**यज्ञं यन्तं मनसा बृहन्तमन्वारोहामि तपसा सयोनिः । उपहूता अग्ने जरसः परस्तात् तृतीये नाके सधमादं मदेम ॥४॥**

हामी तपस्या र मनोयोगपूर्वक यज्ञ गर्दै देवत्वतर्फ लाग्ने बाटामा प्रगति गर्दछौँ । हे अग्निदेवता ! तिम्रा कृपाले बुढ्यौलीसम्म श्रेष्ठ कर्म गर्दै हामी दुःखशोक आदिबाट रहित भएर स्वर्गधाम पुग्न सकौँ र पुत्रपौत्रादिलाई देखेर हर्षित हुन सकौँ ।

**शुद्धाः पूता योषितो यज्ञिया इमा ब्रह्मणां हस्तेषु प्रपृथक् सादयामि । यत्काम इदमभिषिञ्चामि वोऽहमिन्द्रो मरुत्वान्त्स ददातु तन्मे ॥५॥**

...द्ध र पवित्र यज्ञीय योषा नामका आहुतिका विधिहरूलाई हामी ऋत्विक् ब्राह्मणका हातमा ...लगअलग जिम्मा लगाउँछौँ । जुन कामनाले तिमीहरूलाई अभिषेक गर्दै यो काम जिम्मा ...उँछौँ त्यसको फल हामीलाई मरुत्‌गणसहित इन्द्रदेवताका कृपाले प्राप्त होस् ।

## १२३. सौमनस्य सूक्त

**ऋषि**– भृगु । **देवता**– विश्वदेवा । **छन्द**–त्रिष्टुप्, द्विपदा साम्नी अनुष्टुप्, एकावसाना द्विपदा प्राजापत्या भुरिक् अनुष्टुप् ।

**एतं सधस्थाः परि वो ददामि यं शेवधिमावहाज्जातवेदाः । अन्वागन्ता यजमानः स्वस्ति तं स्म जानीत परमे व्योमन् ॥१॥**

...र्गमा रहने गरेका हे देवताहरू हो ! तिमीहरूलाई हामी हविका रूपमा निधि अर्पित गर्दछौँ । ... हवि जातवेदा अग्निदेवताले तिमीहरूकहाँ पुर्‍याउनेछन् । यी यजमानहरू हवि अर्पित ...केपछि नै स्वर्गलोकमा आउनेछन्; तिनलाई तिमीहरूले नबिर्स ।

**जानीत स्मैनं परमे व्योमन् देवाः सधस्था विद लोकमत्र । अन्वागन्ता यजमानः स्वस्तीष्टापूर्तं स्म कृणुताविरस्मै ॥२॥**

...र्गमा रहने गरेका हे देवताहरू हो ! परम व्योमका रूपमा रहेको स्वर्गलोकमा यी यजमानको ...कर्मकै अनुसार स्थान पनि सुनिश्चित गर । यी यजमान हवि अर्पित गरेर कुशलतापूर्वक त्यहाँ ...दा, त्यस बेला यिनलाई नबिर्स र इच्छा पूरा गराउने खालको फल प्रदान गर ।

**देवाः पितरः पितरो देवाः । यो अस्मि सो अस्मि ॥३॥**

...रनेहरू जो हुन्छन्, ती देवता हुन् । दैवी गुण र भावयुक्त भएका पूजनीयहरू नै हाम्रा ...कर्ता हुन्, हामी जे छौँ त्यो नै हौँ ।

**स पचामि स ददामि स यजे स दत्तान्मा यूषम् ॥४॥**

... यज्ञका लागि अन्न पकाउँछौँ, हवि दान गर्दै यज्ञ गर्दछौँ । यस्ता यज्ञको फल प्राप्त गर्नबाट ... नछुटौँ ।

**नाके राजन् प्रति तिष्ठ तत्रैतत् प्रति तिष्ठतु । विद्धि पूर्तस्य नो राजन्त्स देव सुमना भव ॥५॥**

... राजा सोम ! हाम्रो अपराधलाई क्षमा गरेर तिमी हामीलाई स्वर्गलोकको सुख प्रदान गर । हे ...नी ! तिमी हाम्रा कर्मको फल जानेर प्रसन्न मनले हामीलाई सुख प्रदान गर ।

## १२४. निर्ऋत्यपस्तरण सूक्त

**ऋषि**– अथर्वा । **देवता**– दिव्य आपः । **छन्द**–त्रिष्टुप् ।

**दिवो नु मां बृहतो अन्तरिक्षादपां स्तोको अभ्यपप्तद् रसेन । समिन्द्रियेण पयसाहमग्ने छन्दोभिर्यज्ञैः सुकृतां कृतेन ॥१॥**

...ल द्युलोकबाट दिव्य अप् नामको जलतत्त्व रसको थोपाका रूपमा हाम्रा शरीरमाथि खसेको ... हामी इन्द्रियसहित, दुधजस्तै सारले भरिएका त्यस अमृत र छन्दयुक्त मन्त्रले सम्पन्न हुने ... यज्ञको पुण्य फलले युक्त हुन सकौँ ।

**यदि वृक्षादभ्यपप्तत् फलं तद् यद्यन्तरिषात् स उ वायुरेव । यत्रास्पृक्षत् तन्वो३ यच्च वासस आपो नुदन्तु निर्ऋतिं पराचैः ॥२॥**

रुखका टुप्पाबाट खसेको वर्षाको जलविन्दु, रुखको फलजस्तै नै हुन्छ । अन्तरिक्षबाट खसेको जलको धोपो निर्दोष वायुजस्तै हुन्छ । शरीर वा लगाएका लुगा वा तिनलाई पखाल्नका लागि प्रयोग गरिएको जलले जस्तै पापबाट निर्ऋतिदेवताले हाम्रो पाप हामीदेखि पर हटाइदिऊन् ।

**अभ्यञ्जन सुरभि सा समृद्धिर्हिरण्यं वर्चस्तदु पूत्रिममेव । सर्वा पवित्रा वितताध्यस्मत् तन्मा तारीन्निर्ऋतिर्मो अरातिः ॥३॥**

यो अमृतको वर्षाजस्तो अञ्जन सुगन्धित द्रव्य, चन्दन अदि सुवर्ण धारण तथा वर्चस्‌भैँ समृद्धिको रूप हो । यसले पवित्र गराउँछ । यसै किसिमले पवित्रताको आच्छादन भएका कारण पापदेवता र शत्रुहरू हामीदेखि परै रहून् ।

## १२५ – वीर-रथ सूक्त

**ऋषि** – अथर्वा । **देवता** – वनस्पति । **छन्द** – त्रिष्टुप्, जगती ।

**वनस्पते वीड्वङ्गो हि भूया अस्मत्सखा प्रतरणः सुवीरः । गोभिः संनद्धो असि वीडयस्वास्थाता ते जयतु जेत्वानि ॥१॥**

काठ आदि वनस्पतिले निर्मित हे रथ ! तिमी हाम्रा मित्र हुनाले बलियो अङ्ग तथा श्रेष्ठ योद्धाहरूले सम्पन्न होऊ र सङ्कटबाट हामीलाई पार लगाऊ । तिमी श्रेष्ठ कर्ममा बाँधिएका छौ, त्यसो हुनाले नै वीरतापूर्वक कार्य गर । हे रथ ! तिमीमाथि सवार हुने जित्न योग्य होस् र उसले समस्त वैभव जित्नमा समर्थ होस् ।

**दिवस्पृथिव्याः पर्योज उद्‌भृतं वनस्पतिभ्यः पर्याभृतं सहः । अपामोज्मानं परिगोभिरावृतमिन्द्रस्य वज्रं हविषा रथं यज ॥२॥**

हे अध्वर्युहरू हो ! पृथ्वी र सूर्यलोकबाट ग्रहण गरिएको तेज, वनस्पतिबाट प्राप्त गरिएको बल र जलबाट प्राप्त गरिएको ओजले सम्पन्न भएको रसलाई नियोजित गर । सूर्यका किरणबाट आलोकित वज्रजस्तै बलियो रथलाई यजन कार्यमा समर्पित गर ।

**इन्द्रस्यौजो मरुतामनीकं मित्रस्य गर्भो वरुणस्य नाभिः । स इमां नो हव्यदातिं जुषाणो देव रथ प्रति हव्या गृभाय ॥३॥**

हे दिव्य रथ ! तिमी इन्द्रदेवताको वज्र र मरुत्‌हरूको सैन्यशक्तिजस्तै बलिष्ठ र मित्रदेवताको गर्भरूपी आत्मा र वरुणदेवताको नाभी जस्तै छौ । हामीले समर्पित गरेको हविष्यात्र प्राप्त गरेर तृप्त होऊ ।

## १२६ – दुन्दुभि सूक्त

**ऋषि** – अथर्वा । **देवता** – दुन्दुभि । **छन्द** – भुरिक् त्रिष्टुप्, पुरोबृहती विराड्‌गर्भा त्रिष्टुप् ।

**उप श्वासय पृथिवीमुत द्यां पुरुत्रा ते वन्दतां विष्ठितं जगत् । स दुन्दुभे सजूरिन्द्रेण देवैर्दूराद् दवीयो अप सेध शत्रून् ॥१॥**

हे दुन्दुभी नामका बाजा ! तिमी आफ्ना ध्वनिले भूलोक र द्युलोकलाई गुञ्जायमान गराऊ । त्यसले गर्दा स्थावरजङ्गम सबैले तिमीलाई चिनून् । तिमी इन्द्र तथा अन्य देवगणसित प्रेम गर्ने खालका छौ, त्यसो हुनाले हाम्रा शत्रुहरूलाई हामीदेखि पर हटाइदेऊ ।

**आक्रन्दय बलमोजो न आ धा अभि ष्टन दुरिता बाधमानः । अप सेध दुन्दुभे दुच्छुनामित इन्द्रस्य मुष्टिरसि वीडयस्व ॥२॥**

हे दुन्दुभी नामका बाजा ! तिम्रो आवाज सुनेर शत्रुका सैनिकहरू रुन थालेका छन् । हामीलाई तिमी तेज प्रदान गरेर हाम्रो पाप नष्ट गराऊ । तिमी इन्द्रदेवताको मुड्कीजस्तै कठोर भएर हामीलाई बलियो बनाऊ र हाम्रो सेनाका नजिकै रहेका दुष्ट शत्रुहरूलाई पूर्णतया विनाश गर ।

**प्रामूं जयाभीऽमे जयन्तु केतुमद् दुन्दुभिर्वावदीतु । समश्वपर्णाः पतन्तु नो नरोऽस्माकमिन्द्र रथिनो जयन्तु ॥३॥**

हे इन्द्रदेवता ! उद्घोष गरेर तिमी दुष्टका सेनाहरूलाई उचित किसिमले पर भगाऊ । हाम्रा सेना विजय उद्घोष गर्दै फर्किऊन् । हाम्रा द्रुतगामी अश्वका साथमा वीर रथारोहीहरू पनि घुम्ने गर्दछन्, उनीहरू सबैले विजयश्रीलाई वरण गरून् ।

## १२७ – यक्ष्मनाशन सूक्त

**ऋषि** – भृग्वङ्गिरा । **देवता** – वनस्पति, यक्ष्मनाशन । **छन्द** – अनुष्टुप्; त्र्यवसाना षट्पदा जगती ।

**विद्रधस्य बलासस्य लोहितस्य वनस्पते । विसल्पकस्योषधे मोच्छिषः पिशितं चन ॥१॥**

हे औषधि ! तिमी कफ, क्षय, घाउखटिरा, रुघाखोकीमा रगत बग्ने आदि रोगहरूलाई नष्ट गराऊ । तिमी छालाको रोग र मांसमा उत्पन्न हुने विकृतिलाई पनि नष्ट गराऊ ।

**यौ ते बलास तिष्ठतः कक्षे मुष्कावपश्रितौ । वेदाहं तस्य भेषजं चीपुद्रुरभिचक्षणम् ॥२॥**

हे खोकी लाग्ने बलास नामका रोग ! कोखामा उत्पन्न भएका खटिराहरू तिम्रै कारणले हुन् । हामीले त्यसको औषधि जानेका छौँ । चिपुद्र नामको दुर्लभ औषधिले त्यस रोगलाई जरैदेखि नासिदिन्छ ।

**यो अङ्ग्यो यः कर्ण्यो यो अक्ष्योर्विसल्पकः । वि वृहामो विसल्पकं विद्रधं हृदयामयम् । परा तमज्ञातं यक्ष्ममधराञ्चं सुवामसि ॥३॥**

स्नायुतन्तु, नाडी आदिका मुखबाट अनेकौँ प्रकारले फैलँदै जुन सरुवा रोगहरू हातगोडा, आँखा, कान आदिसम्म आइपुग्दछन्, तिनलाई वद्रध नामका घाउ भनिन्छ; त्यो घाउ, हृदयरोग, गुप्त यक्ष्मा र अन्य निम्नगामी रोगहरूलाई हामी औषधिले प्रभावहीन बनाएर फिर्ता पठाउँछौँ ।

## १२८ – राजा सूक्त

**ऋषि** – अथर्वाङ्गिरा । **देवता** – सोम, शकधूम । **छन्द** – अनुष्टुप् ।

**शकधूमं नक्षत्राणि यद् राजानमकुर्वत । भद्राहमस्मै प्रायच्छन्निदं राष्ट्रमसादिति ॥१॥**

नक्षत्रहरूले शाकधूम नामका अग्निविशेषलाई राजा बनाए । किनभने यस नक्षत्रमण्डलको राज्य उनलाई शुभ दिनमा प्राप्त भएको छ भनेर उनीहरूलाई थाहा थियो ।

**भद्राहं नो मध्यन्दिने भद्राहं सायमस्तु नः । भद्राहं नो अह्नां प्राता रात्री भद्राहमस्तु नः ॥२॥**

हाम्रा दिउँसो र साँझका समयहरू हाम्रा लागि पुण्यदायक होऊन् र रातको समय पनि हाम्रा लागि शुभ नै होस् ।

**अहोरात्राभ्यां नक्षत्रेभ्यः सूर्याचन्द्रमसाभ्याम् । भद्राहमस्मभ्यं राजञ्छकधूम त्वं कृधि ॥३॥**

हे नक्षत्रमण्डलका राजा शाकधूम ! तिमी दिउँसो र राति नक्षत्र, सूर्य एवं चन्द्रलाई हाम्रा लागि शुभ बनाइदेऊ ।

**यो नो भद्राहमकरः सायं नक्तमथो दिवा । तस्मै ते नक्षत्रराज शकधूम सदा नमः ॥४॥**

हे शकधूम ! तिमीले साँझ, रात र दिन आदि समयलाई हाम्रा लागि पुण्यप्रद बनाएका छौ । तिमीलाई हामी नमस्कार गर्दछौँ ।

## १२९ – भगप्राप्ति सूक्त

**ऋषि** – अथर्वा । **देवता** – भग । **छन्द** – अनुष्टुप् ।

**भगेन मा शांसपेन साकमिन्द्रण मेदिना । कृणोमि भगिनं माप द्रान्त्वरातयः ॥१॥**

शांशप नामको शान्तिप्रद वृक्षको ऐश्वर्यजस्तै आनन्ददायी इन्द्रदेवताका सहायताले म आफूलाई नै भाग्यशाली बनाउनेछु । हाम्रा शत्रु हामीदेखि परै रहून् ।

**येन वृक्षाँ अभ्यभवो भगेन वर्चसा सह । तेन मा भगिनं कृण्वप द्रान्त्वरातयः ॥२॥**

हे औषधि ! तिमी भगदेवताका तेजका साथमा हामीलाई संयुक्त गराएर सौभाग्यशाली बनाऊ ।

हाम्रा शत्रु हामीदेखि परै रहून् ।

**यो अन्धो यः पुनःसरो भगो वृक्षेष्वाहितः । तेन मा भगिनं कृण्वप द्रान्त्वरातयः ॥३॥**

हे देवताहरू हो ! जुनजुन अन्न र गतिशील ऐश्वर्यहरू वृक्षहरूमा रहेका हुन्छन्, तिनका प्रभावले हामीलाई तिमी सौभाग्यशाली बनाऊ । हाम्रा शत्रु हामीदेखि विमुख भएर परै भागिरहून् ।

## १३० – स्मर सूक्त

**ऋषि** – अथर्वा । **देवता** – स्मर । **छन्द** – अनुष्टुप्, विराट् पुरस्ताद् बृहती ।

**रथजितां राथजितेयीनामप्सरसामयं स्मरः । देवाः प्र हिणुत स्मरमसौ मामनु शोचतु ॥१॥**

यो काम नै मनको कामवासना वा मनोरथलाई जित्ने र रथका सहायताले जितिएका अप्सराहरूको हो । हे देवताहरू हो ! यस्तो कामलाई तिमीहरू हामीदेखि परै राख । हामीलाई पीडित गर्न नसकेका कारणले उसले शोक गर्नुपरोस् ।

**असौ मे स्मतादिति प्रियो मे स्मरतादिति । देवाः प्र हिणुत स्मरमसौ मामनु शोचतु ॥२॥**

यसले हामीलाई सम्झना गरोस् । हाम्रा प्रियले हामीलाई स्मरण गरून् । हे देवताहरू हो ! यस्तो कामलाई हामीदेखि परै राख । हामीलाई पीडित गर्न नसकेका कारणले उसले शोक गरोस् ।

**यथा मम स्मरादसौ नामुष्याहं कदा चन । देवाः प्र हिणुत स्मरमसौ मामनु शोचतु ॥३॥**

यसले हाम्रो सम्झना गरोस्, तर हामीलाई यसको कुनै सम्झना नआओस् । हे देवताहरू हो ! यस्तो कामलाई हामीदेखि परै राख । हामीलाई पीडित गर्न नसकेका कारणले उसले शोक गर्नुपरोस् ।

**उन्मादयत मरुत उदन्तरिक्ष मादय । अग्न उन्मादया त्वमसौ मामनु शोचतु ॥४॥**

हे मरुत्‌हरू हो ! उन्मत्त गराओ । हे अन्तरिक्ष ! उन्मत्त गराऊ । हे अग्निदेवता ! तिमी पनि उन्मत्त गराऊ । हामीलाई उन्मत्त गराउन नसकेका कारणले यस कामले शोक गर्नुपरोस् ।

## १३१ – स्मर सूक्त

**ऋषि** – अथर्वा । **देवता** – स्मर । **छन्द** – अनुष्टुप् ।

**नि शीर्षतो नि पत्तत आध्यो३ नि तिरामि ते । देवाः प्र हिणुत स्मरमसौ मामनु शोचतु ॥१॥**

तिमीभित्र आएका शिरदेखि पाउसम्मका व्यथाहरूलाई हामी हटाइदिनेछौँ । हे देवताहरू हो ! हामीबाट कामलाई पर हटाइदेओ । त्यसले हामीई प्रभावित गर्न नसकोस् ।

**अनुमतेऽन्विदं मन्यस्वाकूते समिदं नमः । देवाः प्र हिणुत स्मरमसौ मामनु शोचतु ॥२॥**

हे अनुमति ! यस प्रार्थनालाई तिमी अनुकूल मान । हे आकूति ! तिमी यी प्रार्थनाले प्रसन्न होऊ । हे देवताहरू हो ! हामीबाट कामलाई पर हटाइदेओ । त्यसले हामीलाई प्रभावित गर्न नसकोस् ।

**यद् धावसि त्रियोजनं पञ्चयोजनमाश्विनम् । ततस्त्वं पुनरायसि पुत्राणां नो असः पिताः ॥३॥**

बाह्र अथवा बीस कोस वा त्यसभन्दा पनि धेरै परसम्म घोडाको सवारी लिएर पुग्न सकिने ठाउँबाट यहाँ फिर्ता आउँछौ भनेदेखि हे देवताहरू हो ! तिमीहरू नै हाम्रा पुत्रका पिता हौ ।

## १३२ – स्मर सूक्त

**ऋषि** – अथर्वा । **देवता** – स्मर । **छन्द** – त्रिपदा अनुष्टुप्, त्रिपदा विराट् महाबृहती, भुरिक् अनुष्टुप्, त्रिपदा महाबृहती ।

**यं देवाः स्मरमसिञ्चन्नप्स्व१न्तः शोशुचानं सहाध्या । तं ते तपामि वरुणस्य धर्मणा ॥१॥**

सम्पूर्ण देवताहरूले नै संसारका प्राणीहरूलाई कामबाट पीडित गराउनका लागि जलले सेचन गरेका थिए । हामी वरुणदेवताको धारणाशक्तिद्वारा कामविकारलाई नै सन्तप्त गराउँछौँ ।

यं विश्वे देवाः स्मरमसिञ्चन्नप्स्व१न्तः शोशुचानं सहाध्या । तं ते तपामि वरुणस्य धर्मणा ॥२॥

विश्वेदेवताले जुन कामलाई जलमा अभिषिक्त गरेका थिए, हामी वरुणदेवताको धारणाशक्तिद्वारा कामविकारलाई नै सन्तप्त गराउँछौँ ।

यमिन्द्राणी स्मरमसिञ्चदप्स्व१न्तः शोशुचानं सहाध्या । तं ते तपामि वरुणस्य धर्मणा ॥३॥

इन्द्राणीले कामलाई मानसिक पीडा दिनका लागि जलमा अभिषिक्त गराएकी थिइन् । हे योषित् ! तिम्रो कल्याणका लागि हामी वरुणदेवताको धारणाशक्तिद्वारा कामविकारलाई नै सन्तप्त गराउँछौँ ।

यमिन्द्राग्नी स्मरमसिञ्चतामप्स्व१न्तः शोशुचानं सहाध्या । तं ते तपामि वरुणस्य धर्मणा ॥४॥

इन्द्र र अग्निदेवताले कामलाई जलमा अभिषिक्त गराएका थिए । हामी वरुणदेवताको धारणशक्तिले त्यस कामलाई सन्तप्त गराउँछौँ ।

यं मित्रावरुणौ स्मरमसिञ्चतामप्स्व१न्तः शोशुचानं सहाध्या । तं ते तपामि वरुणस्य धर्मणा ॥५॥

मित्रावरुणदेवताले मनोवेगका रूपमा रहेका कामलाई जलले भिजाएका थिए, त्यस्ता कामलाई हामी वरुणका धारण शक्तिले सन्तप्त गराउँछौँ ।

## १३३ – मेखलाबन्धन सूक्त

**ऋषि** – अगस्त्य । **देवता** – मेखला । **छन्द** – भुरिक् त्रिष्टुप्, अनुष्टुप्, त्रिष्टुप्, जगती ।

य इमां देवो मेखलामाबबन्ध यः संननाह य उ नो युयोज । यस्य देवस्य प्रशिषा चरामः स पारमिच्छात् स उ नो वि मुञ्चात् ॥१॥

देवताहरूले जुन मेखला बाँधेका छन्, जसले हामीलाई सधैँभरि कर्म गर्नमा नै तत्पर राखेको छ र कर्ममा लगाउने गरेको छ, हामी जुन देवताका अनुशासनमा रहँदै सबै कामहरू पूरा गर्दछौँ, तिनीहरूले हामीलाई सफल हुने आशीर्वाद प्रदान गरून् र बन्धनबाट पनि मुक्त गराऊन् ।

आहुतास्यभिहुत ऋषीणामस्यायुधम् । पूर्वा व्रतस्य प्राश्नती वीरघ्नी भव मेखले ॥२॥

आहुतिले संस्कारित हे मेखला ! तिमी ऋषिहरूको आयुध हौ । तिमी कुनै पनि व्रतभन्दा पहिलने र बाँधिने गरिएका छौ । तिमी नै शत्रुका योद्धाहरूलाई मार्दछौ ।

मृत्योरहं ब्रह्मचारी यदस्मि निर्याचन् भूतात् पुरुषं यमाय । तमहं ब्रह्मणा तपसा श्रमेणानयैनं मेखलया सिनामि ॥३॥

हामी वैवस्वत् यमको कार्य गर्दछौँ । किनभने हामी ब्रह्मचर्य व्रतका तप, दम, शम एवं विशेष दीक्षाका नियमहरूलाई पालन गर्दछौँ । व्रत भङ्ग गर्ने शत्रुहरूलाई हामी आफ्नै अभिचारकर्मले नष्ट गराउँछौँ । यस मेखला बन्धनबाट हामी शत्रुको आक्रामक गतिलाई रोकिदिन्छौँ ।

श्रद्धया दुहिता तपसोऽधि जाता स्वस ऋषीणां भूतकृतां बभूव । सा नो मेखले मतिमा धेहि मेधामथो नो धेहि तप इन्द्रियं च ॥४॥

यो मेखला नामको मर्यादा श्रद्धाकी पुत्री तपःका शक्तिबाट उत्पन्न भएको हो । यो पदार्थहरूका निर्माता ऋषिहरूकी बहिनीजस्तै हो । हे मेखला ! हामीलाई तिमी उत्तम भविष्य निर्माणका लागि स्मृति र धारणशक्तिले सम्पन्न सद्बुद्धि प्रदान गर र तपःशक्तिका साथै आत्मबलले सम्पन्न बनाऊ ।

यां त्वा पूर्वे भूतकृत ऋषयः परिबेधिरे । सा त्वं परि ष्वजस्व मां दीर्घायुत्वाय मेखले ॥५॥

हे मेखला ! तिमीलाई प्राणीहरूका निर्माता उहिलेका ऋषिहरूले बाँधेका थिए । त्यसैले तिमी

अभिचारका दोषहरूलाई नाश गरेर दीर्घायु प्राप्त गराउनका लागि हामीमा बाँधिएका हौ ।

## १३४ – शत्रुनाशन सूक्त

**ऋषि** – शुक्र । **देवता** – वज्र । **छन्द** – परानुष्टुप् त्रिष्टुप्, भुरिक् त्रिपदा गायत्री, अनुष्टुप् ।

**अयं वज्रस्तर्पयतामृतस्यावास्य राष्ट्रमप हन्तु जीवितम् । शृणातु ग्रीवाः प्र शृणातूष्णिहा वृत्रस्येव शचीपतिः ॥१॥**

इन्द्रदेवताको वज्रजस्तो यो दण्ड पनि शत्रुलाई रोक्न र उनका राज्यलाई नष्ट गर्नमा समर्थ होस् । जसरी इन्द्रदेवताले वृत्रासुरको गर्धन र पाखुरा काटेका थिए, उसै गरी यस दण्डले पनि शत्रुलाई नाश गरोस् ।

**अधरोऽधर उत्तरेभ्यो गूढः पृथिव्या मोत्सृपत् । वज्रेणावहतः शयाम् ॥२॥**

ती शत्रुहरू उत्कृष्ट लोकबाट तल्लोमा र तल्लोबाट अझै तल्लोमा झर्दै पृथ्वीमा गाडिऊन् र फेरि माथि उक्सिन नपाऊन् ।

**यो जिनाति तमन्विच्छ यो जिनाति तमिज्जहि । जिनतो वज्र त्वं सीमन्तमन्वञ्चमनु पातय ॥३॥**

हे वज्र ! तिमी शत्रुलाई खोजेर मार र उनलाई अन्तिम सीमासम्म पुऱ्याएर पछारेर नष्ट गराऊ ।

## १३५ – बलप्राप्ति सूक्त

**ऋषि** – शुक्र । **देवता** – वज्र । **छन्द** – अनुष्टुप् ।

**यदश्नामि बलं कुर्व इत्थं वज्रमा ददे । स्कन्धानमुष्य शातयन् वृत्रस्येव शचीपतिः ॥१॥**

म बल बढोस् भनेर पौष्टिक अन्न खान्छु । वज्र धारण गर्दछु र शत्रुको घिच्रो उसै किसिमले काटिदिन्छु, जसरी वृत्रासुरको घाँटी काटेर इन्द्रदेवताले छुट्याउँछन् ।

**यत् पिबामि सं पिबामि समुद्र इव संपिब । प्राणानमुष्य संपाय सं पिबामो अमुं वयम् ॥२॥**

जसरी समुद्रले नदीलाई पिएर आफूभित्र समेट्दछ, उसै गरी म जे पिउने गर्दछु, त्यो ठिकै कुरो पिउँछु । म पहिले शत्रुको प्राण, अपान आदिको रस पिएर त्यसपछि शत्रुलाई नै पिइदिन्छु ।

**यद् गिरामि सं गिरामि समुद्र इव संगिरः । प्राणानमुष्य संगीर्य सं गिरामो अमुं वयम् ॥३॥**

म निल्दछु, म उचित किसिमले निल्दछु । शत्रुको प्राण, अपान चक्षुरूपी रस आदि निल्दछु र त्यसपछि शत्रुलाई नै निलिदिन्छु ।

## १३६ – केशदृंहण सूक्त

**ऋषि** – वीतहव्य । **देवता** – नितत्नी वनस्पति । **छन्द** – अनुष्टुप्, एकावसाना द्विपदा साम्नी बृहती ।

**देवी देव्यामधि जाता पृथिव्यामस्योषधे । तां त्वा नितत्नि केशेभ्यो दृंहणाय खनामसि ॥१॥**

हे औषधि ! तिमी पृथ्वीमा उत्पन्न भएका छौ । तेर्छो भएर फैलने गरेका हे औषधि ! हामी आफ्नो केश बलियो पार्नका लागि तिमीलाई खनेर जम्मा पार्दछौँ ।

**दृंह प्रत्नाञ्जनयाजाताञ्जातानु वर्षीयसस्कृधि ॥२॥**

हे दिव्य औषधि ! तिमी केशलाई लामो र सबल गराऊ, अनि अहिलेसम्म जुन केश उम्रेका छैनन् तिनलाई पनि उत्पन्न गराऊ ।

**यस्ते केशोऽवपद्यते समूलो यश्च वृश्चते । इदं तं विश्वभेषज्याभि षिञ्चामि वीरुधा ॥३॥**

तिम्रो जुन केश झर्ने गर्दछ, त्यसको जरो नै उखेलिएकाले झरेको हो । त्यस दोषलाई हामी औषधिका रसले भिजाएर मेटाउने गर्दछौँ ।

## १३७ – केशवर्धन सूक्त

**ऋषि** – वीतहव्य । **देवता** – नितत्नी वनस्पति । **छन्द** – अनुष्टुप् ।

**यां जमदग्निरखद् दुहित्रे केशवर्धनीम् । तां वीतहव्य आभरदसितस्य गृहेभ्यः ॥१**

जमदग्नि ऋषिले आफ्नी छोरीको कपाल बढाउनका लागि जुन औषधिलाई खनेर निकालेका थिए, त्यस औषधिलाई वीतहव्य नामका महर्षिले कृष्ण केश नामका मुनिका घरबाट ल्याए ।

**अभीशुना मेया आसन् व्यामेनानुमेयाः । केशा नडा इव वर्धन्तां शीर्ष्णस्ते असिताः परि ॥२॥**

हे केश बढाउने रहर गर्नेहरू हो ! तिमीहरूको केश पहिले त अङ्गुलीले नाप्न सकिने खालको थियो, अब त दुई हात फैलाएर नाप्दा पुग्ने व्याम अर्थात् बाहुँ जत्ति नै लामो भइसकेको छ । टाउकाभरि रहेको कालो कपाल नल नामको घाँस बढेझैँ चाँडै बढिरहोस् ।

**दृंह मूलमाग्रं यच्छ वि मध्यं यामयौषधे । केशा नडा इव वर्धन्तां शीर्ष्णस्ते असिताः परि ॥३॥**

हे औषधि ! तिमी केशको अघिल्लो भागलाई लामो, बीचको भागलाई स्थिर र जराको भागलाई बलियो गराऊ । नदीका किनारमा जसरी चाच्चाँडो नर्कट नामको घाँस बढ्दछ, उसै गरी टाउकाको चारैतिर कालो केश बढोस् ।

## १३८ – क्लीबत्व सूक्त

**ऋषि** – अथर्वा । **देवता** – नितत्नी वनस्पति। **छन्द** – अनुष्टुप्, पथ्यापङक्ति ।

**त्वं वीरुधां श्रेष्ठतमाभिश्रुतास्योषधे । इमं मे अद्य पूरुषं क्लीबमोपशिनं कृधि ॥१॥**

हे औषधि ! तिमी औषधिहरूमा सर्वश्रेठ छौ । यस बेला हाम्रो द्वेषरूपी पुरुषलाई आइमाईजस्तो देखिने नपुंसकजस्तै बनाऊ ।

**क्लीबं कृध्योपशिनमथो कुरीरिणं कृधि । अथास्येन्द्रो ग्रावभ्यामुभे भिनत्त्वाण्ड्यौ ॥२॥**

हे औषधि ! तिमी हाम्रा शत्रुलाई नपुंसक वा स्त्रीजस्तै बनाऊ । उनीहरूको पुरुष भनेर चिनाउने अङ्गविशेषलाई इन्द्रदेवताले वज्रद्वारा भत्काइदिएर टाउकामा लामो कपाल भएको बनाऊन् ।

**क्लीब क्लीबं त्वाकरं वध्रे वध्रिं त्वाकरमरसारसं त्वाकरम् । कुरीरमस्य शीर्षणि कुम्बं चाधिनिदध्मसि ॥३॥**

हे शत्रुहरू हो ! हामीले तिमीहरूलाई यस कर्मले पुरुषत्वविहीन र नपुंसक गराएका छौँ । हामी यस्ता नपुंसक र वीर्यविहीन शत्रुको लामो कपालमा कुरिर र कुम्ब नामका जाली र आभूषण लगाइदिन्छौँ ।

**ये ते नाड्यौ देवकृते ययोस्तिष्ठति । वृष्ण्यम् । ते ते भिनद्मि शम्ययामुष्या अधि मुष्कयोः ॥४॥**

दुई अण्डकोषका अधीनमा देवताहरूले बनाएका वीर्यवाहिनी नलीहरू जुन छन्, तिनलाई हामी डण्डले हानेर भत्काइदिन्छौँ ।

**यथा नडं कशिपुने स्त्रियो भिन्दन्त्यश्मना । एवा भिनद्मि ते शेपोऽमुष्या अधि मुष्कयोः ॥५॥**

स्त्रीहरूले जसरी नर्कट आदिलाई ढुङ्गाले किच्ने गर्दछन्, हामी उसरी नै किचेर तिमीहरूका अण्डकोषको प्रभाव समाप्त गराउँछौँ ।

## १३९ – सौभाग्यवर्धन सूक्त

**ऋषि** – अथर्वा । **देवता** – वनस्पति । **छन्द** – त्र्यवसाना षट्पदा विराड् जगती, अनुष्टुप् ।

**न्यस्तिका रुरोहिथ सुभगंकरणी मम । शतं तव प्रतानास्त्रयस्त्रिंशन्नितानाः । तया सहस्रपर्ण्या हृदयं शोषयामि ते ॥१॥**

हे औषधि ! सौभाग्य बढाउने बनेर तिमी प्रकट होऊ र हामीलाई सौभाग्यशाली बनाऊ । तिम्रा

सय शाखा र तेत्तीस उपशाखाहरू छन् । त्यस्ता सहस्रपर्णीद्वारा हामी तिम्रो हृदयलाई सन्तप्त गराउँछौं ।

**शुष्यतु मयि ते हृदयमथो शुष्यत्वास्यम् । अथो नि शुष्य मां कामेनाथो शुष्कास्या चर ॥२॥**

हे कामिनी ! तिम्रो हृदय हामीलाई चिन्तन गर्दागर्दै सुकोस् । हामीलाई कामवासनाले शुष्क गराउने हुँदा तिम्रो मुख नै सुकोस् र तिमी सुकेको मुख लिएर हिंडिराख ।

**संवननी समुष्पाल बभ्रु कल्याणि सं नुद । अमूं च मां च सं नुद समानं हृदयं कृधि ॥३॥**

हे औषधि ! तिमी सौभाग्यशालिनी र पहैंलो वर्णकी छ्यौ । तिमी सेवन गर्न योग्य र उत्साहवर्द्ध हौ । हामी दुवैलाई तिमी आकर्षित गरेर एकअर्काप्रति अनुकूल गराऊ र हामी दुईको हृदय अभिन्न पारिदेऊ ।

**यथोदकमपपुषोऽपशुष्यत्यास्यम् । एवा नि शुष्य मां कामेनाथो शुष्कास्या चर ॥४॥**

हे कामिनी ! जसरी तिर्खाले आत्तिएका व्यक्तिको मुख सुक्ने गर्दछ, उसै गरी मलाई प्राप्त गर्ने कामनाले, वियोगले सताइँदै तिमी पनि मुख सुकाउँदै हिँड्ने गर ।

**यथा नकुलो विच्छिद्य संदधात्यहिं पुनः एवा कामस्य विच्छिन्नं सं धेहि वीर्यावति ॥५॥**

न्याउरीले सर्पलाई टुक्रैटुक्रा पारेर फेरि जोडिदिन्छ, उसै गरी हे वीर्यावती नामकी औषधि ! तिमी पनि बिछोडिएका स्त्रीपुरुषलाई फेरि मिलन गराइदेऊ ।

## १४० – सुमङ्गलदन्त सूक्त

**ऋषि** – अथर्वा । **देवता** – ब्रह्मणस्पति दन्तसमूह । **छन्द** – उरोबृहती, उपरिष्टात् ज्योतिष्मती, त्रिष्टुप्, आस्तारपङ्क्ति ।

**यौ व्याघ्राववरूढौ जिघत्सतः पितरं मातरं च । यौ दन्तौ ब्रह्मणस्पते शिवौ कृणु जातवेदः ॥१॥**

बाघजस्तै हिंस्रक बनेर बढेका दुई दाँतले माता र पितालाई कष्ट दिने गर्दछन् । हे मन्त्राधिपति देवता ! हे अग्निदेवता ! तिमी तिनलाई मातापिताका लागि सुख प्रदान गर्ने बनाइदेऊ ।

**व्रीहिमत्तं यवमत्तमथो माषमथो तिलम् । एष वां भागो निहितो रत्नधेयाय दन्तौ मा हिंसिष्टं पितरं मातरं च ॥२॥**

हे दाँतहरू हो ! तिमीहरू चामल, जौ, मास एवं तिल आदि खाओ । यो तिमीहरूको भाग तिमीहरूलाई सन्तुष्ट गर्नकै लागि प्रस्तुत भएको हो । तिमीहरू सन्तुष्ट होओ र मातापितालाई दुःख दिने खालका नहोओ ।

**उपहूतौ सयुजौ स्योनौ दन्तौ सुमङ्गलौ । अन्यत्र वां घोरं तन्व१ः परैतु दन्तौ मां हिंसिष्टं पितरं मातरं च ॥३॥**

यी दुवै दाँत मित्रजस्ता होऊन्, सुख दिने खालका होऊन् । यस बालकको शारीरिक कष्ट देखेर मातापितालाई जुन दुःख लागेको छ, त्यस दुःखबाट मातापिता मुक्त होऊन् ।

## १४१ – गोकर्णलक्ष्यकरण सूक्त

**ऋषि** – विश्वामित्र । **देवता** – अश्विनीकुमार । **छन्द** – अनुष्टुप् ।

**वायुरेनाः समाकरटत् त्वष्टा पोषाय ध्रियताम् । इन्द्र आभ्यो अधि ब्रवद् रुद्रो भूम्ने चिकित्सतु ॥१॥**

वायुदेवताले यी गाईहरूलाई एकत्रित गरून् । त्वष्टादेवताले यिनलाई पुष्ट गराऊन् । इन्द्रदेवताले यिनलाई स्नेहयुक्त वचन बोलून् । रुद्रदेवताले यिनलाई चिकित्सा गरून् र यिनलाई बढाऊन् ।

**लोहितेन स्वधितिना मिथुनं कर्णयोः कृधि । अकर्तामश्विना लक्ष्म तदस्तु प्रजया बहु ॥२॥**

हे गाई पाल्नेहरू हो ! रातो वर्णका ताँबाका शस्त्रले एक जोडी चिह्न अङ्कित गराओ अश्विनीकुमारले पनि त्यस्तै चिह्न बनाऊन् र त्यो चिह्न सन्ततिका लागि हितकारी होस् ।

**यथा चक्रुर्देवासुरा यथा मनुष्या उत । एवा सहस्र पोषाय कुणुतं लक्ष्माश्विना ॥३॥**

जसरी देवता, असुर, एवं मानिसहरूले शुभ चिह्न अङ्कित गर्दछन्, हे अश्विनीकुमारहरू हो ! तिमीहरू पनि अनेकौं किसिमले पुष्टि प्रदान गर्ने खालका शुभ चिह्न अङ्कित गर ।

## १४२ – अन्नसमृद्धि सूक्त

**ऋषि** – विश्वामित्र । **देवता** – वायु । **छन्द** – अनुष्टुप् ।

**उच्छ्रयस्व बहुर्भव स्वेन महसा यव । मृणीहि विश्वा पात्राणि मा त्वा दिव्याशनिर्वधीत् ॥१॥**

हे जौ ! तिमी उम्रिएर अग्लो होऊ । अनेकौं किसिमले बढ । तिमी रसवीर्यरूपी तेजले हाम्रा भण्डारका पात्रहरूलाई भर । आकाशमा उत्पन्न हुने वज्रले तिमीलाई नष्ट नगरोस् ।

**आशृण्वन्तं यवं देवं यत्र त्वाच्छावदामसि । तदुच्छ्रयस्व द्यौरिव समुद्र इवैध्यक्षितः ॥२॥**

हाम्रो वचन सुन्ने यवदेवता आकाशजस्तै उच्च र समुद्रजस्तै अक्षय होऊन् । हामी यस भूमिमा वृद्धि प्राप्त गर्नका लागि तिमीसित प्रार्थना गर्दछौं ।

**अक्षितास्त उपसदोऽक्षिताः सन्तु राशयः । पृण्वन्तो अक्षिताः सन्त्वत्तारः सन्त्वक्षिताः ॥३॥**

हे जौ ! तिम्रा नजिक रहेर काम गर्नेहरू सधैं क्षयरहित होऊन् । खाद्यान्नको डङ्गुर क्षयरहित होस् । त्यस खाद्यान्नलाई घरमा ल्याउनेहरू र उपयोग गर्नेहरूले अक्षय सौभाग्य प्राप्त गरून् ।

## ॥इति षष्ठं काण्डम् ॥

**छैटौं काण्ड सकियो ।**

ॐ

**ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।**

**अथर्ववेद – संहिता**

# ॥अथ सप्तमं काण्डम् ॥

## १. आत्मा सूक्त

**ऋषि–** अथर्वा । **देवता–** आत्मा । **छन्द–** त्रिष्टुप्, विराट्, जगती ।

**धीती वा ये अनयन् वाचो अग्रं मनसा वायेऽवदन्नृतानि । तृतीयने ब्रह्मणा वावृधानास्तुरीयेणामन्वत नाम धेनोः ॥१॥**

जुन साधक आफ्नो मन र बुद्धिका सामर्थ्यले वाणीको मूल उत्पत्ति स्थानसम्म पुग्दछन् र ऋत-सत्य वचन नै बोल्दछन्, जसले चित्त नामको तेस्रो शक्तिद्वारा ब्रह्मसित एकाकार हुँदै वृद्धि प्राप्त गर्दछन् र अहङ्कार नामको चौथो शक्तिद्वरा धेनुजस्तो धारक क्षमताले सम्पन्नसित आस्था राखेका हुन्छन् उनीहरूले नै परम लक्ष्य प्राप्त गर्दछन् ।

**स वेद पुत्रः पितरं स मातरं स सूनुर्भुवत् स भुवत् पुनर्मघः । स द्यामौर्णोदन्तरिक्षं स्व१ः स इदं विश्वमभवत् स आभवत् ॥२॥**

त्यस्तो साधक नै वास्तविक रूपमा उत्पन्न भएको हो भन्ने गरिन्छ । त्यस पुत्ररूपी जीवले आफ्ना पितामातारूपी ब्रह्म एवं प्रकृतिलाई चिनेको हुन्छ । त्यस्तो साधक नै बारम्बार दान गर्ने अक्षय दिव्य सम्पत्तिको अधिकारी हुने गर्दछ । उसैले अन्तरिक्ष र द्युलोकलाई आफ्ना अधीनमा राख्दछ । उही नै विश्वरूप हुन्छ र सर्वत्र व्याप्त हुन पुग्दछ ।

## २. आत्मा सूक्त

**ऋषि–** अथर्वा । **देवता–** आत्मा । **छन्द–** त्रिष्टुप् ।

**अर्थवाणं पितरं देवबन्धुं मातुगर्भं पितरसुं युवानम् । य इमं यज्ञं मनसा चिकेत प्र णो वोचस्तमिहेह ब्रवः ॥१॥**

जुन साधकले परमपिता रूपी परमात्मासँग सम्बन्ध राख्ने माताको गर्भ र चिरयुवा पिताका उत्पादक तेजका साथै तिनका संयोगबाट चल्ने गरेको यस विश्वचक्ररूपी यज्ञलाई मनका शक्तिले देखेर जानेको हुन्छ, उसैले यहाँ बोलोस् र हामीलाई त्यसका विषयमा जानकारी गराओस् ।

## ३. आत्मा सूक्त

**ऋषि–** अथर्वा । **देवता–** आत्मा । **छन्द–** त्रिष्टुप् ।

**अया विष्ठा जनयन् कर्वराणि स हि घृणिरुरुर्वराय गातुः । स प्रत्युदैद् धरुणं मध्वो अग्रं स्वया तन्वा तन्वमैरयत ॥१॥**

यस विश्वव्यवस्थाअनुसार उसै परमात्माले विभिन्न श्रेष्ठ कर्महरूलाई उत्पन्न गर्दछ । तेजस्वी मधुरता धारण गर्ने, वरण गर्न योग्य उही परमात्मा विस्तृत मार्गमा अगाडि बढ्दै आफ्ना सूक्ष्म शरीरले प्राणीरूपी साधकका शरीरलाई प्रेरित गर्दछ ।

## ४. विश्वप्राण सूक्त

**ऋषि–** अथर्वा । **देवता–** वायु । **छन्द–** त्रिष्टुप् ।

**एकया च दशभिश्चा सुहुते द्वाभ्यामिष्टये विंशत्या च । तिसृभिश्च वहसे त्रिंशता च वियुग्भिर्वाय इह ता वि मुञ्च ॥१॥**

उत्तम किसिमले जसको आह्वान गरिन्छ, उसै सर्वप्रेरक प्रजापति तथा वायुदेवता एक र दस, दुई र बीस, तीन र तीस शक्तिबाट विशेष किसिमले सम्पन्न हुँदै यज्ञमा आऊन् र मनोकामना पूरा गराऊन् अनि उनैहरूलाई तिनले हाम्रो कल्याणका लागि मुक्त गराऊन् ।

## ५. आत्मा सूक्त

**ऋषि**– अथर्वा । **देवता**– आत्मा । **छन्द**– त्रिष्टुप, पङ्क्ति, अनुष्टुप् ।

**यज्ञेन यज्ञमयजन्त देवास्तानि धर्माणि प्रथमान्यासन् । ते ह नाकं महिमानः सचन्त यत्र पूर्वे साध्याः सन्ति देवाः ॥१॥**

उहिले नै जजसले यज्ञद्वारा यज्ञपुरुषको यजन गरेर देवत्व प्राप्त गरिसकेका छन् उनीहरूले नै यस महत्त्वपूर्ण श्रेष्ठ कर्मलाई सम्पन्न गर्दै त्यस सुखपूर्ण स्वर्गलोकलाई प्राप्त गर्दछन्, जहाँ पहिलेदेखि नै साधनसम्पन्न देवताहरू रहने गरेका छन् ।

**यज्ञो बभूव स आ बभूव स प्र जज्ञे स उ वावृधे पुनः । स देवानामधिपतिर्बभूव सो अस्मासु द्रविणमा दधातु ॥२॥**

जुन यज्ञ विश्वात्मारूपले प्रकट भएर सवत्र कारणरूपले व्याप्त भएको छ, उही नै विशिष्ट ज्ञानको साधन बनेको छ । त्यसपछि उही नै वृद्धि हुँदै देवताहरूका स्वामीका रूपमा प्रसिद्ध भयो; यस्तै खालका ज्ञानले हामीलाई धन प्राप्त गराओस् ।

**यद् देवा देवान् हविषायजन्तामर्त्यान् मनसामर्त्येन । मदेम तत्र परमे व्योमन् पश्येम तदुदितौ सूर्यस्य ॥३॥**

श्रेष्ठ कर्मबाट प्राप्त देवत्वलाई धारण गरेका याजकहरू, हविरूपी अमर मनले देवताहरूको यजन गर्दछन् । यसै किसिमले परमाकाशमा उदाएका परमात्मारूपी सूर्यको अविनाशी प्रकाश प्राप्त गर्दछन् ।

**यत् पुरुषेण हविषा यज्ञं देवा अतन्वत । अस्ति नु तस्मादोजीयो यद्विशव्येनेजिरे ॥४॥**

देवताहरूले पुरुषआत्मारूपी विशिष्ट हविले जुन यज्ञ गरेका छन्, अन्य हविले गरिएका यज्ञहरू के यस यज्ञभन्दा महान् हुन सक्लान् र ?

**मुग्धा देवा उत शुनायजन्तोत गोरङ्गैः पुरुधायजन्त । य इमं यज्ञं मनसा चिकेत प्र णो वोचस्तमिहेह ब्रवः ॥५॥**

विवेकरहित यजमान, श्वान र गौ आदि पशुका अवयवले यजन गर्दछन्, भनेदेखि त्यस्तो कर्म मूर्खतापूर्ण र निन्दनीय हुन्छ । जसका मनले यज्ञका महान् प्रक्रियाहरूलाई जानेको छ, त्यस्ता आत्मयज्ञलाई जान्ने परम ज्ञानी महापुरुषले नै परमात्माको स्वरूपका विषयमा भनिदिऊन् ।

## ६. अदिति सूक्त

**ऋषि**– अथर्वा । **देवता**– अदिति । **छन्द**– त्रिष्टुप, भूरिक् त्रिष्टुप् ।

**अदितिर्द्यौरदितिरन्तरिक्षमदितिर्माता स पिता स पुत्रः । विश्वे देवा अदितिः पञ्च जना अदितिर्जातमदितिर्जनित्वम् ॥१॥**

यी अदिति नै द्युलोक र अन्तरिक्ष हुन्, यिनी नै मातापिता तथा पुत्र हुन् । सबै देवता र पाँचै किसिमका मानवसमुदाय पनि अदिति नै हुन् । जेजति उत्पन्न भइसकेका छन् वा जेजति उत्पन्न हुनुपर्ने छन्, ती पनि सबै अदिति नै हुन् ।

**महीमू षु मातरं सुव्रतानामृतस्य पत्नीमवसे हवामहे । तुविक्षत्रामजरन्तीमुरूचीं सुशर्माणमदितिं सुप्रणीतिम् ॥२॥**

उत्तम कर्म गर्नेहरूको हित गर्ने, सत्यको रक्षा गर्ने, अनेकौं किसिमको क्षत्रिय तेज प्रकट गर्ने, अजरअमर, विशाल, शुभकारी, सुख प्रदान गर्ने, योगक्षेम निर्वाह गर्ने र अन्न प्रदान गर्ने माता अदितिलाई हामी रक्षा गरून् भनेर आह्वान गर्दछौं ।

## ७. आदित्यगण सूक्त

**ऋषि**— अथर्वा । **देवता**— अदिति । **छन्द**— विराट्, जगती ।

**सुत्रामाणं पृथिवीं द्यामनेहसं सुशर्माणमदितिं सुप्रणीतिम् । दैवीं नावं स्वरित्रामनागसो अस्रवन्तीमा रुहेमा स्वस्तये ॥१॥**

उत्तम प्रकारले रक्षा गर्ने, अहिंसक, प्रकाशयुक्त, उत्तम सुख प्रदान गर्ने, उत्तम मार्गमा कुशलतापूर्वक निर्देश गर्ने, पृथिवीमाताका शरणमा हामी जान्छौं । यिनी बलियो पतवार र प्वाल नपरेको नौकाजस्तो भएर हामीलाई पार लगाउँछिन् ।

**वाजस्य नु प्रसवे मातरं महीमदितिं नाम वचसा करामहे । यस्या उपस्थ उर्व१न्तरिक्षं सा नः शर्म त्रिवरूथं नि यच्छात् ॥२॥**

अन्न उत्पत्ति गर्नकै लागि अन्न प्रदान गर्ने महान् माता अदिति या मातृभूमिको यशोगान हामी गर्दछौं । जसका माथि यस्तो विशाल अन्तरिक्ष छ, उनै पृथ्वीमाताले हामीलाई तीन गुणले रहित सुख प्रदान गरून् ।

## ८. आदित्यगण सूक्त

**ऋषि**— अथर्वा । **देवता**— अदिति । **छन्द**— आर्षी जगती ।

**दितेः पुत्राणामदितेरकारिषमव देवानां बृहतामनर्मणाम । तेषां हि धाम गभिषक् समुद्रियं नैनान् नमसा परो अस्ति कश्चन ॥१॥**

समुद्रका बीचको गहिरो स्थानमा रहेका असुरहरूलाई त्यहाँबाट हटाएर मातृभूमिको स्वाधीनता खोज्ने देवगणलाई जसले त्यस ठाउँमा स्थापित गर्दछन्, तिनै योग्य देवगण हुन् र त्यस ठाउँमा उनीहरूको नै आवश्यकता छ ।

## ९. शत्रुनाशन सूक्त

**ऋषि**— उपरिबभ्रव । **देवता**— बृहस्पति । **छन्द**— त्रिष्टुप् ।

**भद्रादधि श्रेयः प्रेहि बृहस्पतिः पुरएता ते अस्तु । अथेममस्या वर आ पृथिव्या आरेशत्रुं कृणुहि सर्ववीरम् ॥१॥**

हे मानिसहरू हो ! तिमीहरू सुखको गौण एवं परम कल्याणलाई प्रधान मान्ने मार्ग अनुसरण गर । यस देवमार्गका मार्गदर्शकहरू देवगुरु बृहस्पतिजस्तै ज्ञानी होऊन् । यस पृथ्वीमा श्रेष्ठ वीर पुरुषहरू उत्पन्न होऊन्, जसले गर्दा शत्रुहरू पर पुगून् र यहाँ शान्ति होस् ।

## १०. स्वस्तिदा पूषा सूक्त

**ऋषि**— उपरिबभ्रव । **देवता**— पूषा । **छन्द**— त्रिष्टुप्, त्रिपदार्षी गायत्री, अनुष्टुप् ।

**प्रपथे पथामजनिष्ट पूषा प्रपथे दिवः प्रपथे पृथिव्याः । उभे अभि प्रियतमे सधस्थे आ च परा च चरति प्रजानन् ॥१॥**

द्युलोकका मार्गमा, अन्तरिक्षका मार्गमा र पृथिवीका मार्गमा पूषादेवता प्रकट हुने गर्दछन् । देवताहरू यी प्रिय स्थानहरूमा प्राणीको दुवै किसिमका कर्मका साक्षी बनेर विचरण गर्दछन् ।

**पूषेमा आशा अनु वेद सर्वाः सो अस्माँ अभयतमेन नेषत् । स्वस्तिदा आघृणिः सर्ववीरोऽप्रयुच्छन् पुर एतु प्रजानन् ॥२॥**

यी पोषणकर्ता देवताले सबै दिशाहरूलाई यथार्थ रूपमा जानेका छन् । यिनै देवताहरूले हामीलाई उत्तम मार्गबाट निर्भयतापूर्वक लिएर जान्छन् । कल्याण गर्ने, तेजस्वी, बलवान्, वीर, कहिल्यै नथाक्ने वा अल्छी नगर्ने देवताहरूले हामीलाई मार्गदर्शन गराउँदै हामी सबैलाई उन्नतिका मार्गमा लिएर जाऊन् ।

**पूषन् तव व्रते वयं न रिष्येम कदा चन । स्तोतारस्त इह स्मसि ॥३॥**

हे पूषादेवताहरू हो ! तिमीहरूको व्रतअनुष्ठानमा रहँदा हामीलाई कहिल्यै कष्ट नहोस् । तिनीहरूको व्रत धारण गर्दै स्तुति गरेर हामी सधैं धन, पुत्र, मित्र आदिले सम्पन्न हुन सकौं ।

**परि पूषा परस्ताद्धस्तं दधातु दक्षिणम् । पुनर्नो नष्टमाजतु सं नष्टेन गमेमहि ॥४॥**

हे पोषणकर्ता पूषादेवताहरू हो ! तिमीहरू आफ्नो दाहिने हातको सहाराले हामीलाई अभय प्रदान गर । हाम्रा जेजति साधन आदि नष्ट भएका छन्, तिनलाई हामी पुनः प्राप्त गर्ने प्रयास गर्नेछौँ । तिमीहरूका कृपाले हामीलाई ती पुनः प्राप्त होऊन् ।

## ११. सरस्वती सूक्त

**ऋषि**– शौनक । **देवता**– सरस्वती । **छन्द**– त्रिष्टुप् ।

**यस्ते स्तनः शशयुर्यो मयोभूर्यः सुम्नयुः सुहवो यः सुदत्रः । येन विश्वा पुष्यसि वार्याणि सरस्वति तमिह धातवे कः ॥१॥**

हे सरस्वती देवी ! तिम्रो दिव्यज्ञानरूपी पय शान्ति प्रदान गर्ने, सुख प्रदान गर्ने, मनलाई पवित्र गराउने, पुष्टि प्रदान गर्ने र प्रार्थनीय छ । हामीलाई पनि त्यो दिव्य पय प्रदान गर ।

## १२. राष्ट्रसभा सूक्त

**ऋषि**– शौनक । **देवता**– सरस्वती । **छन्द**– त्रिष्टुप् ।

**यस्ते पृथु स्तनयित्नुर्य ऋष्वो दैवः केतुर्विश्वमाभूषतीदम् । मा नो वधीर्विद्युता देव सस्यं मोत वधी रश्मिभिः सूर्यस्य ॥१॥**

तिम्रो विशाल, गर्जनशक्ति भएको, समस्त विश्वमा व्याप्त मार्गदर्शक ध्वजाजस्तै यस जगत्लाई भूषित गराउने विद्युत्ले हामी सबैको धान्य आदि खाद्यान्न क्षति नहोस् । सूर्यदेवताका किरणले हाम्रो बालीनाली पुष्ट होस् ।

## १३. सत्रुनाशन सूक्त

**ऋषि**– शौनक । **देवता**– सभा, समिति, पितरगण, इन्द्र, मन । **छन्द**– अनुष्टुप्, भुरिक त्रिष्टुप् ।

**सभा च मा समितिश्चावतां प्रजापतेर्दुहितरौ संविदाने । येना संगच्छा उप मा स शिक्षाच्चारु वदानि पितरः सङ्गतेषु ॥१॥**

सभा र समितिहरू प्रजापतिका लागि पुत्रीजस्तै पालन गर्न योग्य छन् । ती सभा र समितिहरूले राजाको रक्षा गरून् । हे पितृहरू हो ! हामी जोसित परामर्श माग्दछौँ, ती सभासद्हरूले हामीलाई उचित सुझाव प्रदान गरून् । हामीलाई सभामा विवेकसम्मत र नम्रतापूर्वक बोल्न सक्ने खालको सद्बुद्धि तिमीले प्रदान गर ।

**विद्म ते सभे नाम नरिष्टा नाम वा असि । ये ते के च सभासदस्ते मे सन्तु सवाचसः ॥२॥**

हे सभा ! हामीले तिम्रो नाम जानेका छौँ । अरिष्टरहित हुनाले नरिष्टा भन्ने तिम्रो नाम अति उपयुक्त छ । सभाका जुनसुकै सदस्य हाम्रै जस्तो विचार र बोल्ने खालका होऊन् ।

**एषामहं समासीनानां वर्चो विज्ञानमा ददे । अस्याः सर्वस्याः संसदो मामिन्द्र भगिनं कृणु ॥३॥**

सभामा विराजमान यी सबै सभासद्हरूको विशेष ज्ञान र तेजलाई ग्रहण गरेर हामी लाभान्वित होऔँ । इन्द्रदेवताले हामीलाई समस्त सभाका अगाडि नै ऐश्वर्यवान् बनाऊन् ।

**यद् वो मनः परागतं यद् बद्धमिह वेह वा । तद् व आ वर्तयामसि मयि वो रमतां मनः ॥४॥**

हे सभासद्हरू हो ! हामीसित रिसाएका तिमीहरूका मनलाई हामी आफूतिर आकर्षित गर्दछौँ । त्यसैले तिमीहरू सबै सावधान भएर हाम्रो कुरो सुन र त्यसमाथि विचार गर ।

## १४. सविता सूक्त

**ऋषि**– अथर्वा । **देवता**– सूर्य । **छन्द**– अनुष्टुप् ।

**यथा सूर्यो नक्षत्राणामुद्यंस्तेजांस्याददे । एवा स्त्रीणां च पुंसां च द्विषतां वर्च आ ददे ॥१॥**

सूर्यले उदाएपछि ताराहरूको प्रकाशलाई आफ्ना प्रकाशमा गाभेर जसरी तिनलाई क्षीण गराउँछन्,

उसै गरी हामीसित द्वेष गर्ने स्त्रीपुरुषको तेजलाई पनि हामी नष्ट गराउँछौँ ।

**यावन्तो मा सपत्नानामायन्तं प्रतिपश्यथ । उद्यन्त्सूर्य इव सुप्तानां द्विषतां वर्च आ ददे ॥२॥**

सूर्य उदाइसक्दा पनि सुतिरहेका पुरुषको तेज जसरी सूर्यले हरण गर्दछन्, उसै गरी हाम्रो उदयउन्नतिसित डाह गर्ने ती विद्वेषीहरूको तेज हामी पनि हरण गरौँ ।

## १५. सविता सूक्त

**ऋषि**– अथर्वा । **देवता**– सविता । **छन्द**– अनुष्टुप्, त्रिष्टुप्, जगती ।

**अभि त्यं देवं सवितारमोण्योः कविक्रतुम् । अर्चामि सत्यसवं रत्नधामभि प्रियं मतिम् ॥१॥**

द्युलोक र पृथ्वीलोकका रक्षक, समस्त जगत्का उत्पादक, सत्यका प्रेरक, ज्ञानी, जगत्कर्ता रमणीय पदार्थ धारण गर्ने सबैका प्यारा र ध्यान गर्न योग्य सवितादेवतालाई हामी उपासना गर्दछौँ ।

**ऊर्ध्वा यस्यामतिर्भा अदिद्युतत् सवीमनि । हिरण्यपाणिरमिमीत सुक्रतुः कृपात् स्वः ॥२॥**

जसको अपरिमित तेज स्वेच्छापूर्वक माथितिर फैलिँदै जाँदा सबै ठाउँ प्रकाशित हुने गर्दछन्, ती श्रेष्ठ कर्म गर्ने देवता सोम हुन् । उनैका प्रेरणाले सुनौलो किरणबाट स्वर्गलोक उत्पन्न हुन्छ र हामीलाई त्यो लोक प्रदान गर्दछन् । उनै देवतालाई सवितादेवताको रूपमा हामी प्रार्थना गर्दछौँ ।

**सावीर्हि देव प्रथमाय पित्रे वर्ष्माणमस्मै वरिमाणमस्मै । अथास्मभ्यं सवितर्वार्याणि दिवोदिव आ सुवा भूरि पश्वः ॥३॥**

हे सवितादेवता ! तिमीले उहिले नै जन्मिएका मानिसहरूलाई जसरी सबै खालका आवश्यक पदार्थ प्रदान गरेका थियौ, उसै गरी यी पालक यजमानलाई पनि शरीरका रूपमा पुत्रपौत्रादि, श्रेष्ठता र अन्य पशु आदि प्रदान गर ।

**दमूना देवः सविता वरेण्यो दधद् रत्नं दक्षं पितृभ्य आयूंषि । पिबात् सोमं ममददेनमिष्टे परिज्मा चित् क्रमते अस्य धर्मणि ॥४॥**

हे देवता ! तिमी सबैका प्रेरक, सर्वश्रेष्ठ र सबैलाई लक्षित पदार्थ प्रदान गर्ने खालका छौ । उहिलेका मानिसलाई धन एवं आयु प्रदान गरेका हे देवता ! तिमी यो पेलेर तयार पारेको आनन्दप्रद सोम ग्रहण गर । गतिमान् भएर निर्बाध गतिले उनै देवता सर्वत्र सञ्चार गर्दछन् ।

## १६. सविता सूक्त

**ऋषि**– भृगु । **देवता**– सविता । **छन्द**– त्रिष्टुप् ।

**तां सवितः सत्यसवां सुचित्रामाहं वृणे सुमतिं विश्ववाराम् । यामस्य कण्वो अदुहत् प्रपीनां सहस्रधारां महिषो भगाय ॥१॥**

हे सवितादेवता ! हामी सत्यप्रेरक, विलक्षण, सबैलाई रक्षा गर्ने, शोभनीय, उत्तम तथा अनेकौं धाराले युक्त त्यस बुद्धिको याचना गर्दछौँ, जुन बुद्धि कण्व ऋषिले प्राप्त गरेका थिए ।

## १७. सविताप्रार्थना सूक्त

**ऋषि**– भृगु । **देवता**– सविता । **छन्द**– त्रिष्टुप् ।

**बृहस्पते सवितर्वर्धयैनं ज्योतयैनं महते सौभगाय । संशितं चित् सन्तरं सं शिशाधि विश्व एनमनु मदन्तु देवाः ॥१॥**

हे बृहस्पति र सवितादेवता ! व्रत पालन गर्ने यजमानका दोषहरू मेटाएर उनलाई प्रगतिका लागि प्रेरणा प्रदान गर । यी यजमानलाई अन्य श्रेष्ठ व्रतहरू पालन गराएर सौभाग्यशाली बन्नका लागि तिमी जगाऊ । सबै देवताहरूले नै यिनलाई अनुमोदन गरून् ।

## १८. द्रविणार्थप्रार्थना सूक्त

**ऋषि**– भृगु । **देवता**– सविता, पृथिवी, पर्जन्य । **छन्द**– त्रिपादार्षी गायत्री, अनुष्टुप्

त्रिष्टुप् ।

**धाता दधातु नो रयिमीशानो जगतस्पतिः । स नः पूर्णेन यच्छतु ॥१॥**

विश्वलाई धारण गर्ने धातादेवता नै संसारका स्वामी हुन् । समस्त अभिलाषाहरूलाई पूर्ण गराउनमा समर्थ धातादेवताले हामीलाई प्रचुर धन आदि प्रदान गरून् ।

**धाता दधातु दाशुषे प्राचीं जीवातुमक्षिताम् । वयं देवस्य धीमहि सुमतिं विश्वराधसः ॥२॥**

सबै खालका धनका स्वामी धातादेवतालाई श्रेष्ठ बुद्धिले हामी ध्यान गर्दछौँ र प्रसन्न भएर हामीलाई अक्षय जीवनीशक्ति प्रदान गरून् भनेर याचना गर्दछौँ ।

**धाता विश्वा वार्या दधातु प्रजाकामाय दाशुषे दुरोणे । तस्मै देवा अमृतं सं व्ययन्तु विश्वे देवता अदितिः सजोषाः ॥३॥**

सबै खालका धनका स्वामी धातादेवताले यजमानलाई श्रेष्ठ पदार्थ प्रदान गरून् । अदितिदेवी र अन्य देवताहरूका साथमा समस्त देवताले उनलाई अमृत प्रदान गरून् ।

**धाता रातिः सवितेदं जुषन्तां प्रजापतिर्निधिपतिर्नो अग्निः । त्वष्टा विष्णुः प्रजया संरराणो यजमानाय द्रविणं दधातु ॥४॥**

धारक, प्रेरक, कल्याणकर्ता सवितादेवता, प्रजारक्षक, पुरुषार्थयुक्त, प्रकाशरूपी अग्निदेवता, त्वष्टादेवता, विश्वमा व्याप्त विष्णुदेवताले हाम्रो आहुति ग्रहण गरून्, प्रजाका साथमा आनन्दपूर्वक रहने देवताले यजमानलाई धन प्रदान गरून् ।

## १९. वृष्टि सूक्त

**ऋषि–** अथर्वा । **देवता–** पर्जन्य पृथिवी । **छन्द–** चतुष्पदा भुरिक् उष्णिक्, त्रिष्टुप् ।

**प्र नभस्व पृथिवि भिन्द्धी३दं दिव्यं नभः । उद्नो दिव्यस्य नो धातरीशानो वि ष्या दृतिम् ॥१॥**

हे पृथ्वीमाता ! हलोले उचित किसिमले तिमी जोतिएपछि वर्षाको जल उचित किसिमले धारण गर्ने योग्य होऊ । हे पर्जन्य ! तिमी दिव्य मेघद्वारा श्रेष्ठ जलको वर्षा गराऊ ।

**न घ्रंस्तताप न हिमो जघान प्र नभतां पृथिवी जीरदानुः । आपश्चिदस्मै घृतमित् क्षरन्ति यत्र सोमः सदमित् तत्र भद्रम् ॥२॥**

...न आदि औषधिहरू जहाँ हुन्छन् र सोमको पूजा जहाँ हुन्छ, त्यस ठाउँमा सबै किसिमको कल्याण हुन्छ । त्यहाँ हिउँले दुःख दिँदैन, गर्मीले खपिनसक्नु ताप दिँदैन र वर्षा पनि समयमा हुन्छ. त्यसो भएर नै भूमिले समृद्धि प्राप्त गर्दछ ।

## २०. प्रजा सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** धाता, प्रजापति, पुष्टपति । **छन्द–** जगती ।

**प्रजापतिर्जनयति प्रजा इमा धाता दधातु सुमनस्यमानः । संजानानाः संमनसः सयोनयो मयि पुष्टं पुष्टपतिर्दधातु ॥१॥**

...पतिदेवताले पुत्रपौत्रादि प्रजाहरूलाई उत्पन्न गरून् । पोषक धातादेवताले उत्तम मनका ...ऊन् । यसैबाट प्रजाहरू एक मत, एक विचारले युक्त एवं विवेकवान् भएर उद्देश्य प्राप्त ...का लागि कार्य गरून् । पुष्टिका देवताले हामीलाई पुष्टि प्रदान गरून् ।

## २१. अनुमति सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** अनुमति । **छन्द–** अनुष्टुप्, त्रिष्टुप्, भुरिक् अनुष्टुप्, जगती, अति शाक्वरगर्भा जगती ।

**अन्वद्य नोऽनुमतिर्यज्ञं देवेषु मन्यताम् । अग्निश्च हव्यवाहनो भवतां दाशुषे मम ॥१॥**

अनुमति नामकी कर्मकी अभिमानी देवी चन्द्रमाका रूपमा आज हाम्रो अनुकूल भएर हाम्रा यज्ञको ...कारी समस्त देवतासम्म पुऱ्याऊन् । हामीले प्रदान गरेको आहुति अग्निदेवताले पनि सबै

देवताहरूकहाँ पुऱ्याऊन् ।

**अन्विदनुमते त्वं मंससे शं च नस्कृधि । जुषस्व हव्यमाहुतं प्रजां देवि रास्व नः ॥२॥**

हे अनुमति नामकी देवी ! हामीलाई तिमी कल्याण गर्ने कार्य गर्नका लागि सुबुद्धि प्रदान गर । अग्निमा अर्पित गरिएको हवि तिमी ग्रहण गर र हामीलाई श्रेष्ठ प्रजा प्रदान गर ।

**अनु मन्यतामनुमन्यमानः प्रजावन्तं रयिमक्षीयमाणम् । तस्य वयं हेडसि मापि भूम सुमृडीके अस्य सुमतौ स्याम ॥३॥**

हे अनुमन्ता नामका देवता ! हामीसित तिमी नरिसाऊ बरु सुखदायक बुद्धिले हामीलाई पुत्रादि एवं अक्षय धन प्रदान गर्ने अनुग्रह गर ।

**यत् ते नाम सुहवं सुप्रणीतेऽनुमते अनुमतं सुदानु । तेना नो यज्ञं पिपृहि विश्ववारे रयिं नो धेहि सुभगे सुवीरम् ॥४॥**

हे धनदात्री अनुमति देवी ! उत्तम नीति भएकी, आह्वान गर्न योग्य, अभिलाषा गरेको फल प्रदान गर्ने भएर तिमी हाम्रा यज्ञमा आऊ र यज्ञलाई पूर्ण गराऊ । हे वरण गर्न योग्य सौभाग्यशालिनी देवी ! हामीलाई तिमी उत्तम वीरहरूका साथै श्रेष्ठ धन प्रदान गर ।

**एमं यज्ञमनुमतिर्जगाम सुक्षेत्रतायै सुवीरतायै सुजातम् । भद्रा ह्यस्याः प्रमतिर्बभूव सेमं यज्ञमवतु देवगोपा ॥५॥**

हे अनुमति देवी ! हाम्रो यस विधिवत् सम्पन्न हुने यज्ञलाई रक्षा गर्दै सुक्षेत्र, पुत्र आदि फल प्रदान गर्नका लागि तिमी यहाँ आऊ । हे देवी ! तिम्रा कृपाले नै श्रेष्ठ कार्यहरू गर्नका लागि प्रेरणा प्राप्त हुने गर्दछ ।

**अनुमतिः सर्वमिदं बभूव यत् तिष्ठति चरति यदु च विश्वमेजति । तस्यास्ते देवि सुमतौ स्यामानुमते अनु हि मंससे नः ॥६॥**

हे अनुमति देवी ! यस चराचर जगत्मा बुद्धि नपुऱ्याईकन काम गर्नेहरू र बुद्धि पुऱ्याएर काम गर्नेहरूमा अनुमतिका रूपमा व्याप्त भएर तिमी हाम्रा बुद्धिलाई सन्मार्गतर्फ प्रेरित गर ।

## २२. एको विभुः सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** आत्मा । **छन्द–** पराशक्वरी विराट् गर्भा जगती ।

**समेत विश्वे वचसा पतिं दिव एको विभूरतिथिर्जनानाम् । स पूर्व्यो नूतनमाविवासत् तं वर्तनिरनु वावृत एकमित् पुरु ॥१॥**

हे बन्धुहरू हो ! तिमीहरू सबैले द्युलोकका स्वामी सूर्यदेवताको स्तुति गर । यी देवता नवजात प्राणीहरूका प्रधान स्वामी हुन् र अतिथिजस्तै पूजनीय पनि छन् । यी सनातन सूर्यदेवता यस नवजात शिशुका पिताजस्तै भएर आफ्नो ठान्दै यसमाथि कृपा गरून् । अनेकौं सन्मार्गका सञ्चालक यिनै देवता हुन् ।

## २३. ज्योति सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** ब्रध्न, उषा । **छन्द–** द्विपदा एकावसाना विराड् गायत्री, त्रिपदा अनुष्टुप् ।

**अयं सहस्रमा नो दृशे कवीनां मतिर्ज्योतिर्विधर्मणि ॥१॥**

सबैमा आत्माका रूपले यिनै देवता व्याप्त भएका छन् । यी सवितादेवताले हामीलाई हजारौं वर्षसम्म स्वस्थ जीवन निर्वाह गर्ने शक्ति प्रदान गरून् । ज्ञानीहरूले सम्मान गर्ने, अनेकौं सन्मार्गका सञ्चालक, उत्तम बुद्धि एवं ज्योतिका रूपमा स्थित भएका यी देवताले हामीलाई सत्कर्ममा प्रेरित गरेर आयु प्रदान गरून् ।

**ब्रध्नः समीचीरुषसः समैरयन् । अरेपसः सचेतसः स्वसरे मन्युमत्तमाश्चिते गोः ॥२॥**

ज्ञानदायिनी, पापनाशिनी, तेजस्वी उषाहरूले हामीलाई महान् सवितादेवतातर्फ प्रेरित गरून् ।

## २४. दुष्वप्ननाशन सूक्त

**ऋषि**– यम । **देवता**– दुष्वप्ननाशन । **छन्द**– अनुष्टुप् ।

**दौष्वप्न्यं दौर्जीवित्यं रक्षौ अभ्वमराय्यः । दुर्णाम्नीः सर्वा दुर्वाचस्ता अस्मन्नाशयामसि ॥१॥**

दुःस्वप्न आउनु, जीवन दुःखी हुनु, हिंस्रकहरूको उपद्रवमा पर्नु, दरिद्रताले सताउनु, विपद्आपद्को डर हुनु, बदनामी भएर चिनिनु र अन्य यस्तै सबै खालका दुष्ट भाषण आदि दोषहरूलाई हामी निष्कासन गर्दछौँ ।

## २५. सविता सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– सविता । **छन्द**– त्रिष्टुप् ।

**यत्र इन्द्रो अखनद् यदग्निर्विश्वे देवा मरुतो यत् स्वर्काः । तदस्मभ्यं सविता सत्यधर्मा प्रजापतिरनुमतिर्नि यच्छात् ॥१॥**

इन्द्रदेवता, अग्निदेवता, विश्वेदेवता र मरुत्गण आदिले जुन फल दिन्छन्, त्यही फल हामीलाई सत्यधर्मा प्रजापति, अनुमति देवी र सूर्यदेवताले प्रदान गरून् ।

## २६. विष्णु सूक्त

**ऋषि**– मेधातिथि । **देवता**– विष्णु । **छन्द**– त्रिष्टुप् ।

**ययोरोजसा स्कभिता रजांसि यौ वीर्यैर्वीरतमा शविष्ठा । यौ पत्येते अप्रतीतौ सहोभिर्विष्णुमगन् वरुणं पूर्वहूतिः ॥१॥**

जसका बलमा सबै खालका लोकहरू स्थिर रहेका छन्, जो अत्यन्त वीर र शूर छन्, जो आफ्ना बलपूर्ण चेष्टाका कारण अगाडि बढिरहेका छन्, उनै विष्णु र वरुण नामका दुई देवतालाई यी होताहरूले हवि प्रदान गर्दछन् ।

**यस्येदं प्रदिशि यद् विरोचते प्र चनाति वि च चष्टे शचीभिः । पुरा देवस्य धर्मणा सहोभिर्विष्णुमगन् वरुणं पूर्वहूतिः ॥२॥**

जसका आज्ञाले समस्त जगत् प्रकाशित भइरहेका छन्, उत्तम रीतिले प्राण धारण गरेका छन् र आफ्नो धर्मकर्तव्य, बल र शक्तिलाई उनले देखेका छन्, उनै विष्णु एवं वरुणदेवतालाई सर्वप्रथम बोलाएर हामी हवि अर्पित गर्दछौँ ।

## २७. विष्णु सूक्त

**ऋषि**– मेधातिथि । **देवता**– विष्णु । **छन्द**– त्रिष्टुप् त्रिपदा विराड् गायत्री, त्र्यवसाना षट्पदा विराट् शक्वरी, गायत्री ।

**विष्णोर्नु कं प्रा वोर्च वीर्याणि यः पार्थिवानि विममे रजांसि । यो अस्कभायदुत्तरं सधस्थं विचक्रमाणस्त्रेधोरुगायः ॥१॥**

...नो सर्वव्यापक विष्णुका सुखवर्द्धक पुरुषार्थको बयान गर्दछौँ । यिनैले धेरै किसिमले प्रशंसा ...एका पृथ्वीलोक, स्वर्गलोक र अन्तरिक्षलोकलाई तीन पाउले शोभनीय रचना गरे र सर्वश्रेष्ठ ...कमा आफूलाई स्थापित गराए ।

**प्र तद् विष्णु स्तवते वीर्याणि मृगो न भीमः कुचरो गिरिष्ठाः । परावत आ जगम्यात् परस्याः ॥२॥**

...न् विष्णुको गुणगान गर्नाले उनका दिव्य पराक्रमको दर्शन हुन्छ । जसरी विशालकाय सिंह ...को गुफा आदि सबै ठाउँमा विचरण गर्दै अतिशीघ्र कहाँबाट कहाँसम्म पुग्दछ, उसै गरी स्मरण ... गर्नाले पनि जतिसुकै टाढा रहेका भए पनि विष्णुदेवता नजिक आउने गर्दछन् ।

**यस्योरुषु त्रिषु विक्रमणेष्वधिक्षियन्ति भुवनानि विश्वा । उरु विष्णो वि क्रमस्वोरु क्षयाय नस्कृधि । घृतं घृतयोने पिब प्रप्र यज्ञपतिं तिर ॥३॥**

...सर्वशक्तिमान् ! तिमी तीनै लोकमा विचरण गर्दछौ । समस्त भुवनहरू नै तिम्रा निवास हुन् । ...देवता ! हामीलाई तिमी साधनसम्पन्न निवास देऊ । हे अग्निका रूपमा रहेका विष्णुदेवता !

यस यज्ञमा अर्पण गरिएको घिउ ग्रहण गरेर प्रसन्न हुँदै तिमी यजमानलाई समृद्धि प्रदान गर ।

**इदं विष्णुर्वि चक्रमे त्रेधा नि दधे पदा । समूढमस्य पांसुरे ॥४॥**

सर्वव्यापक विष्णुदेवता यस संसारमा विचरण गरिरहेका छन् । उनले आफ्ना पाउ तीन किसिमले राखे । यी पाउमा तीनै वटा लोक अटाएका छन् ।

**त्रीणि पदा वि चक्रमे विष्णुर्गोपा अदाभ्यः । इतो धर्माणि धारयन् ॥५॥**

अर्काको प्रभावमा नपर्ने, रक्षक, सर्वत्र व्यापक विष्णुभगवान्ले तीन पाउलाई यस संसारमा राखेका छन् र तीनै लोकलाई धर्मसहित धारण गरेका छन् ।

**विष्णोः कर्माणि पश्यत यतो व्रतानि पस्पशे । इन्द्रस्य युज्यः सखा ॥६॥**

हे मानिसहरू हो ! तिमीहरू सबैले सर्वव्यापक विष्णुभगवान्को कार्य हेर । जहाँबाट यिनले सबै खालका गुणधर्महरूको निरीक्षण गर्दछन्, ती इन्द्रदेवता नै सबैभन्दा असल मित्र हुन् ।

**तद् विष्णोः परमं पदं सदा पश्यन्ति सूरयः । दिवीव चक्षुराततम् ॥७॥**

बुद्धिमान्, ज्ञानीहरू भगवान् विष्णुका परम धामको प्रत्यक्ष दर्शन उसै किसिमले गर्दछन्, जसरी द्युलोकमा रहेका चक्षुरूप सूर्यदेवताले सबैलाई देखिरहेका हुन्छन् ।

**दिवो विष्ण उत वा पृथिव्या महो विष्ण उरोरन्तरिक्षात् । हस्तौ पृणस्व बहुभिर्वसव्यैराप्रयच्छ दक्षिणादोत सव्यात् ॥८॥**

हे विष्णुदेवता ! द्युलोक, भूलोक र विस्तृत अन्तरिक्षबाट प्रचुर साधन तिमी आफ्ना दुवै हातमा भरेर हामी सबैलाई प्रदान गर ।

## २८. इडा सूक्त

**ऋषि**— मेधातिथि । **देवता**— इडा । **छन्द**— त्रिष्टुप् ।

**इडैवास्माँ अनु वस्तां व्रतेन यस्याः पदे पुनते देवयन्तः । घृतपदी शक्वरी सोमपृष्ठोप यज्ञमस्थित वैश्वदेवी ॥१॥**

जुन धेनुका चरणमा देवताको जस्तै आचरण गर्ने यजमानहरू पवित्र हुने गरेका छन्, उनै सोमपृष्ठा, फलदायी, सामर्थ्यशाली, घृतपादी, सबै देवताहरूसित सम्बन्धी इडा नामकी वाणीले हाम्रा यस यज्ञलाई सर्वत्र प्रकाशित गरून् । जसो गर्दा हाम्रा कर्महरू श्रेष्ठ फलदायी हुन्छन् यी धेनुले त्यस्तै गरिदिऊन् ।

## २९. स्वस्ति सूक्त

**ऋषि**— मेधातिथि । **देवता**— वेद । **छन्द**— त्रिष्टुप् ।

**वेदः स्वस्तिर्द्रुघणः स्वस्तिः परशुर्वेदिः परशुर्नः स्वस्ति । हविष्कृतो यज्ञिया यज्ञकामास्ते देवासो यज्ञमिमं जुषन्ताम् ॥१॥**

वेदरूपी दर्भसमूह हाम्रा निम्ति कल्याणकारी होस् । दाउरा काट्ने बन्चरो, घाँस काट्ने हँसिया, गँडासा, फर्सा आदि सबै सुधारका हतियारहरू हाम्रा निम्ति कल्याणकारी होऊन् । यी सबैले हवि तयार गर्ने, यजन गर्ने आदि यजमानहरूलाई सहयोग गरून् ।

## ३०. अग्नाविष्णू सूक्त

**ऋषि**— मेधातिथि । **देवता**— अग्नाविष्णु । **छन्द**— त्रिष्टुप् ।

**अग्नाविष्णू महि तद् वां महित्वं पाथो घृतस्य गुह्यस्य नाम । दमेदमे सप्त रत्ना दधानौ प्रति वां जिह्वा घृतमा चरण्यात् ॥१॥**

हे अग्निदेवता र विष्णुभगवान् ! एकै ठाउँमा निवास गर्ने तिमीहरू दुवै देवताहरूको महिमा ज्यादै ठूलो छ । तिमीहरू दुवै गोप्य रूपमा रहेर घिउको पान गर्दछौ । तिमीहरू यजमानका घरमा सात रत्नहरू धारण गर्दछौ । तिमीहरू दुवैको दिव्य जिह्वाले होम गरिएका घिउको रस आस्वादन गरोस् ।

**अग्नाविष्णू महि धाम प्रियं वां वीथो घृतस्य गुह्य जुषाणौ । दमेदमे सुष्टुत्या वावृधानौ प्रति वां जिह्वा घृतमुच्चरण्यात् ॥२॥**

हे अग्निदेवता र विष्णुभगवान् ! तिमीहरू दुवैको स्थान अति प्रिय छ । तिमीहरू दुवै गोप्य रूपमा रहेर रसपान गर्दछौ । तिमीहरू सबै घरमा स्तुतिले उन्नति गर्दछौ । तिमीहरू दुवैका जिब्राले गोप्य रूपमा घिउको रस आस्वादन गरोस् ।

## ३१. अञ्जन सूक्त

**ऋषि**– भृग्वङ्गिरा । **देवता**– द्यावापृथिवी, मित्र, ब्रह्मणस्पति । **छन्द**– बृहती ।

**स्वाक्तं मे द्यावापृथिवी स्वाक्तं मित्रो अकरयम् । स्वाक्तं मे ब्रह्मणस्पतिः स्वाक्तं सविता करत् ॥१॥**

द्यावापृथिवी, सूर्यदेवता, ब्रह्मणस्पतिदेवता, सवितादेवता यी सबै देवताहरू हाम्रा आँखाको स्वस्थताको लागि कृपा गरेर हामीलाई अञ्जन प्रदान गरून् ।

## ३२. शत्रुनाशन सूक्त

**ऋषि**– भृग्वङ्गिरा । **देवता**– इन्द्र । **छन्द**– भुरिक् त्रिष्टुप् ।

**इन्द्रोतिभिर्बहुलाभिर्नो अद्य यावच्छ्रेष्ठाभिर्मघवञ्छूर जिन्व । यो नो द्वेष्ट्यधरः सस्पदीष्ट यमु द्विष्मस्तमु प्राणो जहातु ॥१॥**

हे इन्द्रदेवता ! तिमी अनेकौं रक्षासाधनले हाम्रो रक्षा गर । हे धनवान्, पराक्रमी वीर ! हामीसित डाह गर्नेहरूको पतन होस् र हाम्रा शत्रुहरू सबै नाश होऊन् ।

## ३३. दीर्घायु सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– आयु । **छन्द**– अनुष्टुप् ।

**उप प्रियं पनिप्नतं युवानमाहुतीवृधम् । अगन्म बिभ्रतो नमो दीर्घमायुः कृणोतु मे ॥१॥**

हामी उनै अग्निदेवताका नजिक हवि र अन्न लिएर जान्छौं, जो सर्वप्रिय तथा स्तुति गर्न योग्य युवा छन् । नम्रतापूर्वक प्रदान गरिएको आहुतिले प्रसन्न भएर उनले हामीलाई दीर्घायु प्रदान गरून् ।

## ३४. दीर्घायु सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– मरुद्गण, पूषा, बृहस्पति । **छन्द**– पथ्यापङ्क्ति ।

**सं मा सिञ्चन्तु मरुतः सं पूषा सं बृहस्पतिः । सं मायमग्निः सिञ्चतु प्रजया च धनेन च दीर्घमायुः कृणोतु मे ॥१॥**

मरुत्देवताले हामीलाई धनसहित प्रजा प्रदान गरून् । ब्रह्मणस्पति, अग्नि र पूषा आदि देवताले हामीलाई श्रेष्ठ सन्तान र धन आदिसहित दीर्घायु प्रदान गरून् ।

## ३५. शत्रुनाशन सूक्त

**ऋषि**– अथर्वा । **देवता**– जातवेदा । **छन्द**– जगती ।

**अग्ने जातान् प्र णुदा मे सपत्नान् प्रत्यजाताञ्जातवेदो नुदस्व । अधस्पदं कृणुष्व ये पृतन्यवोऽनागसस्ते वयमदितये स्याम ॥१॥**

हे अग्निदेवता ! हाम्रा शत्रुलाई तिमी विनाश गर । हे जातवेदा अग्निदेवता ! भविष्यमा हुने हाम्रा शत्रुलाई तिमी नाश गर । हामीसित युद्ध गर्नका लागि तयार हुनेहरूलाई पतन गराऊ । तिम्रा कृपाले हामी रिसराग र पापरहित हुन सकौं; कहिल्यै दुःखी हुनु नपरोस् ।

## ३६. सपत्नीनाशन सूक्त

**ऋषि**– अथर्वा । **देवता**– जातवेदा । **छन्द**– अनुष्टुप्, त्रिष्टुप् ।

**प्रान्यान्त्सपत्नान्त्सहसा सहस्व प्रत्यजाताञ्जातवेदो नुदस्व । इदं राष्ट्रं पिपृहि सौभगाय विश्व एनमनु मदन्तु देवाः ॥१॥**

हे जातवेद अग्निदेवता ! हामीसित उल्टो व्यवहार गर्ने शत्रुहरूलाई तिमी विनाश गरिदेऊ । प्रकट

नभएका वा भविष्यमा प्रकट हुन सक्ने शत्रुलाई विनाश गर । यस राष्ट्रलाई समृद्धिशाली एवं सौभाग्यशाली बनाऊ । समस्त देवताहरूले यस कुरालाई समर्थन गरून् ।

**इमा यास्ते शतं हिराः सहस्रं धमनीरुत । तासां ते सर्वासामहमश्मना बिलमप्यधाम् ॥२॥**

हे स्त्री ! हामी तिम्रा सयौँ नाडी र हजारौँ धमनीहरूको मुख ढुङ्गाले थुनिदिन्छौँ ।

**परं योनेरवरं ते कृणोमी मा त्वा प्रजाभि भून्मोत सूनुः । अस्वं१ त्वाप्रजसं कृणोम्यश्मानं ते अपिधानं कृणोमि ॥३॥**

तिम्रो गर्भस्थानभन्दा पर जुन कुरो छ, त्यसलाई हामी नजिक ल्याउँछौँ । यसबाट तिमीलाई प्राणवान् सन्तान प्राप्त हुनेछ । ढुङ्गालाई बिर्कोका रूपमा राख्दछौँ ।

## ३७. अञ्जन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** अक्षि । **छन्द–** अनुष्टुप् ।

**अक्ष्यौ नौ मधुसंकाशे अनीकं नौ समञ्जनम् । अन्तः कृणुष्व मां हृदि मन इन्नौ सहासति ॥१॥**

हे पत्नी ! हामी दुवैका परस्पर आँखामा मधुर स्नेहको भाव होस् । नेत्रमा पवित्र अञ्जन रहोस् । हाम्रो मन र हृदयमा एक समानको भावना रहोस् ।

## ३८. वास सूक्त

**ऋषि–** अथर्वा । **देवता–** वास । **छन्द–** अनुष्टुप् ।

**अभित्वा मनुजातेन दधामि मम वाससा । यथासो मम केवलो नान्यासां कीर्तयाश्चन ॥१॥**

हे स्वामी ! तिमी सधैँ मेरै भइराख । मैले मन लगाएर जुन वस्त्र तयार गरेकी छु, त्यो तिमीलाई अर्पित गर्दछु र स्नेहको वशमा पारेर अरूतिर जानबाट रोक्दछु ।

## ३९. केवलपति सूक्त

**ऋषि–** अथर्वा । **देवता–** आसुरीवनस्पति । **छन्द–** अनुष्टुप्, चतुष्पदा उष्णिक् ।

**इदं खनामि भेषजं मां पश्यमभिरोरुदम् । परायतो निवर्तनमायतः प्रतिनन्दनम् ॥१॥**

म यो औषधि खन्दछु । यो औषधि पतिलाई अनुकूल बनाउनमा समर्थ छ । यसले पतिलाई अन्यत्र भड्किनबाट रोक्नेछ । यसले दाम्पत्य जीवन आनन्दसाथ व्यतीत हुनेछ ।

**येना निचक्र आसुरिन्द्रं देवेभ्यस्परि । तेना नि कुर्वे त्वामहं यथा तेऽसानि सुप्रिया ॥२॥**

आसुरी नामको यो औषधि अथवा पदार्थका शक्तिले इन्द्रदेवता समस्त देवताहरूमा अधिक प्रभावशाली बनेका छन् । यसै औषधिले म आफ्ना पतिलाई अधिक प्रभावशाली बनाएर उनैकी सहधर्मिणी बन्दै प्रगति गर्न सकूँ ।

**प्रतीची सोममसि प्रतीच्युत सूर्यम् । प्रतीची विश्वान् देवान् तां त्वाच्छावदामसि ॥३॥**

हे शङ्खपुष्पी नामका औषधि ! सोम, सूर्य आदि समस्त देवताहरूलाई नै अगाडि ल्याउनका लागि तिम्रा सहयोगको अपेक्षा गर्दछु ।

**अहं वदामि नेत् त्वं सभायामह त्वं वद । ममेदसस्त्वं केवलो नान्यासां कीर्तयाश्चन ॥४॥**

हे स्वामी ! सभामा तिमी नै बोले पनि बोल तर घरमा म पनि बोल्दछु र त्यो सुनेर तिमीले समर्थन गर्नुपर्दछ । तिमी सधैँ मेरै हौ, अरूको नाम पनि नलेऊ ।

**यदि वासि तिरोजनं यदि वा नद्यस्तिरः । इयं मह्यं त्वामोषधिर्बद्ध्वेव न्यानयत् ॥५॥**

हे स्वामी ! तिमीले यदि कुनै वनमा जानुपर्‍यो वा नदी तर्नुपर्‍यो भने पनि यस औषधिले तानेर तिमीलाई मेरै अगाडि ल्याओस् ।

## ४०. आपः सूक्त

**ऋषि**– प्रस्कण्व । **देवता**– सुपर्ण, वृषभ । **छन्द**– त्रिष्टुप् ।

**दिव्यं सुपर्णं पयसं बृहन्तमपां गर्भं वृषभमोषधीनाम् । अभीपतो वृष्ट्या तर्पयन्तमा नो गोष्ठे रयिष्ठां स्थापयाति ॥१॥**

ओषधिहरूलाई बढाउने, जलका बीचमा विश्वलाई तृप्त गराउने, शोभन मन भएका, वर्षाले प्राणीहरूलाई सन्तुष्ट गराउने सरस्वान् नामका देवतालाई इन्द्रदेवताले हाम्रा गोठमा स्थापित गराऊन् ।

## ४१. सरस्वान् सूक्त

**ऋषि**– प्रस्कण्व । **देवता**– सरस्वान् । **छन्द**– त्रिष्टुप्, भूरिक् त्रिष्टुप् ।

**यस्य व्रतं पशवो यन्ति सर्वे यस्य व्रत उपतिष्ठिन्त आपः । यस्य व्रते पुष्टपतिर्निविष्टस्तं सरस्वन्तमवसे हवामहे ॥१॥**

जुन सरस्वान् नामका देवताका कर्मलाई समस्त पशुप्राणीहरूले अनुगमन गर्दछन् र सबैतिरको जल आफसमा मिसिन्छ, वृष्टि र पुष्टि जसका अधीनमा छन्, जसका कर्मले सबै वस्तुहरूका पोषणकर्ता पनि निर्देशित छन् र रक्षा एवं तृप्तिका लागि हामी उनै सरस्वान् नामका देवतालाई आह्वान गर्दछौँ ।

**आ प्रत्यञ्चं दाशुषे दाश्वंसं सरस्वन्तं पुष्टपतिं रयिष्ठाम् । रायस्पोषं श्रवस्युं वसाना इह हुवेम सदनं रयीणाम् ॥२॥**

पुष्टिका स्वामी, धनका स्थानमा स्वामी बनेर रहेका, यजमानलाई अन्न प्रदान गर्ने इच्छा भएका दाता हविदातासित प्रसन्न होऊन् । उनै कामना पूरा गराउने सरस्वान्का अगाडि उभिएर हामीहरू हवि प्रदान गर्दै सेवा गर्नका लागि उनलाई बोलाउँछौँ ।

## ४२. सुपर्ण सूक्त

**ऋषि**– प्रस्कण्व । **देवता**– श्येन । **छन्द**– जगती, त्रिष्टुप् ।

**अति धन्वान्यत्यपस्ततर्द श्येनो नृचक्षा अवसानदर्शः । तरन् विश्वान्यवरा रजांसीन्द्रेण सख्या शिव आ जगम्यात् ॥१॥**

सब प्राणीका कर्मको साक्षी, प्रशंसनीय गति भएका, अनन्त द्युलोकमा देखिने गरेका, मरुस्थलमा वेगपूर्वक जलको वर्षा गराउने सूर्यदेवता आफ्ना मित्र इन्द्रदेवतालाई द्युलोकबाट तल्लो लोकमा अतिक्रमण गरेर हाम्रो नवीन घर बनाउने स्थानमा लिएर आऊन् ।

**श्येनो नृचक्षा दिव्यः सुपर्णः सहस्रपाच्छतयोनिर्वयोधाः । स नो नि यच्छाद् वसु यत् पराभृतमस्माकमस्तु पितृषु स्वधावत् ॥२॥**

हजार किरण भएका, अपरिमित कर्मफल भएका, सुन्दर गति भएका, अन्नलाई धारण गर्ने सूर्यदेवताले हामीलाई चिरस्थायी बनाऊन् । हामीले अर्पण गरेको धन अथवा हवि पितृहरूका लागि स्वधाका रूपमा सन्तुष्टिदायक होस् ।

## ४३. पापमोचन सूक्त

**ऋषि**– प्रस्कण्व । **देवता**– सोमारुद्र । **छन्द**– त्रिष्टुप् ।

**सोमारुद्रा वि वृहतं विषूचीममीवा या नो गयमाविवेश । बाधेथां दूरं निर्ऋतिं पराचैः कृतं चिदेनः प्र मुमुक्तमस्मत् ॥१॥**

हे सोम र रुद्रदेवता ! तिमीहरू हाम्रा घरबाट विषूचिका र अमिवा नामका रोगहरूलाई नष्ट गर । हामीले गरेका पाप र रोगको गुँड बनेकी पिशाचिनीलाई पर लगेर नष्ट गराओ ।

**सोमारुद्रा युवमेतान्यस्मद् विश्वा तनूषु भेषजानि धत्तम् । अव स्यतं मुञ्चतं यन्नो असत् तनूषु बद्धं कृतमेनो अस्मत् ॥२॥**

हे सोम र रुद्रका गणहरू हो ! तिमीहरू हाम्रा शरीरमा रोगनाशक औषधि स्थापित गराओ र हाम्रा

शरीरमा व्याप्त पापलाई हामीदेखि अलग गरेर उनलाई नष्ट गर ।

## ४४. वाक् सूक्त

**ऋषि**– प्रस्कण्व । **देवता**– वाक् । **छन्द**– त्रिष्टुप् ।

**शिवास्त एका अशिवास्त एकाः सर्वा बिभर्षि सुमनस्यमानः । तिस्रो वाचो निहिता अन्तरस्मिन् तासामेका वि पपातानु घोषम् ॥१॥**

हे वाक्देवता ! तिम्रा कुनै शब्द कल्याणकारी र कुनै अकल्याणकारी अशुभ हुने गर्दछन् । श्रेष्ठ मन भएका, तिमीले दुवै खालका वाणी धारण गर । उच्चारण गर्नेका भित्रपट्टि परा, पश्यन्ती र मध्यमा गरी वाणीका तीन भाग या किसिम हुने गर्दछन् तर श्रोतासित भने बैखरी नामको चौथो भाग बनेर पुगेको हुन्छ ।

## ४५. इन्द्रविष्णू सूक्त

**ऋषि**– प्रस्कण्व । **देवता**– इन्द्र, विष्णु । **छन्द**– भुरिक् त्रिष्टुप् ।

**उभा जिग्यथुर्न परा जयेथे न परा जिग्ये कतरश्चनैनयोः । इन्द्रश्च विष्णो यदपस्पृधेथां त्रेधा सहस्रं वि तदैरयेथाम् ॥१॥**

हे इन्द्रदेवता र विष्णुदेवता ! तिमीहरू दुवै अजेय छौ । तिमीहरूमध्ये एउटै पनि कहिल्यै पराजित भएका छैनौ । हे देवताहरू हो ! जब तिमीहरू दुवै स्पर्धा गर्दै युद्ध गर्दछौ, त्यस बेला हजारौँ शत्रुलाई तीन किसिमले पराजित गराउँछौ र इच्छित वस्तुका रूपमा लोक, वेद या वाणीलाई आफ्ना वशमा गर्दछौ ।

## ४६. ईर्ष्यानिवारण सूक्त

**ऋषि**– प्रस्कण्व । **देवता**– भेषज । **छन्द**– अनुष्टुप् ।

**जनाद् विश्वजनीनात् सिन्धुतस्पर्याभृतम् । दूरात् त्वा मन्य उद्भृतमीर्ष्याया नाम भेषजम् ॥१॥**

सम्पूर्ण मानवका लागि हितकारी जनपद वा समुद्रबाट अथवा पर कतैबाट ल्याइएको औषधिले ईर्ष्या तथा क्रोध हटाउन सकोस् ।

## ४७. ईर्ष्यानिवारण सूक्त

**ऋषि**– प्रस्कण्व । **देवता**– ईर्ष्यापनयन । **छन्द**– अनुष्टुप् ।

**अग्नेरिवास्य दहतो दावस्य दहतः पृथक् । एतामेतस्येर्ष्यामुद्नाग्निमिव शमय ॥१॥**

हे ईर्ष्या निवारण गर्ने देवता ! तिमी अग्निदेवताले जस्तै हाम्रा सबै कार्यहरूलाई भस्म गराउ… ईर्ष्यालु पुरुषका ईर्ष्यालाई पनि उसै किसिमले शान्त गर, जसरी जल खन्याएर अग्निलाई शान्… पार्ने गरिन्छ ।

## ४८. सिनीवाली सूक्त

**ऋषि**– अथर्वा । **देवता**– सिनीवाली । **छन्द**– अनुष्टुप्, त्रिष्टुप् ।

**सिनीवालि पृथुष्टुके या देवानामसि स्वसा । जुषस्व हव्यमाहुतं प्रजां देवि दिदिड्ढि नः ॥१॥**

हे सिनीवाली ! तिमी धेरै तिरबाट स्तुति गर्न योग्य छ्यौ । तिमी देवताहरूकी बहिनीजस्तै छ… यस्तो महान् गुणले सम्पन्न हे देवी ! हामीले प्रदान गरेको हवि तिमी ग्रहण गर र प्रसन्न भएर … आदि प्रजा हामीलाई प्रदान गर ।

**या सुबाहुः स्वङ्गुरिः सुषूमा बहुसूवरी । तस्यै विश्पत्न्यै हविः सिनीवाल्यै जुहोतन ॥२॥**

हे ऋत्विक् र यजमानहरू हो ! सुन्दर बाहु, सुन्दर औँला र शरीरका अङ्गको गठन सुन्दर भएक… सिनीवाली नामकी जुन देवी छिन्, तिनले उत्तम सन्तान प्रदान गर्दछिन्, तिमीहरू सबैले उनला… हवि अर्पित गर ।

**यो विश्पत्नीन्द्रमसि प्रतीची सहस्रस्तुकाभियन्ती देवी । विष्णोः पत्नि तुभ्यं राता हवींषिपतिं देवि राधसे चोदयस्व ॥३॥**

प्रजा तथा सन्तानलाई पालनपोषण गर्ने हे सिनीवाली नामकी देवी ! तिमी परम ऐश्वर्यले सम्पन्न इन्द्रदेवताका सामु जाने गर्दछ्यौ र उनको पूजा गर्दछ्यौ । हजारौँले स्तुति गर्ने व्यापनशील नामका देवताकी पत्नी भनेर चिनिएकी हे देवी ! तिमीलाई हामी हवि अर्पित गर्दछौँ, तिमी प्रसन्न भएर आफ्ना पति इन्द्रदेवताबाट हामीलाई धन प्राप्त गराऊ ।

## ४९. कुहू सूक्त

**ऋषि–** अथर्वा । **देवता–** कुहू । **छन्द–** जगती त्रिष्टुप् ।

**कुहूं देवीं सुकृतं विद्मनापसमस्मिन् यज्ञे सुहवा जोहवीमि । सा नो रयिं विश्ववारं नि यच्छाद् ददातु वीरं शतदायमुक्थ्यम् ॥१॥**

उत्तम कर्म भएकी, ज्ञानपूर्वक कर्म गर्ने र स्तुति गर्न योग्य कुहू नामकी देवी छिन् । यस्ती दिव्य शक्तिले सम्पन्न देवीलाई हामी यस यज्ञमा आह्वान गर्दछौँ । उनले प्रसन्न भएर हामीलाई श्रेष्ठ धन र सयौँ किसिमले दान गर्ने खालका वीर पुत्र प्रदान गरून् ।

**कुहूर्देवानाममृतस्य पत्नी हव्या नो अस्य हविषो जुषेत । शृणोतु यज्ञमुशती नो अद्य रायस्पोषं चिकितुषी दधातु ॥२॥**

देवताहरूमा जो अमृतका नामले चिनिएका छन्, उनलाई पत्नीका रूपमा पालन गर्ने कुहू नामकी देवी हुन् । ती आह्वान गर्न योग्य देवी हाम्रा यस यज्ञमा आएर हवि ग्रहण गरून् र हामीलाई धन आदिले पुष्ट गराऊन् ।

## ५०. राका सूक्त

**ऋषि–** अथर्वा । **देवता–** राका । **छन्द–** जगती ।

**राकामहं सुहवा सुष्टुती हुवे शृणोतु नः सुभगा बोधतु त्मना । सीव्यत्वपः सूच्याच्छिद्यमानया ददातु वीरं शतदायमुक्थ्यम् ॥१॥**

पूर्ण चन्द्रमाको जस्तै आनन्द प्रदान गर्ने, स्तुति गर्न योग्य उनै देवीलाई हामी उचित किसिमले आह्वान गर्दछौँ । ती सौभाग्यशालिनी देवीले आफ्नो सियो र सिउने कलाको दिव्य प्रभावले हामीलाई सयौँ किसिमका दान दिनका लागि समर्थ यशस्वी र वीर पुत्र प्रदान गरून् ।

**यास्ते राके सुमतयः सुपेशसो याभिर्ददासि दाशुषे वसूनि । ताभिर्नो अद्य सुमना उपागहि सहस्रापोषं सुभगे रराणा ॥२॥**

हे राका नामकी देवी ! तिमी उत्तम सुन्दर सुमतिहरूले हविदाता यजमानलाई कल्याणकारी धन प्रदान गर्दछ्यौ । आज उस्तै सुमतिसहित प्रसन्न मनले यहाँ आऊ र हामीलाई श्रेष्ठ धनले पुष्ट गराऊ ।

## ५१. देवपत्नी सूक्त

**ऋषि–** अथर्वा । **देवता–** देवपत्नी । **छन्द–** आर्षीजगती, चतुष्पदा पङ्क्ति ।

**देवानां पत्नीरुशतीरवन्तु नः प्रावन्तु नस्तुजये वाजसातये । याः पार्थिवासो या अपामसि व्रते ता नो देवीः सुहवाः शर्म यच्छन्तु ॥१॥**

[illegible] गर्ने कृपा गर्नका लागि देवपत्नीहरू हाम्रो नजिकै यहाँ आऊन् र लाभ प्राप्त गराउने [illegible] अन्न प्रदान गरून् । जुन देवीहरू पृथ्वीमा वा जल वर्षा गराउनका लागि अन्तरिक्षमा [illegible] गर्दछन् उनीहरू सबैले हामीलाई सुख प्रदान गरून् ।

**उत ग्ना व्यन्तु देवपत्नीरिन्द्राण्य१ग्नाय्यश्विनी राट् । आ रोदसी वरुणानी शृणोतु व्यन्तु देवीर्य ऋतुर्जनीनाम् ॥२॥**

[illegible] हरूका पत्नीका रूपमा रहेका यी देवीहरूले हामीलाई कल्याण गरून् । इन्द्राणी, वरुणानी,

रोदसी र अश्विनीकुमारका राट् नामका पत्नीहरूले हाम्रो प्रार्थना सुनून् । स्त्रीहरूको ऋतुकालमा यी देवीहरूले हाम्रो कल्याण गरून् ।

## ५२. विजय सूक्त

**ऋषि**– अङ्गिरा । **देवता**– इन्द्र । **छन्द**– अनुष्टुप्, त्रिष्टुप्, जगती, भुरिक् त्रिष्टुप् ।

**यथा वृक्षमशनिर्विश्वाहा हन्त्यप्रति । एवाहमद्य कितवानक्षैर्बध्यासमप्रति ॥१॥**

जसरी जहिले पनि विद्युत्का अग्निले वृक्षलाई भस्म गराउँछ, उसै गरी हामी सबैले पासाद्वारा जुवाडेहरूलाई अतुलनीय तरिकाले मार्दछौँ ।

**तुराणामतुराणां विशामवर्जुषीणाम् । समैतु विश्वतो भगो अन्तर्हस्तं कृतं मम ॥२॥**

जुवामा हतार गर्ने र ढिलो गर्नेहरूमा सबैभन्दा श्रेष्ठ म नै हुँ । जुवा खेल्न नछोड्नेहरूको ऐश्वर्य, धन आदि सबै पासोका रूपमा रहेका मलाई नै प्राप्त होस् ।

**ईडे अग्निं स्वावसुं नमोभिरिह प्रसक्तो वि चयत् कृतं नः । रथैरिव प्र भरे वाजयद्भिः प्रदक्षिणं मरुतां स्तोममृध्याम् ॥३॥**

हामी उनै अग्निदेवतालाई स्वावसु नामले स्तुति गर्दछौँ, जो स्तुतिकर्तालाई आफ्नो धन प्रदान गर्दछन् । उनै देवताले प्रसन्न भएर हामीलाई कृत नामका श्रेष्ठ सङ्कल्प वा कर्म पासोका रूपमा प्रदान गरून् । जसरी रथमा अन्न ल्याउने गरिन्छ, उसै गरी सत्कर्मले शत्रुको धन पनि हामी प्राप्त गरौँ ।

**वयं जयेम त्वया युजा वृतमस्माकमंशमुदवा भरेभरे । अस्मभ्यमिन्द्र वरीयः सुगं कृधि प्र शत्रूणां मघवन् वृष्ण्या रुज ॥४॥**

हे इन्द्रदेवता ! तिम्रो सहायता पाएर हामीलाई धेरै शत्रुलाई जितौँ । प्रत्येक युद्धमा तिमी हाम्रा प्रयत्नहरूलाई सुरक्षित राख । हाम्रो प्रगति मार्गकमा बाधा हाल्ने शत्रुको बल पनि नष्ट गरौँ ।हे धनवान् इन्द्रदेवता ! हामीलाई वरिष्ठ स्थानसम्म पुऱ्याएर धन प्रदान गर ।

**अजैषं त्वा संलिखितमजैषमुत संरुधम् । अविं वृको यथा मथदेवा मथ्नामि ते कृतम् ॥५॥**

हे अनेकौँ किसिमले दुःख दिने गरेका शत्रुहरू हो ! तिमीहरूलाई हामी जित्दछौँ । जसरी ब्वाँसले भेडाहरूलाई मथेर मारिदिन्छ, उसै गरी हामी तिम्रा ऋत नामका पासाहरूलाई मथेर नष्ट गराउँछौँ ।

**उत प्रहामतिदीवा जयति कृतमिव श्वघ्नी वि चिनोति काले । यो देवकामो न धनं रुणद्धि समित् तं रायः सृजति स्वधाभिः ॥६॥**

विजयाभिलाषी वीरले आफ्ना घातक शत्रुलाई जित्ने गर्दछ । आफ्नो धन आदि खेर फाल्ने मूर्खले वास्तवमा आफैँले गरेका कर्मको फल भोग्दछ । जुन व्यक्तिले थुपारेर नराखीकन देवकार्यमा धनको लगानी गर्दछ, उसैलाई नै विशिष्ट धनको प्राप्ति हुने गर्दछ ।

**गोभिष्टरेमामतिं दुरेवां यवेन वा क्षुधं पुरुहूत विश्वे । वयं राजसु प्रथमा धनान्यरिष्टासो वृजनीभिर्जयेम ॥७॥**

हे इन्द्रदेवता ! हामी दुर्गतिमा पुऱ्याउने दरिद्रताबाट उत्पन्न दुर्बुद्धिलाई गाई आदि पशुधनको सहाराले हटाउन सकौँ । जौ आदिले भोक मेटाऔँ । हामी प्रतिभारूपी प्रकाशले सम्पन्न व्यक्तिहरूमा श्रेष्ठ हुन सकौँ र आफ्नै शक्तिका प्रभावले धन प्राप्त गरौँ ।

**कृतं मे दक्षिणे हस्ते जयो मे सव्य आहितः गोजिद् भूयासमश्वजिद् धनंजयो हिरण्यजित् ॥८॥**

हाम्रा दाहिने हातमा कृत अर्थात् कर्म र बायाँ हातमा विजय होस् । यी दुवैबाट हामी गाई, अश्व, धन, भूमि र स्वर्ण आदि प्राप्त गर्नका लागि सफल होऔँ ।

**अक्षाः फलवतीं द्युवं दत्त गां क्षीरिणीमिव । सं मा कृतस्य धारया धनुः स्नाव्नेव नह्यत ॥९॥**

हामीलाई दुहुने गाईजस्तै फलदायी विजय प्राप्त गराउनका लागि पासा वा पुरुषार्थ प्राप्त होस् । प्रत्यञ्चा चढेका अवस्थामा धनुष जसरी विजय प्रदान गराउने खालको हुन्छ, उसै गरी हामीलाई तिमी पुरुषार्थले युक्त बनाउँदै श्रेष्ठ फल प्रदान गर ।

## ५३. परिपाण सूक्त

**ऋषि—** अङ्गिरा । **देवता—** इन्द्राबृहस्पति । **छन्द—** त्रिष्टुप् ।

**बृहस्पतिर्नः परि पातु पश्चादुतोत्तरस्मादधरादघायोः । इन्द्रः पुरस्तादुतमध्यतो नः सखा सखिभ्यो वरीयः कृणोतु ॥१॥**

बृहस्पतिदेवताले माथि, तल र पछिल्लो भागबाट हामीलाई रक्षा गरून् । इन्द्रदेवताले पूर्व र मध्य भागबाट हामीलाई जोगाऊन् र सखाका रूपमा रहेका इन्द्रदेवताले आफ्ना स्तोताहरूलाई मित्रका भावले धन आदि प्रदान गरेर श्रेष्ठ बनाऊन् ।

## ५४. सांमनस्य सूक्त

**ऋषि—** अथर्वा । **देवता—** सांमनस्य अश्विनीकुमार । **छन्द—** ककुम्मती अनुष्टुप्, जगती ।

**संज्ञानं नः स्वेभिः संज्ञानमरणेभिः । संज्ञानमश्विना युवमिहास्मासु नि यच्छतम् ॥१॥**

हे अश्विनीकुमारहरू हो ! आफन्तहरूसँग हामी समान ज्ञानले सम्पन्न भएर कुरा मिल्ने खालका होऔँ । हामीसित कुरो नमिल्ने खालकाहरू पनि हामीसित कुरो मिल्ने खालका बनून् । हे अश्विनीकुमारहरू हो ! कृपा गरेर हामी सबैका मनमा तिमीहरूले यस विषयमा असल मति स्थापना गराओ ।

**सं जानामहै मनसा सं चिकित्वा मा युष्महि मनसा दैव्येन । मा घोषा उत्स्थुर्बहुले विनिर्हते मेषुः पप्तदिन्द्रस्याहन्यागते ॥२॥**

हाम्रा मनले श्रेष्ठ ज्ञान प्राप्त गरोस् । ज्ञानवान् भएर, एक मत भएर, आपसमा विरोध नगरीकन हामी कार्यहरू गरौँ । हामी देवताहरूसित प्रेम गर्नमा कहिल्यै नछुटौँ । हाम्रो वाणी आपसमा दुःख दिने खालको नहोस् । भविष्यमा इन्द्रदेवताको वज्र हामीमाथि नखसोस् ।

## ५५. दीर्घायु सूक्त

**ऋषि—** ब्रह्मा । **देवता—** आयु, बृहस्पति, अश्विनीकुमार । **छन्द—** त्रिष्टुप, भुरिक् त्रिष्टुप्, उष्णिक् गर्भार्षी पङ्क्ति, अनुष्टुप् ।

**अमुत्रभूयादधि यद् यमस्य बृहस्पतेरभिशस्तेरमुञ्चः । प्रत्यौहतामश्विना मृत्युमस्मद् देवानामग्ने भिषजा शचीभिः ॥१॥**

हे अग्निदेवता र बृहस्पतिदेवता ! तिमीहरू दुवै परलोकमा पाइने यातनाबाट मुक्त गर र तिमीहरूकै कृपाले दुवै अश्विनीकुमारले यिनलाई मृत्युकारक रोगबाट जोगाऊन् ।

**सं क्रामतं मा जहीतं शरीरं प्राणापानौ ते सयुजाविह स्ताम् । शतं जीव शरदो वर्धमानोऽग्निष्टे गोपा अधिपा वसिष्ठः ॥२॥**

हे प्राण र अपान ! यस मानिसलाई तिमीहरू दुवैले नछोड; बरु यसभित्र उचित किसिमले सञ्चारित होओ । हे पुरुष ! प्राण र अपान तिम्रो शरीरमा सञ्चार गरिरहून्, त्यसपछि तिमी निरन्तर वृद्धि हुँदै सय वर्षसम्म जीवित होऊ । तेजस्वी अग्निदेवताले तिम्रो सुरक्षा गरून् ।

**आयुर्यत् ते अतिहितं पराचैरपानः प्राणः पुनरा ताविताम् । अग्निष्टदाहार्निर्ऋतेरुपस्थात् तदात्मनि पुनरा वेशयामि ते ॥३॥**

हे आयुको कामना गर्ने पुरुष ! स्वास्थ्यविरोधी आचरणका कारण तिम्रो जति आयु नासिँदै गयो, त्यसलाई प्राण र अपानले फेरि पूरा गराऊन् । यज्ञद्वारा प्रसन्न भएका अग्निदेवताले तिमीलाई

सुरक्षित राखून् र दीर्घायु प्रदान गरून् ।

**मेमं प्राणो हासीन्मो अपानोऽवहाय परा गात् । सप्तर्षिभ्य एनं परि ददामि त एनं स्वस्ति जरसे वहन्तु ॥४॥**

यस मानिसलाई प्राण र अपानले छोडेर नजाऊन् । हामी आयुको कामना गर्ने यस मानिसलाई सप्तऋषिका शरणमा पुऱ्याउँछौँ, उनैले यसलाई बुढो होउन्जेलसम्म सुखपूर्वक राखून् ।

**प्र विशतं प्राणापानावनड्वाहाविव व्रजम् । अयं जरिम्णः शेवधिररिष्ट इह वर्धताम् ॥५॥**

हे प्राण र अपान ! तिमीहरू दुवै यस आयुको कामना गर्ने पुरुषका शरीरभित्र उसै गरी भ्रमण गर, जसरी गाईका बथानमा साँढे पसेर घुम्ने गर्दछ । कुनै बाधाविघ्न नपरीकन यसले बुढ्यौलीसम्म आफ्नो जीवन निर्वाह गर्न पाओस् ।

**आ ते प्राणं सुवामसि परा यक्ष्मं सुवामि ते । आयुर्नो विश्वतो दधदयमग्निर्वरेण्यः ॥६॥**

हे आयुको कामना गर्ने पुरुष ! तिम्रो क्षयरोग हामी हटाउँदै तिमीलाई दीर्घजीवी बनाउनका लागि अग्निदेवतासित प्रार्थना गर्दछौँ ।

**उद् वयं तमसस्परि रोहन्तो नाकमुत्तमम् । देवं देवत्रा सूर्यमगन्म ज्योतिरुत्तमम् ॥७॥**

अन्धकारको क्षेत्रलाई पार गर्दै श्रेष्ठ स्वर्गलोकमा चढ्दै हामी सबैका उत्पादक तेजस्वी सूर्यदेवतालाई प्राप्त गरौँ ।

## ५६. विघ्नशमन सूक्त

**ऋषि—** ब्रह्मा । **देवता—** ऋक्साम । **छन्द—** अनुष्टुप् ।

**ऋचं साम यजामहे याभ्यां कर्माणि कुर्वते । एते सदसि राजतो यज्ञं देवेषु यच्छतः ॥१॥**

हामीले पढेका ऋक् र यजुः नामका वेदहरूलाई हविद्वारा पूजन गर्दछौँ । हामी ऋत्विक् यजमानहरू ऋचाहरूलाई र सामगानलाई यजन गर्दछौँ । यी दुवै यज्ञशालमा दन्किएर सुशोभित भइरहेका छन् । यिनैले देवताहरूकहाँ यज्ञलाई पुऱ्याउनेछन् ।

## ५७. मार्गस्वस्त्य अयन सूक्त

**ऋषि—** भृगु । **देवता—** इन्द्र । **छन्द—** अनुष्टुप्, विराट् परोष्णिक् ।

**ऋचं साम यदप्राक्षं हविरोजो यजुर्बलम् । एष मा तस्मान्मा हिंसीद् वेदः पृष्टः शचीपते ॥१॥**

हामीले जुन रीतिले ऋग्वेदद्वारा हवि, सामवेदद्वारा ओज र यजुर्वेदद्वारा बललाई चिनेका छौँ, हे इन्द्रदेवता ! यसरी सोधखोज गरेर जानेका ज्ञानले हामीलाई दुःख नदियोस्; बरु इच्छित फल प्रदान गरोस् ।

**ये ते पन्थानोऽव दिवो येभिर्विश्वमैरयः । तेभिः सुम्नया धेहि नो वसो ॥२॥**

हे इन्द्रदेवता ! तिमी आफ्ना द्युलोकको तल्लोतर्फ भएका मार्गबाट संसारका प्राणीहरूलाई आआफ्नो कर्ममा नियोजित गर्दछौ । तिमी उसै मार्गबाट हामीलाई पनि सुखसहितको पुष्टि प्रदान गर ।

## ५८. विषभेषज्य सूक्त

**ऋषि—** अथर्वा । **देवता—** वृश्चिकादि, वनस्पति, ब्रह्मस्पति । **छन्द—** अनुष्टुप्, विराट प्रस्तारपङ्क्ति ।

**तिरश्चिराजेरसितात् पृदाकोः परि संभृतम् । तत् कङ्कपर्वणो विषमियं वीरुदनीनशत् ॥१॥**

तेर्छो रेखा भएका, काला, फुङ्कार गर्ने सर्पका विषलाई र कङ्कपर्वा नामका प्राणीका विषलाई यस मधुक नामका औषधिले नष्ट गर्दछ ।

**इयं वीरुन्मधुजाता मधुश्चुन्मधुला मधूः । सा विह्रुतस्य भेषज्यथो मशकजम्भनी ॥२॥**

प्रयोग गरिएको यो औषधि मधुबाट निकालिएको हो । यसले मधुर रस बढाउने गर्दछ । टोक्ने प्राणी र तिनको विष यसले नष्ट गराउन सक्छ ।

**यतो दष्टं यतो धीतं ततस्ते निर्ह्वयामसि । अर्भस्य तृप्रदंशिनो मशकस्यारसं विषम् ॥३॥**
जहाँ टोकेको छ र रगत चुसेको छ, त्यस स्थानमा त्यसरी चाँडै टोक्ने गरेका मच्छर आदि किराको विष हामी नष्ट गराउँछौं ।

**अयं यो वक्रो विपरुर्व्यङ्गो मुखानी वक्रा वृजिना कृणोषि । तानि त्वं ब्रह्मणस्पत इषीकामिव सं नमः ॥४॥**
विषका प्रभावले गर्दा रोगाएको अङ्ग खिइन लागेको छ । त्यसका जोर्नीहरू खुकुलिन थालेका छन् । मुख पनि बाङ्गोटिङ्गो हुन थालेको छ, त्यस्ता रोगीलाई यसै औषधिले स्वस्थ गराउँछ ।

**अरसस्य शर्कोटस्य नीचीनस्योपसर्पतः । विषं ह्य१स्यादिष्यथो एनमजीजभम् ॥५॥**
कमजोरजस्ता देखिने, घस्रिएर हिँड्ने यस शर्कोटक नामको विष भएका जन्तुले बाङ्गो बनाउँछ; त्यसको विष हामीले नष्ट पारिसकेका छौं ।

**न ते बाह्वोर्बलमस्ति न शीर्षे नोत मध्यतः । अथ किं पापयामुया पुच्छे बिभर्ष्यर्भकम् ॥६॥**
हे बिच्छी ! तिम्रा पाखुरामा, शिरमा र मध्य भागमा कष्ट दिन सक्ने सामर्थ्य अब छैन । केवल अलिकति विष पुच्छरमा रहेको छ । त्यसो हुँदा पनि तिमी दुर्बुद्धिको वशमा परेर अर्कालाई दुःख दिनका लागि किन पछ्याउँदै छौ ?

**अदन्ति त्वा पिपीलिका वि वृश्चन्ति मयूर्यः । सर्वे भल ब्रवाथ शार्कोटम रसंविषम् ॥७॥**
हे सर्प ! तिमीलाई त कमिलाले नै खाइदिन्छन् र पोथी मयूरले पनि तिमीलाई टुक्रैटुक्रा पारिदिन्छ । हे विषनाशक औषधि ! तिमी शर्कोटकको विष पनि समाप्त गरिदेऊ ।

**य उभाभ्यां प्रहरसि पुच्छेन चास्येन च । आस्ये३ न ते विषं किमु ते पुच्छधावसत् ॥८॥**
हे बिच्छी ! तिम्रा पुच्छरमा अलिकति विष छ, त्यसो हुँदा पनि तिमी पुच्छर र मुख यी दुवैले हान्ने गर्दछौ ।

## ५९. सरस्वती सूक्त

**ऋषि**– वामदेव । **देवता**– सरस्वती । **छन्द**– जगती ।

**यदाशसा वदतो मे विचुक्षुभे यद् याचमानस्य चरतो जनाँ अनु । यदात्मनि तन्वो मे विरिष्टं सरस्वती तदा पृणद् घृतेन ॥१॥**
खोजेको कुरो नपाउँदा मेरा जुन अङ्गमा कष्ट भएको छ र यसबाट मलाई जुन आत्मग्लानि वा हीनताको भाव आएको छ, ती सबैलाई सरस्वती देवीले स्नेहपूर्वक दूर गराऊन् ।

**सप्त क्षरन्ति शिशवे मरुत्वते पित्रे पुत्रासो अप्यवीवृतन्नृतानि । उभे इदस्योभे अस्य राजत उभे यतेते उभे अस्य पुष्यतः ॥२॥**
मरुत्वान्‌ले सात दिव्य प्रवाहद्वारा शिशुलाई रस प्रदान गर्दछन् । जसरी पुत्रले आफ्ना पितालाई सत्कर्मद्वारा सेवा गर्दछ, उसै गरी यिनले शिशुको सेवा गर्दछन् । यिनीसँग दुई वटा शक्ति छन् । तिनले यिनको तेज बढाउँछन्, कार्य गर्दछन् र पोषण गर्दछन् ।

## ६०. अन्न सूक्त

**ऋषि**– कौरुपथि । **देवता**– इन्द्रावरुण । **छन्द**– जगती, त्रिष्टुप् ।

**इन्द्रावरुणा सुतपाविमं सुतं सोमं पिबतं मद्यं धृतव्रतौ । युवो रथो अध्वरो देववीतये प्रति स्वसरमुत यातु पीतये ॥१॥**
हे सोमपान गर्ने कर्म भएका इन्द्र र वरुणदेवताहरू हो ! तिमीहरू दुवै यो पेलिएको हर्षवर्द्धक सोम पान गर । यसो भएकै कारण तिमीहरूको अपराजेय रथ, तिमीहरूलाई देवत्वको कामना गर्ने यजमानका घरका नजिकै लिएर आउँछ ।

**इन्द्रावरुणा मधुमत्तमस्य वृष्णः सोमस्य वृषणा वृषेथाम् । इदं वामन्धः परिषिक्तमासद्यास्मिन् बर्हिषि मादयेथाम् ॥२॥**
हे वरुण र इन्द्रदेवताहरू हो ! तिमीहरू दुवै मन परेको फलको वर्षा गराउँछौं । तिमीहरूकै लागि

मधुर सोमको भाग अन्नका रूपमा चमस आदि पात्रमा राखिएको छ । तिमीहरू यहाँ ओछ्याएका कुशका आसनमा बसेर सन्तुष्ट होओ ।

## ६१. शापमोचन सूक्त

**ऋषि**— बादरायणि । **देवता**— अरिनाशन । **छन्द**— अनुष्टुप् ।

**यो नः शपादशपतः शपतो यश्च नः शपात् । वृक्षइव विद्युता हत आ मूलादनु शुष्यतु ॥१॥**

अर्कालाई हेला नगर्ने हामीलाई जसले शाप दिने गर्दछ र कठोर वाक्यले हाम्रो निन्दा गर्दछ, ऊ त्यसैं किसिमले नष्ट होस्, जसरी चट्याङ्ले आहत भएको वृक्ष मूलसहित सुकेर जान्छ ।

## ६२. रम्यगृह सूक्त

**ऋषि**— ब्रह्मा । **देवता**— वास्तोष्पति, गृह समूह । **छन्द**— अनुष्टुप्, परानुष्टुप् त्रिष्टुप् ।

**ऊर्जं बिभ्रद् वसुवनिः सुमेधा अघोरेण चक्षुषा मित्रियेण । गृहानैमि सुमना वन्दमानो रमध्वं मा बिभीत मत् ॥१॥**

अन्न धारण गर्ने, धन प्रदान गर्ने, श्रेष्ठ बुद्धि भएका, शान्त मनका भएर सबैप्रति मित्रताको भाव राख्ने समस्त वन्दनीय जन आदिको वन्दना गर्ने हुँदै हामी आफ्नो घरका नजिकै पुगेर प्रवेश गर्न लागेका छौं । यहाँ सबै मानिसहरू निर्भय हुँदै आनन्दले रहौं ।

**इमे गृहा मयोभुव ऊर्जस्वन्तः पयस्वन्तः । पूर्णा वामेन तिष्ठन्तस्ते नो जानन्त्वायतः ॥२॥**

हाम्रा यी घरहरू हामीलाई सुख दिने, बल प्रदान गर्ने र अन्न तथा दुध आदिले युक्त होऊन् । प्रवासबाट फिर्ता हुँदा यिनले हामी स्वामीलाई नबिर्सिऊन् ।

**येषामध्येति प्रवसन् येषु सौमनसो बहुः । गृहानुप ह्वयामहे ते नो जानन्त्वायतः ॥३॥**

यी घरमा रहँदा हामीलाई सुखको अनुभूति होस् । घरमा हामी आफ्ना इष्टमित्र बोलाउँछौं, हामी सबै आनन्दले रहौं ।

**उपहूता भूरिधनाः सखायः स्वादुसंमुदः । अक्षुध्या अतृष्या स्त गृहा मास्मद् बिभीतन ॥४॥**

हे घरहरू हो ! तिमीहरू धनले सम्पन्न होओ । तिमीहरू मधुर पदार्थले युक्त रहँदै हाम्रो मित्र बन । तिमीहरूभित्र निवास गर्ने व्यक्ति भोकप्यासले पीडित नहोस् । हे गृह ! हामी परदेशबाट फिर्ता हुँदा हामीदेखि तिमीहरू नडराओ ।

**उपहूता इह गाव उपहूता अजावयः । अथो अन्नस्य कीलाल उपहूतो गृहेषु नः ॥५॥**

हाम्रा घरमा गाई, भेडाबाख्रा र अन्य सबै खालका प्राणधारीका साथै अन्न होस्, कुनै कुराको कमी नहोस् ।

**सूनृतावन्तः सुभगा इरावन्तो हसामुदाः । अतृष्या अक्षुध्या स्त गृहा मास्मद् बिभीतन ॥६॥**

हे घरहरू हो ! तिमीहरू सत्ययुक्त र उत्तम भाग्यका भएर, अन्नवान् बन । तिमीहरूभित्र हाँसखेलको वातावरण रहोस्, कोही भोकोतिर्खो नरहोस् । हे घरहरू हो ! हामीसित तिमीहरू नडराओ ।

**इहैव स्त मानु गात विश्वा रूपाणि पुष्यत । ऐष्यामि भद्रेणा सह भूयांसो भवता मया ॥७॥**

हे घरहरू हो ! तिमीहरू यसै क्षेत्रमा सुव्यवस्थित होओ, हामी प्रवासिएपछि अस्तव्यस्त नहोओ । विभिन्न खालकाहरूलाई पालनपोषण गर । कल्याणकारी साधनहरू लिएर हामी फिर्ता आउनेछौं । हरेक किसिमले हाम्रो उन्नति गर ।

## ६३. तपः सूक्त

**ऋषि**— अथर्वा । **देवता**— अग्नि । **छन्द**— अनुष्टुप् ।

**यदग्ने तपसा तप उपतप्यामहे तपः । प्रियाः श्रुतस्य भूयास्मायुष्मन्तः सुमेधसः ॥१॥**

तपको प्रक्रियाका आधारमा जुन तप गरिन्छ, हामी त्यही गर्दछौं । त्यसबाट नै हामी प्रिय ज्ञान र दीर्घायु प्राप्त गर्न सक्दछौं ।

अग्ने तपस्तप्यामह उप तप्यामहे तपः । श्रुतानि शृण्वन्तो वयमायुष्मन्तः सुमेधसः ॥२॥

हे अग्निदेवता ! तिम्रा नजिकै नियमहरूलाई पालन गर्दै हामी शारीरिक र मानसिक संयमरूपी तपस्या गर्दछौं । यसैबाट श्रुति सुन्ने र त्यसलाई धारण गर्ने शक्ति बढोस् र दीर्घायु प्राप्त होस् ।

## ६४. शत्रुनाशन सूक्त

**ऋषि**– कश्यप । **देवता**– अग्नि । **छन्द**– जगती ।

**अयमग्निः सत्पतिर्वृद्धवृष्णो रथीव पत्तीनजयत् पुरोहितः । नाभा पृथिव्यां निहितो दविद्युतदधस्पदं कृणुतां ये पृतन्यवः ॥१॥**

जुन अग्निदेवताले महान् देवताहरूकहाँ हवि पुऱ्याउँछन्, जो पुरोहित, प्रवृद्ध, बलवान् र महारथीझैं प्रजालाई आफ्नो अधीनमा राख्ने गर्दछन्, उनै अग्निदेवताले पृथ्वीको नाभीरूपी वेदिकामा स्थापित भएर हाम्रा शत्रुलाई गोडाले किचिदिऊन् ।

## ६५. दुरितनाशन सूक्त

**ऋषि**– कश्यप । **देवता**– अग्नि । **छन्द**– जगती ।

**पृतनाजितं सहमानमग्निमुक्थैर्हवामहे परमात् सधस्थात् । स नः पर्षदति दुर्गाणि विश्वा क्षामद् देवोऽति दुरितान्यग्निः ॥१॥**

युद्धमा शत्रुको सेनालाई पराजित गराउने, हविको भारी सहन गर्ने अग्निदेवतालाई उत्कृष्ट लोकबाट स्तोत्रले हामी बोलाउँछौं । उनै अग्निदेवताले हामीलाई सबै खालका कष्टबाट जोगाऊन् र दुर्गति गराउने खालका पापहरूलाई नाश गरून् ।

## ६६. पापमोचन सूक्त

**ऋषि**– यम । **देवता**– आपः, अग्नि । **छन्द**– भुरिक् अनुष्टुप्, न्यङ्कुसारिणी बृहती ।

**इदं यत् कृष्णः शकुनिरभिनिष्पतन्नपीपतत् । आपो मा तस्मात् सर्वस्माद् दुरितात् पान्त्वंहसः ॥१॥**

कालो रङ्गका पक्षीजस्ता दुर्भाग्यले आकाशमार्गबाट हाम्रा यी अङ्गहरूमा घात गरिरहेका छन् । यसै कारण यस्तो दुर्गति प्रदान गर्ने पापबाट हामीलाई अभिमन्त्रित जलले रक्षा गरोस् ।

**इदं यत् कृष्णः शकुनिरवामृक्षन्निर्ऋते ते मुखेन । अग्निर्मा तस्मादेनसो गार्हपत्यः प्र मुञ्चतु ॥२॥**

हे मृत्युदेवता ! दुर्भाग्यसूचक यस कालाले तिम्रो मुखको सहाराले हामीलाई छोएको छ । त्यसबाट लागेको पापलाई गार्हपत्य अग्निदेवताले नष्ट गरून् ।

## ६७. दुरितनाशन सूक्त

**ऋषि**– शुक्र । **देवता**– अपामार्गवीरुत् । **छन्द**– अनुष्टुप् ।

**प्रतीचीनफलो हि त्वमपामार्ग रुरोहिथ । सर्वान् मच्छपथाँ अधि वरीयो यावया इतः ॥१॥**

हे अपामार्ग नामका औषधि ! तिमी उल्टो झुन्डिएको प्रतीची फलले भरिएर विकसित हुने गर्दछौ । मेरा सबै खालका रोगरूपी पापलाई नष्ट गर ।

**यद् दुष्कृतं यच्छमलं यद् वा चेरिम पापया । त्वया तद् विश्वतोमुखापामार्गाप मृज्महे ॥२॥**

हे सर्वतोमुखी अपामार्ग नामका औषधि ! हामीबाट जुन दुःखदायी पापकर्म भएका छन् र दुर्बुद्धिका कारण जुन पापरूपी मैलो हामीले जम्मा पारेका छौं तिनीहरू सबैलाई तिमीले उचित किसिमले नष्ट गराऊ ।

**श्यावदता कुनखिना बण्डेन यत्सहासिम । अपामार्ग त्वया वयं सर्वं तदप मृज्महे ॥३॥**

[illegible] नामका औषधि ! तिमी हाम्रा ती पापरूपी दोषहरूलाई हटाइदेऊ जुन काला, पहेँला र [illegible] एवं नङ भएका तथा व्याधिग्रस्त निस्तेज व्यक्तिका साथमा बस्दाखेरि हामीलाई सरेर [illegible] ।

## ६८. ब्रह्म सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– ब्राह्मणम्, ब्रह्म । **छन्द**– त्रिष्टुप् ।

**यद्यन्तरिक्षे यदि वात आस यदि वृक्षेषु यदि वोलपेषु । यदश्रवन् पशव उद्यमानं तद् ब्राह्मणं पुनरस्मानुपैतु ॥१॥**

यस आकाशमा, वायुमा, वृक्षमा, घाँस आदि वनस्पतिमा र पशुप्राणी आदिमा जुन ब्रह्मतेज सधैँभरि स्रवित हुने गरेको छ वा प्रकट हुने गरेको छ, त्यो हामीलाई बारम्बार प्राप्त होस् ।

## ६९. आत्मा सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– आत्मा । **छन्द**– पुरः परोष्णिक् बृहती ।

**पुनर्मैत्विन्द्रियं पुनरात्मा द्रविणं ब्राह्मणं च । पुनरग्नयो धिष्ण्या यथास्थाम कल्पयन्तामिहैव ॥१॥**

हामीलाई इन्द्रियशक्ति, आत्मचेतना र ब्रह्मतेज फेरि पनि प्राप्त होस् । यज्ञ आदि स्थानमा रहने अग्नि हामीलाई प्राप्त होस् । हामी फेरि पनि धन प्राप्त गरेर समृद्ध हुन सकौँ ।

## ७०. सरस्वती सूक्त

**ऋषि**– शन्ताति । **देवता**– सरस्वती । **छन्द**– अनुष्टुप्, त्रिष्टुप् ।

**सरस्वति व्रतेषु ते दिव्येषु देवि धामसु । जुषस्व हव्यमाहुतं प्रजां देवि ररास्व नः ॥१॥**

हे सरस्वती देवी ! तिम्रा दिव्य व्रत र धामका लागि अर्पित गरिएको आहुति तिमी ग्रहण गर । हामीलाई तिमी पुत्रपौत्रादिका रूपमा प्रजा प्रदान गर ।

**इदं ते हव्यं घृतवत् सरस्वतीदं पितृणां हविरास्यं यत् । इमानि त उदिता शंतमानि तेभिर्वयं मधुमन्तः स्याम ॥२॥**

हे सरस्वती देवी ! हामीले तिम्रा लागि घिउले युक्त भएको हवि अर्पित गरेका छौँ । त्यसलाई तिमी पितृहरूकहाँ पुग्नका लागि प्रेरित गर । तिम्रा लागि हामी जुन हवि अर्पित गर्दछौँ, त्यसका प्रभावले हामी मधुरतायुक्त अन्नले सम्पन्न हुन सकौँ ।

## ७१. सरस्वती सूक्त

**ऋषि**– शन्ताति । **देवता**– सरस्वती । **छन्द**– गायत्री ।

**शिवा नः शंतमा भव सुमृडीका सरस्वति । मा ते युयोम संदृशः ॥१॥**

हे वाणीकी देवी सरस्वती ! तिमी सबै खालका सुख प्रदान गर्दछ्यौ । हामीलाई तिमी रोगबाट पूर्ण रूपले मुक्त गरेर हाम्रो कल्याण गर । हे देवी ! हामी तिम्रो वास्तविक रूपको दर्शन गर्दछौँ ।

## ७२. सुख सूक्त

**ऋषि**– शन्ताति । **देवता**– सुख । **छन्द**– पथ्या पङ्क्ति ।

**शं नो वातो वातु शं नस्तपतु सूर्यः । अहानि शं भवन्तु नः शं रात्री प्रति धीयतां शमुषा नो व्युच्छतु ॥१॥**

हे वायुदेवता ! हाम्रा लागि तिमी सुखकारक रूपले प्रवाहित होऊ र सुखपूर्वक प्रेरित गराउने सूर्यदेवताले सुख एवं स्वास्थ्यवर्द्धक ताप प्रदान गरून् । उषाकाल, दिन र रात्रि सबै किसिमले हाम्रा लागि कल्याणकारी होऊन् ।

## ७३. शत्रुदमन सूक्त

**ऋषि**– अथर्वा । **देवता**– श्येन । **छन्द**– त्रिष्टुप्, अतिजगतीगर्भा जगती, पुरःककुम्मती अनुष्टुप्, अनुष्टुप् ।

**यत किं चासौ मनसा यच्च वाचा यज्ञैर्जुहोति हविषा यजुषा । तन्मृत्युना निर्ऋतिः संविदाना पुरा सत्यादाहुतिं हन्त्वस्य ॥१॥**

जुन शत्रुले हामीलाई नष्ट गर्ने सङ्कल्प गर्दै हवि र मन्त्रद्वारा अभिचार कर्म गर्नेतिर लागेका छन्,

उसका मन, वाणी र शरीरले गरेका कर्महरू सफल हुनुभन्दा पहिले नै; हे निर्ऋतिदेवता ! तिमी मृत्युको सहायताले त्यसलाई नष्ट गराऊ ।

**यातुधाना निर्ऋतिरादु रक्षस्ते अस्य घ्नन्त्वनृतेन सत्यम् । इन्द्रेषिता देवा आज्यमस्य मथ्नन्तु मा तत् सं पादि यदसौ जुहोति ॥२॥**

यातुधान, राक्षस र शत्रुद्वारा हाम्रा विरुद्धमा गरिँदै भएका जेजति अभिचारहरू छन्, तिनलाई निर्ऋतिदेवताले विपरीत क्रियाद्वारा नष्ट गराइदिऊन् । शत्रुहरूले हवनमा प्रयोग गरेको घिउलाई इन्द्रदेवताले प्रेरित गरेका देवताहरूले नष्ट गराइदिऊन् ।

**अजिराधिराजौ श्येनौ संपातिनाविव । आज्यं पृतन्यतो हतां यो नः कश्चाभ्यघायति ॥३॥**

हामीलाई अनिष्ट गर्न खोज्ने शत्रुद्वारा घिउले गर्ने हवन अधिराज र अजिर नामका मृत्युका दूतहरूले बाजपक्षीझैँ झम्टिएर नष्ट गराऊन् ।

**अपाञ्चौ त उभौ बाहू अपि नह्याम्यास्यम् । अग्नेर्देवस्य मन्युना तेन तेऽवधिषं हविः ॥४॥**

हे अभिचार गर्ने शत्रुहरू हो ! हामी तिमीहरूका दुवै भुजा र मुख बाँधिदिन्छौँ, अनि अग्निका भयानक कोपद्वारा तिमीहरूको हवि, घिउ आदि सबै नाश गराउँछौँ ।

**अपि नह्यामि ते बाहू अपि नह्याम्यास्यम् । अग्नेर्घोरस्य मन्युना तेन तेऽवधिषं हविः ॥५॥**

हे शत्रु ! अभिचार कर्ममा प्रवृत्त हातहरूलाई हामी बाँधिदिन्छौँ । मन्त्र बोल्ने मुखलाई हामी बाँध्छौँ । हविद्वारा सिद्ध हुने गरेका तिम्रा कार्यहरूलाई पनि हामी अग्निको विकराल कोपले नष्ट गराउँछौँ ।

## ७४. अग्नि सूक्त

**ऋषि–** अथर्वा । **देवता–** अग्नि । **छन्द–** अनुष्टुप् ।

**परि त्वाग्ने पुरं वयं विप्रं सहस्य धीमहि । धृषद्वर्णं दिवदिवे हन्तारं भङ्गुरावतः ॥१॥**

हे अरणीमन्थनबाट उत्पन्न भएका अग्निदेवता ! जुन राक्षसहरू यज्ञ आदि कर्ममा बाधा उपस्थित गराउँछन् तिनीहरूलाई नाश गर । हे अग्निदेवता ! यी मार्नेहरूलाई नष्ट गर्नका लागि नै हामीले तिमीलाई सबै तिरबाट धारण गरेका छौँ ।

## ७५. इन्द्र सूक्त

**ऋषि–** अथर्वा । **देवता–** इन्द्र । **छन्द–** अनुष्टुप्, त्रिष्टुप् ।

**उत् तिष्ठताव पश्यतेन्द्रस्य भागमृत्वियम् । यदि श्रातं जुहोतन यद्यश्रातं ममत्तन ॥१॥**

हे ऋत्विक्हरू हो ! तिमीहरू वसन्त ऋतु आदिका महिनाहरूमा हुने गरेका यी यज्ञमा इन्द्रदेवताका लागि पाकिरहेको यज्ञको भाग निरीक्षण गर्नका लागि आसनबाट उठ्ने गर । पाक्ने बेलासम्म इन्द्रदेवतालाई स्तुति गरिराख । पाकिसकेका अन्नका भागले इन्द्रदेवताका लागि अग्निमा आहुति प्रदान गर ।

**श्रातं हविरो ष्विन्द्र प्र याहि जगाम सूरो अध्वनो वि मध्यम् । परि त्वासते निधिभिः सखायः कुलपा न व्राजपतिं चरन्तम् ॥२॥**

हे इन्द्रदेवता ! तिम्रा लागि पकाइँदै गरेको हविको भाग पाकिसकेको छ र तिम्रा यज्ञको समय पनि भइसकेको छ । त्यसैले अब चाँडै आऊ । ऋत्विक्हरूले तिम्रा लागि सोमले भरिएको पात्र लिएका छन् । हामी सबै जना तिम्रा लागि उसै किसिमले उपासना गर्दछौँ, जसरी कुलका रक्षक पुत्रहरूले विचरण गर्ने गरेका समूहका नायक पिताको उपासना गर्दछन् ।

## ७६. इन्द्र सूक्त

**ऋषि–** अथर्वा । **देवता–** इन्द्र । **छन्द–** त्रिष्टुप् ।

**श्रातं मन्य ऊधनि श्रातमग्नौ सुशृतं मन्ये तदृतं नवीयः । माध्यन्दिनस्य सवनस्य दध्नः पिबेन्द्र वज्रिन् पुरुकृज्जुषाणः ॥१॥**

यो दुध गाईका थुनमा नै पाकेको थियो, पछि फेरि अग्निमा पकाइएको छ, त्यसपछि यसैबाट दही

बनाइएको छ । त्यसैले यो हविका रूपमा सत्य र नवीन छ । हे अनेकौं कर्म गर्ने वज्रधारी इन्द्रदेवता ! तिमी मध्य दिनका समयमा पेलेर दही मिसाइएको सोमरस पान गर ।

## ७७. घर्म सूक्त

**ऋषि**— अथर्वा । **देवता**— घर्म, अश्विनीकुमार । **छन्द**— त्रिष्टुप्, जगती, पथ्यावृहती ।

**समिद्धो अग्निर्वृषणा रथी दिवस्तप्तो घर्मो दुह्युते वामिषे मधु । वयं हि वाँ पुरुदमासो अश्विना हवामहे सधमादेषु कारवः ॥१॥**

हे बलवान् अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै द्युलोकका देवताका अग्रणी हौ । प्रदीप्त अग्निको तापले उचित किसिमले पकाइएको घिउ पात्रमा छ । तिमीहरू दुवैका लागि मधुर रसका रूपमा गाईको दुध दुहिएको छ । घरभरि हवि भएका हामी स्तोताहरू तिमीहरूलाई यज्ञमा बोलाउँछौं ।

**समिद्धो अग्निरश्विना तप्तो वां घर्म आ गतम् । दुह्यन्ते नूनं वृषणेह धेनवो दस्रा मदन्ति वेधसः ॥२॥**

हे कामना पूर्ति गराउने अश्विनीकुमारहरू हो ! अग्नि प्रदीप्त भइसकेको छ, घिउ तताइसकिएको छ, गाईको दुध दुहिसकिएको छ । तिमीहरू दुवै अश्विनीकुमारहरूलाई शत्रुसंहारकका रूपमा स्तोताहरू स्तुतिका साथ सेवा गर्दै आनन्द मनाइरहेका छन् ।

**स्वाहाकृतः शुचिर्देवेषु यज्ञो यो अश्विनोश्चमसो देवपानः । तमु विश्वे अमृतासो जुषाणा गन्धर्वस्य प्रत्यास्ना रिहन्ति ॥३॥**

प्रदीप्त प्रवर्ग्य नामको यो यज्ञ दुवै अश्विनीकुमारहरूका लागि गरिएको हो । जुन चमस नामका विशेष पात्रमा अश्विनीकुमारहरू रसपान गर्दछन् र जुनबाट देवताहरूलाई हव्य अर्पित गरिन्छ, त्यो पात्र पवित्र छ । उसै पात्रले समस्त देवताहरू अग्निरूपी मुखले आआफ्नो भाग ग्रहण गर्दछन् ।

**यदुस्रियास्वाहुतं घृतं पयोऽयं स वामश्विना भाग आ गतम् । माध्वी धर्तारा विदथस्य सत्पती तप्तं घर्मं पिबतं रोचने दिवः ॥४॥**

हे दुवै अश्विनीकुमारहरू हो ! घिउसहितको यो गाईको दुध पात्रमा भरिदिएका छौं । यो तिमीहरूकै भाग हो । त्यसैले तिमीहरू दुवै आओ । हे माधुर्ययुक्त, यज्ञस्वरूप, पालनकर्ता देवताहरू हो ! तिमीहरू आओ र घामले तातेर परिपक्व भएको यो रस पान गर ।

**तप्तो वां घर्मो नक्षतु स्वहोता प्र वामध्वर्युश्चरतु पयस्वान् । मधोर्दुग्धस्याश्विना तनाया वीतं पातं पयस उस्रियायाः ॥५॥**

हे दुवै अश्विनीकुमारहरू हो ! यो तताइएको तेजरूपी दुध तिमीहरू दुवैलाई प्राप्त होस् । हवन गर्ने अध्वर्युहरू दुधका साथमा तिमीहरूको सेवा गर्दछन् । स्वस्थ गाईको घिउसहितको यो मधुर दुध तिमीहरू दुवैले ग्रहण गर ।

**उप द्रव पयसा गोधुगोषमा घर्मे सिञ्च पय उस्रियायाः । वि नाकमख्यत् सविता वरेण्योऽनुप्रयाणमुषसो वि राजति ॥६॥**

हे अध्वर्युहरू हो ! तिमीहरू गाईको दुध दुहेर यज्ञशालामा लिएर आओ । त्यो दुध तताउनका लागि भाँडामा खन्याओ । श्रेष्ठ सवितादेवता उषाकालपछि सुशोभित हुँदै सम्पूर्ण स्वर्गलोकलाई प्रकाशित गराउनेछन् ।

**उप ह्वये सुदुघां धेनुमेतां सुहस्तो गोधुगुत दोहदेनाम् । श्रेष्ठं सवं सविता साविषन्नोऽभीद्धो घर्मस्तदु षु प्र वोचत् ॥७॥**

सुखपूर्वक दुहुन सकिने गाईहरूलाई हामी आह्वान गर्दछौं । यस्ता गाईको दुध स्वच्छ हातले दुहुनुपर्दछ । सव उपनाम भएको यो दुध सर्वप्रेरक सवितादेवताले हामी सबैका लागि प्रेरित गरून् । प्रदीप्त तेजस्वी घर्म नामको यज्ञको हामीलाई उपदेश प्रदान गर ।

**हिङ्‌कृण्वती वसुपत्नी वसूनां वत्समिच्छन्ती मनसा न्यागन् । दुहामश्विभ्यां पयो अघ्न्येयं सा वर्धतां महते सौभगाय ॥८॥**

हिंकार शब्द गर्दै, मनले बाछो खोज्ने गाई आएको छ । यो अवध्य गाई दुवै अश्विनीकुमारहरूका साथमा अन्य देवताहरूका लागि पनि दुध प्रदान गरोस् । यो सौभाग्य बढाउने होस् ।

**जुष्टो दमूना अतिथिर्दुरोण इमं नो यज्ञमुप याहि विद्वान् । विश्वा अग्ने अभियुजो विहत्य शत्रूयतामा भरा भोजनानि ॥९॥**

सबैले सेवा गर्न योग्य हे दानको इच्छा भएको अग्निदेवता ! हाम्रा भक्तिले तिमी प्रसन्न होऊ र हाम्रा यज्ञमा आएर सेनासहितका शत्रुहरूलाई नाश गर । अनि उनीहरूले भोग गर्ने गरेको धन हामीलाई प्रदान गर ।

**अग्ने शर्ध महते सौभगाय तव द्युम्नान्युत्तमानि सन्तु । सं जास्पत्यं सुयममा कृणुष्व शत्रूयतामभि तिष्ठा महांसि ॥१०॥**

हे अग्निदेवता ! तिम्रो प्रदीप्त ऊर्ध्वगामी तेज सौभाग्यशाली होस् । तिमी उदार हृदयले हामीलाई धन प्रदान गर । तिम्रा कृपाले हामी पतिपत्नी दुवै समान मनको विचारका भएर तिम्रो सेवा गरौँ । हाम्रा शत्रुहरूलाई तिमी नाश गर ।

**सूयवसाद् भगवती हि भूया अधावयं भगवन्तः स्याम । अद्धि तृणमघ्न्ये विश्वदानीं पिब शुद्धमुदकमाचरन्ती ॥११॥**

हे गर्मीरूपी दुध लिएका ! तिमी उत्तम घाँस खाऊ र सौभाग्यशाली बन । हामी पनि भाग्यशाली होऔँ । तिमी घाँस खाँदै शुद्ध जल पनि पान गर ।

## ७८. गण्डमालाचिकित्सा सूक्त

**ऋषि–** अथर्वाङ्गिरा । **देवता–** जातवेदा । **छन्द–** अनुष्टुप् ।

**अपचितां लोहिनीनां कृष्णा मातेति शुश्रुम । मुनेर्देवस्य मूलेन सर्वा विध्यामि ता अहम् ॥१॥**

कालो रङ्गकी पिशाचिनी नै गण्डमाला रोगकी आमा हो भन्ने सुनिएको छ । ती सबै खालका गण्डमालाहरूलाई मुनि नामका दिव्य औषधिले हामी नाश गर्दछौँ ।

**विध्याम्यासां प्रथमां विध्याम्युत मध्यमाम् । इदं जघन्या मासामा च्छिनद्मि स्तुकामिव ॥२॥**

यो गलगण्ड रोग प्रारम्भिक अवस्थाको, मध्यम अवस्थाको वा अन्तिम अवस्थाको; जस्तोसुकै भए पनि हामी यी तीनै अवस्थामा त्यस गण्डमालालाई नाश गर्दछौँ ।

**त्वाष्ट्रेणाहं वचसा वि त ईर्ष्याममीमदम् । अथो यो मन्युष्टे पते तमु ते शमयामसि ॥३॥**

हे क्रोधी र ईर्ष्यालु पुरुष ! हामी तिम्रो क्रोधी र ईर्ष्यालु प्रवृत्तिलाई सूक्ष्म विवेचनात्मक वाणीले शान्त गराउँछौँ ।

**व्रतेन त्वं व्रतपते समक्तो विश्वाहा सुमना दीदिहीह । तं त्वा वयं जातवेदः समिद्धं प्रजावन्त उप सदेम सर्वे ॥४॥**

हे व्रतशील, जातवेदा अग्निदेवता ! तिमी व्रतशील भएर हर्षित मनका साथमा हाम्रा घरमा प्रदीप्त भइराख । हामी सबै पुत्रपौत्रादिसहित तिम्रो उपासना गर्दछौँ ।

## ७९. अघ्न्या सूक्त

**ऋषि–** उपरिबभ्रव । **देवता–** अघ्न्या । **छन्द–** त्रिष्टुप्, त्र्यवसाना भुरिक् पथ्यापङ्क्ति ।

**प्रजावतीः सूयवसे रुशन्तीः शुद्धा अपः सुप्रपाणे पिबन्तीः । मा व स्तेन ईशत माघशंसः परि वो रुद्रस्य हेतिर्वृणक्तु ॥१॥**

हे गौमाता ! रुद्रदेवताले तिमीलाई दुःख नदिऊन् । व्याघ्र आदि हिंसक पशु तिमीदेखि परै रहून् ।

चोरले तिमीलाई अपहरण गर्न नसकोस् । तिमी उत्तम किसिमले बाछाका साथमा घाँस र निर्मल जल भएका क्षेत्रमा विचरण गर्दै त्यो घाँसपानी ग्रहण गर ।

**पदज्ञा स्थ रमतयः संहिता विश्वनाम्नीः । उप मा देवीर्देवेभिरेत । इमं गोष्ठमिदं सदो घेतेनास्मान्त्समुक्षत ॥२॥**

हे आनन्द प्रदान गर्ने गाईहरू हो ! तिमीहरूले आआफ्नो ठाउँ राम्रोसित चिनिसकेका छौ । तिमीहरू अनेकौँ दिव्य नाम र विभिन्न खालका बाछाका साथमा हाम्रा नजिकै आओ । तिमीहरू हाम्रो घर र गोठलाई दुध, घिउ आदि गव्य पदार्थले समृद्धिशाली बनाओ ।

## ८०. गण्डमालाचिकित्सा सूक्त

**ऋषि**– अथर्वा । **देवता**– अपचिद् भैषज्य । **छन्द**– विराट् अनुष्टुप्, परोष्णिक्, अनुष्टुप् ।

**आ सुस्रसः सुस्रसो असतीभ्यो असत्तराः । सेहोररसतरा लवणाद् विक्लेदीयसीः ॥१॥**

गण्डमाला रोग रसाइरहने र अत्यन्त नराम्रो खालको पीडा दिने हुन्छ । यो रोग औषधि र मन्त्रले नष्ट होस् । गण्डमाला रोगले ग्रसित मानिस अत्यन्तै निर्वीर्य वा कमजोर हुने गर्दछ । यो गण्डमाला नुन पग्लेको भन्दा पनि ज्यादा रसाउने गर्दछ ।

**या ग्रैव्या अपचितोऽथो या उपपक्ष्याः । विजाम्नि या अपचितः स्वयंस्रसः ॥२॥**

गलाना हुने गण्डमाला, कोखामा हुने गण्डमाला वा गुह्य स्थानमा हुने गण्डमाला स्वयं नै रसाएर बगिरहने गर्दछ ।

**यः कीकसाः प्रशृणाति तलीद्यमवतिष्ठति । निर्हास्तं सर्वं जायान्यं यः कश्च ककुदि श्रितः ॥३॥**

जुन हड्डीभित्र फैलिएको क्षयरोग, जुन क्षयरोगले मांसलाई क्षय गराएको हुन्छ, गर्धनभन्दा तलको पृष्ठ भागमा हुने ककुदी नामको जुन रोग हुन्छ, त्यस्ता रोगहरू धेरै स्त्रीसित धेरै असंयमित भएर जीवन यापन गर्दा लाग्दछन् । औषधि एवं अग्निदेवताले तिनलाई नष्ट गर्छन् ।

**पक्षी जायान्यः पतति स आविशति पूरुषम् । तदक्षितस्य भेषजमुभयोः सुक्षतस्य च ॥४॥**

यो क्षयरोग उब्जाउने विषका कीटाणुहरू हावामा उड्दै आएर पुरुषका शरीरमा पस्दछन् र उसलाई प्रभावित गर्दछन् । थोरै या पुरानो समयदेखि दुःख पाइरहेको क्षय रोगीलाई मन्त्रले झारफुक गरेर वा वीणातन्त्री खण्ड आदि औषधिले स्वस्थ गराउँछन् ।

## ८१. गण्डमालाचिकित्सा सूक्त

**ऋषि**– अथर्वा । **देवता**– जायान्य, इन्द्र । **छन्द**– भुरिक् अनुष्टुप्, त्रिष्टुप् ।

**विद्म वै ते जायान्य जानं यतो जायान्य जायसे । कथं ह तत्र त्वं हनो यस्य कृण्मो हविर्गृहे ॥१॥**

असंयमित जीवन निर्वाह गर्दाखेरि उत्पन्न भएका हे क्षय रोग ! हामी तिम्रो उत्पत्तिका विषयमा जान्दछौँ । जुन घरमा हवन हुन्छ, त्यस्ता घरमा तिमी कसरी पुग्दछौ ?

**धृषत् पिब कलशे सोममिन्द्र वृत्रहा शूर समरे वसूनाम् । माध्यन्दिने सवन आ वृषस्व रयिष्ठानो रयिमस्मासु धेहि ॥२॥**

हे शत्रुलाई दबाउने शूर इन्द्रदेवता ! पात्रमा राखिएको सोमरस तिमी पान गर । तिमी वृत्रासुरलाई संहार गर्ने हौ । मध्य दिनका समयमा तिमी सोमपान गरेर प्रसन्न होऊ र हामीलाई धनले पुर्ण बनाऊ ।

## ८२. शत्रुनाशन सूक्त

**ऋषि**– अङ्गिरा । **देवता**– मरुदगण । **छन्द**– त्रिपदा गायत्री, त्रिष्टुप्, जगती ।

**सांतपना इदं हविर्मरुतस्तज्जुजुष्टन । अस्माकोती रिशादसः ॥१॥**

हे सूर्यसित सम्बन्धित मरुत् देवगण ! तिमीहरूका लागि तयार पारिएको यो हवि तिमीहरू सेवन

गर र शत्रुबाट हाम्रो रक्षा गर ।

**यो नो मर्तो मरुतो दुर्हृणायुस्तिरश्चित्तानि वसवो जिघांसति । द्रुहः पाशान् प्रति मुञ्चतां सस्तपिष्ठेन तपसा हन्तना तम् ॥२॥**

हे धन प्रदान गर्ने मरुत्गण ! यदि कुनै मानिसले परोक्ष रूपमा हाम्रो चित्तलाई क्षुब्ध गराउन खोजेको छ भने, त्यसलाई वरुणदेवताको पासोले बाँध र तिमी त्यसरी दुःख दिन खोज्ने पुरुषलाई संहार गर ।

**संवत्सरीणा मरुतः स्वर्का उरुक्षयाः सगणा मानुषासः । ते अस्मत् पाशान् प्र मुञ्चन्त्वेनसः सांतपना मत्सरा मादयिष्णवः ॥३॥**

प्रत्येक संवत्सरमा प्रकाशित हुने गरेको, उत्तम मन्त्रले स्तुत्य, विशाल अन्तरिक्षमा निवास गर्ने, वर्षा गराउने, मानिसको कल्याण गर्ने, शत्रुलाई सताउने मरुत्देवताले हामीलाई बन्धनबाट मुक्त गराइदिऊन् ।

## ८३. बन्धमोचन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** अग्नि । **छन्द–** परोष्णिक्, त्रिष्टुप् ।

**वि ते मुञ्चामि रशनां वि योक्त्रं वि नियोजनम् । इहैव त्वमजस्र एध्यग्ने ॥१॥**

तिम्रा रोगरूपी बन्धनका डोरीलाई हामी प्रयोक्ताहरू खोलिदिन्छौँ । कण्ठप्रदेश, कोखातिर, बीचको भाग, तल्लो भाग सबैतिरका रोगरूपी गाँठाहरूबाट तिमीलाई हामी मुक्त गराउँछौँ । हे अग्निदेवता ! तिमी यी रोगीका लागि अनुकूल भएर बढिराख ।

**अस्मै क्षत्राणि धारयन्तमग्ने युनज्मि त्वा ब्रह्मणा दैव्येन । दीदिह्यस्मभ्यं द्रविणेह भद्रं प्रेमं वोचो हविर्दां देवतासु ॥२॥**

हे अग्निदेवता ! तिमीलाई हामी यी यजमानको बल बढाउन र हवि वहन गर्नका लागि बोलाउँछौँ । तिमी कृपा गरेर यी रोगीको स्वास्थ्यलाभका लागि इन्द्र आदि देवताहरूसित प्रार्थना गर । हामीलाई पुत्र, धन आदिले समृद्ध गराऊ ।

## ८४. अमावास्या सूक्त

**ऋषि–** अथर्वा । **देवता–** अमावास्या । **छन्द–** जगती, त्रिष्टुप् ।

**यत् ते देवा अकृण्वन् भागधेयममावास्ये संवसन्तो महित्वा । तेना नो यज्ञं पिपृहि विश्ववारे रयिं नो धेहि सुभगे सुवीरम् ॥१॥**

हे अमावस्या ! तिम्रो महत्त्वलाई स्वीकार गरेर देवताहरूले तिमीलाई हविको जुन भाग अर्पित गरेका छन्, त्यो भाग ग्रहण गरेर हाम्रो यो यज्ञ पूर्ण गराऊ । हामीलाई तिमी कर्मकुशल, सुन्दर पुत्र आदिका साथमा धन प्रदान गर ।

**अहमेवास्म्यमावास्या३ मामा वसन्ति सुकृतो मयीमे । मयि देवा उभये साध्याश्चेन्द्रज्येष्ठाः समगच्छन्त सर्वे ॥२॥**

म अमावस्याको अधिष्ठाता देवता हुँ । श्रेष्ठ कर्म गर्ने देवताहरू मसित वास गर्दछन् र साध्यसहित इन्द्र आदि दुवै किसमका देवताहरू मसित आएर समभावले मिलेर रहन्छन् ।

**आगन् रात्री संगमनी वसूनामूर्जं पुष्टं वस्वावेशयन्ती । अमावास्यायै हविषा विधेमोर्जं दुहाना पयसा न आगन् ॥३॥**

सबै वसुहरूलाई नै मिलाउने, पुष्टिकारक र बलवर्द्धक धन प्रदान गर्ने प्रतिक्षित अमावस्याको रात्रि आयो । हामी यसका लागि हवि अर्पित गर्दछौँ । उसले हामीलाई अन्न, दुध, अन्य रस एवं धन आदिले पुष्ट गरोस् ।

**अमावास्ये न त्वदेतान्यन्यो विश्वा रूपाणि परिभूर्जजान । यत्कामास्ते जुहुमस्तन्नो अस्तु वयं स्याम पतयो रयीणाम् ॥४॥**

हे अमावस्या ! तिमीभन्दा बाहेक अर्को कुनै पनि देवता समस्त संसारको रचना गर्नमा समर्थ

छैन । तिमीलाई हामी हवि अर्पित गर्दै मनोकामना पूर्ण गराऊ भनेर प्रार्थना गर्दछौँ । हवि ग्रहण गरेर तिमी हाम्रो मनोकामना पूर्ण गराउँदै हामीलाई धन प्रदान गर ।

## ८५. पूर्णिमा सूक्त

**ऋषि**— अथर्वा । **देवता**— पौर्णमासी, प्रजापति । **छन्द**— त्रिष्टुप्, अनुष्टुप् ।

**पूर्णा पश्चादुत पूर्णा पुरस्तादुन्मध्यतः पौर्णमासी जिगाय । तस्यां देवैः संवसन्तो महित्वा नाकस्य पृष्ठे समिषा मदेम ॥१॥**

चन्द्रमा पूर्ण भएका तिथिलाई नै पूर्णिमा भन्ने गरिन्छ । पूर्व, पश्चिम र मध्य भागमा यो पूर्णमास चम्कने गर्दछ । देवताहरूका साथमा रहँदै हामी स्वर्गभन्दा माथि रहेका त्यसैबाट अन्नरस प्राप्त गर्दछौँ र आनन्दित हुन्छौँ ।

**वृषभं वाजिनं वयं पौर्णमासं यजामाहे । स नो ददात्वक्षितां रयिमनुपदस्वतीम् ॥२॥**

रहर गरेको खालका फल प्रदान गर्ने, हविको रूप र अन्नको रूपमा पूर्णमासलाई हामी यजन गर्दछौँ । त्यसरी पूजित पूर्णमास प्रसन्न भएर अक्षय एवं अविनाशी धन हामीलाई प्रदान गरोस् ।

**प्रजापते न त्वदेतान्यन्यो विश्वा रूपाणि परिभूर्जजान । यत्कामास्ते जुहुमस्तन्नो अस्तु वयं स्याम पतयो रयीणाम् ॥३॥**

हे प्रजापतिदेवता ! तिमी सर्वत्र व्याप्त भएर समस्त रूपका सिर्जनाकार हौ, यस्तो गर्न अरू कोही पनि समर्थ छैन । जुन कामनाले हामी आहुति प्रदान गर्दछौँ तिनलाई तिमी पूरा गराऊ र हामीलाई धन प्रदान गर ।

**पौर्णमासी प्रथमा यज्ञियासीदह्नां रात्रीणामतिशर्वरेषु । ये त्वां यज्ञैर्यज्ञिये अर्धयन्त्यमी ते नाके सुकृतः प्रविष्टाः ॥४॥**

दिन तथा रातका दुवै समयमा यज्ञ गर्नका लागि योग्य तिथि पूर्णिमा नै हो । हे पूजनीय पूर्णिमा ! यज्ञद्वारा जसले तिमीलाई पूजा गर्दछन्, उनी श्रेष्ठ कर्म गर्नेहरूलाई स्वर्गधाममा प्रवेश गर्ने अनुमति प्राप्त हुने गर्दछ ।

## ८६. सूर्य चन्द्र सूक्त

**ऋषि**— अथर्वा । **देवता**— सावित्री, सूर्य, चन्द्रमा । **छन्द**— त्रिष्टुप्, अनुष्टुप्, आस्तारपङ्क्ति, सम्राडास्तारपङ्क्ति ।

**पूर्वापरं चरतो माययैतौ शिशू क्रीडन्तौ परि यातोऽर्णवम् । विश्वान्यो भुवना विचष्ट ऋतूँरन्यो विदधज्जायसे नवः ॥१॥**

मायारूपी कौशलद्वारा अघिपछि हिँड्दै गरेका दुई चन्द्रसूर्यरूपी बालकहरू एकले अर्कालाई पछ्याउँदै समुद्रमा पुग्ने गर्दछन् । तिनीहरूमध्ये एउटा सूर्यले समस्त भुवनलाई प्रकाशित गराउँछन् भने अर्का चन्द्रले ऋतुहरूको निर्माण गरेर स्वयं नै नयाँनौला कलाहरूका रूपमा उत्पन्न हुने गर्दछन् ।

**नवोनवो भवसि जायमानोऽह्नां केतुरुषसामेष्यग्रम् । भागं देवेभ्यो वि दधास्यायन् प्र चन्द्रमस्तिरसे दीर्घमायुः ॥२॥**

हे चन्द्रदेवता ! कला बदलिरहने हुनाले तिमी सधैँ नै तिमी नयाँ छौ । जसरी ध्वजाले कुनै ठाउँको चिनारी दिन्छ, त्यसै किसिमले तिमी तिथिहरूको पनि सूचना दिने गर्दछौ । हे सूर्यदेवता ! तिमी दिनको सूचना दिने गर्दछौ । उषाकालका अन्तिम समयमा तिमी प्रकट हुन्छौ । तिमी समस्त देवताहरूलाई नै उनीहरूको हविको भाग अर्पित गर्दछौ र चन्द्रदेवताले दीर्घायु प्रदान गर्दछन् ।

**सोमस्यांशो युधां पतेऽनूनो नाम वा असि । अनूनं दर्श मा कृधि प्रजया च धनेन च ॥३॥**

हे सोमका अंश ! हे युद्धका स्वामी ! तिम्रो यश कहिल्यै पनि क्षीण हुँदैन । हे दर्शनीय देवता ! हामीसित प्रसन्न भएर हामीलाई तिमी प्रजा एवं श्रेष्ठ धन आदिले परिपूर्ण गराऊ ।

**दर्शोऽसि दर्शतोऽसि समग्रोऽसि समन्तः । समग्रः समन्तो भूयासं गोभिरश्वैः प्रजया पशुभिर्गृहैर्धनेन ॥४॥**

हे दर्शनीय सोम ! तिमी दर्शन गर्न योग्य छौ । तिमी अनेकौं कलाले विकसित भएर पूर्णिमामा सिङ्गो रूप हुने गर्दछौ । तिमी आफू नै पूर्ण छौ, त्यसो हुनाले नै हामीलाई पनि अश्व, गाई, सन्तान, घर र धन आदिले अन्त्यसम्म परिपूर्ण गराइराख ।

**योऽस्मान् द्वेष्टि यं वयं द्विष्मस्तस्य त्वं प्राणेना प्यायस्व । आ वयं प्याशिषीमहि गोभिरश्वैः प्रजया पशुभिर्गृहैर्धनेन ॥५॥**

हे सोमदेवता ! जुन शत्रु हामीसित द्वेष गर्दछन् र हामी पनि उनीहरूसित द्वेष गर्दछौं, तिमी ती शत्रुको प्राण खिँचेर त्यसभन्दा अगाडि बढ । हामीलाई पनि अश्व, गाई, सन्तान, घर र धन आदिले अन्त्यसम्म परिपूर्ण गराइराख ।

**यं देवा अंशुमाप्याययन्ति यमक्षितमक्षिता भक्षयन्ति । तेनास्मानिन्द्रो वरुणो बृहस्पतिरा प्याययन्तु भुवनस्य गोपाः ॥६॥**

जुन एक कलात्मक सोमदेवतालाई देवताहरूले प्रतिदिन एकएक कला बढाउँछन्, जुन क्षयरहित सोमलाई अविनाशी देवताहरूले भक्षण गर्दछन्, देवताहरूका अधिपति इन्द्रदेवता, वरुणदेवता र बृहस्पतिदेवताले तिनै सोमद्वारा हाम्रो कल्याण गर्दै हामीलाई अगाडि बढाऊन् ।

## ८७. अग्नि सूक्त

**ऋषि–** शौनक । **देवता–** अग्नि । **छन्द–** त्रिष्टुप्, ककुम्मती बृहती, जगती ।

**अभ्यर्चत सुष्टुतिं गव्यमाजिमस्मासु भद्रा द्रविणानि धत्त । इमं यज्ञं नयत देवता नो घृतस्य धारा मधुमत् पवन्ताम् ॥१॥**

हे गाईरूपी वाणी ! सुन्दर स्तुतिले तिमी अग्निलाई अर्चना गर र हामीलाई कल्याणकारी धन प्रदान गर । हामी यस यज्ञमा देवताहरूलाई ल्याऔं र तिम्रा कृपाले यज्ञमा घिउका धाराहरू मधुर भावले देवताहरूतिर चलून् ।

**मय्यग्रे अग्निं गृह्णामि सह क्षत्रेण वर्चसा बलेन । मयि प्रजां मय्यायुर्दधामि स्वाहा मय्यग्निम् ॥२॥**

हामी सर्वप्रथम आहुतिका आधारका रूपमा रहेका अग्निलाई धारण गर्दछौं । क्षात्रशौर्य र ज्ञानको तेजका साथमा अग्निलाई हामी धारण गर्दछौं । हामीलाई प्रजा एवं आयु प्राप्त होस् भनेर नै हामी अग्निदेवतालाई समिधा आदि समर्पित गर्दछौं ।

**इहैवाग्ने अधि धारया रयिं मा त्वा नि क्रन् पूर्वचित्ता निकारिणः । क्षत्रेणाग्ने सुयममस्तु तुभ्यमुपसत्ता वर्धतां ते अनिष्टृतः ॥३॥**

हे अग्निदेवता ! हामीसित वैरीको भावना राख्नेहरूसित तिमी प्रसन्न नहोऊ । हामी तिम्रो सेवा गर्दछौं, हामीसित तिमी प्रसन्न भएर हामीलाई ऐश्वर्यशाली बनाऊ । तिमी आफ्नो बलियो रूपमा स्थिर होऊ । तिम्रो सेवा गर्नेहरूको प्रभाव बढोस् र सबै किसिमले समृद्ध होऊन् ।

**अन्वग्निरुषसामग्रमख्यदन्वहानि प्रथमो जातवेदाः । अनु सूर्य उषसो अनु रश्मीननु द्यावापृथिवी आ विवेश ॥४॥**

उषाकालका साथै अग्निदेवता प्रकाशित हुने गर्दछन् । यी जातवेदा अग्निदेवता पहिलो उषाकालमा सूर्यका रूपमा प्रकट हुन्छन्, त्यसपछि दिनलाई प्रकट गराउँदै आफ्ना प्रकाशित किरणले सम्पूर्ण द्यावापृथिवीमा प्रवेश गर्दछन् ।

**प्रत्यग्निरुषसामग्रमख्यत् प्रत्यहानि प्रथमो जातवेदाः । प्रति सूर्यस्य पुरुधा च रश्मीन् प्रति द्यावापृथिवी आ ततान ॥५॥**

प्रत्येक उषाकालमा अग्निदेवता प्रकाशित हुने गर्दछन् । यिनी प्रत्येक दिनहरूसँगै पनि प्रकाशित हुन्छन् । जातवेदा सूर्यका रूपमा रहेका अग्निदेवता सूर्यका किरणमा आफू पनि प्रकाशित हुन्छन् र

समस्त द्युलोक एवं पृथिवीमा पनि प्रकाश फैलाउने गर्दछन् ।

**घृतं ते अग्ने दिव्ये सधस्थे घृतेन त्वां मनुरद्या समिन्धे । घृतं ते देवीर्नप्त्य१ आ वहन्तु घृतं तुभ्यं दुह्रतां गावो अग्ने ॥६॥**

हे अग्निदेवता ! तिम्रो घिउ देवताहरूको सामुहिक निवासस्थानमा रहने गर्दछ । आज पनि मनु नामका देवताले तिमीलाई घिउले नै प्रदीप्त गराउँछन् । तिम्रा लागि नदीले जलका रूपमा घिउ ल्याइदिऊन् र गाईहरूले दुधमा घिउ ल्याइदिऊन् ।

## ८८. पाशमोचन सूक्त

**ऋषि**— शुनः शेप । **देवता**— वरुण । **छन्द**— अनुष्टुप्, पथ्यापङ्क्ति, त्रिष्टुप्, बृहतीगर्भा त्रिष्टुप् ।

**अप्सु ते राजन् वरुण गृहो हिरण्ययो मिथः । ततो धृतव्रतो राजा सर्वा धामानि मुञ्चतु ॥१॥**

हे राजा वरुणदेवता ! तिम्रो सुनले बनेको घर जलमा छ । व्रत धारण गर्ने वरुणदेवताले समस्त धामहरूलाई नै बन्धनबाट मुक्त गराऊन् ।

**धाम्नोधाम्नो राजन्नितो वरुण मुञ्च नः । यदापो अघ्न्या इति वरुणेति यदूचिम ततो वरुण मुञ्च नः ॥२॥**

हे राजा वरुणदेवता ! तिमी हाम्रा शरीरमा रहेका सबै खालका रोगहरूबाट हामीलाई मुक्त गराऊ । तिमी रोग र पापबाट हामीलाई मुक्त गराऊ । वाणीको दुरूपयोगजनित पापबाट हामी मुक्त होऔँ ।

**उदुत्तमं वरुण पाशमस्मदवाधमं वि मध्यमं श्रथाय । अधा वयमादित्य व्रते तवानागसो अदितये स्याम ॥३॥**

हे वरुणदेवता ! तिमी हाम्रा शरीरको ऊर्ध्व भागमा रहेको पासोलाई माथितिरै तानेर नष्ट गर, मध्य भागमा रहेको पासो तानेर झिकिदेऊ र तल्लो भागमा रहेको पासोलाई पनि निकालेर नष्ट गराऊ । त्यसपछि हामी सबै खालका पासोबाट मुक्त भएर अखण्डित स्थितिमा रहौँ ।

**प्रास्मत् पाशान् वरुण मुञ्च सर्वान् य उत्तमा अधमा वारुणा ये । दुष्वप्न्यं दुरितं निष्वास्मदथ गच्छेम सुकृतस्य लोकम् ॥४॥**

हे वरुणदेवता ! हामीलाई तिमी आफ्ना उत्तम एवं अधम दुवै प्रकारका पासोबाट मुक्त गराऊ । दुःस्वप्न देख्नाले हुने गरेका पापहरू हटाइदेऊ । पासो र पापबाट मुक्त भएर हामी पुण्यलोक प्राप्त गरौँ ।

## ८९. क्षत्रभृदग्नि सूक्त

**ऋषि**— भृगु । **देवता**— अग्नि, इन्द्र । **छन्द**— जगती, त्रिष्टुप् ।

**अनाधृष्यो जातवेदा अमर्त्यो विराडग्ने क्षत्रभृद् दीदिहीह । विश्वा अमीवाः प्रमुञ्चन् मानुषीभिः शिवाभिरद्य परि पाहि नो गयम् ॥१॥**

हे अग्निदेवता ! तिमी अमर, बलशाली एवं उत्पन्न भएका समस्त प्राणीहरूका विषयमा जान्दछौ । हाम्रा यस कार्यमा तिमी प्रदीप्त भएर समस्त रोगहरूलाई शान्त गराऊ र हामीलाई कल्याणकारी साधनहरूले सुरक्षित गराऊ ।

**इन्द्र क्षत्रमभि वाममोजोऽजायथा वृषभ चर्षणीनाम् । अपानुदो जनममित्रायन्तमुरुं देवेभ्यो अकृणोरु लोकम् ॥२॥**

हे इन्द्रदेवता ! तिमी श्रेष्ठ क्षात्रबलले सम्पन्न छौ । हे कामनाहरूलाई पूर्ति गराउने अग्निदेवता ! हामीसित दुर्व्यवहार गर्ने शत्रुहरूलाई तिमी विनाश गर र देवताहरू जुन ठाउँमा निवास गर्दछन्, त्यही स्वर्गलोक हामीलाई प्राप्त गराऊ ।

**मृगो न भीमः कुचरो गिरिष्ठाः परावत आ जगम्यात् परस्याः । सृकं संशाय पविमिन्द्र तिग्मं वि शत्रून् ताढि वि मृधो नुदस्व ॥३॥**

पर्वतमा निवास गर्ने, डर लाग्दा पञ्जा भएका, भयङ्कर सिंहजस्तै शक्तिशाली इन्द्रदेवता परको लोकबाट आऊन् । हे इन्द्रदेवता ! तिमी आफ्ना तिखारेका वज्रले सङ्ग्राममा शत्रुलाई तिरस्कार गर्दै उनीहरूलाई नाश गर ।

## ९०. अरिष्टनेमि सूक्त

**ऋषि–** अथर्वा । **देवता–** तार्क्ष्य । **छन्द–** त्रिष्टुप् ।

**त्यमू षु वाजिनं देवजूतं सहोवानं तरुतारं रथानाम् । अरिष्टनेमिं पृतनाजिमाशुं स्वस्तये तार्क्ष्यमिहा हुवेम ॥१॥**

सुन्दर पँखेटा भएका जुन बलवान् छन्, देवताहरूले सोम ल्याउनका लागि जसलाई प्रेरित गरेका थिए, जसले म अरिष्टनेमीका पिता एवं शत्रुलाई पराजित गरेका थिए र जो शीघ्रतापूर्वक गमन गर्दछन् त्यस्ता उनी तृक्षका पुत्र तार्क्ष्य नाम भएका गरूडलाई हामी आह्वान गर्दछौँ ।

## ९१. त्राता इन्द्र सूक्त

**ऋषि–** अथर्वा । **देवता–** इन्द्र । **छन्द–** त्रिष्टुप् ।

**त्रातारमिन्द्रमवितारमिन्द्रं हवेहवे सुहवं शूरमिन्द्रम् । हुवे नु शक्रं पुरुहूतमिन्द्रं स्वस्ति न इन्द्रो मघवान् कृणोतु ॥१॥**

भयबाट मुक्त गराउने, समस्त किसिमका सङ्घर्षमा बोलाउन योग्य इन्द्रदेवतालाई हामी आह्वान गर्दछौँ । हामी शक्र नामका सबैतिरबाट बोलाइने गरेका इन्द्रदेवतालाई आह्वान गर्दछौँ । उनै धनवान् इन्द्रदेवताले हामीलाई सबै किसिमले कल्याण गरून् ।

## ९२. व्यापकदेव सूक्त

**ऋषि–** अथर्वा । **देवता–** रुद्र । **छन्द–** जगती ।

**यो अग्नौ रुद्रो यो अप्स्व१न्तर्य ओषधीर्विरुध आविवेश । य इमा विश्वा भुवनानि चाक्लृपे तस्मै रुद्राय नमो अस्त्वग्नये ॥१॥**

उनै अग्निजस्तै तेजस्वी रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ । जो अग्निमा, जलमा, औषधिमा प्रवेश पुगेका छन् र जो समस्त सृष्टिका प्राणीहरूको रचना गर्दछन्, उनैलाई हामी आह्वान गर्दछौँ ।

## ९३. सर्पविषनाशन सूक्त

**ऋषि–** गरुत्मान् । **देवता–** तक्षक । **छन्द–** त्र्यवसाना बृहती ।

**अपेह्यरिरस्यरिर्वा असि । विषे विषमपृक्था विषमिद् वा अपृक्थाः । अहिमेवाभ्यपेहि तं जहि ॥१॥**

हे विष ! तिमी सबैका शत्रु हौ । तिमी यस डँसिएको व्यक्तिबाट निस्केर उसै सर्पमा प्रवेश गर र उसै सर्पका लागि पनि शत्रु नै बनेर मारिदेऊ ।

## ९४. दिव्यआपः सूक्त

**ऋषि–** सिन्धुद्वीप । **देवता–** अग्नि । **छन्द–** अनुष्टुप्, त्रिपदा निचृत् परोष्णिक् ।

**अपो दिव्या अचायिषं रसेन समपृक्ष्महि । पयस्वानग्न आगमं तं मा सं सृज वर्चसा ॥१॥**

हामी दिव्य जलका रसले युक्त होऔँ । हे अग्निदेवता ! हामी तिम्रा सामु दुध लिएर आएका छौँ । कृपा गरेर हामीलाई तिमी तेजस्वी बनाऊ ।

**सं माग्ने वर्चसा सृज सं प्रजया समायुषा । विद्युर्मे अस्य देवा इन्द्रो विद्यात् सह ऋषिभिः ॥२॥**

हे अग्निदेवता ! हामीलाई तिमी पवित्र बलले युक्त बनाऊ । तिम्रा यस कृपाले हामीलाई ऋषि र देवताका साथै इन्द्रदेवताले पनि पवित्र मानून् । हामीलाई तिमी पुत्रपौत्रादिका साथमा लामो

आयु पनि प्रदान गर ।

**इदमापः प्र वहतावद्यं च मलं च यत् । यच्चाभिदुद्रोहानृतं यच्च शेपे अभीरुणम् ॥३॥**

हे जलसमूह ! हामीले जेजति निन्दा, असत्य भाषण गरेका छौँ, ऋण तिरेका छैनौँ, पितासित द्रोह गरेका छौँ वा यस्तै अरू पापकर्म गरेका छौँ, तिमी ती सबै पापका समूहबाट हामीलाई पर लैजाऊ र हाम्रो रक्षा गर ।

**एधोऽस्येधिषीय समिदसि समेधिषीय । तेजोऽसि तेजो मयि धेहि ॥४॥**

हे अग्निदेवता ! जसरी तिमी बलले तेजस्वी भएर शत्रुलाई नाश गर्दछौ, उसै गरी हामीलाई पनि तेजस्वी बनाऊ ।

## ९५. शत्रुबलनाशन सूक्त

**ऋषि–** अङ्गिरा । **देवता–** मन्त्रोक्त । **छन्द–** गायत्री, विराट् पुरस्ताद् बृहती, त्र्यवसाना षट्पदा भूरिक् जगती ।

**अपि वृश्च पुराणवद् व्रततेरिव गुष्पितम् । ओजो दासस्य दम्भय ॥१॥**

हे अग्निदेवता ! तिमी यस हिंस्रक शत्रुको बल र तेज उसै गरी नष्ट गराऊ जसरी उहिलेका शत्रुको बलवीर्य नष्ट गराएका थियौ ।

**वयं तदस्य संभृतं वस्विन्द्रेण वि भजामहै । म्लापयामि भ्रजः शिभ्रं वरुणस्य व्रतेन ते ॥२॥**

शत्रुले एकत्रित गरेको धन हामी इन्द्रदेवताको सहायताले प्राप्त गर्दछौँ र वरुणदेवताको सहायताले तेजस्वी शत्रुको घमन्ड नाश गराउँछौँ ।

**यथा शेपो अपायातै स्त्रीषु चासदनावयाः । अवस्थस्य क्नदीवतः शाङ्कुरस्य नितोदिनः । यदाततमव तत्तनु यदुत्तनं नि तत्तनु ॥३॥**

निम्न स्तरको वाणी र काँडाजस्तै भएर दुःख दिने मानिसले फैलाएको आतङ्क नाश होस् । तिनीहरूको शारीरिक सामर्थ्य नाश होस् । यिनका शरीरका अङ्गहरूले स्त्रीका शरीरलाई दुःख दिन नसकून् ।

## ९६. सुत्रामा इन्द्र सूक्त

**ऋषि–** अथर्वा । **देवता–** चन्द्रमा । **छन्द–** त्रिष्टुप् ।

**इन्द्रः सुत्रामा स्ववाँ अवोभिः सुमृडीको भवतु विश्ववेदाः । बाधतां द्वेषो अभयं नः कृणोतु सुवीर्यस्य पतयः स्याम ॥१॥**

श्रेष्ठ रक्षक इन्द्रदेवताले आफ्ना सुखदायक रक्षा साधनले हामीलाई रक्षा गरून् । समस्त धनले सम्पन्न इन्द्रदेवताले हामीलाई धन प्रदान गरून् र शत्रुलाई संहार गरेर हामीलाई निर्भय गरून् ।

## ९७. सुत्रामा इन्द्र सूक्त

**ऋषि–** अथर्वा । **देवता–** चन्द्रमा । **छन्द–** त्रिष्टुप् ।

**स सुत्रामा स्ववाँ इन्द्रो अस्मदाराच्चिद् द्वेषः सनुतर्युयोतु । तस्य वयं सुमतौ यज्ञियस्यापि भद्रे सौमनसे स्याम ॥१॥**

इन्द्रदेवता श्रेष्ठ रक्षक हुन् । त्यसैले आफ्ना शक्तिले शत्रुलाई हाम्रा नजिकबाट धेरै टाढा भगाउँछन् । यस्ता इन्द्रदेवताको कल्याणकारी सद्‌बुद्धिको कृपा हामीलाई प्राप्त भइरहोस् र त्यसबाट हामीलाई कल्याण होस् ।

## ९८. शत्रुनाशन सूक्त

**ऋषि–** भृग्वङ्गिरा । **देवता–** इन्द्र । **छन्द–** गायत्री

**इन्द्रेण मन्युना वयमभि ष्याम पृतन्यतः । घ्नन्तो वृत्राण्यप्रति ॥१॥**

हामीसित युद्ध गर्ने जसलाई रहर छ, त्यस्ता शत्रुलाई हामी इन्द्रदेवताको सहयाताले पराजित गराउँछौँ । उनै इन्द्रदेवताले पराजित भएका शत्रुलाई समूल नष्ट गराइदिऊन् ।

## ९९. सांमनस्य सूक्त

**ऋषि**– अथर्वा । **देवता**– सोम । **छन्द**– अनुष्टुप् ।

**ध्रुवं ध्रुवेण हविषाव सोमं नयामसि । यथा न इन्द्रः केवलीर्विशः संमनसस्करत् ॥१॥**

स्थिर भएर रहेका सोमलाई हामी सोमशकट वा पाल्की आदि साधनमा पुरोडाश आदि हविका साथमा इन्द्रदेवताका निम्ति ल्याउँछौं । यसबाट प्रसन्न भएर इन्द्रदेवताले हाम्रा सन्तानहरूलाई सुस्थिर मति प्रदान गरून् ।

## १००. शत्रुनाशन सूक्त

**ऋषि**– कपिञ्जल । **देवता**– गृध्रद्वय । **छन्द**– अनुष्टुप्, भुरिक् अनुष्टुप् ।

**उदस्य श्यावौ विथुरौ गृध्रौ द्यामिव पेततुः । उच्छोचनप्रशोचनावस्योच्छोचनौ हृदः ॥१॥**

शत्रुको ओठ चिरियोस् अथवा उसका प्राण र अपान जसरी आकाशमा गिद्ध नामको चरो उड्दछ उसरी नै उडेर जाओस् ।

**अहमेनावुदतिष्ठिपं गावौ श्रान्तसदाविव । कुर्कुराविव कूजन्तावुदवन्तौ वृकाविव ॥२॥**

जसरी थाकेका गोरुलाई, भुक्न लागेका कुकुरलाई र ब्वाँसालाई मानिसले बलपूर्वक लखेट्ने गर्दछन् उसै गरी शत्रुको प्राणलाई पनि हामी बलपूर्वक अलग गराउँछौं ।

**आतोदिनौ नितोदिनावथो संतोदिनावुत । अपि नह्याम्यस्य मेढ्रं इतः स्त्री पुमाञ्जभार ॥३॥**

हामी शत्रुका रूपमा रहेका ती स्त्री वा पुरुषका मर्मस्थानमा पीडित गर्दछौं, जसले हाम्रो धन हरण गरेका छन् । ती स्त्री वा पुरुषले यसैका पिरले आफ्नो ज्यान फ्यालेर मरुन् ।

## १०१. शत्रुनाशन सूक्त

**ऋषि**– कपिञ्जल । **देवता**– वय । **छन्द**– अनुष्टुप् ।

**असदन् गावः सदनेऽपप्तद् वसतिं वयः । आस्थाने पर्वता अस्थुः स्थाम्नि वृक्कावतिष्ठिपम् ॥१॥**

जसरी गाईहरू गोठमा र चराहरू गुँडमा सुखपूर्वक बसेका हुन्छन्, पर्वतहरू आफ्ना सुनिश्चित स्थानमा स्थिर भएर रहेका हुन्छन्, उसै गरी शरीरमा हामी दुवै मृगौला स्थापित गराउँछौं ।

## १०२. यज्ञ सूक्त

**ऋषि**– अथर्वा । **देवता**– इन्द्राग्नि । **छन्द**– त्रिष्टुप्, त्रिपदार्ची भुरिक् गायत्री, त्रिपदा प्राजापत्या बृहती, त्रिपदा साम्नी भुरिक् जगती, उपरिष्टाद् बृहती ।

**यदद्य त्वा प्रयति यज्ञे अस्मिन् होतश्चिकित्वन्नवृणीमहीह । ध्रुवमयो ध्रुवमुता शविष्ठ प्रविद्वान् यज्ञमुप याहि सोमम् ॥१॥**

हे ज्ञानी होता अग्निदेवता ! तिमीलाई हामी वरण गर्दछौं । हे बलशाली ! तिमी शान्तिपूर्वक आऊ र सोमरूपी हवि ग्रहण गर ।

**समिन्द्र नो मनसा नेष गोभिः सं सूरिभिर्हरिवन्त्सं स्वस्त्या । सं ब्रह्मणा देवहितं यदस्ति सं देवानां सुमतौ यज्ञियानाम् ॥२॥**

हे हरियो वर्णका अश्व भएका इन्द्रदेवता ! हामीलाई तिमी श्रेष्ठ मन, उत्तम वाणी र कल्याणकारी विद्वानहरूले सम्पन्न गराऊ । हामी देवताको हित गर्नेहरूलाई ज्ञान र देवताको शुभ मतितर्फ लैजाऊ ।

**यानावह उशतो देव देवांस्तान् प्रेरय स्वे अग्ने सधस्थे । जक्षिवांसः पपिवांसो मधून्यस्मै धत्त वसवो वसूनि ॥३॥**

हे तेजस्वी अग्निदेवता ! हविको कामना भएका जुन देवताहरूलाई तिमीले आह्वान गरेका छौ, तृप्त गरेर उनीहरूलाई सुनिश्चित उत्तम स्थानमा पठाऊ । हवि आदि सेवन र मधु आदि उत्तम रस पान गर्ने हे वसुगण ! तिमीहरू याजकलाई धनधान्यादि प्रदान गर ।

**सुगा वो देवाः सदना अकर्म य आजग्म सवने मा जुषाणाः । वहमाना भरमाणाः स्वा वसूनि वसुं घर्मं दिवमा रोहतानु ॥४॥**

हे देवताहरू हो ! हामीले तिमीहरू सबैका लागि उत्तम आवास निर्माण गरेका छौं । यस यज्ञमा अर्पित हवि तिमीहरूले ग्रहण गरेका छौ । अब तिमीहरू प्रसन्न भएर आफ्नो श्रेष्ठ धन हामीलाई प्रदान गरेर स्वयं प्रकाशित द्युलोकमा आरोहण गर ।

**यज्ञ यज्ञं गच्छ यज्ञपतिं गच्छ । स्वां योनिं गच्छ स्वाहा ॥५॥**

हे यज्ञदेवता ! तिमी हाम्रो यज्ञ, यज्ञपति तथा आफ्नो आश्रयस्थानमा जाऊ । यो आहुति तिम्रा लागि समर्पित गरिएको छ ।

**एष ते यज्ञो यज्ञपते सहसूक्तवाकः । सुवीर्यः स्वाहा ॥६॥**

हे याजक !सूक्त र मन्त्रले विधिपूर्वक हुने यस यज्ञले तिमीलाई कल्याणकारी सामर्थ्यले युक्त बनाओस् । यो आहुति तिम्रा लागि समर्पित गरिएको छ ।

**वषड्ढुतेभ्यो वषडहुतेभ्यः । देवा गातुविदो गातुं वित्त्वा गातुमित ॥७॥**

जुन देवताहरूका लागि यजन गरिएको छ र जसको यजन गरिएको छैन, ती सबै देवताहरूका लागि यो आहुति समर्पित छ । हे मार्गका जानकारी भएका देवताहरू हो ! जुन मार्गबाट तिमीहरू आएका थियौ, यसो सत्कर्मको समाप्ति भएपछि तिमीहरू उसै मार्गबाट आआफ्ना स्थानमा फिर्ता जाओ ।

**मनसस्पत इमं नो दिवि देवेषु यज्ञम् । स्वाहा दिवि स्वाहा पृथिव्यां स्वाहान्तरिक्षे स्वाहा वाते धां स्वाहा ॥८॥**

हे मनका स्वामी ! तिमी हाम्रा यस यज्ञलाई द्युलोकमा देवताहरूसम्म पुऱ्याइदेऊ । पृथ्वी, अन्तरिक्ष, द्युलोक र समस्त वायुमण्डलमा यसलाई स्थापित गराऊ । यो आहुति तिम्रा लागि समर्पित गरिएको छ ।

## १०३. हवि सूक्त

**ऋषि**– अथर्वा । **देवता**– इन्द्र, विश्वेदेवा । **छन्द**– विराट् त्रिष्टुप् ।

**सं बर्हिरक्तं हविषा घृतेन समिन्द्रेण वसुना सं मरुद्भिः । सं देवैर्विश्वदेवेभिरक्तमिन्द्रं गच्छतु हविः स्वाहा ॥१॥**

घिउ र हवनसामग्रीले भरिएको आहुति मनग्गे मात्रामा प्रदान गरिएको छ । यसबाट इन्द्र, वसु, मरुत्सहित समस्त देवगण तृप्त होऊन् । यो उत्तम आहुति देवताहरूमा प्रमुख इन्द्रदेवताका लागि प्राप्त होस् ।

## १०४. वेदी सूक्त

**ऋषि**– अथर्वा । **देवता**– वेदी । **छन्द**– भुरिक् त्रिष्टुप् ।

**परि स्तृणीहि परि धेहि वेदिं मा जामिं मोषीरमुया शयानाम् । होतृषदनं हरितं हिरण्ययं निष्का एते यजमानस्य लोके ॥१॥**

हे यज्ञदेवता ! चारैतिर फैलिएर वेदीलाई ओगट । याजकको बहिनीरूपी भावनाको गतिलाई बाधा नपार । याजकहरूका घर हरियालीले युक्त होऊन् तथा यजमानलाई यस लोकमा स्वर्णमुद्रा र अलङ्कारहरू प्राप्त होऊन् ।

## १०५. दुःस्वप्ननाशन सूक्त

**ऋषि**– यम । **देवता**– दुःष्वप्न नाशन । **छन्द**– अनुष्टुप् ।

**पर्यावर्तेदुष्वप्न्यात् पापात् स्वप्न्यादभूत्याः । ब्रह्माहमन्तरं कृण्वे परा स्वप्नमुखाः शुचः ॥१॥**

हामी दुःस्वप्नबाट हुने पापबाट मुक्त हुनेछौं । हामी ज्ञानको मध्यस्थताले स्वप्न र शोक आदिबाट उत्पन्न पापलाई दूर गराउँछौं र तिनबाट मुक्त हुन्छौं ।

## १०६. दुःस्वप्ननाशन सूक्त

**ऋषि**— यम । **देवता**— दुःष्वप्ननाशन । **छन्द**— अनुष्टुप् ।

**यत् स्वप्ने अन्नमश्नामि न प्रातरधिगम्यते । सर्वं तदस्तु मे शिवं नहि तद् दृश्यते दिवा ॥१॥**

हामीले स्वप्नमा जुन अन्न खायौँ, जागेका बेला त्यसको कुनै बोध हुँदैन र त्यो दिउँसो देखिँदैन पनि । त्यसो भए तापनि त्यो सबै कुरो हाम्रा लागि कल्याणकारी होस् ।

## १०७. आत्मन– अहिंसन सूक्त

**ऋषि**— प्रजापति । **देवता**— द्यावापृथिवी, अन्तरिक्ष, मृत्यु । **छन्द**— विरात् पुरस्तात् बृहती ।

**नमस्कृत्य द्यावापृथिवीभ्यामन्तरिक्षाय मृत्यवे । मेक्षाम्यूर्ध्वस्तिष्ठन् मा मा हिंसिषुरीश्वराः ॥१॥**

हामी द्यावापृथिवी, अन्तरिक्ष र मृत्युलाई नमस्कार गर्दछौँ । यिनीहरूका स्वामी अग्नि, वायु र सूर्यदेवताका साथै मृत्युले पनि हामीलाई वध नगरून् । हामी दीर्घ कालसम्म यसै लोकमा रहौँ ।

## १०८. क्षत्रिय सूक्त

**ऋषि**— प्रजापति । **देवता**— ब्रह्मात्मा । **छन्द**— त्रिष्टुप् ।

**को अस्या नो द्रुहो ऽवद्यवत्या उन्नेष्यति क्षत्रियो वस्य इच्छन् । को यज्ञकामः क उ पूर्तिकामः को देवेषु वनुते दीर्घमायुः ॥१॥**

आपसी द्रोहवृत्तिरूपी यस निन्दनीय दुर्गति नामकी पिशाचिनीबाट हामीलाई कसले जोगाउला ? यस यज्ञ अनुष्ठानलाई पूर्ण गर्ने कामना गर्ने को होला ? हामीलाई धनऐश्वर्य कसले देला ? हामीलाई कुन देवताले लामो आयु देलान् ?

## १०९. गौ सूक्त

**ऋषि**— प्रजापति । **देवता**— ब्रह्मात्मा । **छन्द**— त्रिष्टुप् ।

**कः पृश्निं धेनुं वरुणेन दत्तामथर्वणे सुदुघां नित्यवत्साम् । बृहस्पतिना सख्यं जुषाणो यथावशं तन्वः कल्पयाति ॥१॥**

अथर्वाले वरुणदेवालाई विविध वर्णका, सुखपूर्वक दुध दिने बाछासहितका गाई प्रदान गरे । बृहस्पतिदेवताका मित्र प्रजापतिदेवताले यी गाईहरूलाई सबै किसिमले स्वस्थ राखून् ।

## ११०. दिव्यवचन सूक्त

**ऋषि**— अथर्वा । **देवता**— मन्त्रोक्त । **छन्द**— अनुष्टुप् ।

**अपक्रामन् पौरुषेयाद् वृणानो दैव्यं वचः । प्रणीतीरभ्यावर्तस्व विश्वेभिः सखिभिः सह ॥१॥**

हे साधक ! तिमी आफ्ना समस्त सहपाठीका साथमा दिव्य वचन सुनेर त्यसलाई धारण गर र सामान्य मानिसबाट गरिने कार्यबाट हटेर उच्च आचरण गर्दै देवत्वतर्फ अग्रसर होऊ ।

## १११. अमृतत्व सूक्त

**ऋषि**— अथर्वा । **देवता**— जातवेदा, वरुण । **छन्द**— बृहतीगर्भा त्रिष्टुप् ।

**यदस्मृति चकृम किं चिदग्न उपारिम चरणे जातवेदः । ततः पाहि त्वं नः प्रचेतः शुभे सखिभ्यो अमृतत्वमस्तु नः ॥१॥**

हे अग्निदेवता ! स्मरणका अभावमा हामीले आचरणसम्बन्धी जुन भुल गरेका छौँ ती अपराध तिमी क्षमा गर । हे जातवेदा अग्निदेवता ! तिमी यस्ता खालका भुलबाट बचाऊ र हाम्रा मित्रहरूका साथमा हामीलाई अमरता प्रदान गर ।

## ११२. संतरण सूक्त

**ऋषि–** भृगु । **देवता–** सूर्य, आपः । **छन्द–** अनुष्टुप् ।

**अव दिवस्तारयन्ति सप्त सूर्यस्य रश्मयः । आपः समुद्रिया धारास्तास्ते शल्यमसिस्रसन् ॥१॥**

सूर्यदेवताले आफ्ना सात किरणले समुद्रको जलधारालाई पहिले द्युलोकसम्म लैजान्छन् । अनि त्यसैबाट वर्षा गराउँछन् । हे व्याधिग्रस्त मानिस ! उनले तिम्रो शल्यजत्तिकै दुःख दिने रोगलाई नष्ट गरून् ।

## ११३. शत्रुनाशन सूक्त

**ऋषि–** भृगु । **देवता–** अग्नि । **छन्द–** बृहतीगर्भा त्रिष्टुप्, त्रिष्टुप् ।

**यो नस्तायद् दिप्सति यो न आविः स्वो विद्वानरणो वा नो अग्ने । प्रतीच्येत्वरणी दत्वती तान् मैषामग्ने वास्तु भून्मो अपत्यम् ॥१॥**

हे अग्निदेवता ! प्रत्यक्ष रूपले होस् वा अप्रत्यक्ष रूपले; जसले हामीलाई दुःख दिन्छ, त्यो हाम्रो आफन्त नै भए पनि वा पराई नै होस्, त्यो विद्वान् नै भए पनि त्यसको निवास नष्ट होस् र त्यो सन्तानहीन होस् । त्यसलाई पछाडिपट्टि दाँत भएको चाबुक नामका डोरीले पिटेर दुःख देऊ ।

**यो नः पुप्ताञ्जाग्रतो वाभिदासात् तिष्ठतो वा चरतो जातवेदः । वैश्वानरेण सयुजा सजोषास्तान् प्रतीचो निर्दह जातवेदः ॥२॥**

हे जातवेदा अग्निदेवता ! जुन दुष्टले मलाई सुतेका बेला वा जागेका अवस्थामा अथवा हिँडिरहेका बेला वा बसेका समयमा मार्ने विचार गर्दछ भने त्यसलाई तिमी वैश्वानर अग्निदेवताका सहायताले नष्ट गराइदेऊ ।

## ११४. राष्ट्रभृत सूक्त

**ऋषि–** बादरायणि । **देवता–** अग्नि । **छन्द–** त्रिष्टुप्, विराट् पुरस्ताद् बृहती, अनुष्टुप् ।

**इदमुग्राय बभ्रवे नमो यो अक्षेषु तनूवशी । घेतेन कलिं शिक्षामि स नो मृडातीदृशे ॥१॥**

उग्र वीर बभ्रु नामका देवतालाई हामी नमस्कार गर्दछौं र अभिमन्त्रित घिउले पाशलाई पीडित गर्दछौं । पाशलाई नियन्त्रणमा राख्ने यी देवताले हामीलाई यस्तो जितहारको खेलरूपी जीवनमा जित प्रदान गरेर सुखी बनाऊन् ।

**घृतमप्सराभ्यो वह त्वमग्ने पांसूनक्षेभ्यः सिकता अपश्च । यथाभागं हव्यदातिं जुषाणा मदन्ति देवा उभयानि हव्या ॥२॥**

हे अग्निदेवता ! तिमी अन्तरिक्षमा निवास गर्ने अप्सराहरूका लागि हामीबाट प्रदान गरिएको घिउ पुऱ्याइदेऊ । जितहारका यस जीवनरूपी खेलमा हाम्रा जो प्रतिद्वन्द्वीहरू छन्, उनलाई जल र धुलोले तर्साऊ । इन्द्रदेवताका साथै अन्य देवताहरू पनि आआफ्नो हविको भाग लिएर तृप्त होऊन् ।

**अप्सरसः सधमादं मदन्ति हविर्धानमन्तरा सूर्यं च । ता मे हस्तौ सं सृजन्तु घृतेन सपत्नं मे कितवं रन्धयन्तु ॥३॥**

सूर्यलोकमा, भूलोक एवं दुवैका मध्य भागमा रहेको अन्तरिक्षमा अर्पण गरिएको हविले अप्सराहरू हर्षित भइरहेका छन् । उनीहरू प्रसन्न भएर हाम्रा प्रतिद्वन्द्वीहरूलाई हाम्रो वशमा गराऊन् । जसरी घिउलाई सार मानिन्छ उसरी नै खेलको सार भनेको विजय हो । यही विजयरूपी घिउ हामीलाई उनले हात लगाइदिऊन् ।

**आदिनवं प्रतिदीव्ने घृतेनास्माँ अभि क्षर । वृक्षमिवाशन्या जहि यो अस्मान् प्रतिदीव्यति ॥४॥**

प्रतिद्वन्द्वीहरूका साथमा भएका यस खेलमा हामीलाई घिउरूपी सारले युक्त गराऊ । हाम्रा

प्रतिद्वन्द्वीहरूलाई तिमी उसै किसिमले नष्ट गराऊ, जसरी बिजुलीले वृक्षलाई नाश गर्दछ ।

**यो नो द्युवे धनमिदं चकार यो अक्षाणां ग्लहनं शेषणं च । स नो देवो हविरिदं जुषाणो गन्धर्वेभिः सधमादं मदेम ॥५॥**

जुन देवताहरूले कृपा गरेर हामीलाई यस खेलमा विजयी बनाएका छन्, जसले हाम्रा प्रतिपक्षीहरूका आँखा कमजोर गराएका छन् र हामीलाई उनको धन दिएका छन्, उनै देवताहरू हामीले दिएको हवि ग्रहण गरून् । हामी आनिन्दत भएका गन्धर्वहरूसँग आनन्दित होऔँ ।

**संवसव इति वो नामधेयमुग्रंपश्या राष्ट्रभृतो ह्यक्षाः । तेभ्यो व इन्दवो हविषा विधेम वयं स्याम पतयो रयीणाम् ॥६॥**

हे गन्धर्वहरू हो ! तिमीहरू उग्र दृष्टि भएका, राष्ट्रको भरणपोषण गर्ने, एवं संवसव अर्थात् उचित किमिसको वास प्रदान गर्ने नाम भएका छौ । हामी तिमीहरूका लागि यजन गर्दछौँ । अर्पित हविले तिमीहरू प्रसन्न भएर हामीलाई धनसम्पत्तिको स्वामी बनाओ ।

**देवान् यन्नाथितो हुवे ब्रह्मचर्यं यदूषिम । अक्षान् यद् बभ्रूनालभे ते नो मृडन्त्वीदृशे ॥७॥**

धन प्राप्त गर्ने इच्छाले हामी अग्नि आदि देवताहरूलाई आह्वान गर्दछौँ । हामी ब्रह्मचर्य व्रतपूवर्क बभ्रु नामका देवताको पासो स्पर्श गर्ने साहस गर्दछौँ । ती देवताले हामीलाई विजयको सुख प्रदान गरून् ।

## ११५. शत्रुनाशन सूक्त

**ऋषि–** भृगु । **देवता–** इन्द्राग्नी । **छन्द–** गायत्री, त्रिष्टुप्, अनुष्टुप् ।

**अग्न इन्द्रश्च दाशुषे हतो वृत्राण्यप्रति । उभा हि वृत्रहन्तमा ॥१॥**

हे अग्निदेवता र इन्द्रदेवता ! तिमीहरू दुईले वृत्रलाई संहार गरेका हौ । कृपा गरेर हामी हविदाताहरूलाई छेकेर राख्ने पापलाई तिमीहरू नाश गर । हामी सबै पापमुक्त हुन सकौँ ।

**याभ्यामजयन्त्स्व१रग्र एव यावातस्थतुर्भुवनानि विश्वा । प्रचर्षणी वृषणा वज्रबाहू अग्निमिन्द्रं वृत्रहणा हुवेऽहम् ॥२॥**

जसले देवताहरूको सहयोग गरेर, उनीहरूलाई स्वर्ग प्राप्त गराए र समस्त प्राणीहरूमा व्याप्त भएका छन्, जो देवकर्ममका साक्षी हुन् र कामनाहरूलाई पूरा गराउँछन्, त्यस्ता अग्निदेवता र इन्द्रदेवतालाई हामी आह्वान गर्दछौँ ।

**उप त्वा देवो अग्रभीच्चमसेन बृहस्पतिः । इन्द्र गीर्भिर्न आ विश यजमानाय सुन्वते ॥३॥**

हे इन्द्रदेवता ! देवताहरूका हितैषि बृहस्पतिदेवता चमस नामका पात्रमा यज्ञको आहुति तिमीलाई प्राप्त गराउँछन् । उसै गरी सोम तयार गर्ने यी यजमानहरूसित प्रसन्न भएर तिमी यिनको स्तुति स्वीकार गर र यिनलाई धन प्रदान गर ।

## ११६. आत्मा सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** वृषभ । **छन्द–** पराबृहती, त्रिष्टुप् ।

**इन्द्रस्य कुक्षिरसि सोमधान आत्मा देवानामुत मानुषाणाम् । इह प्रजा जनय यास्त आसु या अन्यत्रेह तास्ते रमन्ताम् ॥१॥**

हे वृषभ ! तिमी सोमधारण गर्ने हौ । तिमी मानव र देवताको आत्माका रूपमा रहेका छौ । तिमी यहाँ प्रजा उत्पन्न गर । यहाँ वा अन्यत्र जहाँसुकै भए पनि प्रजाहरू सुखी रहून् ।

## ११७. पापनाशन सूक्त

**ऋषि–** वरुण । **देवता–** आपः, वरुण । **छन्द–** भूरिक् अनुष्टुप्, अनुष्टुप् ।

**शुम्भनी द्यावापृथिवी अन्तिसुम्ने महिव्रते । आपः सप्त सुस्रुवुर्देवीस्ता नो मुञ्चन्त्वंहसः ॥१॥**

द्यावापृथिवीले महान् व्रत धारण गरेका छन् । यिनले हामीलाई नजिकैबाट सुख प्रदान गर्दछन् । यहाँका प्रवाहित हुने गरेका सात वटा दिव्य धाराहरूले हामीलाई पापबाट बचाऊन् ।

**मुञ्चन्तु मा शपथ्याऽदथो वरुण्या दुत । अथो यमस्य पड्वीशाद् विश्वस्माद् देवकिल्बिषात् ॥२॥**

वरुणदेवताले हामीलाई शाप, क्रोध र यमका बन्धनबाट बचाऊन् । देवताहरूप्रति गरिएका अनुचित कर्मले उत्पन्न भएका दोषहरूबाट पनि वरुणदेवताले हामीलाई मुक्त गराऊन् ।

## ११८. शत्रुनाशन सूक्त

**ऋषि**– भार्गव । **देवता**– तृष्टिका । **छन्द**– विराट् अनुष्टुप्, शंकुमती चतुष्पदा भुरिक् उष्णिक् ।

**तृष्टिके तृष्टवन्दन उदमूं छिन्धि तृष्टिके । यथा कृतद्विष्टासोऽमुष्मै शेप्यावते ॥१॥**

हे कामतृष्णा ! हे धनतृष्णा ! तिमीहरू आआफ्ना कुप्रभावले स्त्रीपुरुषमा द्वेष उत्पन्न गराउँछौ । उनीहरूका स्नेहको सम्बन्ध पनि काटिदिन्छौ ।

**तृष्टासि तृष्टिका विषा विषातक्यसि । परिवृक्ता यथासस्यृषभस्य वशेव ॥२॥**

हे तृष्णा ! तिमी लोभमय छौ । तिमी विषको लहराझैं विषैलो प्रभाव पार्दछौ । साँढेले छोडिदिनाले जसरी गाईहरू बाछोविनाका हुन्छन् उसै गरी तिमी पनि त्याग्ने योग्य छौ ।

## ११९. शत्रुनाशन सूक्त

**ऋषि**– भार्गव । **देवता**– अग्नीषोमा । **छन्द**– अनुष्टुप् ।

**आ ते ददे वक्षणाभ्य आ तेऽहं हृदयाद् ददे । आ ते मुखस्य संकाशात् सर्वं ते वर्च आ ददे ॥१॥**

हे द्वेषकारिणी अधम स्त्री ! हामी तिम्रो मुख, वक्षस्थल आदि आकर्षक अङ्गका तेजलाई नष्ट गर्दछौं । हृदयका कुत्सित भावनाहरूलाई नाश गराउँछौं ।

**प्रेतो यन्तु व्याध्यः प्रानुध्याः प्रो अशस्तयः । अग्नी रक्षस्विनीर्हन्तु सोमो हन्तु दुरस्यतीः ॥२॥**

हे विकारबाट ग्रस्त स्त्री र पुरुषहरू हो ! तिमीहरूको शारीरिक रोग र मानसिक चिन्ता हटोस् । तिमीहरू लोकनिन्दाबाट मुक्त होओ । अग्निदेवताले राक्षसनीहरूको नाश गरून् र सोमदेवताले अनिष्ट चिन्तनलाई प्रेरित गर्ने पिशाचिनीहरूलाई संहार गरून् ।

## १२०. पापलक्षणनाशन सूक्त

**ऋषि**– अथर्वाङ्गिरा । **देवता**– सविता, जातवेदा । **छन्द**– अनुष्टुप्, त्रिष्टुप् ।

**प्र पतेतः पापि लक्ष्मि नशयेतः प्रामुतः पत । अयस्मयेनाङ्केन द्विषते त्वा सजामसि ॥१॥**

हे पापलक्ष्मी ! तिमी यहाँबाट धेरै कोस टाढा जाऊ । अरू सबै तिरबाट हट्दै तिमी हाम्रा शत्रुका नजिकै स्थिर होऊ । हामी फलामे सुइराले तिमीलाई आफ्ना शत्रु भएतिर पठाउँछौं ।

**या मा लक्ष्मीः पतयालूरजुष्टाभिचस्कन्द वन्दनेव वृक्षम् । अन्यत्रास्मत् सवितस्तामितो धा हिरण्यहस्तो वसु नो रराणः ॥२॥**

वन्दना नामको लहरो जसरी कुनै वृक्षमा चढेपछि त्यो रुख नै सुकाउँछ उसै गरी यी अलक्ष्मी हामीमाथि आरोपित भएर हामीलाई सुकाउँदै छिन् । हे सूर्यदेवता ! तिमी यी अलक्ष्मीलाई हामीबाट पर लैजाऊ र हामीलाई सुवर्ण प्रदान गर ।

**एकशतं लक्ष्म्यो३ मर्त्यस्य साकं तन्वा जनुषोऽधि जाताः । तासां पापिष्ठा निरितः प्र हिण्मः शिवा अस्मभ्यं जातवेदो नि यच्छ ॥३॥**

मानिसको जन्मका साथै एक सय एक लक्ष्मीले जन्म लिएका छन् । यिनीहरूमा जुन पापमय अलक्ष्मीहरू छन्, उनलाई हामी सधैंभरिका लागि पर हटाउँछौं । हे जातवेदा अग्निदेवता ! यिनीहरूमा जुन कल्याणकारी लक्ष्मीहरू छन्, तिनलाई तिमी हाम्रा नजिक ल्याइदेऊ ।

**एता एना व्याकरं खिले गा विष्ठिता इव । रमन्तां पुण्या लक्ष्मीर्याः पापीस्ता अनीनशम् ॥४॥**

गोठमा भएका गाईहरूलाई गुण वा अवगुणका आधारमा जसरी दुई भागमा बाँड्ने गरिन्छ, उसै गरी सबै लक्ष्मीहरूमध्ये पुण्यकारक लक्ष्मी नै हामीसँग आनन्दका साथ बसून् र पापमयी अलक्ष्मीहरू हामीदेखि पर जाऊन् ।

## १२१. ज्वरनाशन सूक्त

**ऋषि–** अथर्वाङ्गिरा । **देवता–** चन्द्रमा । **छन्द–** परोष्णिक्, एकावसाना द्विपदा आर्ची अनुष्टुप् ।

**नमो रूराय च्यवनाय नोदनाय धृष्णवे । नमः शीताय पूर्वकामकृत्वने ॥१॥**

तातो गराउने, हल्लाउने, भड्काउने, डर देखाउने, जाडो हुँदै आउने र शरीर ख्याउटे गराउने आदि सबै खालका ज्वरहरूलाई नमस्कार छ ।

**यो अन्येद्युरुभयद्युरभ्येतीमं मण्डूकमभ्ये त्वव्रतः ॥२॥**

एक दिन बिराएर आउने, दुई दिन बिराएर आउने र कुनै निश्चित समयविनै आउने गरेका जुन ज्वरहरू छन्, तिनीहरू सबै यी भ्यागुतोझैं अल्छी गर्ने व्यक्तिकहाँ जाऊन् ।

## १२२. शत्रुनिवारण सूक्त

**ऋषि–** अथर्वाङ्गिरा । **देवता–** इन्द्र । **छन्द–** पथ्याबृहती ।

**आ मन्द्रैरिन्द्र हरिभिर्याहि मयुररोमभिः । मा त्वा के चिद् वि यमन् विं न पाशिनोऽति धन्वेव ताँ इहि ॥१॥**

हे इन्द्रदेवता ! तिमी आफ्नो मयूरपङ्खी वर्णका अर्थात् सात रङ्गका अश्वलाई साथमा लिएर यहाँ आऊ । जसरी व्याधाले पक्षीहरूलाई जालमा फँसाउने गर्दछ, त्यसरी तिमीलाई कसैले पनि आफ्नो वाणी आदिका जालमा फँसाउन सक्दैन । त्यस्तो कपटीहरूलाई तिमी बालुवाको मैदानलाई झैं छोडेर यहाँ आऊ ।

## १२३. वर्मधारण सूक्त

**ऋषि–** अथर्वाङ्गिरा । **देवता–** चन्द्रमा, वरुण, देवगण । **छन्द–** त्रिष्टुप् ।

**मर्माणि ते वर्मणा छादयामि सोमस्त्वा राजामृतेनानु वस्ताम् । उरोर्वरीयो वरुणस्ते कृणोतु जयन्तं त्वानु देवा मदन्तु ॥१॥**

हे वीर ! तिनीजस्ता विजयका अभिलाषीको मर्मस्थानलाई हामी कवचले सुरक्षित गर्दछौं । सोमदेवताले अमृतमय आच्छादनले तिमीलाई सुरक्षित गराऊन् । वरुणदेवताले महान् सुख प्रदान गरून् । विजय प्राप्त गराउनका लागि इन्द्र आदि सबै देवताले तिमीलाई प्रोत्साहित गरिरहून् ।

**॥इति सप्तमं काण्डम् ॥**

सातौं काण्ड सकियो ।

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

अथर्ववेद – संहिता

# ॥अथष्टमं काण्डम् ॥

## १. दीर्घायुप्राप्ति सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** आयु । **छन्द–** पुरोबृहती त्रिष्टुप्, अनुष्टुप्, पस्तारपङ्क्ति, त्रिष्टुप्, त्रिपदा विराट् गायत्री, विराट् पथ्याबृहती, त्र्यवसाना पञ्चपदा जगती, त्रिपदा भुरिक् महाबृहती, एकावसाना द्विपदा साम्नी भुरिक् बृहती ।

**अन्तकाय मृत्यवे नमः प्राणा अपाना इह ते रमन्ताम् । इहायमस्तु पुरुष सहासुना सूर्यस्य भागे अमृतस्य लोके ॥१॥**

मृत्युद्वारा सबैलाई अन्त्य गराउने अन्तकर नामका देवतालाई हामी नमस्कार गर्दछौँ । यी देवताको कृपाले यी मानिसका शरीरमा प्राण र अपान सुखपूर्वक सञ्चरित होऊन् । यी पुरुषले दीर्घ जीवन यापन गर्दै सूर्यको भागका रूपमा रहेका यस पृथ्वीमा आनन्दपूर्वक रहून् ।

**उदेनं भगो अग्रभीदुदेनं सोमो अंशुमान् । उदेनं मरुतो देवा उदिन्द्राग्नी स्वस्तये ॥२॥**

भगदेवताले यी मानिसको जीवनीशक्तिलाई उठाएका छन् । तेजस्वी सोमदेवताले यिनलाई उठाएका छन् र इन्द्रदेवता तथा अग्निदेवताले पनि यिनलाई उच्च बनाएर उठाएका छन् ।

**इह तेऽसुरिह प्राण इहायुरिह ते मनः । उत् त्वा निर्ऋत्याः पाशेभ्यो दैव्या वाचा भरामसि ॥३॥**

हे आयुको इच्छा गर्ने पुरुष ! यस शरीरमा तिम्रो प्राण, आयु, मन र जीवन स्थिर होस् । जुन रोगरूपी पासोका बन्धनले तिम्रो अधोगति भइरहेको थियो, हामी मन्त्रद्वारा त्यसबाट तिमीलाई मुक्त गराउँछौँ ।

**उत् क्रामातः पुरुष माव पत्था मृत्योः पड्वीशमवमुञ्चमानः । मा च्छित्था अस्माल्लोकादग्नेः सूर्यस्य संदृशः ॥४॥**

हे पुरुष ! तिमी रोगरूपी बन्धनलाई काटेर मृत्युपछिका पाशजालबाट मुक्त होऊ । अग्निदेवता र सूर्यदेवताको दर्शन गरिराख यस पृथ्वीको त्याग नगर ।

**तुभ्यं वातः पवतां मातरिश्वा तुभ्यं वर्षन्त्वमृतान्यापः । सूर्यस्ते तन्वे३ शं तपाति त्वां मृत्युर्दयतां मा प्र मेष्ठाः ॥५॥**

हे पुरुष ! अन्तरिक्षमा रहने गरेका वायु तिम्रा लागि सुखदायक होऊन, जल अमृतजस्तै होस्, सूर्यदेवता सुखदायक भएर ताप प्रदान गरून् र मृत्युदेवताको दयाले दीर्घ जीवन यापन गर ।

**उद्यानं ते पुरुष नावयानं जीवातुं ते दक्षतातिं कृणोमि । आ हि रोहेममृतं सुखं रथमथ जिर्विर्विदथमा वदासि ॥६॥**

हे पुरुष ! तिम्रो गति ऊर्ध्व होस्, अधोगति नहोस् । तिमीलाई हामी जीवनीशक्ति र बलवर्द्धक औषधिहरू दिनेछौँ । त्यसबाट तिमी यस रथरूपी शरीरमा आरुढ भएर बुढ्यौलीविनाको रहँदै जीवनका विषयमा जानकारी गराऊ ।

**मा ते मनस्तत्र गान्मा तिरो भून्मा जीवेभ्यः प्र मदो मानु गाः पितॄन् । विश्वे देवा अभि रक्षन्तु त्वेह ॥७॥**

तिम्रो मन मृत्युतर्फ नजाओस् र त्यता पुगेर नबिलाओस् । तिमी पितृहरू भएका ठाउँमा नजाऊ बरु बाँच्ने इच्छा गर । समस्त देवताहरूले तिम्रो रक्षा गरून् ।

**मा गतानामा दीधीथा ये नयन्ति परावतम् । आ रोह तमसो ज्योतिरेह्या ते हस्तौ रभामहे ॥८॥**

जुन पितृहरू गइसके, उनीहरूको मात्रै सम्झना नगर । उनीहरूले तिमीलाई पितृलोक लैजान सक्छन् । हामी तिम्रो हात समाउँछौँ । तिमी यस अज्ञान अन्धकारबाट निस्केर ज्ञानका आलोकतर्फ अघि बढ ।

**श्यामश्च त्वा मा शबलश्च प्रेषितौ यमस्य यौ पथिरक्षी श्वानौ । अर्वाङेहि मा वि दीध्यो मात्र तिष्ठः पराङ्मनाः ॥९॥**

हे मानिसहरू हो ! प्राणीको प्राण हरण गर्ने यमदेवताका दुई वटा मार्गरक्षक कुकुरहरू छन् । तिनमा सेतो दिनको प्रतीक हो र कालो रातको प्रतीक हो । तिमी ती कुकुरको गाँस नबन । हामीतिर ध्यान लगाऊ र आफ्ना मनलाई संसारबाट विमुख नगराऊ ।

**मैतं पन्थामनु गा भीम एष येन पूर्वं नेयथ तं ब्रवीमि । तम एतत् पुरुष मा प्र पन्था भयं परस्तादभयं ते अर्वाक् ॥१०॥**

तिमी त्यस भयानक मार्गको अनुसरण नगर । मृत्युभन्दा पहिले आफ्नो मन त्यस मार्गमा नलैजाऊ । हामीले भन्दै गरेका कुरामा ध्यान देऊ । तिमी त्यस मार्गमा नजाऊ, त्यहाँ तिमीलाई डर हुनेछ, यहाँ निर्भर भएर बस ।

**रक्षन्तु त्वाग्नयो ये अप्स्व१न्ता रक्षतु त्वा मनुष्या३ यमिन्धते । वैश्वानरो रक्षतु जातवेदा दिव्यस्त्वा मा प्र धाग् विद्युता सह ॥११॥**

हे रक्षाको कामना गर्ने पुरुष ! आह्वान गर्न योग्य अग्निदेवता, वैश्वानर अग्निदेवता, विद्युत्‌रूपी अग्निदेवता र जलमा निवास गर्ने अग्निदेवताले तिमीलाई रक्षा गरून् ।

**मा त्वा क्रव्यादभि मंस्तारात् संकसुकाच्चर । रक्षतु त्वा द्यौ रक्षतु पृथिवी सूर्यश्च त्वा रक्षतां चन्द्रमाश्च । अन्तरिक्षं रक्षतु देवहेत्याः ॥१२॥**

शरीरको मासुलाई आहार बनाउने क्रव्याद् नामका अग्निदेवताले तिमीलाई चारो नबनाऊन् । शवलाई भस्म बनाउने संकुसुक नामका अग्निदेवता तिम्रा छेउमा नआऊन् । सूर्य, चन्द्रमा, द्यावापृथिवी र अन्तरिक्षले पनि आआफ्ना दिव्य शक्तिले तिमीलाई रक्षा गरिरहून् ।

**बोधश्च त्वा प्रतिबोधश्च रक्षतामस्वप्नश्च त्वानवद्राणश्च रक्षताम् । गोपायंश्च त्वा जागृविश्च रक्षताम् ॥१३॥**

हे रक्षाको आशा गरिरहेका पुरुष ! बोध, ज्ञान, विद्या तथा प्रतिबोध, अविद्या, अज्ञानले तिमीलाई रक्षा गरून् । गोपायन एवं जागृवि नामका ऋषिहरूले तिमीलाई रक्षा गरून् ।

**ते त्वा रक्षन्तु ते त्वा गोपायन्तु तेभ्यो नमस्तेभ्यः स्वाहा ॥१४॥**

तिनीहरू सबैले तिमीलाई रक्षा र पालन गरून् । ती समस्त दिव्य शक्तिलहरूलाई नमस्कारपूर्वक यो उत्तम आहुति अर्पित गर्दछौँ । उनीहरू यस समर्पित आहुतिले प्रसन्न होऊन् ।

**जीवेभ्यस्त्वा समुद्रे वायुरिन्द्रो धाता दधातु सविता त्रायमाणः । मा त्वा प्राणो बलं हासीदसुं तेऽनु ह्वयामसि ॥१५॥**

रक्षक, पोषक सवितादेवता, वायुदेवता र इन्द्रदेवताले तिम्रा प्राणको रक्षा गरून् । तिमी आफ्ना पुत्रपौत्रादि एवं भार्याका साथमा बस्न पाऊ भनेर नै हामीले तिमीलाई मृत्युबाट जोगाउँछौँ । हामी तिम्रो प्राणलाई तिम्रै अनुकूल गराउँछौँ; त्यस प्राण र बलले तिमीलाई त्याग्दैनन् ।

**मा त्वा जम्भः संहनुर्मा तमो विदन्मा जिह्वा बर्हिः प्रमयुः कथा स्याः । उत् त्वादित्या वसवो भरन्तूदिन्द्राग्नी स्वस्तये ॥१६॥**

जम्भ नामको राक्षस तिमी भएका ठाउँमा नपुगोस् । अज्ञानको अन्धकार तिम्रा नजिक नरहोस् । राक्षसको जिब्रो पनि तिमीसम्म नपुगोस् । तिमी यज्ञ गर्ने हौ, त्यसैले आदित्य, वसु, इन्द्र एवं अग्नि आदि देवतो तिमीलाई कल्याण गर्दै उत्थान गरून् ।

**उत् त्वा दौरुत् पृथिव्युत् प्रजापतिरग्रभीत् । उत् त्वा मृत्योरोषधयः सोमराज्ञीरपीपरन् ॥१७॥**

द्यावापृथिवी र प्रजापतिले तिमीलाई मृत्युबाट बचाऊन् । सोम जसका राजा हुन्, त्यस्ता औषधिहरूले मृत्युबाट रक्षा गरून् ।

**अयं देवा इहैवास्त्वयं मामुत्र गादितः । इमं सहस्रवीर्येण मृत्योरुत् पारयामसि ॥१८॥**

हे देवताहरू हो ! यी पुरुष हाम्रो उपचारका प्रभावले मृत्युका मुखबाट जोगिएर रहून् । हामी हजारौँ उपायले यिनको रक्षा गरौँ ।

**उत् त्वा मृत्योरपीपरं सं धमन्तु वयोधसः । मा त्वा व्यस्तकेश्यो३ मा त्वाघरुदो रुदन् ॥१९॥**

हे प्राणको रक्षा होस् भन्ने कामना भएका पुरुष ! तिमीलाई हामी मृत्युबाट पार लगाउँछौँ । आयुका अधिष्ठाता देवताले तिमीलाई मर्न नदिऊन् । स्त्रीहरूले जगल्टा फिँजाएर तिम्रा छेउमा विलाप गर्नु नपरोस् ।

**आहार्षमविदं त्वा पुनरागाः पुनर्णवः । सर्वाङ्ग सर्वं ते चक्षुः सर्वमायुश्च तेऽविदम् ॥२०॥**

हे पुरुष ! मानौँ अहिले यो तिम्रो नयाँ पुनर्जन्म भएको छ । किनभने तिमीलाई हामीले मृत्यका मुखबाट खोसेर ल्याएका छौँ । अब तिम्रा समस्त अङ्ग आदि पूर्ण रूपमा स्वस्थ रहून् र तिमीलाई पूर्ण आयु प्राप्त होस् ।

**व्यवात् ते ज्योतिरभूदप त्वत् तमो अक्रमीत् । अप त्वन्मृत्युं निर्ऋतिमप यक्ष्मं नि दध्मसि ॥२१॥**

हे पुरुष ! तिम्रा सामु जुन अन्धकार थियो, त्यसलाई हटाइसकिएको छ र तिमीलाई नयाँ जीवनज्योति प्राप्त भएको छ । निर्ऋति नामका पापका देवता र मृत्युलाई तिमीबाट पर हटाइएको छ । अब तिमीलाई खियाउने रोगलाई हामीले नष्ट गरिदियौँ । तिमीलाई दीर्घ आयु र निरोगिता प्राप्त होस् ।

## २. दीर्घायुप्राप्ति सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** आयु । **छन्द–** भुरिक् त्रिष्टुप्, आस्तार पङ्क्ति, पस्तारपङ्क्ति, अनुष्टुप्, पथ्यापङ्क्ति, पुरस्ताद् ज्योतिष्मती जगती, पञ्चपदा जगती, विष्टार पङ्क्ति, पुरस्ताद् बृहती, त्रिष्टुप्, त्र्यवसाना षट्पदा जगती, त्रिपदा अनुष्टुप्, उपरिष्टाद् बृहती, सतः पङ्क्ति ।

**आ रभस्वेमाममृतस्य श्नुष्टिमच्छिद्यमाना जरदष्टिरस्तु ते । असुं त आयुः पुनरा भरामि रजस्तमो मोप गा मा प्र मेष्ठाः ॥१॥**

हे रोगी ! यो अमृत पान गर्न आरम्भ गर । तिमी वृद्धावस्थासम्म निर्विघ्न जीवन यापन गर । हामीले तिम्रो प्राण र आयुको रक्षा गर्नका लागि व्यवस्था बनाइसकेका छौँ । तिमी भोगमय जीवन र अज्ञानबाट पर रहनेछौ; अहिल्यै तिमी मर्नेछैनौ ।

**जीवतां ज्योतिरभ्येह्यर्वाङा त्वा हरामि शतशारदाय । अवमुञ्चन् मृत्युपाशानशस्तिं द्राघीय आयुः प्रतरं ते दधामि ॥२॥**

हे पुरुष ! तिमी जीवित मानिसजस्तै सचेत होऊ । हामी तिम्रो अपयश नाश गर्दै तिमीलाई मृत्युको पाशरूपी रोगबाट बचाउँछौँ । तिमीलाई दीर्घायु प्राप्त होस् ।

**वातात् ते प्राणमविदं सूर्याच्चक्षुरहं तव । यत् ते मनस्त्वयि तद् धारयामि सं वित्स्वाङ्गैर्वद जिह्वयालपन् ॥३॥**

हे पुरुष । हामीले वायुदेवतासित तिम्रा प्रण र सूर्यदेवतासित तिम्रा आँखाका ज्योति प्राप्त गरेर तिम्रा मनलाइ तिमीभित्रै धारण गराएका छौँ । अब तिमीले आफ्ना समस्त अङ्गअवयव प्राप्त गरिसकेका छौ । अब सचेष्ट भएर जिब्राले प्रस्ट उच्चारण गर ।

**प्राणेन त्वा द्विपदां चतुष्पदामग्निमिव जातमभि सं धमामि । नमस्ते मृत्यु चक्षुषे नमः प्राणाय तेऽकरम् ॥४॥**

जसरी उत्पन्न हुनेबित्तिकैका अग्निलाई प्राणीले आफ्नै प्राणवायुद्वारा प्रदीप्त गराउँछ, उसै गरी तिम्रो क्षीण भएका प्राणलाई अनेकौँ उपायले हामी तेजस्वी बनाउँछौँ । हे मृत्यु ! तिम्रो प्राणबल र क्रूर आँखालाई हामी नमस्कार गर्दछौँ ।

**अयं जीवतु मा मृतेमं समीरयामसि । कृणोम्यस्मै भेषजं मृत्यो मा पुरुषं वधीः ॥५॥**

यो पुरष अहिल्यै नमरोस्, धेरै समयसम्म बाँचिरहोस् । औषधिको प्रयोगले हामी यसलाई सचेत गर्दछौँ । हे मृत्यु ! तिमी यस पुरुषलाई नमार ।

**जीवलां नघारिषां जीवन्तीमोषधीमहम् । त्रायमाणां सहमानां सहस्वतीमिह हुवेऽस्मा अरिष्टतातये ॥६॥**

सधैँभरि हरियो रहने, जीवनदायिनी, रक्षा गर्ने, रोगलाई पर हटाउने यो पाठा नामको औषधि यस पुरुषलाई मृत्युबाट बचाउनका लागि हामी ल्याउँछौँ र प्रयोग गर्दछौँ ।

**अधि ब्रूहि मा रभथाः सृजेमं तवैव सन्त्सर्वहाया इहास्तु । भवाशर्वौ मृडतं शर्म यच्छतमपसिध्य दुरितं धत्तमायुः ॥**

हे मृत्यु ! यो पुरुष तिम्रै हो भन्ने जानेर यसलाई तिमी नमार । यस पृथ्वीमा यो आफ्नो पूरा आयुभरि सबै किसिमले सक्रिय रहोस् । हे भव र शर्व नामका देवताहरू हो ! तिमीहरू यी रोगलाई नाश गरेर यस पुरुषलाई सुखमय जीवन र दीर्घ आयु प्रदान गर ।

**अस्मै मृत्यो अधि ब्रूहिमं दयस्वोदितोऽयमेतु । अरिष्टः सर्वाङ्गः सुश्रुज्जरसा शतहायन आत्मना भुजमश्नुताम् ॥८॥**

हे मृत्यु ! तिमी यस मानिसलाई दया गरेर सम्झाऊ । यो मानिस आँखा, कान आदि अङ्गले स्वस्थ रहँदै सय वर्षसम्म सुखपूर्वक रहोस् । अन्य कसैको पनि सेवासुसारको आश्रयविनै आफ्ना कामहरू आफैँले गर्न सकोस् ।

**देवानां हेतिः परि त्वा वृणक्तु पारयामि त्वा रजस उत् त्वा मृत्योरपीपरम् । आरादग्निं क्रव्यादं निरूहं जीवातवे ते परिधिं दधामि ॥९॥**

हे पुरुष ! दैवी आपत्तिहरूबाट तिम्रो रक्षा होस् । हामी रजस् नामको भोगवृत्तिबाट पार लगाउँछौँ । मासभक्षक क्रव्याद् नामका अग्निलाई तिमीदेखि पर गराउँछौँ र तिमीलाई दीर्घजीवन प्राप्त होस् भनेर देवताहरूको यजन गर्नका लागि अग्निलाई स्थापना गर्दछौँ ।

**यत् ते नियानं रजसं मृत्यो अनवधर्ष्यम् । पथ इमं तस्माद् रक्षन्तो ब्रह्मास्मै वर्म कृण्मसि ॥१०॥**

हे मृत्यु ! तिम्रो तेजोमय मार्गलाई कसैले पनि नाश गर्न सक्दैन । यस पुरुषलाई त्यस मार्गबाट जोगिएर रहनका लागि मन्त्रणाका रूपमा कवच धारण गराउँछौँ ।

**कृणोमि ते प्राणापानौ जरां मृत्युं दीर्घमायुः स्वस्ति । वैवस्वतेन प्रहितान् यमदूताश्चरतोऽप सेधामि सर्वान् ॥११॥**

हे बाँच्ने रहर भएका पुरुष ! हामी तिम्रो प्राण, अपानलाई सुव्यवस्थित गराएर दीर्घ जीवन प्रदान गर्दछौँ । वृद्धावस्था र मृत्यु यी सबैले तिमीलाई कल्याण गरून् । विवस्वान् सूर्यबाट उत्पन्न कालका दूतहरूबाट तिमीलाई हामी जोगाउँछौँ ।

**आरादरातिं निर्ऋतिं परो ग्राहिं क्रव्यादः पिशाचान् । रक्षो यत् सर्वं दुर्भुतं तत् तम इवाप हन्मसि ॥१२॥**

कलङ्कित गराउने निर्ऋतिलाई दुर्गति गराउँछौँ र मार्दछौँ । मासभक्षी पिशाचहरूलाई विनाश गर्दछौँ । अरू अहित गर्ने जेजति छन् ती सबै तमोगुणीहरूलाई हामी नाश गर्दछौँ ।

**अग्नेष्टे प्राणममृतादायुष्मतो वन्वे जातवेदसः । यथा न रिष्या अमृतः सजूरसस्तत् ते कृणोमि तदु ते समृध्यताम् ॥१३॥**

हे पुरुष ! हामी अमरता र आयुलाई धारण गर्ने जातवेदा अग्निदेवतासित तिम्रा प्राणलाई सतेज गर्नका लागि याचना गर्दछौँ । हामीले गरेका शान्तिकर्मले तिमीलाई समृद्धिशाली बनाऊन् । उनका प्रभावले तिमी पीडारहित, अमर र सुखी जीवन यापन गर ।

**शिवे ते स्तां द्यावापृथिवी असंतापे अभिश्रियौ । शं ते सूर्य आ तपतु शं वातो वातु ते हृदे । शिवा अभि क्षरन्तु त्वापो दिव्याः पयस्वतीः ॥१४॥**

द्यावापृथिवीले तिमीलाई सन्ताप नदिऊन् । तिनीहरूले तिमीलाई धनऐश्वर्य प्रदान गर्दै कल्याण गरून् । सूर्यदेवताका कृपाले तिमीलाई सुखदायक ताप प्राप्त होस् । हृदयलाई वायुदेवताले सुख दिऊन् । द्युलोकमा रहेको जल र बहने गरेका जलले तिमीलाई दिव्य सुख प्रदान गरून् ।

**शिवास्ते सन्त्वोषधय उत् त्वाहार्षमधरस्या उत्तरां पृथिवीमभि । तत्र त्वादित्यौ रक्षतां सूर्याचन्द्रमसावुभा ॥१५॥**

औषधिहरू तिम्रा लागि कल्याणकारी गुणले युक्त होऊन् । हामी तिमीलाई पृथ्वीको तल्लो भूभागबाट माथिल्लो भूभागमा ल्याउँछौँ । यहाँ अदितिमाताका दुवै पुत्र सूर्यदेवता र चन्द्रदेवताले तिमीलाई रक्षा गर्नेछन् ।

**यत् ते वासः परिधानं यां नीविं कृणुषे त्वम् । शिवं ते तन्वे तत् कृण्मः संस्पर्शेऽद्रूक्ष्णमस्तु ते ॥१६॥**

हे बालक ! तिम्रा नाभीमा बाँधिने तल्लो वस्त्र र माथि ओढ्ने परिधानवस्त्रहरू तिमीलाई सुख दिने खालका होऊन् । तिनीहरू खस्रो नभएर सुखदायक, स्पर्शकारक र सुकोमल होऊन् ।

**यत् क्षुरेण मर्चयता सुतेजसा वप्ता वपसि केशश्मश्रु । शुभं मुखं मा न आयुः प्र मोषीः ॥१७॥**

हे कपाल खौरिने भद्र पुरुष ! जुन छुराले तिमी कपाल र मुखमण्डलका रौँ खौरने विचार गर्दै छौ, त्यो सफा र धारिलो होस् । दारीकपाल खौरिएर मुखको शोभा बढाइदेऊ र हाम्रो आयु क्षीण नगराऊ ।

**शिवौ ते स्तां व्रीहियवावबलासावदोमधौ । एतौ यक्ष्मं वि बाधेते एतौ मुञ्चतो अंहसः ॥१८॥**

हे अन्नप्राशन संस्कारले संस्कारित हुने बालक ! यी धान र जौ तिम्रा लागि कल्याणकारक र बलवर्द्धक होऊन् । यी दुवै रोगनाशक भएर तिमीलाई पापबाट मुक्त गराऊन् ।

**यदश्नामि यत्पिबसि धान्यं कृष्याः पयः । यदाद्यं यदनाद्यं सर्वं ते अन्नमविषं कृणोमि ॥१९॥**

हे बालक ! तिम्रा लागि हामी खेतीको कामबाट उब्जाइएको धान्य एवं दुध आदि प्रदान गर्दछौँ तिमी खिर आदि जे खान्छौ र दुध आदि जे पिउँछौ, तिनीहरूले तिमीलाई कष्ट नदिऊन् । ती सबै कुरालाई हामी तिम्रा निम्ति विषरहित गराउँछौँ अर्थात् तिनले तिमीलाई हानी गर्नेछैनन् ।

**अह्ने च त्वा रात्रये चोभाभ्यां परि दद्मसि । अरायभ्यो जिघत्सुभ्य इमं मे परि रक्षत ॥२०॥**

हे कुमार ! हामी तिमीलाई दिन र रात्रिका अभिमानी देवताको जिम्मा लगाउँछौँ । उनीहरूले तिमीलाई धनका लुटेरा र भक्षण गर्ने हिंसकबाट जोगाउनेछन् ।

**शतं तेऽयुतं हायनान् द्वे युगे त्रीणि चत्वारि कृण्मः । इन्द्राग्नी विश्वे देवास्तेऽनु मन्यन्तामहृणीयमानाः ॥२१॥**

हे बालक ! इन्द्र, अग्निका साथमा समस्त देवताहरूका कृपाले तिमीलाई सय वर्षको आयु प्राप्त होस् । त्यस सय वर्षको आयुका दुवै सन्धिकालसहितका तीन अवस्थाहरू र चार आश्रमहरूमा कुनै खालको व्यवधान नआओस् ।

**शरदे त्वा हेमन्ताय वसन्ताय ग्रीष्माय परि दद्मसि । वर्षाणि तुभ्यं स्योनानि येषु वर्धन्त ओषधीः ॥२२॥**

हे बालक ! तिमीलाई हामी शरद्, हेमन्त, वसन्त र ग्रीष्म ऋतुहरूको जिम्मा लगाउँछौं । यी सबैले तिमीलाई कल्याण गरून् । जुन ऋतुमा औषधिहरू बढ्दछन् त्यो वर्षा ऋतु पनि तिमीलाई सुख प्रदान गर्ने खालको होस् ।

**मृत्युरीशे द्विपदां मृत्युरीशे चतुष्पदाम् । तस्मात् त्वां मृत्योर्गोपतेरुद्भरामि स मा बिभेः ॥२३॥**

दुई खुट्टे र चार खुट्टेको स्वामिनी मृत्यु हुन् । तिमीलाई हामी अमर आत्मज्ञानद्वारा मृत्युभन्दा माथि उठाउँछौं । त्यसो भए पछि तिमी मृत्युको भयबाट मुक्त हुन सक्नेछौ ।

**सोऽरिष्ट न मरिष्यसि न मरिष्यसि मा बिभेः । न वै तत्र म्रियन्ते नो यन्त्यधमं तमः ॥२४॥**

तिमी मृत्युको भय,बाट मुक्त होऊ । तिमी मर्नेछैनौ, कसै गरी मर्नेछैनौ । तिमी अधम अज्ञानरूपी अन्धकारतर्फ नगएर ज्ञानको आलोकमा निवास गर्दछौ । त्यसैले तिमी मर्नेछैनौ ।

**सर्वो वै तत्र जीवति गौरश्वः पुरुषः पशुः । यत्रेदं ब्रह्म क्रियते परिधिर्जीवनाय कम् ॥२५॥**

जुन ठाउँमा ज्ञान र विद्याका आधारमा जीवनलाई सुखमय बनाउनका लागि चारैतिर कार्यहरू भइरहेका हुन्छन्, त्यहाँ गाई, घोडा र अन्य पशुहरूका साथमा मानिसले पनि दीर्घ जीवन प्राप्त गर्दछन् ।

**परि त्वा पातु समानेभ्योऽभिचारात् सबन्धुभ्यः । अमम्रिर्भवामृतोऽतिजीवो मा ते हासिषुरसवः शरीरम् ॥२६॥**

यिनै श्रेष्ठ कर्मका कारणले तिम्रो रक्षा होस् । आफूसमानको कुनै अन्य पुरुष वा त्यस्तै बन्धुहरूले तिमीमाथि गरेको अभिचार कर्मबाट तिम्रो रक्षा होस् । तिमी अजरअमर भएर दीर्घ जीवन प्राप्त गर र तिम्रा प्राणले शरीरलाई नछोडोस् ।

**ये मृत्यव एकशतं या नाष्ट्रा अतितार्याः । मुञ्चन्तु तस्मात् त्वां देवा अग्नेर्वैश्वानरादधि ॥२७॥**

मृत्युको कारण बन्न सक्ने जुन सयौँ किसिमका रोगहरू छन् र यस्तै खालका नाशकारक शक्तिहरू छन्, जुनमा फँसेपछि पार लाग्न मुस्किल हुन्छ, ती सबै मृत्यु र विनाशकारी शक्तिबाट तिमीलाई इन्द्र र अग्निदेवताका साथमा सबै देवताहरूले रक्षा गरून् ।

**अग्नेः शरीरमसि पारयिष्णु रक्षोहासि सपत्नहा । अथो अमीवचातनः पूतुद्रुर्नाम भेषजम् ॥२८॥**

पवित्रता प्रदान गर्ने हे पूतद्रु नामका औषधि ! तिमी अग्निको ऊर्जालाई पार गर्ने शरीरको रूप हौ। तिमी राक्षसहरू र शत्रुलाई संहार गर्न र रोगलाई हटाउन सक्ने खालका छौ । तिमी यस्तो भएकाले हाम्रो अभिलाषा पूरा गराऊ ।

## ३. शत्रुनाशन सूक्त

**ऋषि**– चातन । **देवता**– अग्नि । **छन्द**– त्रिष्टुप्, भुरिक् त्रिष्टुप्, अनुष्टुप्, पञ्चपदा बृहतीगर्भा जगती, गायत्री ।

**रक्षोहणं वाजिनमा जिघर्मि मित्रं प्रथिष्ठमुप यामि शर्म । शिशानो अग्निः क्रतुभिः समिद्धः स नो दिवा स रिषः पातु नक्तम् ॥१॥**

राक्षसको विनाश गर्ने, बलवान्, याजकका मित्र र प्रतिष्ठित अग्निदेवतालाई घिउले प्रज्वलित गराउँदै हामी अत्यन्त सुखको अनुभव गर्दछौं । आफ्नो ज्वाला तेज गराउँदै यज्ञकर्म सम्पन्न गर्ने यजमानद्वारा यी अग्निदेवता प्रदीप्त हुन्छन् । हामीलाई यिनै अग्निदेवताले हिंस्रक राक्षसबाट रातदिन रक्षा गर्दछन् ।

**अयोदंष्ट्रो अर्चिषा यातुधानानुप स्पृश जातवेदः समिद्धः । आ जिह्वया मूरदेवान् रभस्व क्रव्यादो वृष्ट्वापि धत्स्वासन् ॥२॥**

हे ज्ञानका प्रतीक अग्निदेवता ! तिमी अति तेजस्वी र फलामका दाँतले सम्पन्न भएर आफ्ना जिब्रारूपी ज्वालाले हिंस्रक राक्षसहरूलाई नष्ट गर । मांसभक्षी राक्षसहरूलाई काटेर आफ्ना ज्वालामुखी मुखमा धारण गर ।

**अभोभयाविन्नुप धेहि दंष्ट्रौ हिंस्रः शिशानोऽवरं परं च । उतान्तरिक्षे परि याह्यग्ने जम्भैः सं धेह्याभि यातुधानान् ॥३॥**

हे अग्निदेवता ! तिमी आफ्ना दुवै दाँतलाई तीक्ष्ण गराऊ र तिनलाई असुरहरूभित्र प्रवेश गराऊ । दुवै किसिमले तिमी तिनलाई संहार गर र निकट एवं दूर रहेका प्रजाहरूलाई रक्षा गर । हे दीप्तिमान् बलशाली अग्निदेवता ! अन्तरिक्षमा रहेका असुरका नजिक तिमी जाऊ र ती दुष्टहरूलाई आफ्ना दाह्राले चबाऊ ।

**अग्ने त्वचं यातुधानस्य भिन्धि हिंस्राशनिर्हरसा हन्त्वेनम् । प्र पर्वाणि जातवेदः शृणीहि क्रव्यात् क्रविष्णुर्वि चिनोत्वेनम् ॥४॥**

हे सर्वज्ञ अग्निदेवता ! तिमी असुरहरूको छाला भिन्नभिन्न गराऊ । तिनलाई तिम्रा हिंस्रक वज्रास्त्रका तेजस्विताले नष्ट गरोस् । असुरका अङ्गहरू भङ्ग होऊन् । खण्डखण्ड भएर लडेका असुरका अङ्गअवयवहरू मांसभक्षी वृक आदि पशुहरूले खाऊन् ।

**यत्रेदानीं पश्यसि जातवेदस्तिष्ठन्तमग्न उत वा चरन्तम् । उतान्तरिक्षे पतन्तं यातुधानं तमस्ता विध्य शर्वा शिशानः ॥५॥**

हे ज्ञानवान् बलशाली अग्निदेवता ! तिमी राक्षसहरूलाई स्थिर स्थितिमा, यताउता घुमिरहेका अवस्थामा, आकाशमा वा मार्गमा जहाँ देख्दछौ, त्यहीँ शरसन्धान गरेर तेज बाण ताकेर हानेर संहार गर ।

**यज्ञैरिषूः संनममानो अग्ने वाचा शल्याँ अशनिभिर्दिहानः । ताभिर्विध्य हृदये यातुधानान् प्रतीचो बाहून् प्रति भङ्ग्ध्येषाम् ॥६॥**

हे अग्निदेवता ! तिमी शक्तिवर्द्धक यज्ञ र हाम्रो प्रार्थनाले सन्तुष्ट भएर आफ्ना बाणलाई सन्धान गर्दै उनको अग्रभागलाई वज्रसित जोड्दै असुरको हृदय छेडिदेऊ । त्यसपछि युद्धका लागि प्रेरित भएका तिनका सहयोगीहरूका पनि पाखुरा भाँचिदेऊ ।

**उतारब्धान्त्स्पृणुहि जातवेद उतारेभाणाँ ऋष्टिभिर्यातुधानान् । अग्ने पूर्वो नि जहि शोशुचान आमादः क्ष्विङ्कास्तमदन्त्वेनीः ॥७॥**

हे ज्ञानी अग्निदेवता ! तिमी आक्रमणकारी असुरको हातबाट आक्रान्त भएका यजमानलाई ऋष्टि नामको दुईतिर धार भएको खड्ग लिएर सुरक्षा गर । तिमी प्रदीप्त भएर काँचो मासु भक्षण गर्ने असुरहरूलाई संहार गर । शब्द गर्दै वेगले उड्ने पक्षीले यी राक्षसलाई खाऊन् ।

**इह प्र ब्रूहि यतमः सो अग्ने यातुधानो य इदं कृणोति । तमा रभस्व समिधा यविष्ठ नृचक्षसश्चक्षुषे रन्धयैनम् ॥८॥**

हे युवा अग्निदेवता ! कुनकुन राक्षसहरू यस यज्ञलाई विध्वंस गर्दछन् ? त्यो हामीलाई भन समिधाले प्रज्वलित भएर तिमी ती असुरहरूलाई संहार गर । मानिसमाथि तिम्रो कृपामयी दृष्टि सधैँ रहन्छ, उसै कल्याणकारी दृष्टिभित्रका आफ्ना तेजले असुरहरूलाई विनाश गर ।

**तीक्ष्णेनाग्ने चक्षुषा रक्ष यज्ञं प्राञ्चं वसुभ्यः प्र णय प्रचेतः । हिंस्रं रक्षांस्यभि शोशुचानं मा त्वा दभन् यातुधाना नृचक्षः ॥९॥**

हे अग्निदेवता ! तिमी आफ्ना तीखा तेजले हाम्रा यज्ञको संरक्षण गर । हामीलाई श्रेष्ठ ज्ञानले सम्पन्न गराऊ । हे मानिसका द्रष्टा अग्निदेवता ! तिमी असुरका संहारक हौ । तिम्रो प्रज्वलित स्वरूपलाई दमन गर्न राक्षसहरूले नसकून् ।

**नृचषा रक्षः परि पश्य विक्षु तस्य त्रीणि प्रति शृणीह्यग्रा । तस्याग्ने पृष्टीर्हरसा शृणीहि त्रेधा मूलं यातुधानस्य वृश्च ॥१०॥**

मानिसको निरीक्षण गर्ने हे अग्निदेवता ! तिमी मानिसका घातक असुरहरूलाई पनि हेर । ती राक्षसका अगाडि भएका तीन वटा टाउकाहरू गिँड । उसका नजिकै रहेका राक्षसलाई पनि चाँडै समाप्त गर । यसै किसिमले तीनतिरबाट राक्षसहरूको जरो नै मासिदेऊ ।

**त्रिर्यातुधानः प्रसितिं त एत्वृतं यो अग्ने अनृतेन हन्ति । तमर्चिषा स्फूर्जयञ्जातवेदः समक्षमेनं गृणते नि युङ्ग्धि ॥११॥**

हे ज्ञानले सम्पन्न अग्निदेवता ! तिम्रो ज्वालाका चपेटामा राक्षसलाई तीन पटक हाल । जुन राक्षस सत्यलाई असत्य वाणीले विनाश गर्दछन्, उनलाई आफ्ना तेजस्विताले भस्मीभूत गर । स्तोताका समक्षमा नै यिनलाई विनाश गर ।

**यदग्ने अद्य मिथुना शपातो यद् वाचस्तृष्टं जनयन्त रेभाः । मन्योर्मनसः शरव्या३ जायते या तया विध्य हृदये यातुधानान् ॥१२॥**

हे अग्निदेवता ! आज जुन स्त्रीपुरुषका जोडाले आपसी झगडा गर्दछन् र जुन व्यक्ति आपसमा कटु वाणीको प्रयोग गर्दछन्, जोसिलो मानसिक शक्तिले छोडिएका बाणले तिमी ती राक्षसहरूको हृदय छेडिदेऊ ।

**परा शृणीही तपसा यातुधानान् पराग्ने रक्षो हरसा शृणीहि । परार्चिषा मूरदेवाञ्छृणीहि परासुतृपः शोशुचतः शृणीहि ॥१३॥**

हे अग्निदेवता ! तिमी असुलाई आफ्नो तेजस्विताले भस्म गराऊ, उनलाई आफ्ना तपःशक्तिले विनाश गराऊ । हिंस्रक असुरलाई आफ्ना तीक्ष्ण ज्वालाले विनाश गर । मानिसको प्राण हरण गर्ने असुरलाई आफ्नै ज्वालाले भस्मीभूत पार ।

**पराद्य देवा वृजिनं शृणन्तु प्रत्यगेनं शपथा यन्तु सृष्टाः । वाचास्तेनं शरव ऋच्छन्तु मर्मन् विश्वस्यैतु प्रसितिं यातुधानः ॥१४॥**

अग्नि आदि देवताहरू प्राणघाती असुरलाई विनाश गरून् । उनीहरूका सामु हाम्रा शापयुक्त वचन जाऊन् । असत्यवादी असुरका मर्मस्थलमा बाण जाऊन् । सर्वव्यापी अग्निदेवताका बन्धनमा परेर असुरहरू पतन होऊन् ।

**यः पौरुषेयेण क्रविषा समङ्क्ते यो अश्व्येन पशुना यातुधानः । यो अघ्न्याया भरति क्षीरमग्ने तेषां शीर्षाणि हरसापि वृश्च ॥१५॥**

हे अग्निदेवता ! जुन राक्षस मानिसको मासु खाएर आफ्नो पेट अघाउने गर्दछन्, जो अश्व आदि पशुका मांस एकत्र गर्दछन् र जो हिंसारहित गाई आदिको दुध चोर्दछन्, त्यस्ता दुष्टको मस्तकलाई तिमी आफ्नै सामर्थ्यले छिन्नभिन्न गराऊ ।

**विषं गवां यातुधाना भरन्तामा वृश्चन्तामदितये दुरेवाः । परैणान् देवः सविता ददातु परा भागमोषधीनां जयन्ताम् ॥१६॥**

राक्षसी शक्तिले गाईको जुन दुध पान गर्दछन्, त्यो उनीहरूका लागि विषजस्तै होस् । देवमाता अदितिलाई सन्तुष्ट गर्नका लागि यी राक्षसहरूलाई तिमी आफ्ना ज्वालारूपी शस्त्रले काटिदेऊ । सवितादेवताले यी राक्षसहरूलाई हिंस्रक पशुले खानका लागि दिऊन् । खान योग्य औषधिको अंश यिनलाई प्राप्त नहोस् ।

**संवत्सरीणं पय उस्रियायास्तस्य माशीद् यातुधानो नृचक्षः । पीयूषमग्ने यतमस्तितृप्सात् तं प्रत्यञ्चमर्चिषा विध्य मर्मणि ॥१७॥**

हे मानिसका निरीक्षक अग्निदेवता ! वर्षभरिमा जम्मा हुने गरेको गाईको दुधजति दुष्ट राक्षसहरूले पान गर्न नपाऊन् । जुन राक्षस यस्तो अमृतरूपी दुध पान गर्ने विचार गर्दछन्, तिनीहरू नजिक आउनासाथ तिमी यिनलाई ज्वालारूपी तेजले छिन्नभिन्न गराऊ ।

**सनादग्ने मृणसि यातुधानान् न त्वा रक्षांसि पृतनासु जिग्युः । सहमूराननु दह क्रव्यादो मा ते हेत्या मुक्षत दैव्यायाः ॥१८॥**

हे ज्ञानवान् बलशाली अग्निदेवता ! तिमीले सधैँभरि नै राक्षसहरूलाई मार्ने गरेका छौ । उनलाई युद्धमा पराजित गराएका छौ । तिमी क्रूर प्रकृति भएका, अभक्ष्य आहार खाने खालका दुष्टलाई नष्ट गराऊ । उनीहरू तिम्रो तेजस्विताबाट बच्न नसकून् ।

**त्वं नो अग्ने अधरादुदक्तस्त्वं पश्चादुत रक्षा पुरस्तात् । प्रति त्ये ते अजरासस्तपिष्ठा अघशंसं शोशुचतो दहन्तु ॥१९॥**

हे अग्निदेवता ! हामीलाई तिमी पूर्व, पश्चिम, उत्तर, दक्षिण आदि चारै दिशाबाट संरक्षित गराऊ । तिम्रो अति उज्ज्वल, अविनाशी र अति तापयुक्त ज्वालाले दुष्कर्मी राक्षसलाई चाँडै भस्म गरोस् ।

**पश्चात् पुरस्तादधरादुतोत्तरात् कविः काव्येन परि पाह्यग्ने । सखा सखायमजरो जरिम्णे अग्ने मर्तौ अमर्त्यस्त्वं नः ॥२०॥**

हे दीप्तिमान् अग्निदेवता ! तिमी क्रान्तदर्शी कविजस्तै हौ । आफ्ना कार्यकुशलताले उत्तर, दक्षिण, पूर्व र पश्चिमबाट हामीलाई उचित किसिमले रक्षा गर । हे मित्र र अग्निदेवता ! तिमी जीर्णतारहित छौ, हामी तिम्रा मित्र हौँ, तिम्रा कृपादृष्टिले दीर्घजीवी हुन सकौँ । तिमी अविनाशी छौ, हामी मरणशील मानिसहरूलाई चिरञ्जीवी गराऊ ।

**तदग्ने चक्षुः प्रति धेहि रेभे शफारुजो येन पश्यसि यातुधानान् । अथर्ववज्ज्योतिषा दैव्येन सत्यं धूर्वन्तमचितं न्योष ॥२१॥**

हे ज्ञानसम्पन्न बलशाली अग्निदेवता ! गर्जना गर्ने अहङ्कारी असुरमाथि तिमी त्यस किसिमको दृष्टि राख, जसले तिमी ऋषिहरूका उत्पीडक खुर र नङ्ग्रा भएका असुरलाई हेर्ने गर्दछौ । सत्यलाई असत्यले विनाश गर्न खोज्ने अज्ञानी असुरलाई तिमी आफ्ना दिव्य तेजस्विताले अथर्वा ऋषिको सम्मान गर्दै भस्मीभूत गराऊ ।

**परि त्वाग्ने पुरं वयं विप्रं सहस्य धीमहि । धृषद्वर्णं दिवेदिवे हन्तारं भङ्गुरावतः ॥२२॥**

हे बलशाली अग्निदेवता ! तिमी पूर्णता प्रदान गर्ने, विज्ञ, सङ्घर्षशील असुरलाई दिनहुँ संहार गर्दछौ । हामी तिम्रो ध्यान गर्दछौँ ।

**विषेण भङ्गुरावतः प्रति स्म रक्षसो जहि । अग्ने तिग्मेन शोचिषा तपुरग्रभिरर्चिभिः ॥२३॥**

हे अग्निदेवता ! तिमी विध्वंसक कर्ममा लागेका असुरलाई आफ्ना विस्तृत, तीक्ष्ण तेजस्विताले जलाऊ र तातिएको ऋष्टि नामको दुईतिर धार हुने अस्त्रले उनलाई नष्ट गराऊ ।

**वि ज्योतिषा बृहता भात्यग्निराविर्विश्वानि कृणुते महित्वा । प्रादेवीर्मायाः सहते दुरेवाः शिशीते शृङ्गे रक्षोभ्यो विनिक्ष्वे ॥२४॥**

आफ्नो अत्यन्त तेजस्वी ज्वालाका साथमा अग्निदेवता प्रकाशित भएर आफ्नै सामर्थ्यले सम्पूर्ण जगत्का प्राणीहरूलाई प्रकाशित गराउँछन् । असुरतले फिँजाइएको कपटपूर्ण छलछामलाई संहार गर्नमा सक्षम भएका कारणले अग्निदेवता तिनको संहार गर्नका लागि आफ्नो ज्वालारूपी सिङ तिखार्ने गर्दछन् ।

**ये ते शृङ्गे अजरे जातवेदस्तिग्महेती ब्रह्मसंशिते । ताभ्यां दुर्हार्दमभिदासन्तं किमीदिनं प्रत्यञ्चमर्चिषा जातवेदो वि निक्ष्व ॥२५॥**

हे सर्वज्ञ अग्निदेवता ! तिम्रो प्रख्यात ज्वालारूपी सिङ जीर्णतारहित र तीक्ष्ण हुनाले हतियारको रूपमा रहेको छ । हाम्रा मन्त्रले प्रयोग गरिएको मन्त्रसामर्थ्यले तीक्ष्णता प्राप्त गरेका त्यस सिङले दुष्ट प्रकृतिका राक्षसलाई सबै तिरबाट विनाश गर । यस्तो के हुन लागेको छ ? भन्दै ती छिद्रान्वेषी राक्षसहरूलाई पूरै संहार गर ।

**अग्नी रक्षांसि सेधति शुक्रशोचिरमर्त्यः । शुचिः पावक ईड्यः ॥२६॥**

सेतोसफा आभायुक्त, अमर, पवित्र र शुत्र गराउने अग्निदेवता असुरहरूलाई नाश गर्दछन् । ती

स्तुति गर्न योग्य देवता हुन् ।

## ४. शत्रुदमन सूक्त

**ऋषि**– चातन । **देवता**– इन्द्रासोम, अर्यमा । **छन्द**– जगती अनुष्टुप्, त्रिष्टुप् भुरिक् त्रिष्टुप्, अनुष्टुप् ।

**इन्द्रासोमा तपतं रक्ष उब्जतं न्यर्पयतं वृषणा तमोवृधः । परा शृणीतमचितो न्योषतं हतं नुदेथां नि शिशीतमत्त्रिणः ॥१॥**

हे इन्द्र र सोमदेवता ! तिमीहरू राक्षसलाई जलाएर मार । हे अभीष्टको वर्षा गराउनेहरू हो । अज्ञानरूपी अन्धकारमा विकसित राक्षसहरूलाई तिमीहरू मार । ज्ञानहीन राक्षसलाई पोलेर, मारेर हामीदेखि पर लगेर फालिदेओ । अर्काको मासु खानेहरूलाई थाङ्नोजस्तो बनाओ ।

**इन्द्रासोमा समघशंसमभ्य१घं तपुर्ययस्तु चरुरग्निमाँ इव । ब्रह्मद्विषे क्रव्यादे घोरचक्षसे द्वेषो धत्तमनवायं किमीदिने ॥२॥**

हे इन्द्र र सोनदेवता ! महापापी महादुष्टहरूलाई तिमीहरू विनाश गर । तिनीहरू तिमीहरूका तेजले आगोमा हालिएको चरुझैं जलेर भस्म होऊन् । ज्ञानसित द्वेष गर्ने, काँचो मासु खाने भयानक रूप भएका, सर्वभक्षी दुष्टका लागि निरन्तर वैर र द्वेषको भावना राख ।

**इन्द्रासोमा दुष्कृतो वव्रे अन्तरनारम्भणे तमसि प्र विध्यतम् । यतो नैषां पुनरेकश्चनोदयत् तद् वामस्तु सहसे मन्युमच्छवः ॥३॥**

हे इन्द्र र सोमदेवता ! दुष्कर्मना लागेका राक्षसहरूलाई फेरि निस्कन नसक्ने गरी गहिरो अन्धकारमा डुबाइदेओ । तिमीहरू दुवै शत्रुभञ्जक हुनाले शत्रुलाई जित्नमा समर्थ छौ ।

**इन्द्रासोमा वर्तयतं दिवो वधं सं पृथिव्या अधशंसाय तर्हणम् । उत् तक्षतं स्वर्य१ पर्वतेभ्यो येन रक्षो वावृधानं निजूर्वथः ॥४॥**

हे इन्द्र र सोमदेवता ! अन्तरिक्षबाट तिमीहरू घातक हतियार उत्पन्न गर । राक्षसहरूको विनाश गर्नका लागि पृथ्वीबाट आयुध प्रकट गर । मेघबाट राक्षसको विनाश गर्ने खालका विध्वंसक वज्र उत्पन्न गर र बढ्दै आउने राक्षसहरूलाई मार ।

**इन्द्रासोमा वर्तयतं दिवस्पर्यग्नितप्तेभिर्युवमश्महन्मभिः । तपुर्वधेभिरजरेभिरत्त्रिणो नि पर्शाने विध्यतं यन्तु निस्वरम् ॥५॥**

हे इन्द्र र सोमदेवताहरू हो ! तिमीहरू अन्तरिक्षबाट चारैतिर आयुधहरू फ्याँक । तिमीहरू दुवै अग्निझैं तातिएका ढुङ्गोजस्ता घातक र तापक अस्त्र प्रहार गर्दछौ । आफ्ना अजर आयुधहरूले लुटेर खान पल्केका राक्षसहरूलाई चिरा पार, त्यसो भएपछि तिनीहरू डरले चुप लागेर भागून् ।

**इन्द्रासोमा परि वां भूतु विश्वत इयं मतिः कक्ष्याश्वेव वाजिना । यां वां होत्रां परिहिनोमि मेधयेमा ब्रह्माणि नृपती इव जिन्वतम् ॥६॥**

हे इन्द्र र सोमदेवता ! एकाछेउमा भएका डोरीले जसरी घोडालाई चारै तिरबाट बाँधेको हुन्छ, उसै गरी यस स्तुतिले तिमीहरूलाई पनि सबैतिर व्याप्त गराओस् । तिमीहरू बलिया छौ, आफ्ना मेधाशक्तिका बलले हामी यो प्रार्थना तिमीहरूकहाँ पठाउँदै छौं । राजाले झैं तिमीहरूले पनि यस स्तुतिलाई सफल गराओ ।

**प्रति स्मरेथां तुजयद्भिरेवैर्हतं द्रुहो रक्षसो भङ्गुरावतः । इन्द्रासोमा दुष्कृते मा सुगं भूद् यो मा कदा चिदभिदासति द्रुहः ॥७॥**

हे इन्द्र र सोमदेवता ! तिमीहरू शीघ्रगामी अश्वले शत्रुमाथि आक्रमण गर । द्रोह गर्ने, विनाशकारी राक्षसको विनाश गर । जसले जुनसुकै बेला हामीलाई दुःख दिन खोजेका हुन्छन्, त्यस्ता दुष्कर्मीहरूसित सुगमतापूर्वक देखा नपर ।

**यो मा पाकेन मनसा चरन्तमभिचष्टे अनृतेभिर्वचोभिः । आप इव काशिना संगृभीता असन्नस्त्वासत इन्द्र वक्ता ॥८॥**

पवित्र मनले आचरण गर्ने हामीलाई जुन राक्षसहरू असत्य वचनद्वारा दोषी सिद्ध गर्न खोज्दछन्, हे इन्द्रदेवता ! त्यस्ता ढाँट कुरा गर्ने राक्षसहरू मुठीभित्र थुनिएको जलजस्तै पूर्ण रूपले विनाश होऊन् ।

**ये पाकशंसं विहरन्त एवैर्ये वा भद्रं दूषयन्ति स्वधाभिः । अहये वा तान् प्रददातु सोम आ वा दधातु निर्ऋतेरुपस्थे ॥९॥**

म शुद्ध मन भएका वसिष्ठलाई आफ्नो स्वार्थका लागि जसले दुःख दिन्छन् या आफ्ना धन वा साधनले मजस्तो कल्याणवृत्ति भएकालाई दोषी बनाउने कोसिस गर्दछन्, हे सोमदेवता ! तिनलाई तिमी सर्पजस्ता विषालु जीव भएका ठाउँमा फ्याँकिदेऊ ।

**यो नो रसं दिप्सति पित्वो अग्ने अश्वानां गवां यस्तनूनाम् । रिपु स्तेन स्तेयकृद् दभ्रमेतु नि ष हीयतां तन्वा३ तना च ॥१०॥**

हे अग्निदेवता ! जसले हाम्रा अन्नको सारतत्त्व नाश गर्ने विचार गर्दछ, जसले गाई, अश्व र सन्तानहरूको विनाश गर्दछ, त्यस्ता समाजका शत्रु चोरहरू विनाश होऊन् । आफ्नो शरीर र सन्तानका साथ तिनीहरू नाश होऊन् ।

**परः सो अस्तु तन्वा३ तान च तिस्रः पृथिवीरधो अस्तु विश्वाः । प्रति शुष्यतु यशो अस्य देवा यो मा दिव दिप्सति यश्च नक्तम् ॥११॥**

त्यस्ता दुष्ट पातकीहरूको शरीर र सन्तान नाश होऊन् । पृथ्वी आदि तीनै लोकबाट तिनीहरूको पतन होस् । हे देवताहरू हो ! त्यस्ताको कीर्ति सुकेर विनाश होऊन् । जुन दुष्ट राक्षसले हामीलाई रातदिन सताउँछन् तिनीहरू नाश होऊन् ।

**सुविज्ञानं चिकितुषे जनाय सच्चासच्च वचसी पस्पृधाते । तयोर्यत् सत्यं यतरदृजीयस्तदित् सोमोऽवति हन्त्यासत् ॥१२॥**

सत्य र असत्य वचनले परस्परमा स्पर्धा गरिरहेका हुन्छन् भन्ने कुरो विद्वान् मानिसहरूले जानेका छन् । त्यस्ता वचनमध्ये जुन सत्य र सरल हुन्छ, त्यसलाई सोमदेवताले सुरक्षा गर्दछन् र जुन असत्य हुन्छ, त्यसलाई समाप्त पारिदिन्छन् ।

**न वा उ सोमो वृजिनं हिनोति न क्षत्रियं मिथुया धारयन्तम् । हन्ति रक्षो हन्त्यासद् वदन्तमुभाविन्द्रस्य प्रसितौ शयाते ॥१३॥**

सोमदेवताले पाप कर्म गर्ने, मिथ्याचारीहरूलाई बलवान् भए पनि मार्दछन् । उनले राक्षसलाई मार्दछन् र असत्य बोल्नेलाई पनि मार्दछन् । उनले ती मारेका ती राक्षसहरू गएर इन्द्रदेवताद्वारा बाँधिन्छन् ।

**यदि वाहमनृतदेवो अस्मि मोघं वा देवाँ अप्यूहे अग्ने । किमस्मभ्यं जातवेदो हृणीषे द्रोघवाचस्ते निर्ऋथं सचन्ताम् ॥१४॥**

हामीले यदि भुल गरेर अनृत देवताको उपासना गरेका छौँ भनेदेखि अथवा व्यर्थमा नै देवताहरूका नजिक गएका छौ भनेदेखि हे अग्निदेवता ! हामीसित तिमी नरिसाऊ । द्रोही मिथ्याभाषीहरू नै तिमीबाट हिंसित होऊन् ।

**अद्या मुरीय यदि यातुधानो अस्मि यदि वायुस्ततप पूरुषस्य । अधा स वीरैर्दशभिर्वि यूया यो मा मोघं यातुधानेत्याह ॥१५॥**

हामी यदि राक्षस नै हौँ वा कुनै सज्जन पुरुषको हत्या गर्दछौँ भनेदेखि आजै मरौँ अन्यथा हामीलाई जसले व्यर्थमा राक्षस भनेर बोलाउने गरेका छन्, उनीहरू आफ्नै दस वीर, दस परिजन र दस इन्द्रियका साथमा सबै नष्टःहोऊन् ।

**यो मायातुं यातुधानेत्याह यो वा रक्षाः शुचिरस्मीत्याह । इन्द्रस्तं हन्तु महता वधेन विश्वस्य जन्तोरधमस्पदीष्ट ॥१६॥**

हामीजस्तो दैवी स्वभाव भएका वसिष्ठलाई जुन राक्षसले राक्षस भनेको छ र जुन राक्षसले आफूलाई शुद्ध वसिष्ठ भनेको छ, त्यस्ताहरू इन्द्रदेवताका महान् आयुधले नष्ट होऊन् । तिनीहरू सबै लोकबाट पतित होऊन् ।

**प्र या जिगाति खर्गलेव नक्तमप द्रुहुस्तन्वं गूहमाना । वव्रमनन्तमव सा पदीष्ट ग्रावाणो घ्नन्तु रक्षस उपब्दैः ॥१७॥**

जुन राक्षसीहरू रातका समयमा आफ्नो शरीर उल्लुले झैँ लुकाएर हिँड्ने गर्दछन्, तिनीहरू उँधो मुन्टो भएर अनन्त गर्तमा खसून् । ढुङ्गाका ढिस्कामा ठूलो शब्द गर्दै खसाएर त्यस्ता राक्षसलाई विनाश गर ।

**वि तिष्ठध्वं मरुतो विक्ष्वीच्छत गृभायत रक्षसः सं पिनष्टन । वयो ये भूत्वा पतयन्ति नक्तभिर्ये वा रिपो दधिरे देवे अध्वरे ॥१८॥**

हे मरुत्वीरहरू हो ! तिमीहरू प्रजाका माझमा रहेर राक्षसहरूलाई खोजी गर । जुन राक्षस रातका समयमा पक्षी बनेर आउँछन् र यज्ञमा हिंसा गर्दछन्, उनलाई पक्रेर विनाश गर ।

**प्र वर्तय दिवोऽश्मानमिन्द्र सोमशितं मघवन्त्सं शिशाधि । प्राक्तो अपाक्तो अधरादुदक्तोऽभि जहि रक्षसः पर्वतेन ॥१९॥**

हे इन्द्रदेवता ! तिमी अन्तरिक्ष मार्गबाट वज्र प्रहार गर । हे धनवान् इन्द्रदेवता ! तिमी आफ्ना यजमानलाई सोमद्वारा संस्कारित गर । तिमी पूर्व, पश्चिम, उत्तर र दक्षिणका चारै दिशाबाट पर्वतसमानको शस्त्रले राक्षसलाई विना गर ।

**एत उ त्ये पतयन्ति श्वयातव इन्द्रं दिप्सन्ति दिप्सवोऽदाभ्यम् । शिशीते शक्रः पिशुनेभ्यो वधं नूनं सृजदशनिं यातुमदभ्यं ॥२०॥**

जुन राक्षसहरू कुकुरले झैँ टोक्नका लागि झम्टेर आउँछन्, जुन राक्षस अहिंसनीय इन्द्रदेवताको हिंसा गर्न खोज्दछन्, इन्द्रदेवताले त्यस्ता कपटीहरूलाई मार्नका लागि वज्र तेज गराउँछन् । इन्द्रदेवता दुष्ट राक्षसलाई वज्रले चाँडै विनाश गरून् ।

**इन्द्रो यातूनामभवत् पराशरो शविर्मथीनामभ्याऽविवासताम् । अभीदु शक्रः परशुर्यथा वनं पात्रेव भिन्दन्त्सत एतु रक्षसः ॥२१॥**

इन्द्रदेवता राक्षसहरूलाई दमन गर्दछन् । हविष्य विनाश गर्नेहरूलाई इन्द्रदेवताले पराजित गराउँछन् । बन्चराले जसरी वन फाँड्दछ, मुसलले जसरी माटाका भाँडा फोर्दछ, उसै गरी इन्द्रदेवताले अगाडि आएका राक्षसहरूलाई संहार गर्दछन् ।

**उलूकयातुं शुशुलूकयातुं जहि श्वयातुमुत कोकयातुम् । सुपर्णयातुमुत गृध्रयातुं दृषदेव प्र मृण रक्ष इन्द्र ॥२२॥**

हे इन्द्रदेवता ! उल्लुजस्तालाई तिमी मारिदेऊ । ब्वाँसाजस्तालाई तिमी मारिदेऊ । कुकुर, चखवा, बाज, गिद्ध आदि जस्ता विभिन्न दुर्गुण भएका राक्षसहरूलाई तिमी ढुङ्गाले बनेको वज्र नामका अस्त्रले मार र यस्ता सबैबाट हामीलाई जोगाऊ ।

**मा नो रक्षो अभि नड् यातुमावदपोच्छन्तु मिथुना ये किमीदिनः । पृथिवी नः पार्थिवात् पात्वंहसोऽन्तरिक्षं दिव्यात् पात्वस्मान् ॥२३॥**

राक्षसहरू हाम्रा लागि घातक नहोऊन् । दुःख दिने स्त्रीपुरुषका जोडीबाट देवताहरूले हामीलाई जोगाऊन् । आपसमा फाटो हाल्ने घातक राक्षसहरूबाट पनि हामीलाई जोगाऊ । पृथ्वीले हामीलाई भूलोकका पापबाट जोगाऊन् । अन्तरिक्षले हामीलाई आकाशका पापबाट जोगाऊन् ।

इन्द्र जहि पुमांसं यातुधानमुत स्त्रियं मायया शाशदानाम् । विग्रीवासो मूरदेवा ऋदन्तु मा ते दृशन्त्सूर्यमुच्चरन्तम् ॥२४॥

इन्द्रदेवताले पुरुष राक्षसलाई विनाश गरून् र कपटी हिंस्रक स्त्रीहरूलाई पनि विनाश गरून् । हिंसा गर्नु जसको खेल हो, त्यस्ताको टाउको छिनाऊन् । तिनीहरू सूर्योदयभन्दा पहिले नै समाप्त होऊन् ।

प्रति चक्ष्व वि चक्ष्वेन्द्रश्च सोम जागृतम् । रक्षोभ्यो वधमस्यतमशनिं यातुमद्भ्यः ॥२५॥

हे सोमदेवता ! तिमी र इन्द्रदेवताले जागा अवस्थामा रहेर सबै राक्षसहरूलाई देखेका छौ । राक्षसलाई मार्नका लागि तयार गरेका अस्त्र उनीहरूमाथि हान र कष्ट दिनेहरूलाई वज्रले हानेर संहार गर ।

## ५. प्रतिसरमणि सूक्त

**ऋषि–** शुक्र । **देवता–** कृत्यादूषण, मन्त्रोक्त देवता । **छन्द–** उपरिष्टाद्‌बृहती, त्रिपदा विराट् गायत्री, चतुष्पदा भुरिक् जगती, अनुष्टुप्, भुरिक् संस्तार पङ्क्ति, ककुम्मती अनुष्टुप्, चतुष्पदा पुरस्कृति जगती, त्रिष्टुप्, पथ्या पङ्क्ति, त्र्यवसाना षट्पदा जगती, पुरस्ताद् बृहती, जगती गर्भा त्रिष्टुप्, विराट् गर्भास्तारपङ्क्ति, पराविराट् त्रिष्टुप्, त्र्यवसाना सप्तपदाविराट गर्भा भुरिक् शक्वरी ।

अयं प्रतिसरो मणिर्वीरो वीराय बध्यते । वीर्यवान्त्सपत्नहा शूरवीरः परिपाणः सुमङ्गलः ॥१॥

प्रतिसर नामका यस विद्यारूपी मणिले दुष्कृत्य गर्ने शत्रुलाई प्रतिकार गर्दछ । वीरोचित गुणले सम्पन्न यो औषधि पराक्रमी पुरुषलाई नै बाँधिने गर्दछ । वीर्ययुक्त यो मणि शत्रुका लागि घातक, वीरमा वीरता ल्याउने, सबै किसिमका रोगहरूबाट संरक्षण गर्ने, सुन्दर र मङ्गलप्रद छ ।

अयं मणिः सपत्नहा सुवीरः सहस्वान् वाजी सहमान उग्रः । प्रत्यक् कृत्या दूषयन्नेति वीरः ॥२॥

यो मणि शत्रुनाशक, वीरतायुक्त, सहनशील, बलवान्, अन्नप्रदाता, शत्रुलाई पराजित गर्ने, र प्रचण्ड पराक्रमी छ । प्रयोगकर्ताका दुष्कृत्यलाई यसले फेरि उसैतिर प्रेरित गर्दै आएको छ ।

अनेनेन्द्रो मणिना वृत्रमहन्ननेनासुरान् पराभावयन्मनीषी । अनेनाजयद् द्यावापृथिवी उभे इमे अनेनाजयत् प्रदिशश्चतस्रः ॥३॥

प्रतिसर नामका यस मणिका सामर्थ्यले इन्द्रदेवताले वृत्रासुरलाई संहार गरेका थिए । यस मणिको ज्ञानक्षमताको प्रभावबाट नै मनीषी इन्द्रदेवताले असुरहरूलाई पराजित गरेका थिए र द्युलोक तथा पृथ्वीलोकमा स्वामित्व ग्रहण गर्नुका साथै चारै दिशाहरूमा विजय पताका फहराएका थिए ।

अयं स्राक्त्यो मणिः प्रतीवर्तः प्रतिसरः । ओजस्वान् विमृधो वशी सो अस्मान् पातु सर्वतः ॥४॥

यो स्राक्त्य नामका प्रगतिशील मणिलाई जसले दुरूपयोग गर्दछ, त्यसलाई यसले प्रतिकार गर्ने क्षमता लिएको छ । यो ओजस्वी छ, आक्रामक छ र वशीकरण गर्ने सामर्थ्य पनि भएको छ । यस मणिले हामीलाई सबै तिरबाट संरक्षण प्रदान गरोस् ।

तदग्निराह तदु सोम आह बृहस्पतिः सविता तदिन्द्रः । ते मे देवाः पुरोहिताः प्रतीचीः कृत्याः प्रतिसरैरजन्तु ॥५॥

यस मणिका प्रभावका सम्बन्धमा अग्निदेवता, सोमदेवता, बृहस्पतिदेवता, सर्वप्रेरक सवितादेवता तथा इन्द्र आदि सबै देवताहरूले कुरा गरेका छन् । हाम्रा निम्ति पठाइएको कृत्यालाई यी सबै अग्रगामी देवताहरूले आआफ्नो प्रभावद्वारा अभिचारकर्तातिरै पठाइदिऊन् ।

अन्तर्दधे द्यावापृथिवी उताहरुत सूर्यम् । ते मे देवाः पुरोहिताः प्रतीचीः कृत्या प्रतिसरैरजन्तु ॥६॥

हामी आफ्नो र पापदेवीका बीचमा द्यावापृथिवी, दिन तथा सूर्यदेवतालाई अवरोधकका रूपमा स्थापित गर्दछौं । अभीष्ट फल साधक, अगाडि प्रतिष्ठित गरिएका, यी देवताहरूले प्रतिसर मन्त्रका सामर्थ्यले घातक प्रयोगलाई गर्नेहरूतर्फ नै पुनः पठाइदिऊन् ।

ये स्राक्त्यं मणिं जना वर्माणि कृण्वते । सूर्य इव दिवमारुह्य वि कृत्या बाधते वशी ॥७॥

यस स्राक्त्य नामका मणिलाई जसले रक्षा कवचका रूपमा धारण गर्दछ, ऊ सूर्यले झैं द्युलोकमा आरोहण गरेर कृत्यालाई बाधा पार्न सक्छ र वशमा राख्न सक्दछ ।

स्राक्त्येन मणिन ऋषिणेव मनीषिणा । अजैषं सर्वाः पृतना वि मृधो हन्मि रक्षसः ॥८॥

इन्द्रियविजयी, ज्ञानसम्पन्न महामनीषी अथर्वाको जस्तै यस स्राक्त्य मणिका सामर्थ्यले हामी सबैले शत्रुका सेनालाई जित्नका लागि समर्थ भएका छौं र घातक राक्षसहरूलाई यसैका प्रभावले विनाश गरिरहेका छौं ।

याः कृत्या आङ्गिरसीर्याः कृत्या आसुरीर्याः कृत्याः स्वयंकृता या उचान्येभिराभृताः । उभयीस्ताः परा यन्तु परावतो नवतिं नाव्या३ अति ॥९॥

आङ्गिरसी घातक प्रयोग, असुरहरूले अपनाएको घातक प्रयोग, स्वयंद्वारा गरिएको घातक प्रयोग, आफ्नै लागि संहारक सिद्ध हुने र अन्य शत्रुले गरेका घातक प्रयोग यी सबै नै नब्बे वटा नदीभन्दा पर जाऊन् ।

अस्मै मणिं वर्म बध्नन्तु देवा इन्द्रो विष्णुः सविता रुद्रो अग्निः । प्रजापतिः परमेष्ठी विराड् वैश्वानर ऋषयश्च सर्वे ॥१०॥

यस्ता घातक प्रयोगहरूलाई निवारण गर्ने फलको खोजीमा रहेका यजमानका लागि इन्द्र, विष्णु, सविता, रुद्र, अग्नि, प्रजापति, परमेष्ठी, विराट् र वैश्वानर यी सबै देवताहरू तथा समस्त ऋषिहरू अर्काले पठाएको घातक प्रयोगलाई निवारण गर्नका लागि मणिका रूपमा कवच बाँधून् ।

उत्तमो अस्योषधीनामनड्वाञ्जगतामिव व्याघ्रः श्वपदामिव । यमैच्छामाविदाभ तं प्रतिस्पाशनमन्तितम् ॥११॥

मणिहरूलाई उत्पादन गर्ने हे औषधि ! जङ्गली पशुहरूमा जसरी बाघ र भारी बोक्ने पशुहरूमा गोरु उत्तम हुन्छन्, उसै गरी औषधिहरूमा तिमी श्रेष्ठ छौ । हामी जुन शत्रु वा विकृतिका विषयमा चिन्तित हुन्छौं, त्यसको विनाश भएको पाऔं ।

स इद् व्याघ्रो भवत्यथो सिंहो अथो वृषा । अथो सपत्नकर्शनो यो बिभर्तीमं मणिम् ॥१२॥

जसले यो महिमामय स्राक्त्य नामका मणिलाई धारण गर्दछन्, उनीहरू निश्चित रूपमा बाघ र सिंहजस्तै अर्कालाई पराजित गराउने हुन्छन् अनि गाईका बथानमा निश्चिन्त भएर विचरण गर्ने साँढेझैं शत्रुलाई दमन गर्न सक्ने हुन्छन् ।

नैनं घ्नन्त्यप्सरसो न गन्धर्वा न मर्त्याः । सर्वा दिशो वि राजति यो बिभर्तीमं मणिम् ॥१३॥

यस स्राक्त्य मणिलाई धारण गर्नेमाथि न त कुनै अप्सरा, न गन्धर्व र न अन्य कुनै मानिसले प्रहार गर्न सक्दछ । तिनीहरू सबै दिशामा नै विशिष्टतापूर्वक शोभायमान भएका हुन्छन् ।

कश्यपस्त्वामसृजत कश्यपस्त्वा समैरयत् । अबिभस्त्वेन्द्रो मानुषे बिभ्रत् संश्रेषिणेऽजयत् । मणिं सहस्रवीर्यं वर्म देवा अकृण्वत ॥१४॥

हे मणि ! प्रजापति कश्यपले तिमीलाई बनाए र प्रेरित गरे । देवराज इन्द्रले मानवीय सङ्ग्राममा तिमीलाई धारण गरे र विजय प्राप्त गरे । असीम सामर्थ्ययुक्त स्राक्त्य मणिलाई पहिले नै देवताहरूले कवचको रूपमा प्रयोग गरेका थिए ।

**यस्त्वा कृत्याभिर्यस्त्वा दीक्षाभिर्यज्ञैर्यस्त्वा जिघांसति । प्रत्यक् तवमिन्द्र तं जहि वज्रेण शतपर्वणा ॥१५॥**

जुन पुरुष तिमीलाई मारक प्रयोग, दीक्षाजनित घातक कृत्या र घातक यज्ञमा मार्ने विचार गरेका हुन्छन्, हे इन्द्रदेवता ! तिनलाई तिमी सयौँ पर्वले युक्त वज्र नामका अस्त्रले आफ्ना सम्मुखमा मारिदेऊ ।

**अयमिद् वै प्रतीवर्त ओजस्वान्त्संजयो मणिः । प्रजां धनं च रक्षतु परिपाणः सुमङ्गलः ॥१६॥**

यो मणि घातक प्रयोग निवारण गर्ने काममा निश्चित रूपमा नै सहायक हुने गर्दछ । परम बल प्रदायक, विजयात्मक गुणले युक्त छ । यसले हाम्रा सन्तान र वैभवको संरक्षण गर्दछ । यो मणि हाम्रा लागि सबै तिरबाट संरक्षकका रूपमा छ र उत्तम तथा मङ्गलकारी कार्यको साधनका रूपमा रहेको छ ।

**असपत्नं नो अधरादसपत्नं न उत्तरात् । इन्द्रासपत्नं नः पश्चाज्ज्योतिः शूर पुरस्कृधि ॥१७॥**

हे पराक्रमी इन्द्रदेवता ! हाम्रा उत्तर, दक्षिण र पश्चिम दिशातर्फ शत्रुहरूलाई संहार गर्ने ज्योति विद्यमान रहोस् र हाम्रा सामु अर्थात् पूर्व दिशामा पनि तिमी त्यस ज्योतिलाई स्थापित गर ।

**वर्म मे द्यावापृथिवी वर्माहर्वर्म सूर्यः । वर्म म इन्द्रस्वाग्निश्च वर्म धाता दधातु मे ॥१८॥**

द्यावापृथिवी, सूर्य, इन्द्र, अग्नि र धाता यी देवताहरूले हामीलाई संरक्षक कवच धारण गर्नमा सहायता प्रदान गरून् ।

**ऐन्द्राग्नं वर्म बहुलं यदुग्रं विश्वे देवा नाति विध्यन्ति सर्वे । तन्मे तन्वं त्रायतां सर्वतो बृहदायुष्माञ्जरदष्टिर्यथासानि ॥१९॥**

इन्द्राग्नी देवताको विस्तृत र प्रचण्ड मणिका रूपमा रहेको जुन कवच छ, जसलाई भेदन गर्न कुनै पनि देवताले सक्दैनन् त्यसै कवचले हाम्रा शरीरलाई सबै तिरबाट संरक्षण गरोस् । त्यसबाट हामी दीर्घायुको लाभ प्राप्त गर्दै वृद्धअवस्थासम्म स्वस्थ रहन सकौँ ।

**आ मारुक्षद् देवमणिर्मह्या अरिष्टतातये । इमं मेथिमभिसंविशध्वं तनूपानं त्रिवरूथमोजसे ॥२०॥**

धारण गर्नका लागि इन्द्राग्नि देवताले प्रेरित गरेको यो देवमणि हाम्रा शरीरमा शोभायमान होस् । हे मानिसहरू हो ! शत्रुविनाशक, शरीर रक्षक र तीन आवरणले युक्त यस मणिलाई बलसामर्थ्यका लागि धारण गर ।

**अस्मिन्निन्द्रो नि दधातु नृम्णमिमं देवासो अभिसंविशध्वम् । दीर्घायुत्वाय शतशारदायायुष्माञ्जरदष्टिर्यथासत् ॥२१॥**

यस स्राक्त्य मणिका प्रभावले इन्द्रदेवताले हाम्रो लक्षित सुख प्रदान गरून् । हे देवताहरू हो ! तिमीहरू यसै मणिमा व्याप्त होओ । यसको कल्याणक्षमतालाई यसरी बढाओ, जसका प्रभावले धारणकर्ताले सय वर्षको आयु पाउन सकोस् र बुढ्यौलीसम्म पनि निरोगिताको लाभ प्राप्त गरिरहोस् ।

**स्वस्तिदा विशां पतिर्वृत्रहा विमृधो वशी । इन्द्रो बध्नातु ते मणिं जिगीवाँ अपराजितः सोमपा अभयंकरो वृषा ? स त्वा रक्षतु सर्वतो दिवा नक्तं च विश्वतः ॥२२॥**

कल्याणकारी, प्रजाका पालक, वृत्रासुरका नाशक, विभिन्न युद्धहरूका सञ्चालक, सबै शत्रुक नियन्त्रक, विजयी, अपराजेय, सोमपानकर्ता, भयरहित र अभीष्ट फलको वर्षा गराउने इन्द्रदेवताले शरीरमा मणि बाँधून् । त्यो मणि सबै तिरबाट रातदिन संरक्षण गर्ने होस् ।

## ६. गर्भदोषनिवारण सूक्त

**ऋषि–** मातृनामा । **देवता–** मातृनामा, मन्त्रोक्त, ब्रह्मस्पति । **छन्द–** अनुष्टुप् पुरस्ताद् बृहती, त्र्यवसाना षट्पदा जगती, पथ्यापङ्क्ति, त्र्यवसाना सप्तपदा शक्वरी

त्र्यवसाना सप्तपदा जगती ।

**यौ ते मातोन्ममार्ज जातायाः पतिवेदनौ । दुर्णामा तत्र मा गृधदलिंश उत वत्सपः ॥१॥**

पतिलाई अर्पण गर्नुपर्ने जुन अङ्ग तिमी जन्मनासाथ तिम्री आमाले सफा गरेकी थिइन्, ती अङ्गमा दुर्णामा, आलिंश र वत्सप नाम गरेका क्रमशः दुष्ट, शक्ति क्षय गर्ने र बच्चालाई हानी गर्ने कुतत्त्वहरू नपुगून् ।

**पलापलानुपलालौ शर्कुं कोकं मलिम्लुचं पलीजकम् । आश्रेषं वव्रिवाससमृक्षग्रीव प्रमीलिनम् ॥२॥**

गर्भिणीलाई दुःख दिने पलाल नामको अति सूक्ष्म र अनुपलाल नामको मांससित सम्बन्धित रोगहरूलाई हामी हटाउँछौँ । सऱ्याक्सुरुक शब्द गर्ने शर्कु नामको, कोक नामको कामुक, मलिम्चुल नामको मैलो, पलीजक नामको चाउरी पार्ने आश्रेय नामको टाँसिएर दुःख दिने, वव्रिवास नामको कुरूप बनाउने, ऋक्षग्रीवा नामको गर्धन बिगारेर भालुको जस्तो बनाउने, प्रमीलिन नामको आँखामा अल्छ्याइँ उत्पन्न गराउने यी सबै गर्भनाशक रोगरूपी राक्षसहरूलाई हामी पर हटाउँछौँ ।

**मा सं वृतो मोप सृप ऊरू माव सृपोऽन्तरा । कृणोम्यस्यै भेषजं बजं दुर्णामचातनम् ॥३॥**

हे रोगका गुँड ! तिमी यस गर्भिणीका दुई तिघ्राका बीचमा र त्यहाँबाट भित्रपट्टि नपस अनि तलतिर पनि नसर । त्यसैका लागि नै हामी दुर्नाम नामको रोग निवारण गर्नका लागि पिंगवज नामको औषधि प्रयोग गरिरहेका छौँ ।

**दुर्णामा च सुनामा चोभा संवृतमिच्छतः । अरायानप हन्मः सुनामा स्त्रैणमिच्छताम् ॥४॥**

दुर्नाम र सुनाम यी दुवै एकै साथमा रहनका लागि इच्छुक छन् । यिनमा दुर्नाम निकृष्ट छ र हामी यसलाई विनाश गर्दछौँ तथा उत्कृष्ट सुनाम स्त्रीजतिमा विद्यमान रहोस् ।

**यः कृष्णः केश्यसुर स्तम्बज उत तुण्डिकः । अरायानस्या मुष्काभ्यां भंससोऽप हन्मसि ॥५॥**

कालो वर्णको केशी नामको राक्षसरूपी रोग, स्तम्बभागमा लाग्ने स्तम्बज नामको रोग र मुख नै बिगार्ने तुण्डिक नामका रोगहरू सबै दुर्भाग्यशाली हुन् । यिनलाई हामी गर्भिणी स्त्रीका दुवै डिम्बग्रन्थि र कम्मरबाट निकालेर भगाउँछौँ ।

**अनुजिघ्रं प्रमृशन्तं क्रव्यादमुत रेरिहम् । अरायाञ्छ्वकिष्किणो बजः पिङ्गो अनीनशत् ॥६॥**

गन्धले नाश गराउने अनुजिघ्र नामको रोग, स्पर्शले हनन गराउने प्रमृश नामको रोग, मांसभक्षक क्रव्याद अग्नि, चाटेर नै मारिदिने रेरिह नामको रोग, किष्किष् गर्ने किष्किण, नित्य हिंस्रक तथा धन रित्याउने राक्षसरूपी रोगको बीजलाई पिंगवज नामका औषधिले विनाश गर्दछौँ ।

**यस्त्वा स्वप्ने निपद्यते भ्राता भूत्वा पितेव च । बजस्तान्त्सहतामितः क्लीबरूपांस्तिरीटिनः ॥७॥**

हे नारी ! सुप्त अवस्थामा तिमीसित जति जीवाणुहरूले भाइ अथवा पिता बनेर आउँछन्, त्यस्ता नपुंसकलाई यस बज नामका औषधिले हटाइदियोस् ।

**यस्त्वा स्वपन्तीं त्सरति यस्त्वा दिप्सति जाग्रतीम् । छायामिव प्र तान्त्सूर्यः परिक्रामन्ननीनशत् ॥८॥**

हे गर्भिणी स्त्री ! स्वप्नअवस्थामा तिमीले थाहा नपाउने भन्ने जानेर र जाग्रा अवस्थामा पनि तिम्रा नजिकै आएर जसले दुःख दिन्छ, तिमी ती सबै रोगका गुँडलाई उसै गरी विनाश गर, जसरी अन्तरिक्षमा विचरण गरिरहेका सूर्यले अन्धकारलाई विनाश गर्दछन् ।

**यः कृणोति मृतवत्सामवतोकामिमां स्त्रियम् । तमोषधे त्वं नाशयास्याः कमलमञ्जिवम् ॥९॥**

हे औषधि ! जसले यी स्त्रीलाई मृत बच्चा पाउने वा गर्भपात हुने गराउँछ, त्यस्ता रोगका गुँडलाई तिमीले विनाश गर र गर्भद्वाररूपी कमललाई रोगरहित गराऊ ।

**ये शालाः परिनृत्यन्ति सायं गर्दभनादिनः । कुसुला ये च कुक्षिलाः ककुभाः करुमाः स्रिमाः । तानोषधे त्वं गन्धने विषूचीनान् वि नाशय ॥१०॥**

गधाको जस्तो स्वर भएको, कुठिलको आकृति भएको अथवा सियोको टुप्पोजस्तो कुसुल नामको ठूलो कोखा गराउने कुक्षिल नामको रोग, भयानक आकृतियुक्त ककुभ नामको रोग, नराम्रो ध्वनि गरेर कराउने करुम नामको रोग आदिजस्ता रोगका कीटाणुहरू साँझपख घरका वरिपरि चारैतिर नाच्ने गर्दछन् । हे औषधि ! तिमी आफ्ना गन्धले ती फैलने गरेका घातक किराहरूलाई विनाश गर ।

**ये कुकुन्धाः कुकूरभाः कृत्तीर्दूर्शानि बिभ्रति । क्लीबा इव प्रनृत्यन्तो वने ये कुर्वते घोषं तानितो नाशयामसि ॥११॥**

कुकुध नामको राक्षसरूपी रोग, कुकुरको जस्तो शब्द निकाल्ने गरेका हिंस्रक कृत्यले दुष्कर्म अँगाल्ने गर्दछ र त्यसले पागलको जस्तै हातगोडा फ्याँक्दै जङ्गलमा कराउँदै घुम्ने गराउँछ । यी दुवै खालका रोग उब्जाउने कीटाणुहरूलाई हामी गर्भिणीदेखि पर हटाउने गर्दछौँ ।

**ये सूर्यं न तितिक्षन्त आतपन्तममुं दिवः । अरायान् बस्तवासिनो दुर्गन्धींल्लोहितास्यान् मककान् नाशयामसि ॥१२॥**

जसले आकाशमा चम्कने गरेका सूर्यलाई सहन गर्न सक्दैन, त्यस्ता अलच्छिनी, बाखाको छालाजस्तो दुर्गन्धले भरिएका, रगताम्य मुख भएका, टेडो किसिमको गति भएका यस्ता सबै खालका रोगका कीटाणुहरूलाई हामी विनाश गर्दछौँ ।

**य आत्मानमतिमात्रमंस आधाय बिभ्रति । स्त्रीणां श्रोणिप्रतोदिन इन्द्र रक्षांसि नाशय ॥१३॥**

जो सूर्य या इन्द्ररूपी आत्मतत्त्वलाई काँधमा बोकेर विचरण गर्दछन्, उनीहरूले स्त्रीका कम्मर दुखाउने रोगका कीटाणुहरूलाई विनाश गरिदिऊन् ।

**ये पूर्वे वध्वोऽ यन्ति हस्ते शृङ्गाणि बिभ्रतः । आपाकेस्थः प्रहासिन स्तम्बे ये कुर्वते ज्योतिस्तानितो नाशयामसि ॥१४॥**

जुन पिशाचरूपी रोगका किराहरू हातमा सिङ बोकेको जस्तो गरी डस्ने शक्ति लिएर विचरण गरेका हुन्छन् र जो भोजनालयमा नाच्दै गाउँदै रमाइलो गरिरहेका हुन्छन्, जो घरमा वा खम्बामा उज्यालो उत्पन्न गर्दछन्, त्यस्ता सबै खालका रोगका कीटाणुहरूलाई हामी गर्भिणीको आवासबाट टाढा हटाउँछौँ ।

**येषां पश्चात् प्रपदानि पुरः पार्ष्णीः पुरो मुखा । खलजाः शकधूमजा उरुण्डा ये च मट्मटाः कुम्भमुष्का अयाशवः । तानस्या ब्रह्मणस्पते प्रतीबोधेन नाशय ॥१५॥**

जसका खुट्टा पछाडि छन्, अनि मुख र कुर्कुच्चा अगाडि छन्, त्यस्ता राक्षसरूपी रोग, खाद्यान्न सफा गर्ने ठाउँमा उब्जिने किराहरू, गाईका गोबर वा घोडाका लिदीमा उत्पन्न हुने, ठूलो खालको मुख भएका अथवा मुखै नभएका, ज्यादै दुःख दिने गरी मट्-मट् शब्द निकाल्ने, ठूला अण्डकोश भएका र वायुजस्तै तेज गति भएका जेजस्ता रोगका कीटाणुहरू हुन्छन्, ती सबै राक्षसरूपी कीटाणुहरूलाई— हे ज्ञानका स्वामी ब्रह्मणस्पतिदेवता ! तिमी आफ्नै ज्ञानले नष्ट गराऊ ।

**पर्यस्ताक्षा अप्रचङ्कशा अस्त्रैणाः सन्तु पण्डगाः । अव भेषज पादय य इमां संविवृत्सत्यपतिः स्वपतिं स्त्रियम् ॥१६॥**

ठूलठूला आँखाले हेर्ने, ख्याउटे जङ्घा भएको जुन राक्षसले स्त्रीहरूलाई दुःख दिने गरेको हुनाले

त्यसको विरोधस्वरूप त्यही राक्षस स्त्रीले विहीन अथवा सर्प होस् । जो संयमहीन र कामासक्त राक्षसी प्रवृत्ति मानिसका रूपमा रहेको छ, त्यसले स्वप्न अवस्थामा पनि स्त्रीलाई पिउन खोजेकै हुन्छ भने हे औषधि ! तिमी त्यसलाई नष्ट गराऊ ।

**उद्धर्षिणं मुनिकेशं जम्भयन्तं मरीमृशम् । उपेषन्तमुदुम्बलं तुण्डेलमुत शालुडम् । पदा प्र विध्य पार्ष्ण्या स्थालीं गौरिव स्पन्दना ॥१७॥**

जोडदार रूपमा अँठ्याउने, मुनिको जस्तै जटा भएको मुनिकेश नामको, हिंस्रक प्रवृत्ति भएको मरीमृश यी रोग र गर्भिणी स्त्रीलाई खोज्दै हिँड्ने गरेको उदुम्बर नामको रोग र भयानक सुँड भएको शालड नामको रोग आदि यी सबै दुष्ट राक्षसहरूलाई हे औषधि ! तिमी कुर्कुच्चा र गोडाले उसरी नै मिचिदेऊ, जसरी दुध दुहुने काम सकिएपछि वा दुष्ट स्वभाव भएकाले दुहुने बेलैमा गाईले भाँडामा लात्तले हान्ने गर्दछ ।

**यस्ते गर्भं प्रतिमृशाज्जातं वा मारयाति ते । पिङ्गस्तमुग्रधन्वा कृणोतु हृदयाविधम् ॥१८॥**

हे गर्भिणी ! तिम्रो गर्भ बिगार्ने वा जन्मिएका शिशुलाई मार्ने इच्छा गर्ने राक्षसलाई यसै औषधिले समाप्त गराऊ । हे सेतो औषधि ! तिमी प्रचण्ड गतिमान् भएर गर्भ घात गर्ने राक्षसका हृदयलाई पीडित गराऊ ।

**ये अग्नो जातान् मारयन्ति सूतिका अनुशेरते । स्त्रीभागान् पिङ्गो गन्धर्वान् वातो अभ्रमिवाजतु ॥१९॥**

जुन रोगरूपी राक्षसले आधा उत्पन्न भइसकेका गर्भलाई विनाश गर्दछ र जसले आइमाईको छद्म रूप बनाएर प्रसूति गृहमा सुत्ने गर्दछ, तिनले गर्भिणी स्त्रीलाई आफ्नो अंश नै मानेका हुन्छन् त्यस्ता गन्धर्वरूपी फोहोरी राक्षसलाई पिंगबज नामको औषधि अर्थात् सेतो सस्यूँले उसै गरी हटाउँछ, जसरी पानी नभएको रित्तो बादललाई हावाले उडाउने गर्दछ ।

**परिसृष्टं धारयतु यद्धितं माव पादी तत् । गर्भं त उग्रौ रक्षतां भेषजौ नीविभार्यौ ॥२०॥**

विकसित तथा स्थिर गर्भलाई खस्न नदेऊ । वस्त्र या नियममा राख्ने गरेको उग्र औषधिले गर्भको रक्षा गरोस् ।

**पवीनसात् तङ्गल्वा३च्छायकादुत नग्नकात् । प्रजायै पत्ये त्वा पिङ्गः परि पातु किमीदिनः ॥२१॥**

वज्रजस्तो नाक भएको, ठूला गाला भएको, तङ्गल्व, कालो रङ्गको सायक र नाङ्गो अवस्थामा रहने नग्नक नामका यी रोगका कीटाणुरूपी राक्षसहरूबाट सन्तान र पतिलाई दुःख नभई सुख होस् भन्नका लागि यस पिङ्ग नामका औषधिले तिमीलाई रक्षा गरोस् ।

**द्व्यास्याच्चतुरक्षात् पञ्चपादादनङ्गुरेः । वृन्तादभि प्रसर्पतः परि पाहि वरीवृतात् ॥२२॥**

हे औषधि ! दुई मुख भएका, चार आँखा भएका, पाँच खुट्टा भएका, औँलाविनाको लहरोजस्तै खुट्टा भएका, मुखलाई तलतिर फर्काएर हिँड्ने गरेका र सबै अङ्गमा नै व्याप्त हुने गरेका रोगका कीटाणुहरूबाट तिमीले रक्षा गर ।

**य आमं मांसमदन्ति पौरुषेयं च ये क्रविः । गर्भान् खादन्ति केशवास्तानितो नाशयामसि ॥२३॥**

राक्षसरूपी रोगका जुन कीटाणुहरूले काँचो मासु खान्छन्, जसले पुरुषको पनि मासु खान्छन्, जो लामो र ठूलो कपाल भएका राक्षसहरू छद्मरूपमा प्रवेश गरेर गर्भलाई भक्षण गर्दछन्, त्यस्ता तीनै खालका राक्षसरूपी रोगहरूलाई हामी गर्भिणी स्त्रीबाट टाढा पुऱ्याउँदछौँ ।

**ये सूर्यात् परिसर्पन्ति स्नुषेव श्वशुरादधि । बजश्च तेषां पिङ्गश्च हृदयेऽधि नि विध्यताम् ॥२४॥**

ससुरालाई देखेर बुहारीले बाटो छोडिदिएझैँ सूर्यलाई देखेपछि भाग्ने खालका ती रोगका कीटाणुरूपी असुरहरूको हृदयलाई यस पिङ्गबज नामका औषधिले छेडिदिन्छ ।

**पिङ्ग रक्ष जायमानं मा पुमांसं स्त्रियं क्रन् । आण्डादो गर्भान्मा दभन् बाधस्वेतः किमीदिनः ॥२५॥**

हे पिङ्गबज नामका औषधि ! जन्मिएका सन्तानलाई तिमी रक्षा गर । उत्पन्न हुन लागेको पुरुष गर्भ वा स्त्री गर्भलाई भूतको बाधाबाट तिमीले जोगाऊ । अण्डकोशलाई खाइदिने कृमिले गर्भलाई नष्ट गर्न नसकोस् । हे औषधि ! तिमी यी कृमीहरूलाई गर्भिणीको नजिकबाट पर हटाऊ ।

**अप्रजास्त्वं मार्तवसमाद् रोदमघमावयम् । वृक्षाद्दिव स्रजं कृत्वाप्रिये प्रति मुञ्च तत् ॥२६॥**

हे औषधिको रूपमा रहेका देवशक्तिहरू हो ! तिमीहरू सन्तानहीनता, बालमृत्यु, हृदयको रोदन र पापको भोग आदिलाई शत्रुमाथि नै यस किसिमले हालिदेओ, जसरी वृक्षबाट उत्पन्न फूलको माला कसैलाई पहिराउने गरिन्छ ।

## ७. ओषधि समूह सूक्त

**ऋषि–** अथर्वा । **देवता–** भैषज्य, आयुष्य, ओषधि समूह । **छन्द–** अनुष्टुप्, उपरिष्टाद् भुरिक् बृहती, गुरउष्णिक, पञ्चपदा परानुष्टुप् अतिजगती, पथ्यापङ्क्ति, द्विपदार्ची भूरिक अनुष्टुप्, पञ्चपदा विराद् अतिशक्वरी, उपरिष्टात् निचृत् बृहती, निचृत् अनुष्टुप्, भुरिक् अनुष्टुप् ।

**या बभ्रवो याश्च शुक्रा रोहिणीरुत पृश्नयः । असिक्नीः कृष्णा ओषधीः सर्वा अच्छावदामसि ॥१॥**

खैरा, सेता, राता, नीला र काला वा यस्तै विभिन्न वर्ण तथा सानो शरीर भएका औषधिहरूका सामु गएर रोगनिवारणका लागि हामी उनीहरूसित गुहार माग्दछौं ।

**त्रायन्तामिमं पुरुषं यक्ष्माद् देवेषितादधि । यासां द्यौष्पिता पृथिवी माता समुद्रो मूलं वीरुधां बभूव ॥२॥**

जसकी माता पृथ्वी हुन्, पिता द्युलोक हुन् र मूल समुद्र हुन्, त्यस्ता जलरूपी औषधिले दैवी प्रकोपबाट प्रेरित भएका रोगहरूका प्रभावबाट यी मानिसहरूलाई जोगाऊन् ।

**आपो अग्रं दिव्या ओषधयः । तास्ते यक्ष्ममेनस्य१मङ्गादङ्गादनीनशन् ॥३॥**

हे रोगी पुरुष ! अगाडि उपस्थित जल र दिव्य औषधिहरूले तिम्रा दुष्कर्मको पापका कारण उत्पन्न भएका यक्ष्मा आदि रोगलाई अङ्गप्रत्यङ्गबाट निष्कासित गरून् ।

**प्रस्तृणती स्तम्बिनीरेकशुङ्गाः प्रतन्वतीरोषधीरा वदामि । अंशुमतीः काण्डिनीर्या विशाखा ह्वयामि ते वीरुधो वैश्वदेवीरुग्राः पुरुषजीवनीः ॥४॥**

विशेष विस्तार भएको, झ्याम्टिएको, एउटा कोपिलो लाग्ने र अत्यन्त धेरै हाँगाबिँगा भएका औषधिहरूलाई हामी आह्वान गर्दछौं । अंशुमती नामको अनेकौं अंशमा काण्ड र गाँठा भएको अनेकौं किसिमका हाँगाहरूले झ्याङ्गिएको, सबै देवशक्तिहरूसित सम्बन्धित, प्रभावले युक्त भएको, जीवनदायी औषधिहरूलाई तिमीहरूजस्ता रोगीको हितका लागि हामी आह्वान गर्छौं ।

**यद् व सहः सहमाना वीर्यं१ यच्च वो बलम् । तनेममस्माद् यक्ष्मात् पुरुषं मुञ्चतौषधीरथो कृणोमि भेषजम् ॥५॥**

हे रोगनिवारक औषधिहरू हो ! तिमीभित्र रोग निवारण गर्ने जुन सामर्थ्य र बल छ, त्यसका तिमीहरू यस्ता रोगीहरूलाई यक्ष्मा आदि रोगबाट जोगाओ भन्ने उद्देश्यले नै हामी विभिन्न खालका औषधिहरू तयार गरिरहेका छौं ।

**जीवलां नघारिषां जीवन्तीमोषधीमहम् । अरुन्धतीमुन्नयन्तीं पुष्पां मधुमतीमिह हुवेऽस्मा अरिष्टतातये ॥६॥**

जीवनदायी, हानिरहित, रोप्न सकिने अथवा बाधारहित, उँभो लगाउने खालका, मिठा र फूल फुल्ने खालका औषधिहरूलाई यहाँ लोकहितका लागि र आरोग्यलाभका लागि हामीले आह्वान गर्दछौं ।

**इहा यन्तु प्रचेतसो मेदिनीर्वचसो मम । यथेमं पारयामसि पुरुषं दुरितादधि ॥७॥**

विशिष्ट ज्ञानले युक्त वैद्यका मन्त्ररूपी वचनले पुष्टिकारक औषधिहरू यहाँ आऊन् । ती औषधिहरूका प्रभावले हामी यी रोगी मानिसहरूलाई रोगरूपी पापबाट पार लगाउन सकौँ ।

**अग्नेर्घासो अपां गर्भो या रोहन्ति पुनर्णवाः । ध्रुवाः सहस्रनाम्नीर्भेषजीः सन्त्वाभृताः ॥८॥**

जलको गर्भरूप र अग्निको खाद्य भएका कारणले जुन औषधिहरू बारम्बार नयाँ बनेर उत्पन्न हुने गर्दछन्, हजारौँ किसिमका नाम भएका, स्थिरतासम्पन्न ती सबैलाई यहाँ ल्याइयोस् ।

**अवकोल्बा उदकात्मान ओषधयः । व्यृषन्तु दुरितं तीक्ष्णशृङ्ग्यः ॥९॥**

जसको प्राणचेतनाका रूपमा जल नै रहेको छ, त्यस्तो पानीको लेउमा उत्पन्न हुने, खरो खालको गन्ध भएको, तिखो सिङजस्तो आकार भएका जुन औषधिहरू हुन्छन्, तिनीहरूले नै पापरूपी रोगलाई विनाश गरून् ।

**उन्मुञ्चन्तीर्विवरुणा उग्रा या विषदूषणीः । अथो बलासनाशनीः कृत्यादूषणीश्च यास्ता इहा यन्त्वोषधीः ॥१०॥**

रोग निवारण गर्ने, जलोदर आदि रोगहरू हटाउने, रोग निवारणका लागि प्रचण्ड क्षमताले सम्पन्न, विषनाशक, कफनाशक र मारक प्रयोगलाई नाश गर्ने यस्ता जेजति औषधिहरू छन्, ती सबै यहाँ आऊन् ।

**अपक्रीताः सहीयसीर्वीरुधो या अभिष्टुताः । त्रायन्तामस्मिन् ग्रामे गामश्वं पुरुषं पशुम् ॥११॥**

किनबेच नहुने तर आफैँ गएर फेला पारिएको, आफ्ना प्रभावक्षमताले रोगलाई पर हटाउने, मन्त्रहरूबाट प्रशंसा पाएका औषधिहरू जेजति छन्, तिनीहरूले यस गाउँमा गाई, अश्व आदि पशु र मानिसलाई रक्षा गरून् ।

**मधुमन्मूलं मधुमदग्रमासां मधुमन्मध्यं वीरुधां बभूव । मधूमत् पर्णं मधुमत् पुष्पमासां मधोः संभक्ता अमृतस्य भक्षो घृतमन्नं दुह्रतां गोपुरोगवम् ॥१२॥**

यी औषधिहरूको मूल, मध्य र अग्र भाग, उनका पात र फूल आदि सबै मिठो खालका हुन्छन् । यी औषधिहरू मधुर रसले सिञ्चित तथा अमृत सेवन गराउने खालका छन् । यिनले गाईहरूलाई घिउ आदि अन्न प्रदान गर्ने बनाउने कामलाई प्राथमिकता दिऊन् ।

**यावतीः कियतीश्चेमाः पृथिव्यामध्योषधीः । ता मा सहस्रपर्ण्यो मृत्योर्मुञ्चन्त्वंहसः ॥१३॥**

पृथ्वीमा उब्जने असङ्ख्य पात भएका औषधिहरूले हामीलाई पापरूपी मृत्युबाट जोगाऊन् ।

**वैयाघ्रो मणिर्वीरुधां त्रायमाणोऽभिशस्तिपाः । अमीवाः सर्वा रक्षांस्यप हन्त्वधि दूरमस्मत् ॥१४॥**

औषधिहरूले बनाइएको, बाघजस्तो पराक्रमी, मणिले रोगरूपी पापबाट संरक्षण गर्दछ । त्यस मणिले सबै रोग र रोगका कीटाणुहरूलाई अन्यत्र लगेर विनाश गरोस् ।

**सिंहस्येव स्तनथोः सं विजन्तेऽग्नेरिव विजन्त आभृताभ्यः । गवां यक्ष्मः पुरुषाणां वीरुद्भिरतिनुत्तो नाव्या एतु स्रोत्याः ॥१५॥**

रोगहरू जसरी सिंहको गर्जन र अग्निको प्रचण्ड ज्वालासित डराउने गर्दछन्, उसै गरी यी प्राप्त भएका औषधिहरूले धपाएका गाई आदि पशु र मानिसका रोगहरू सबै नौकाले तर्न सकिने नदीहरूलाई पार गरेर परको देशतिर पुगून् ।

**मुमुचाना ओषधयोऽग्नेर्वैश्वानरादधि । भूमिं संतन्वतीरित यासां राजा वनस्पतिः ॥१६॥**

जुन औषधिका अधिपति वनस्पतिदेवता हुन्, जसले भूमिलाई ढाकेर राख्ने गर्दछन्, त्यस्ता रोगलाई निवारण गर्ने औषधिहरू वैश्वानर अग्निमाथि आधारित हुने गर्दछन् ।

**या रोहन्त्याङ्गिरसीः पर्वतेषु समेषु च । ता नः पयस्वतीः शिवा ओषधीः सन्तु शं हृदे ॥१७॥**

महर्षि अङ्गिराले पर्गेलेका जुन मङ्गलकारी औषधिहरू पर्वतीय क्षेत्र र समथर भूभागमा उत्पन्न हुने गर्दछन्, तिनीहरू सारयुक्त दुधजस्तो भएर हाम्रा हृदयस्थललाई सुखशान्ति प्रदान गर्नमा सक्षम होऊन् ।

**याश्चाहं वेद वीरुधो याश्च पश्यामि चक्षुषा । अज्ञाता जानीमश्च या यासु विद्म च संभृतम् ॥१८॥**

जुन औषधिहरूका विषयमा हामीलाई जानकारी छ र जसलाई हामीले आफ्नै आँखाले देखेका छौँ, अथवा जुन थाहा नपाएका औषधिहरूलाई हामी चिन्न सक्छौँ, ती सबै औषधिहरूमा रोगलाई डाँडो कटाउने खालको तत्त्व रहेको हुन्छ भन्ने कुरो हामीले जानेका छौँ ।

**सर्वाः समग्रा ओषधीर्बोधन्तु वचसो मम । यथेमं पारयामसि पुरुषं दुरितादधि ॥१९॥**

चिनेका वा नचिनेका ती सबै औषधिहरूले हाम्रो अभिप्राय बुझून् । त्यसो भएपछि नै हामी यी रोगीहरूलाई पापरूपी रोगबाट मुक्त गर्नमा सफल हुनेछौँ ।

**अश्वत्थो दर्भो वीरुधां सोमो राजामृतं हविः । व्रीहिर्यवश्च भेषजौ दिवस्पुत्रावमर्त्यौ ॥२०॥**

पिपल, कुश, औषधिको राजा सोम, अमृत, हविहरू, धान, जौ आदि सबै अमर औषधि हुन् । यी सबै नै द्युलोकका सन्तान हुन् ।

**उज्जिहीध्वे स्तनयत्यभिक्रन्दत्योषधीः । यदा वः पृश्निमातरः पर्जन्यो रेतसावति ॥२१॥**

जसकी माता नै पृथ्वी हुन्, त्यस्ता हे औषधिहरू हो ! पर्जन्यले जब गर्जिएको शब्द आउन थाल्दछ, त्यस बेला तिमीहरू मास्तिर उठ । यसै प्रक्रियाले पर्जन्यले आफ्ना तेजद्वारा तिमीहरूको संरक्षण गर्दछन् ।

**तस्यामृतस्येमं बलं पुरुषं पाययामसि । अथो कृणोमि भेषजं यथासच्छतहायनः ॥२२॥**

तिनै औषधिसमूहको अमृतरूपी रससामर्थ्य हामी यी पुरुषलाई पियाउँछौँ, यसै गरी हामी यिनलाई औषधि सेवन गराउँछौँ, जसले गर्दा यिनी सय वर्षको आयुको लाभ प्राप्त गर्दछन् ।

**वराहो वेद वीरुधं नकुलो वेद भेषजीम् । सर्पा गन्धर्वा या विदुस्ता अस्मा अवसे हुवे ॥२३॥**

जुन औषधिहरूलाई सुँगुर, न्याउरी, सर्प, गन्धर्व आदिले जानेका हुन्छन्, तिनलाई हामी यी रोगी मानिसको संरक्षण गर्नका लागि आह्वान गर्दछौँ ।

**याः सुपर्णा आङ्गिरसीर्दिव्या या रघटो विदुः । वयांसि हंसा या विदुर्याश्च सर्वे पतत्रिणः । मृगा या विदुरोषधीस्ता अस्मा अवसे हुवे ॥२४॥**

अङ्गिराले जुन सुन्दर पात भएका औषधिलाई प्रयोग गरेका थिए, जुन दिव्य औषधिका ज्ञाता पशुपक्षी र हंसहरू हुन्छन्, उनै सबै किसिमका औषधिहरूलाई हामी यी रोगीको रक्षा गर्नका लागि यहाँ बोलाउने गर्दछौँ वा खोजेर ल्याउने गर्दछौँ ।

**यावतीनामोषधीनां गावः प्राश्नन्त्यघ्न्या यावतीनामजावयः । तावतीस्तुभ्यमोषधीः शर्म यच्छन्त्वाभृताः ॥२५॥**

निर्दोष गाईहरूले रोग मेटाउनका लागि जुन औषधि खाने गर्दछन् र जुन औषधि भेडाबाखाले खान्छन्, ती सबै किसिमका औषधिहरू तिम्रा लागि कल्याणकारी होऊन् ।

**यावतीषु मनुष्या भेषजं भिषजो विदुः । तावतीर्विश्वभेषजीरा भरामि त्वामभि ॥२६॥**

औषधि विशेषज्ञ चिकित्सकले जति औषधि र तिनीहरूको प्रयोगका विषयमा जान्दछन्, ती सबै खालका औषधिहरूलाई हामीले तिम्रो कल्याणका लागि यहाँ लिएर आइसकेका छौँ ।

**पुष्पवतीः प्रसूमतीः फलिनीरफला उत । संमातर इव दुह्रामस्मा अरिष्टतातये ॥२७॥**

फूल लागेका, पात भएका, फल लागेका र फलरहित यी सबै खालका औषधिहरू यी पुरुषको

सुख शान्ति विस्तार गर्नका लागि श्रेष्ठ माताजस्तै छन्, यिनलाई दोहन गरिन्छ ।

**उत् त्वाहार्षं पञ्चशलादथो दशशलादुत । अथो यमस्य पड्वीशाद् विश्वस्माद् देवकिल्बिषात् ॥२८॥**

पाँच किसिमका कर्मेन्द्रियहरूमा र दस किसिमका इन्द्रियहरूका कष्टले गर्दा यमको बन्धनका कारण वा जुनसुकै देवताहरूप्रति गरिएका पापले गर्दा दुःख पाएका तिमी आरोग्यको कामना गर्ने मानिसलाई रोगमुक्त बनाएर हामीले उकासेका छौँ

## ८. शत्रुपराजय सूक्त

**ऋषि**— भृग्वङ्गिरा । **देवता**— परसेनाहनन, इन्द्र, वनस्पति । **छन्द**— अनुष्टुप्, उपरिष्टाद् बृहती, विराट बृहती, बृहती पुरस्तात् पङ्क्ति, आस्तार पङ्क्ति, विपरीत पादलक्ष्मा चतुष्पदा अतिजगती, पथ्या बृहती, भुरिक् अनुष्टुप्, विराट् पुरस्ताद् बृहती, निचृत पुरस्ताद् बृहती, त्रिष्टुप्, चतुष्पदा शक्वरी, त्र्यवसाना त्रिष्टुप् उष्णिक् गर्भा पराशक्वरी पञ्चपदा जगती ।

**इन्द्रो मन्थतु मन्थिता शक्रः शूरः पुरंदरः । यथा हनाम सेना अमित्राणां सहस्रशः ॥१॥**

शत्रुको सहरलाई ध्वस्त गराउने इन्द्रदेवता शूरवीर र समर्थ छन् तथा शत्रुको सैन्यदललाई मथ्ने गर्छन् । उनले मन्थन प्रारम्भ गरून्, जसले गर्दा हामी शत्रुसेनालाई विभिन्न ढङ्गले मार्न सकौँ ।

**पूतिरज्जुरुपध्मानी पूतिं सेनां कृणोत्वमूम् । धूममग्निं परादृश्यामित्रा हृत्स्वा दधतां भयम् ॥२॥**

शत्रुको सेनालाई प्रहार गर्नका लागि डढाइएको दुर्गन्धयुक्त डोरीले उनीहरूका माझमा दुर्गन्धयुक्त धुवाँ उत्पन्न गरोस् । त्यस्तो धुवाँ र आगो देखेर हामीसित रिस गर्नेहरूका मनमा भय उत्पन्न होस् ।

**अमूनश्वत्थ निः शृणीहि खादामून् खदिराजिरम् । ताजद्भङ्ग इव भज्यन्तां हन्त्वेनान् वधको वधैः ॥३॥**

हे पीपल ! अश्वमा आरोहण गरेका ! यी शत्रुका सेनालाई तिमीहरू संहार गर । हे खयर ! हे शत्रु भक्षण गर्ने ! तिमी यी शत्रुलाई भक्षण गर । यिनीहरू झारपातझैँ मासिऊन्, वध गर्ने उपकरणले यिनको हत्या गरौँ ।

**परुषानमून् परुषाह्वः कृणोतु हन्त्वेनान् वधको वधैः । क्षिप्रं शर इव भज्यन्तां बृहज्जालेन संदिताः ॥४॥**

आह्वान गर्नका लागि प्रयोग गरिने कठोर वाणीले यी सैनिकहरूलाई उत्तेजित गरौँ र वध गर्नका लागि प्रयोग गरिने हिंस्रक विधिले यिनीहरूलाई वध गरौँ । व्युहका रूपमा रहेको ठूलो जालमा बाँधिएका यी शत्रुहरू नर्कटझैँ सजिलैसित विनाश होऊन् ।

**अन्तरिक्षं जालमासीज्जालदण्डा दिशो महीः । तेनाभिधाय दस्यूनां शक्रः सेनामपावपत् ॥५॥**

अन्तरिक्ष जालका रूपमा रहेको छ र विस्तृत दिशाहरू त्यस जालको दण्डका रूपमा रहेका छन् । त्यस जालले दस्युहरूका सेनालाई बाँधेर उनलाई छिन्नभिन्न गरिदिएको छ ।

**बृहद्धि जालं बृहतः शक्रस्य वाजिनीवतः । तेन शत्रूनभि सर्वान् न्युब्ज यथा न मुच्यातै कतमश्चनैषाम् ॥६॥**

सैन्यदलका साथमा रहने महिमामय इन्द्रदेवताको जाल ठूलो आकारको छ । हे इन्द्रदेवता ! तिमी सबै शत्रुलाई सबै तिरबाट आफ्ना अधीनमा गराऊ, त्यसो गर्दा यिनीहरूमध्ये कुनै पनि छुटेर निस्कन नपाओस् ।

**बृहत् ते जालं बृहत इन्द्र शूर सहस्रार्घस्य शतवीर्यस्य । तेन शतं सहस्रमयुतं न्यर्बुदं जघान शक्रो दस्यूनामभिधाय सेनया ॥७॥**

हे शूरवीर इन्द्रदेवता ! यज्ञमा असङ्ख्य धनसम्पदा प्राप्त गर्ने अथवा हजारौँले पूजा गर्न योग्य र

सयौँ खालका पराक्रमी कार्य सम्पन्न गर्ने उनै इन्द्रदेवताको जाल नै विशाल छ । इन्द्रदेवताले सैन्य शक्तिले र यसै जालले सयौँ, हजारौँ, लाखौँ वा करोडौँ दस्यु शत्रुलाई पक्रेर विनाश गरेका थिए ।

**अयं लोको जालमासीच्छक्रस्य महतो महान् । तेनाहमिन्द्रजालेनामूंस्तमसाभि दधामि सर्वान् ॥८॥**

यही लोक नै महान् इन्द्रदेवताको महिमामय विशाल जाल हो । यसै इन्द्रजालले सबै शत्रुहरूलाई हामी अन्धकारले छोपिदिन्छौँ ।

**सेदिरुग्रा व्यृद्धिरार्तिश्चानपवाचना । श्रमस्तन्द्रीश्च मोहश्च तैरमूनभि दधामि सार्वन् ॥९॥**

पाप वा पिशाचिनीरूपी ठूलो थकाइ, भयङ्कर निर्धनता, अकथनीय व्यथा, कष्टमय परिश्रम, आलस्य, तन्द्रा, मोह आदिको सहायताले सबै शत्रुलाई हामी विनाश गर्दछौँ ।

**मृत्यवेऽमून् प्र यच्छामि मृत्युपाशैरमी सिताः । मृत्योर्ये अघला दूतास्तेभ्य एनान् प्रति नयामि बद्ध्वा ॥१०॥**

..ुलाई हामी मृत्युका लागि भेटी चढाउँछौँ । यी शत्रुहरू मृत्युको पाशले बाँधिइसकेका छन्, ..ाई बाँधेर हामी मृत्युको दूतहरू भएतर्फ लिएर जान्छौँ ।

**नयतामून् मृत्युदूता यमदूता अपोम्भत । परः सहस्रा हन्यन्तां तृणेढ्वेनान् मत्यं भवस्य ॥११॥**

हे मृत्युका दूतहरू हो ! यी शत्रुलाई लिएर जाओ । हे यमदूतहरू हो ! यिनीहरूले नै नरक भराउँदै हजारौँ सैनिकहरू मृत्युका लागि चढाओ । रुद्रदेवताको आयुधले यिनीहरूको संहार गरोस् ।

**साध्या एकं जालदण्डमुद्यत्य यन्त्योजसा । रुद्रा एकं वसव एकमादित्यैरेक उद्यतः ॥१२॥**

साध्यदेवताले जालको एक दण्ड उठाएर बलपूर्वक शत्रुहरू भएतिर जान्छन् । उसका साथमा एक जालदण्डलाई रुद्रदेवता, एकलाई वसुदेवता र आदित्य देवताले एकएक वटा जालका दण्डहरू उठाएका छन् ।

**विश्वे देवा उपरिष्यदुब्जन्तो यन्त्वोजसा । मध्येन घ्नन्तो यन्तु सेनामङ्गिरसो महीम् ॥१३॥**

विश्वेदेवताले माथिल्लो भागबाट दुष्ट शत्रुहरूलाई दमन गर्दै बलपूर्वक गमन गरून् र आङ्गिरस सेनालाई संहार गर्दै भूमिका बीचमा फ्याँकून् ।

**वनस्पतीन् वानस्पत्यानोषधीरुत वीरुधः । द्विपाच्चतुष्पादिष्णामि यथा सेनाममूं हनन् ॥१४॥**

हामी वनस्पतिले र वनस्पतिद्वारा बनेका औषधि, लताहरू तथा दुई खुट्टे मानिस आदि र चार खुट्टे हिंस्रक पशहरूलाई मन्त्रका सामर्थ्यले प्रेरित गर्दछौँ, त्यसैबाट उनीहरू शत्रुका सैन्यशक्तिलाई संहार गर्नमा सक्षम होऊन् ।

**गन्धर्वाप्सरसः सर्पान् देवान् पुण्यजनान् पितॄन् । दृष्यनदृष्यनिष्णामि यथा सेनाममूं हनन् ॥१५॥**

गन्धर्व, अप्सरा, सर्प, देवगण, पुण्यजन र देखेका वा नदेखेका पितृहरूलाई हामी यस किसिमले प्रेरित गर्दछौँ, जसले उनीहरू शत्रुसेनाको विनाश गर्नका लागि सक्षम होऊन् ।

**इम उप्ता मृत्युपाशा यानाक्रम्य न मुच्यसे । अमुष्या हन्तु सेनाया इदं कूटं सहस्रशः ॥१६॥**

हे शत्रुहरू हो ! मृत्युका यस्तायस्ता हजारौँ पाशहरू राखिसकिएको छ कि, जसलाई पार गर्ने बेलामा तिमीहरू सुरक्षित रहन सक्दैनौ । यस कूटले हजारौँ तरिकाले शत्रुका सेनालाई विनाश गर्दछ ।

**घर्मः समिद्धो अग्निनायं होमः सहस्रहः । भवश्च पृश्निबाहुश्च शर्व सेनाममूं हतम् ॥१७॥**

यस हविलाई अग्निले अति गजबसँग प्रज्वलित गराइरहेका छन् । यो होम हजारौँ शत्रुहरूलाई संहार गर्न सक्ने खालको छ । हे सफा पाखुरा भएका भव र शर्व नामका देवताहरू हो !

तिमीहरू यी सेनाहरूलाई समाप्त पार ।

**मृत्योराषमा पद्यन्तां क्षुधं सेदिं वधं भयम् । इन्द्रश्चाक्षुजालाभ्यां शर्व सेनाममूं हतम् ॥१८॥**

ी शत्रुहरू मृत्यु, भोक, निर्धनता र भयमा परुन् । हे इन्द्र र शर्व नामका देवता ! तिमीहरू दुवैले त्रुको सेनालाई संहार गर ।

**पराजिताः प्र त्रसतामित्रा नुत्ता धावत ब्रह्मणा । बृहस्पतिप्रणुत्तानां मामीषां मोचि कश्चन ॥१९॥**

दुष्ट शत्रुहरू हो ! तिमीहरू मन्त्रका सामर्थ्यले पराजित भएर र सन्त्रस्त हुँदै मन्त्रको प्रयोग गरेर खेदिँदाखेरि भाग्ने गर । मन्त्रका अधिष्ठाता बृहस्पतिदेवताले भगाएका शत्रुहरूमध्ये कुनै पनि रक्षित रूपमा रहन वा जोगिन सकेका छैनन् ।

**अब पद्यन्तामेषामायुधानि मा शकन् प्रतिधामिषुम् । अथैषां बहु बिभ्यतामिषवो घ्नन्तु मर्मणि ॥२०॥**

ी शत्रुका हातहतियारहरू सबै तल खसून् । यिनीहरू अर्कोपटक धनुषमा बाण चढाउनका लागि फल नहोऊन् । भयभीत स्थितिमा यिनको मर्मस्थल बाणले छेडियोस् ।

**सं क्रोशत्तामेनान् द्यावापृथिवी समन्तरिक्षं सह देवताभिः । मा ज्ञातारं मा प्रतिष्ठां विदन्त मिथो विघ्नाना उप यन्तु मृत्युम् ॥२१॥**

ुलोक, पृथिवी, अन्तरिक्ष र देवताहरूले यिनलाई शाप दिऊन् । त्यसले गर्दा यी शत्रुहरू तिष्ठारहित होऊन् र अथर्ववेदको ज्ञानविज्ञानबाट पनि वञ्चित होऊन्, त्यसपछि आफूआफूमै रोध र वैरीभाव राख्दै झगडा गरेर सबै मरुन् ।

**दिशश्चतस्रोऽश्वतर्यो देवरथस्य पुरोडाशाः शफा अन्तरिक्षमुद्धिः । द्यावापृथिवी पक्षसी ऋतवोऽभीशवोऽन्तर्देशाः किंकरा वाक् परिरथ्यम् ॥२२॥**

ार दिशाहरू नै देवरथलाई तान्ने घोडाहरू हुन्, पुरोडाश घोडाको खुर हो, अन्तरिक्ष माथिल्लो ाग, द्युलोक र पृथिवी यी दुई त्यसका पक्षहरू हुन्, ऋतुहरू लगाम हुन् उपदिशाहरू यसका रक्षक हुने र वाणी यस रथको परिधि हो ।

**संवत्सरो रथः परिवत्सरो रथोपस्थो विराडीषाग्नी रथमुखम् । इन्द्रः सव्यष्ठाश्चन्द्रमाः सारथीः ॥२३॥**

वत्सर रथ हो भने परिवत्सर त्यस रथमा बस्ने ठाउँ हो, विराट्लाई घोडा नार्ने जुवा मानिएको छ ने अग्नि यस रथका मुख्य रूप हुन् । इन्द्रदेवता यस रथमा विराजमान महारथी हुन् भने चन्द्रमा नका सारथीको रूपमा रहेका छन् ।

**इतो जयेतो वि जय सं जय जय स्वाहा । इमे जयन्तु परामी जयन्तां स्वाहैभ्यो दुराहामीभ्यः । नीललोहितेनामूनभ्यवतनोमि ॥२४॥**

ाबाट जय र उताबाट विजय प्राप्त हुने गरोस् । हामी उचित किसिमले जय प्राप्त गर्न सकौं नेर नै यो आहुति प्रदान गरिएको छ । हाम्रा यी वीर मित्रहरू विजयशील होऊन् । शत्रुको निक पराजित होस् भनेर नै आहुति प्रदान गर्दछौं । नीला र राता वर्णका ज्वालाहरूले हामी सबै त्रुहरूलाई नै दमन गर्ने गर्दछौं ।

## ९. विराद् सूक्त

**ऋषि**— अथर्वा । **देवता**— कश्यप, समस्त आर्ष **छन्द**, समस्त **ऋषिगण** । **छन्द**— त्रिष्टुप्, पङ्क्ति, आस्तार पङ्क्ति, अनुष्टुप्, जगती, भुरिक् त्रिष्टुप्, चतुष्पदा अतिजगती ।

**कुतस्तौ जातौ कतमः सो अर्धः कस्माल्लोकात् कतमस्याः पृथिव्याः । वत्सौ विराजः सलिलादुदैतां तौ त्वा पृच्छामि कतरेण दुग्धा ॥१॥**

ड र चेतनका रूपमा रहेका यी दुवै कहाँबाट उत्पन्न भए ? जसबाट सृष्टि उत्पन्न भएको छ, त्यो

आधा भाग भनेको कुन हो ? कुन लोकबाट र भूमिका कुन भागबाट सलिल नामको जलरूपी मूल द्रव्यले विराट्का दुई बच्चा उत्पन्न भए ? ती दुवैका विषयमा म तिमीसित सोध्दछु । तिनीहरूमध्ये एक यी प्रकृतिरूपी गाईलाई कसले दुहुने गर्दछ ?

**यो अक्रन्दयत् सलिलं महित्वा योनिं कृत्वा त्रिभुजं शयानः । वत्सः कामदुघो विराजः स गुहा चक्रे तन्वः पराचैः ॥२॥**

त्रिभुजाकारको त्रिआयाममा शयन गर्ने, आफ्नै महत्त्वले सलिल प्रवाहलाई उत्तेजित गर्ने, उही आत्मतत्त्व नै दूरस्थ गुफामा आफ्नो शरीर रचना गर्न लागेको छ ।

**यानि त्रीणि बृहन्ति येषां चतुर्थं वियुनक्ति वाचम् । ब्रह्मैनद् विद्यात् तपसा विपश्चिद् यस्मिन्नेकं युज्यते यस्मिन्नेकम् ॥३॥**

ज्यादै ठूलो महिमाले सम्पन्न जुन तीन ब्रह्म, प्रकृति र जीव हुन्छन्, यिनीहरूका संयोगले उत्पन्न भएको चौथो शरीर हो र यसैले नै वाणीलाई प्रकट गर्दछ । ज्ञानीहरू तपश्चर्याले यस ब्रह्म वा परमात्मतत्त्वलाई बुझून् । यिनीहरूमा एउटा जीव, एउटा परब्रह्ममा गाँसिएको हुन्छ ।

**बृहतः परि सामानि षष्ठात् पञ्चाधि निर्मिता । बृहद् बृहत्या निर्मितं कुतोऽधि बृहथि मिता ॥४॥**

बृहत् तत्त्वले नै उत्तम पाँच सामहरूको वा पाँच प्राणहरूको रचना भएको छ, तिनीहरूबाटै छैटौँ शरीरको निर्माण भयो । त्यस बृहत्तत्वले नै बृहत् सृष्टि उत्पन्न भयो र यस बृहत्तत्वको उत्पत्ति कहाँबाट भयो भन्ने कुरो नै विशेष जान्न योग्य छ ।

**बृहती परि मात्राया मातुर्मात्राधि निर्मिता माया ह जज्ञे मायाया मायाया मातली परि ॥५॥**

बृहती नामका प्रकृतिका मात्राबाट माताको मात्रा अर्थात् तन्मात्रा निर्माण भएको छ । मायारूप माताबाट निश्चित रूपले नै प्रकृतिरूपी माया उत्पन्न भयो र मायामाथिको माया नै प्रकृति हो ।

**वैश्वानरस्य प्रतिमोपरि दौर्यावद् रोदसी विबबाधे अग्निः । ततः षष्ठादामुतो यन्ति स्तोमा उदितो यन्त्यभि षष्ठमह्नः ॥६॥**

वैश्वानर अग्निदेवताका प्रतिमारूपी आभाऊर्जाका माथिल्लो तहमा नै स्वर्गलोक स्थित छ । जहाँसम्म अग्निदेवताले द्युलोक र भूलोकलाई प्रेरित हुनमा बाध्य गराउँछन्, त्यस अवस्थामा नै पञ्चप्राणले सम्पन्न वा पञ्चतत्त्वले युक्त छैटौँ शरीरको निर्माण हुन्छ । त्यसैको स्तोमलाई वाणीले प्रकट गर्दछ । दिनको उदय हुनासाथ उसै पञ्चाग्निभन्दा भिन्न छैटौँतर्फ उन्मुख हुन्छ ।

**षद् त्वा पृच्छाम ऋषयः कश्यपेमे त्वं हि युक्तं युयुक्षे योग्यं च । विराजमाहुर्ब्रह्मण पितरं तां नो वि धेहि यतिधा सखिभ्यः ॥७॥**

हे कश्यप ! तिमी युक्त र योग्यहरूमध्ये श्रेष्ठ विधिले यज्ञ गर्नमा कुशल छौ । त्यसो हुनाले नै हामी छ किसिमका तत्त्वको विषयमा जानेका ऋषिहरू तिमीसित प्रश्न गर्दछौँ कि त्यो विराट् पुरुषलाई नै सृष्टिका निर्माता ब्रह्माका पिता भन्ने गरिन्छ, यसका विषयमा हामी ऋषि मित्रहरूलाई जति किसिमले सम्भव हुन्छ, उति नै किसिमले बुझ्ने गरी भनिदेऊ ।

**यां प्रच्युतामनु यज्ञाः प्रच्यवन्त उपतिष्ठन्त उपतिष्ठमानाम् । यस्या व्रतेप्रसवे यक्षमेजति सा विराड्षयः परमे व्योमन् ॥८॥**

हे ऋषिहरू हो ! जुन विराट् पुरुष गतिमान् भएपछि यज्ञीय प्रक्रियाहरू गतिशील हुन्छन् र विराट्ले स्थिर हुँदा सृष्टिको धुरीका रूपमा रहेको यज्ञीय प्रक्रिया पनि स्थिर हुने गर्दछ; जसका स्तुतिको रूप कर्ममा प्रकट हुँदाखेरि यजन गर्न योग्य दैवी भावनाहरू रमाउन लाग्दछन्, त्यस्ता विराट् पुरुष परम श्रेष्ठ व्योम लोकमा विद्यमान छन् ।

**अप्राणैति प्राणेन प्राणपीनां विराट् स्वराजमभ्येति पश्चात् । विश्वं मृशन्तीमभिरूपां विराजं पश्यन्ति त्वे न त्वे पश्यन्त्येनाम् ॥९॥**

हे ऋषिहरू हो ! प्राणरहित विराट्ले प्राणधारी प्रजाहरूको प्राणका रुमपा आगमन गर्दछन् ।

त्यसपछि विराट् स्वयं नै प्रकाशमानका नजिक पुग्दछन् । सबैलाई स्पर्श गर्ने उनै विराट्लाई कतिपय सूक्ष्मदर्शीहरू देख्नमा पनि समर्थ हुन्छन्, तर मोहमायाले भ्रमितहरूले अज्ञानताका कारण यसलाई देख्न पाउँदैनन् ।

**को विराजो मिथुनत्वं प्र वेद क ऋतून् क उ कल्पमस्याः । क्रमान् को अस्याः कतिधा विदुग्धान् को अस्या धाम कतिधा व्युष्टीः ॥१०॥**

यस विराट् प्रकृति र पुरुषका जोडालाई कसले चिनेको छ ? ऋतुहरूलाई कसले जानेको छ ? यसका क्रमहरूलाई कसले जानेको छ ? यसका कल्पहरूलाई कसले जानेको छ ? यसको दोहन कति पटक गरियो भन्ने विषयमा कसले जानेको छ ? यसका धामका विषयमा कसले जानेको छ ? यसका प्रभातकालहरू कति किसिमका छन् ? यी सबै विषयमा कसले जानेको छ ?

**इयमेव सा या प्रथमा व्यौच्छदास्वितरासु चरति प्रविष्टा । महान्तो अस्यां महिमानो अन्तर्वधूर्जिगाय नवगज्जनित्री ॥११॥**

जुन पहिलो पटक सृष्टिकालमा प्रकाशित भएको थियो, यो उषा उही हो । यस प्रकृति र अन्य सबै खालका प्राणीहरूमा प्रविष्ट भएर हिँड्ने यही हो । यस उषासितै विभिन्न खालका ठूला शक्तिहरू छन् । यसले नयाँ जन्मदात्री वधूभैँ भएर सबैलाई जितिदिन्छ ।

**छन्दः पक्षे उषसा पेपिशाने समानं योनिमनु सं चरेते । सूर्यपत्नी सं चरतः प्रजानती केतुमती अजरे भूरिरेतसा ॥१२॥**

वेदका सुन्दर मन्त्रहरू पनि उषाकै कारण सुन्दर भएका हुन्; दिव्यज्ञानको प्रकाश नै चेतनाको उषाकाल हो र उसैले विभिन्न मन्त्रहरू प्रकट हुन्छन् । अनि एउटै लक्ष्य लिएर अघि बढ्दछन् । सूर्यपत्नी, प्रकाशयुक्त उषाले आफ्नो ज्योतिरूपी अत्यन्त महान् रेतस्लाई सञ्चारित गरायो ।

**ऋतस्य पन्थामनु तिस्र आगुस्त्रयो घर्मा अनु रेत आगुः । प्रजामेका जिन्वतयूर्जमेका राष्ट्रमेका रक्षति देवयूनाम् ॥१३॥**

सत्यका मार्गमा अग्नि, सूर्य र चन्द्रमा यी तीनैले आआफ्ना तेजस्वितायुक्त वीर्य साथैमा लिएर जान्छन् । यिनमा पहिलो अग्निको सामर्थ्य ऋत्विक्‌हरूको सन्तुष्टि, दोस्रो सूर्यको शक्तिले बललाई पोषण र तेस्रो चन्द्रमाका शक्तिले देवत्वका लागि उपासना गर्ने ऋत्विक्‌हरूलाई संरक्षित तथा यज्ञले सम्पन्न रष्ट्रमा संरक्षण गर्दछ ।

**अग्नीषोमावदधुर्या तुरीयासीद् यज्ञस्य पक्षावृषयः कल्पयन्तः । गायत्रीं त्रिष्टुभं जगतीमनुष्टुभं बृहदर्कीं यजमानाय स्वराभरन्तीम् ॥१४॥**

अग्नि र सोम यी यज्ञका दुई पक्ष हुन् भन्ने ऋषिहरूले मानेका छन् । चौथो रूपमा गायत्री, त्रिष्टुभ, जगती, अनुष्टुप् आदि छन्दहरूले यजमानमा आफ्नो प्रकाश व्याप्त गराउने बृहत् ज्ञान वा यज्ञको उपासना गर्ने पद्धति धारण गराउँछन् ।

**पञ्च व्युष्टीरनु पञ्च दोहा गां पञ्चनाम्नीमृतवोऽनु पञ्च । पञ्च दिशः पञ्चदशेन क्लृप्तास्ता एकमूर्ध्नीरभि लोकमेकम् ॥१५॥**

पाँच वटा उषाशक्तिहरूकै अनुकूल पाँचै किसिमका दोहन गर्ने समय रहेका छन् । पाँच किसिमका नाम भएका गाईहरूकै अनुकूल पाँच किसिमका ऋतुहरू छन् । पाँच दिशाहरू, चौध भुवन पार गरिसकेपछिको पन्ध्रौँ महत्तत्वसित समर्थ भएर कुनै योगीका लागि एउटै लोकजस्तो हुने गरेको छ ।

**षड् जाता भूता प्रथमजर्तस्य षडु सामानि षडहं वहन्ति । षड्योगं सीरमनु सामसाम षडाहुर्द्यावापृथिवीः षडुर्वीः ॥१६॥**

प्रारम्भमा नै यस ऋतयज्ञबाट पाँच तत्त्वपछिको मनसहित छ वटा, छ वटा साम र तिनका तन्मात्रा र उनैका संयोगले छ किसिमका अहं भावहरू उत्पन्न भएर । यी छ वटा जोडीमा बाँधिएका

बन्धनका साथमा छ वटा सामरूपी प्रवृत्तिहरू पनि आबद्ध रहेका छन् । द्युलोकबाट पृथ्वीसम्म छ वटा लोकहरू छन् । पर्वतहरूलाई आफूभित्र समेटेको हुनाले भूमि पनि छ वटै बनेर रहेको छ ।

**षडाहुः शीतान् षडु मास उष्णानृतुं नो ब्रूत यतमोऽतिरिक्तः । सप्त सुपर्णाः कवयो नि षेदुः सप्त च्छन्दांस्यनु सप्त दीक्षाः ॥१७॥**

महिनाहरूलाई पनि छ वटा शीत ऋतुका र छ वटा ग्रीष्म ऋतुका भनेर मानिएको छ । यसका अतिरिक्त जुन शेष रहन्छ, त्यसका सम्बन्धमा हामीलाई भन । ज्ञानीहरू सात वटा सुपर्ण, सात छन्द, सात दीक्षा आदिको पनि ज्ञान भएका हुन्छन् ।

**सप्त होमाः समिधो ह सप्त मधूनि सप्तर्तवो ह सप्त । सप्ताज्यानि परि भूतमायन् ताः सप्तगृध्रा इति शुश्रुमा वयम् ॥१८॥**

सात किसिमको होम, सात खालका समिधाहरू, सात ऋतुहरू र सातै किसिमका मधुहरू हुन्छन् । सात किसिमका घिउरूपी तेज यस संसारमा मानिसलाई उपलब्ध हुने गरेको छ । यसका साथै गिद्धहरू पनि सातै खालका छन् भन्ने कुरो हामीले सुनेका छौँ ।

**सप्त च्छन्दांसि चतुरुत्तराण्यन्यो अन्यस्मिन्नध्यार्पितानि । कथं स्तोमाः प्रति तिष्ठन्ति तेषु तानि स्तोमेषु कथमार्पितानि ॥१९॥**

सात छन्द र चार वटा श्रेष्ठ वेदका विभागहरू छन् । यी सबै नै एकापसमा सम्बद्ध रहेका हुन्छन् । उनीहरूमा स्तोम कसरी विराजमान रहेको छ र उनीहरू स्तोममा कसरी समर्पित छन् ?

**कथं गायत्री त्रिवृतं व्याप कथं त्रिष्टुप् पञ्चदशेन कल्पते । त्रयस्त्रिंशेन जगती कथमनुष्टुप् कथमेकविंशः ॥२०॥**

गायत्रीबाट त्रिवृत कसरी व्याप्त भएको छ ? त्रिष्टुप् पन्ध्रबाट कसरी बनेको छ ? तेत्तीसबाट जगती र एक्काईसबाट अनुष्टुप् कसरी सम्बन्ध राख्ने बनेका हुन् ?

**अष्ट जाता भूता प्रथमजर्तस्याष्टेन्द्रर्त्विजो दैव्या ये । अष्टयोनिरदितिरष्टपुत्राष्टमीं रात्रिमभि हव्यमेति ॥२१॥**

सत्यबाट सबैभन्दा पहिले आठ किसिमका प्राणीहरू उत्पन्न भए । हे इन्द्रदेवता ! जुन दिव्य ऋत्विक्‌हरू छन् ती पनि आठ नै छन् । आठ पुत्रहरू जन्माउने अदिति अष्टमी रातिमा हविष्यान्न ग्रहण गर्दछिन् ।

**इत्थं श्रेयो मन्यमानेदमागमं युष्माकं सख्ये अहमस्मि शेवा । समानजन्मा क्रतुरस्ति वः शिवः स वः सर्वाः सं चरति प्रजानन् ॥२२॥**

यस किसिमको कल्याणकारी भावनालाई स्वीकार गर्दै तिमीहरूकै जस्तो जन्म लिएका, तिमीसित सख्यभाव राखेर हामी सुखी होऔँ । यज्ञले तिमीलाई मङ्गल गर्दछ । त्यस्ता खालका तिमीले सबैको जानकारी राखी आपसमा सञ्चरित हुने गर्दछौ ।

**अष्टेन्द्रस्य षड् यमस्य ऋषीणां सप्त सप्तधा । अपो मनुष्या३नोषधीस्ताँ उ पञ्चानु सेचिरे ॥२३॥**

इन्द्र आठ, यमराज छ, ऋषिहरू सात र औषधिहरू पनि सात नै छन् । ती औषधि र मानिसलाई पाँच किसिमका अप् नामको जलरूपी तेजले अनुकूल रीतिले सेचन गर्दछन् ।

**केवलीन्द्राय दुदुहे हि गृष्टिर्वशं पीयूषं प्रथमं दुहाना । अथातर्पयच्चतुरश्चतुर्धा देवान् मनुष्याँ३ असुरानुत ऋषीन् ॥२४॥**

प्रथम पटक दोहन गराउनका लागि ब्याएको, विलक्षण, प्रकृतिरूपी लैनो गाईले अमृतको रूपमा रहेको दुध इन्द्रका निम्ति अनुकूल रीतले दिएको छ । त्यसपछि देवता, मानिस, असुर र ऋषि यी चारैलाई चार किसिमले सन्तुष्ट गराउँदछ ।

**को नु गौः क एकऋषिः किमु धाम का आशिषः । यक्षं पृथिव्यामेकवृदेकर्तुः कतमो नु सः ॥२५॥**

त्यो गाई कुन हो ? ती एक ऋषि भनेका को हुन् ? धम र आशीर्वाद कुनकुन हुन् ? पृथ्वीमा

एउटै सर्वव्यापक पूजनीय देवता छन्, र एक मात्र प्रमुख ऋतु कुन हो ?

**एको गौरेक एकऋषिरेकं धामैकधाशिषः । यक्षं पृथिव्यामेकवृदेकर्तुर्नाति रिच्यते ॥२६॥**

त्यो गाई भनेको नै एक्लो वा सङ्ख्यात्मक एक हो, त्यही नै एक प्रमुख ऋषि हो, त्यही एक नै स्थान पनि हो र आशीर्वाद पनि त्यही एक नै हो । पृथ्वीमा पूजनीय देवता पनि एक नै छन्, अनि ऋतु पनि एक नै छ र त्यसभन्दा बढी अरू केही छैन ।

## १०. विराट् सूक्त

**ऋषि**– अथर्वाचार्य । **देवता**– विराट् । **छन्द**– त्रिपदा आर्ची पङ्क्ति, याजुषी जगती, साम्नी अनुष्टुप्, आर्ची अनुष्टुप्, विराट् गायत्री, साम्नी बृहती ।

**विराड् वा इदमग्र आसीत् तस्या जातायाः सर्वमबिभेदियमेवेदं भविष्यतीति ॥१॥**

त्यो शक्ति पहिलेदेखि नै विराट् थियो । यो नै सृष्टिरूप हुनेछ भनेर त्यस शक्तिबाट सबै भयभीत भएका थिए

**सोदक्रामत् सा गार्हपत्ये न्यक्रामत् ॥२॥**

त्यस विराट् शक्तिले माथितर्फ गमन गऱ्यो र त्यो गार्हपत्यका रूपमा अवतरित भयो ।

**गृहमेधी गृहपतिर्भवति य एवं वेद ॥३॥**

गृहयज्ञ गर्ने जजसले यस तथ्यलाई जानेका छन्, तिनीहरू नै असल गृहपालक हुन्छन् ।

**सोदक्रामत् साहवनीये न्यक्रमत् ॥४॥**

फेरि उही विराट् शक्ति माथितिर उठेर आव्हनीय अग्निका संस्थामा प्रवेश गर्न पुग्यो ।

**यन्त्यस्य देवा देवहूतिं प्रियो देवानां भवति य एवं वेद ॥५॥**

जसले यस किसिमको कुरो जानेको छ, उही नै देवताको स्नेहपात्र बन्दछ, सबै देवशक्तिहरू नै उसले आह्वान गरेका ठाउँमा जाने गर्दछन् ।

**सोदक्रामत् सा दक्षिणाग्नौ न्यक्रामत् ॥६॥**

त्यो विराट् शक्ति फेरि अझै माथि उठ्दै दक्षिणाग्निका संस्थानमा प्रवेश गर्न पुग्यो ।

**यज्ञर्तो दक्षिणीयो वासतेयो भवति य एवं वेद ॥७॥**

जसले यस किसिमको कुरो जानेको हुन्छ, उही नै यज्ञ गर्नमा सिपालु र अर्कालाई समेत निवासस्थल दिनका लागि सक्षम हुनेछ ।

**सोदक्रामत् सा सभायां न्यक्रामत् ॥८॥**

त्यसपछि त्यो विराट् शक्ति अझै माथि उठेर सभामा प्रवेश गर्न पुग्यो ।

**यन्त्यस्य सभां सभ्यो भवति य एवं वेद ॥९॥**

जसले यस किसिमको कुरो जानेको हुन्छ, उही नै सभाका लागि योग्य हुन्छ र उसका सभामा जनसाधारणहरू पनि जाने गर्दछन् ।

**सोदक्रामत् सा समितौ न्यक्रामत् ॥१०॥**

त्यसपछि त्यो विराट् शक्ति अझै माथि उठ्यो र समितिमा रूपान्तरित भयो ।

**यन्त्यस्य समितिं सामित्यो भवति य एवं वेद ॥११॥**

जसले समितिका विषयमा यस्तो कुरो जानेको हुन्छ, उही नै समितिका लागि योग्य हुन्छ र उसका समितिमा संरक्षक सैनिकहरू आउँछन् ।

**सोदक्रामत् सामन्त्रणे न्यक्रामत् ॥१२॥**

त्यसपछि त्यो विराट् शक्ति अझै माथि उठ्दै गयो र मन्त्रीमण्डलमा प्रवेश गर्न पुग्यो ।

**यन्त्यस्यामन्त्रणमामन्त्रणीयो भवति य एवं वेद ॥१३॥**

जसले यसको तथ्य जानेको हुन्छ, उही नै मन्त्रीमण्डलमा सामेल हुन पुग्छ र जनसाधारणलाई उसले उचित मन्त्रणा दिएर निर्देश गर्न सक्छ ।

## ११. विराट् सूक्त

**ऋषि–** अथर्वाचार्य । **देवता–** विराट् । **छन्द–** त्रिपदा साम्नी अनुष्टुप्, उष्णिक् गर्भा चतुष्पदा उपरिष्टात् विराट् बृहती, एकपदा याजुषी गायत्री, एकपदा साम्नी पङ्क्ति, विराट् गायत्री, आर्ची अनुष्टुप्, साम्नी पङ्क्ति, आसुरी गायत्री साम्नी अनुष्टुप्, साम्नी बृहती ।

**सोदक्रामत् सान्तरिक्षे चतुर्धा विक्रान्तातिष्ठत् ॥१॥**

त्यो विराट् शक्ति अझै उचालिँदै अन्तरिक्षमा पुगेपछि चार भागमा बाँडिएर त्यहीँ रह्यो ।

**तां देवमनुष्या अब्रुवन्नियमेव तद् वेद यदुभय उपजीवेमेमामुप ह्वयामहा इति ॥२॥**

देवता र मानिसहरूले त्यसका सम्बन्धमा हामीले जानेका छौँ भनेका थिए । जुन शक्तिले हामी दुवै जीवन निर्वाह गर्दछौँ, त्यो त्यही शक्ति हो र हामी त्यसलाई बोलाउँछौँ ।

**तामुपाह्वयन्त ॥३॥**

त्यसपछि उनीहरूले त्यसलाई बोलाए ।

**ऊर्ज एहि स्वध एहि सूनृत एहीरावत्येहीति ॥४॥**

हे ऊर्जा नामकी उन्नतिदेवी ! हे पितृहरूलाई तृप्ति दिने स्वधा नामकी देवी ! हे वाणीका रूपमा रहेकी प्रिय देवी ! हे अन्नले सम्पन्न देवी ! तिमीहरू सबै यहाँ आओ ।

**तस्या इन्द्रो वत्स आसीद् गायत्र्यभिधान्यभ्रमूधः ॥५॥**

इन्द्रदेवता बाछा बने, गायत्री डोरी भइन् र मेघ दुध धारण गर्ने पयोधरका रूपमा स्थापित भए ।

**बृहच्च रथन्तरं च द्वौ स्तनावास्तां यज्ञायज्ञियं च वामदेव्यं च द्वौ ॥६॥**

बृहत्साम र रथन्तरसाम दुवै स्तनका रूपमा देखिए र यज्ञायज्ञिय र वामदेव्य नामका सामहरू पनि दुवै स्तनका रूपमा स्थापित भए ।

**ओषधीरेव रथन्तरेण देवा अदुह्रन् व्यचो बृहता ॥७॥**

देवशक्तिले रथन्रसामबाट औषधि र बृहत्सामबाट व्यापक आकाशको रसधारा दुहेर निकाले ।

**अपो वामदेव्येन यज्ञं यज्ञायज्ञियेन ॥८॥**

वामदेव्यसामबाट जल र यज्ञायज्ञियसामबाट यज्ञविज्ञान निकालिए ।

**ओषधीरेवास्मै रथंतरं दुहे व्यचो बृहत् ॥९॥**

जसले यसका विषयमा जानकारी लिएको छ, रथन्तरसामले उनका लागि औषधिहरू दिन्छ र बृहत्सामले अन्तरिक्ष दुहेको रस प्रदान गर्दछ ।

**अपो वामदेव्यं यज्ञं यज्ञायज्ञियं य एवं वेद ॥१०॥**

जसले यस कुरालाई जानेको छ, उनीहरूको हितका लागि वामदेव्यसामले जल र यज्ञायज्ञिय सामले यज्ञविज्ञान दुहुन्छन् ।

## १२. विराट् सूक्त

**ऋषि–** अथर्वाचार्य । **देवता–** विराट् । **छन्द–** चतुष्पदा विराट् अनुष्टुप्, आर्ची त्रिष्टुप्, चतुष्पदा प्राजापत्या पङ्क्ति, आर्ची बृहती ।

**सोदक्रामत् सा वनस्पतीनागच्छत् तां वनस्पतयोऽघ्नत सा संवत्सरे समभवत् ॥१॥**

त्यो विराट् शक्ति फेरि पनि उन्नति गर्दै वनस्पतिहरूका नजिकै पुग्यो, त्यसको उपभोग वनस्पतिले गरे । संवत्सरसँग त्यो पनि एकाकार भयो ।

**तस्माद् वनसपतीनां संवत्सरे वृक्णमपि रोहति वृश्चतेऽस्याप्रियो भ्रातृव्यो य एवं वेद ॥२॥**

त्यसो हुनाले वनस्पतिका काटिएका भागहरू सबै नै एक वर्षपछि फेरि उसै रूपमा उम्रिएर आउने भए । जसले यस विषयमा जानेको हुन्छ, उनीहरूको दुःखकष्ट र अप्रिय शत्रुहरू विनाश हुन्छन्

**सोदक्रामत् सा पितॄनागच्छत् तां पितरोऽघ्नत सा मासि समभवत् ॥३॥**

फेरि त्यो विराट् शक्ति पितृहरूका नजिकमा पुग्यो । उसलाई पितृहरूले भोग गरे । त्यसो भएपछि

त्यो महिनाहरूमा विलीन हुन पुग्यो ।

**तस्मात् पितृभ्यो मास्युपमास्यं ददति प्र पितृयाणं पन्थां जानाति य एवं वेद ॥४॥**

त्यसै कारणले मानिसहरू पितृका निम्ति प्रत्येक महिनामा आफ्ना सामुमा रहेको वस्तु दानका रूपमा दिने गर्दछन् । जसले यस रहस्यलाई जानेको हुन्छ, त्यसले पितृयान मार्गको विषयमा पनि जानकारी सजिलै पाएको हुन्छ ।

**सोदक्रामत् सा देवानागच्छत् तां देवा अघ्नत सार्धमासे समभवत् ॥५॥**

त्यो विराट् शक्ति अझै फेरि पनि उचालिँदै गयो र देवताहरूका नजिकै पुग्यो । देवताहरूले त्यसको भोग गरे । आधा महिनाभरिमा त्यो उनीहरूसित विलीन भयो ।

**तस्माद् देवेभ्योऽर्धमासे वषट् कुर्वन्ति प्र देवयानं पन्थां जानाति य एवं वेद ॥६॥**

त्यसो भएकै कारण देवशक्तिहरूका निम्ति आधाआधा महिनामा वषट्कर्म गर्ने विधान बनेको छ । जुन मानिसले यस रहस्यलाई जानेको छ, तिनीहरू देवयान मार्गको विषयमा पनि सजिलैसित जान्न योग्य हुन्छन् ।

**सोदक्रामत् सा मनुष्या३नागच्छत् तां मनुष्या अघ्नत सा सद्यः समभवत् ॥७॥**

त्यस विराट् शक्तिले अझै उन्नति गर्दै गयो र त्यो मानिसका नजिकै पुग्यो । मानिसहरूले त्यसको उपभोग गरे । उसै बेला नै त्यो मानिससित एकाकार भएर बस्यो ।

**तस्मान्मनुष्येभ्य उभयद्युरुप हरन्त्युपास्य गृहे हरन्ति य एवं वेद ॥८॥**

त्यसो भएको हुनाले नै मानिसका लागि हरेक दिन अन्न आदिको व्यवस्था गर्नुपर्ने भएको छ । जसले यो रहस्य जानेको छ, देवताहरू उसका घरमा दिनहुँ अन्न आदि लिएर आउँछन् ।

## १३. विराट् सूक्त

**ऋषि–** अथर्वाचार्य । **देवता–** विराट् । **छन्द–** चतुष्पदा साम्नी जगती, साम्नी बृहती, साम्नी उष्णिक्, आर्ची अनुष्टुप्, आसुरी गायत्री, चतुष्पदा उष्णिक्, प्राजापत्या अनुष्टुप्, आर्ची त्रिष्टुप्, विराट् गायत्री ।

**सोदक्रामत् सासुरानागच्छत् तामसुरा उपाह्वयन्त माय एहीति ॥१॥**

त्यो विराट् शक्ति अझै उन्नति गर्दै गएर असुरहरूका नजिक पुग्यो । उसलाई असुर शक्तिले हे मायाका स्वरूप ! तिमी यहाँ आऊ भनेर अझ नजिक बोलाए ।

**तस्या विरोचनः प्राह्लादिर्वत्स आसीदयस्पात्रं पात्रम् ॥२॥**

प्रह्लादका पुत्र विरोचन उनका वत्स थिए र उनीसित फलामको भाँडो थियो ।

**तां द्विमूर्धार्त्व्यो ऽधोक् तां मायामेवाधोक् ॥३॥**

ऋतुपुत्र द्विमुर्द्धाले उनलाई दोहन गरे र उसैबाट मायाको पनि दोहन गरियो ।

**तां मायामसुरा उप जीवन्त्युपजीवनीयो भवति य एवं वेद ॥४॥**

त्यसै मायाका सहारामा असुरशक्तिले जीवन यापन गर्न लागे । जसले यस विषयमा जानकारी पाएको छ, उसले जीवन निर्वाह गर्ने कौशल जानेको हुन्छ ।

**सोदक्रामत् सा पितॄनागच्छत् तां पितर उपाह्वयन्त स्वध एहीति ॥५॥**

त्यसपछि त्यस विराट् शक्तिले फेरि पनि उन्नतिको मार्ग लियो र पितृहरूका नजिक पुग्यो । पितृहरूले हे स्वधा ! तिमी आऊ भन्दै उसलाई आह्वान गरे ।

**तस्या यमो राजा वत्स आसीद् रजतपात्रम् पात्रम् ॥६॥**

त्यति बेला यम बाछोका रूपमा थिए र उनीसित चाँदीको भाँडो थियो ।

**तामन्तको मार्त्यवोऽधोक् तां स्वधामेवाधोक् ॥७॥**

मृत्युका अधिष्ठाता अन्तक नामका देवताले दोहन गरे र त्यसैबाट स्वधाको पनि दोहन भयो ।

**तां स्वधां पितर उप जीवन्त्युपजीवनीयो भवति ए एवं वेद ॥८॥**

स्वधाबाट पितृहरूले जीवनयापन गर्दछन् र जसले यस कुराको रहस्य जानेको हुन्छ, उनीहरू

जीवन निर्वाह गर्ने कलामा कुशल हुन्छन् ।

**सोदक्रामत् सा मनुष्याऽनागच्छत् तां मनुष्या३ उपाह्वयन्तेरावत्येहीति ॥९॥**

त्यस विराट् शक्तिले अझै उन्नतिको मार्ग लिएर जाँदा मानिसका नजिकै पुग्यो । मानिसहरूले हे इरावती ! हे अन्नकी खानी ! आऊ यता आऊ भन्दै उनलाई आफ्ना नजिकमा बोलाए ।

**तस्या मनुर्वैवस्वतो वत्स आसीत् पृथिवी पात्रम् ॥१०॥**

मनुका पुत्र विवस्वान् बाछो भए पृथ्वी त्यहाँ भाँडो भइन् ।

**तां पृथी वैन्यो ऽधोक् तां कृषिं च सस्यं चाधोक् ॥११॥**

वेन राजाका पुत्र पृथुले त्यस बेला दुहुने काम गरे र त्यसबाट कृषि र अन्य खाद्य वस्तुहरू दोहनमा प्राप्त भए ।

**ते कृषिं च सस्यं च मनुष्या३ उप जीवन्ति कृष्टराधिरुपजीवनीयो भवति य एवं वेद ॥१२॥**

त्यसै कृषिका उत्पादनले मानिसहरू जीवन यापन गर्दछन् । जसले यसको रहस्य जानेको हुन्छ, उनीहरू खेतीको काममा कुशल हुन्छन् र अरू प्राणीका लागि पनि जीविका निर्वाह गराउन सक्ने हुन्छन् ।

**सोदक्रामत् सा सप्तऋषीनागच्छत् तां सप्तऋषय उपाह्वयन्त ब्रह्मण्वत्येहीति ॥१३॥**

त्यो विराट् शक्ति फेरि पनि उन्नति गर्दै उचालिँदै गयो र सप्तर्षिहरू भएका ठाउँमा पुग्यो । हे ब्रह्मज्ञानले सम्पन्न ! तिमी आऊ, पवित्र पाइला यहाँ राखिदेऊ भन्दै सप्तर्षिहरूले त्यसलाई आफूनजिकै बोलाए ।

**तस्याः सोमो राजा वत्स आसीच्छन्दः पात्रम् ॥१४॥**

राजा सोम त्यस बेलामा बाछो भए र छन्दहरू त्यस बेलाका भाँडा बने ।

***तां बृहस्पतिराङ्गिरसो ऽधोक् तां ब्रह्म च तपश्चाधोक् ॥१५॥***

अङ्गिरसका कुलमा उत्पन्न भएका बृहस्पतिले त्यहाँ दुहुने काम गरे र त्यसबाट ब्रह्मविद्या र तप प्राप्त भयो ।

***तद् ब्रह्म च तपश्च सप्तऋषय उप जीवन्ति ब्रह्मवर्चस्युपजीवनीयो भवति य एवं वेद ॥१६॥***

वेदको ज्ञान र तपले सप्तर्षिहरूले जीवन निर्वाह गरे । जसले यसको रहस्य जानेका छन्, उनीहरू वेदका विज्ञ र ब्रह्मज्ञानले सम्पन्न तेजस्वी भएर अरू प्राणीलाई समेत जीवन निर्वाह गराउने खालका हुने गर्दछन् ।

## १४. विराट् सूक्त

**ऋषि–** अथर्वाचार्य । **देवता–** विराट् । **छन्द–** चतुष्पदा साम्नी जगती, साम्नी उष्णिक्, आर्ची अनुष्टुप्, चतुष्पदा प्राजापत्या जगती, साम्नी त्रिष्टुप्, विराट् गायत्री, आर्ची त्रिष्टुप्, चतुष्पदाउष्णिक्, साम्नी बृहती, त्रिपदा ब्राह्मी भुरिक् गायत्री, साम्नी अनुष्टुप् ।

**सोदक्रामत् सा देवानागच्छत् तां देवा उवाह्वयन्तोर्ज एहीति ॥१॥**

त्यो विराट् शक्ति फेरि उँभो लाग्दै देवताहरूका समीपमा पुग्यो । हे ऊर्जा ! तिमी आऊ भन्दै देवताहरूले त्यसलाई नजिकै बोलाए ।

**तस्या इन्द्रो वत्स आसीच्चमसः पात्रम् ॥२॥**

त्यस बेला इन्द्रदेवता त्यहाँ बाछो बने र चमस पात्र बनेको थियो ।

**तां देवः सविताधोक् तामूर्जामेवाधोक् ॥३॥**

सर्वप्रेरक सवितादेवता त्यहाँ दोहनकर्ता भए र त्यसबाट बल प्राप्त भयो ।

**तामूर्जां देवा उप जीवन्त्युपजीवनीयो भवति य एवं वेद ॥४॥**

उसै बलले देवताहरू आफ्नो जीवनयापन गर्दछन् । जसले यस विषयको तत्त्वज्ञान पाएको छ, ऊ जीवन निर्वाह गर्नमा कुशल हुनेछ ।

**सोदक्रामत् सा गन्धर्वाप्सरस आगच्छत् तां गन्धर्वाप्सरस उपाह्वयन्त पुण्यगन्ध एहीति ॥५॥**

त्यस विराट् शक्तिले फेरि उन्नति गर्दै उकालिएर गन्धर्व तथा अप्सराहरूका नजिकै पुग्यो । गन्धर्व र अप्सराहरूले हे उत्तम सुगन्धसम्पन्न ! तिमी यहाँ आऊ भन्दै आफ्ना नजिकमा बोलाए ।

**तस्याश्चित्ररथः सौर्यवर्चसो वत्स आसीत् पुष्करपर्णं पात्रम् ॥६॥**

सूर्यवर्चस्‌का पुत्र चित्ररथ त्यस बेला बाछोका रूपमा रहे र पुष्करपर्ण नामको कमल पात्रका रूपमा देखिए ।

**तां वसुरीचः सौर्यवर्चसो ऽधोक् तां पुण्यमेव गन्धमधोक् ॥७॥**

सूर्यवर्चस्‌का पुत्र वसुरुचिले दुहुने काम गरे र त्यसबाट पवित्र एवं सुगन्धी पदार्थ प्राप्त भयो ।

**तं पुण्यं गन्धं गन्धर्वाप्सरस उप जीवन्ति पुण्यगन्धिरुपजीवनीयो भवति य एवं वेद ॥८॥**

त्यसै सुगन्धले अप्सार र गन्धर्वहरूले जीवन निर्वाह गर्दछन् । जसले यस्तो रहस्य जानेको हुन्छ, उनीहरूले पवित्र सुगन्धीमय भएर अर्का प्राणीलाई समेत जीवन निर्वाह गराउने गर्दछन् ।

**सोदक्रामत् सेतरजनानागच्छत् तामितरजना अपाह्वयन्त तिरोध एहिति ॥९॥**

त्यो विराट् पुरुष फेरि उन्नतिको उकालो चढेर इतरजन अर्थात् अन्यान्य जनताका सामु पुग्यो । तिनीहरूले उसलाई हे तिरोध शक्ति ! तिमी यहाँ आएर पाइला टेकिदेऊ भनेर बोलाए ।

**तस्याः कुबेरो वेश्रवणो वत्स आसीदामपात्रं पात्रम् ॥१०॥**

विश्रवाका पुत्र कुबेर बाछाको रूपमा रहेर आमा नामको पात्रलाई भाँडो बनाई दुहुने काम गरियो ।

**तां रजतनाभिः काबेरकोऽधोक् तां तिरोधामेवाधोक् ॥११॥**

काबेरकका पुत्र रजतनाभिले दुहुने काम गरेर तयसबाट तिरोधा नामको सञ्चय गर्ने शक्ति प्राप्त भयो ।

**तां तिरोधामितरजना उप जीवन्ति तिरो धत्ते सर्वं पाप्मानमुपजीवनीयो भवति य एवं वेद ॥१२॥**

त्यस अन्तर्धान शक्तिले अन्य मानिसहरूले जीवन निर्वाह गर्दछन् । जसले यस रहस्यलाई जानेको छ, उनीहरू सबै पापबाट पर हटाएर मानिसलाई जीवन निर्वाह गर्न योग्य बनाउँछन् ।

**सोदक्रामत् सा सर्पानागच्छत् तां सर्पा उपाह्वयन्त विषवत्येहीति ॥१३॥**

त्यो विराट् शक्ति फेरि पनि उन्नति गर्दै उकालो लाग्दा सर्पहरूका समीपमा पुगेछ । सर्पहरूले उनलाई हे विषवती ! तिमी यहाँ आऊ भनेर आग्रहसाथ बोलाए ।

**तस्यास्तक्षको वैशालेयो वत्स आसीदलाबुपात्रं पात्रम् ॥१४॥**

विशालाका पुत्र तक्षक त्यस बेला बाछो बनेका थिए र अलाबु त्यहाँ पात्र बनेका थिए ।

**तां धृतराष्ट्र ऐरावतो ऽधोक् तां विषमेवाधोक् ॥१५॥**

ऐरावतका वंशज धृतराष्ट्रले दुहुने काम गरे र त्यसबाट विष प्राप्त भएको थियो ।

**तद् विषं सर्पा उप जीवन्त्युपजीवनीयो भवति य एवं वेद ॥१६॥**

त्यस विषले सर्पहरूले आफ्नो जीवन निर्वाह गर्दछन् । जसले यो रहस्य वास्तविक रूपमा जानेको हुन्छ तिनीहरूकै सहायताले सबै प्राणीले जीवन निर्वाह गर्दछन् ।

## १५. विराट् सूक्त

**ऋषि–** अथर्वाचार्य । **देवता–** विराट् । **छन्द–** द्विपदा विराट् गायत्री, द्विपदा साम्नी त्रिष्टुप्, द्विपदा प्राजापत्या अनुष्टुप्, द्विपदा आर्ची उष्णिक् ।

**तद् यस्मा एवं विदुषेऽलाबुनाभिषिञ्चेत् प्रत्याहनयात् ॥१॥**

त्यसो भएको हुनाले नै यस्तो विषविद्या जान्नेहरूलाई यदि अलाबुले अभिषेक गरिन्छ भनेदेखि त्यो विष प्रभावहीन भएर त्यसै नाश हुने गर्दछ ।

**न च प्रत्याहन्यान्मनसा त्वा प्रत्याहन्मीति प्रत्याहन्यात् ॥२॥**

यदि त्यो औषधि नाश गरेनौ भने हामी तिमीलाई नै हनन गर्नेछौँ भन्ने खालका मनको सङ्कल्पशक्तिले विषको प्रतिकार गरौँ ।

**यत् प्रत्याहन्ति विषमेव तत् प्रत्याहन्ति ॥३॥**

यस किसिमको प्रतिकार गर्ने खालको प्रयोग गरिएका समयमा विषको नै प्रभावशीलता नष्ट गर्दछौँ ।

**विषमेवास्याप्रियं भ्रातुव्यमनुविषिच्यते य एवं वेद ॥४॥**

जसले यस किसिमको विद्या उचित तरिकाले जानेको छ, विष गएर तिनका दुष्ट शत्रुमाथि खस्दछ र शत्रु नै आफूले प्रयोग गरेका विषका प्रभावमा परेर नाश हुन्छ ।

**॥इति अष्टमं काण्डम् ॥**

**आठौँ काण्ड सकियो ।**

ॐ

**ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।**

## अथर्ववेद – संहिता

# ॥अथ नवमं काण्डम् ॥

### १. मधुविद्या सूक्त

**ऋषि**– अथर्वा । **देवता**– मधु, अश्विनीकुमार । **छन्द**– त्रिष्टुप, त्रिष्टुब्गार्भा पङ्क्ति, परानुष्टुप् त्रिष्टुप्, अतिशाक्वरगर्भा यवमध्या महाबृहती, अतिजागतगर्भा यवमध्या महाबृहती, बृहतीगर्भा संस्तार पङ्क्ति, पराबृहती पस्तार पङ्क्ति, परोष्णिक् पङ्क्ति, अनुष्टुप्, पुर उष्णिक् उपरिष्टात् विराट बृहती, भुरिक् विष्टार पङ्क्ति, एकावशाना द्विपदार्ची अनुष्टुप्, त्रिपदा ब्राह्मी पुर उष्णिक्, द्विपदार्ची पङ्क्ति, त्र्यवसाना षट्पदाष्टि ।

**दिवस्पृथिव्या अन्तरिक्षात् समुद्रादग्नेर्वातान्मधुकशा हि जज्ञे । तां चायित्वामृतं वसानां हृद्भिः प्रजाः प्रति नन्दन्ति सर्वाः ॥१॥**

मधुकशा नामको मधुर रसप्रवाह उत्पन्न गराउने मधुविद्यारूपी गाई, स्वर्ग, पृथ्वी, अन्तरिक्ष यी सबै समुद्र र अग्निबाट उत्पन्न भएका हुन् । त्यस अमृतरूपी रस प्रदान गर्ने मधुकशालाई अर्चना गर्नाले सम्पूर्ण प्रजाहरू हृदयदेखि नै आनन्दित हुन्छन् ।

**महत् पयो विश्वरूपमस्याः समुद्रस्य त्वोत रेत आहुः । यत ऐति मधुकशा रराणा तत् प्राणस्तदमृतं निविष्टम् ॥२॥**

त्यस मधुकशाको दुधरूपी रस विश्वरूप अर्थात् अनेकौँ किसिमका रूप भएको छ । समुद्रको रेतस् पनि उही हो । यो मधुविद्याले शब्द गर्दै जहाँबाट जाने गर्दछ, त्यो नै प्राण वा प्राणको उत्पत्तिको हेतु हो । त्यो सर्वत्र सञ्चरित अमृतप्रवाहजस्तै छ ।

**पश्यन्त्यस्याश्चरितं पृथिव्यां पृथङ्नरो बहुधा मीमांसमानाः । अग्नेर्वातान्मधुमशा हि जज्ञे मरुतामुग्रा नप्तिः ॥३॥**

विभिन्न किसिमले अलगअलग विचार गर्ने मीमांसकहरूले यस मधुकशाको चरित्रलाई पृथ्वीमा अनेकौँ किसिमले हेर्ने गरेका छन् । मरुत्गणकी प्रचण्ड तेजस्विनी पुत्री भनेर चिनिएकी यी मधुकशा अग्नि र वायुका संयोगले उत्पन्न भएकी हुन् भनिएको छ ।

**मातादित्यानां दुहिता वसूनां प्राणः प्रजानाममृतस्य नाभिः । हिरण्यवर्णा मधुकशा घृताची महान् भर्गश्चरति मर्त्येषु ॥४॥**

यो मधुकशा आदित्यहरूका लागि जननी, वसुगणका लागि कन्या, प्रजाहरूका लागि प्राण र अमृतका लागि नाभीका रूपमा रहेको छ भन्ने गरिन्छ । हिरण्य नामको सृष्टिको उत्पादनक मूल तत्त्वको वर्ण वा स्वभाव भएको, घिउको सारले सेचन गर्ने यो मधुकशा सबै मानिसहरूमा नै महान् तेजस्विताका साथमा विचरण गर्दछ ।

**मधोः कशामजनयन्त देवास्तस्या गर्भो अभवद् विश्वरूपः । तं जातं तरुणं पिपर्ति माता स जातो विश्वा भुवना वि चष्टे ॥५॥**

यस मधुकशालाई देशक्तिहरूले निर्माण गरेका हुन्, त्यसको गर्भ विश्वरूप हुने गर्दछ र यसले विश्वमा जस्तोसुकै पनि रूप प्रस्तुत गर्न सक्छ । उत्पन्न भएका त्यस तरुण मधुरतायुक्त पदार्थलाई उसै माताले पालेकी छन् । उस मधुर प्रवाहले उत्पन्न भएका भुवनहरूलाई आलोकित र प्रभावित गरेको छ ।

**कस्तं प्र वेद क उ तं चिकेत यो अस्या हृदः कलशः सोमधानो अक्षितः । ब्रह्मा सुमेधाः सो अस्मिन् मदेत ॥६॥**

मधुकशाका हृदयका नजिकै सोमरसले भरिएको कलश अक्षय रूपमा विद्यमान छ । यस कलशलाई कसकसले जानेका छन् र कसले वास्तविक रूपमा यसका विषयमा विचार गर्दछन् ? उसै मधुर रसले सृष्टिकर्ता ब्रह्मा आफ्नो कार्य सम्पन्न गर्दै आनन्दित होऊन् ।

**स तौ प्र वेद स उ तौ चिकेत यावस्याः स्तनौ सहस्रधारावक्षितौ । उर्जं दुहाते अनपस्फुरन्तौ ॥७॥**

हजारौँ धारा निरन्तर रूपमा बगाउने यस मधुकशाका जुन अक्षय स्तनहरू छन्, तिनीहरू नरोकिईकन बलप्रद रस प्रदान गरिरहन्छन् । ब्रह्मा नै तिनका ज्ञाता र उनै तिनको प्रयोग तथा चिन्तनकर्ता पनि हुन् ।

**हिङ्करिक्रती बृहती वयोधा उच्चैर्घोषाभ्येति या व्रतम् । त्रीन् घर्मानभि वावशाना मिमाति मायुं पयते पयोभिः ॥८॥**

हवि धारण गर्ने, कुर्लिएर ठूलो स्वर निकाल्ने जुन शक्ति यज्ञभूमिमा विचरण गर्दछ, उसैले यी तीनै वटालाई नियन्त्रित गर्दै समयको मूल्याङ्कन गर्दछ र उसबाट दुधका धाराहरू बगाउने गर्छ ।

**यामापीनामुपसीदन्त्यापः शाक्वरा वृषभा ये स्वराजः । ते वर्षन्ति ते वर्षयन्ति तद्विदे काममूर्जमापः ॥९॥**

वर्षणशील र स्वप्रकाशित अप् नामको उत्पादनशील प्रवाह त्यसलाई पान गर्ने खालको शक्तिले सम्पन्न मधुकशाका निकट पुग्दछ । उसले यो विद्याको जानकारी प्राप्त गर्नका लागि अभीष्ट बलदायी अन्नको वर्षा गर्दछ र उही सार्थक भएर बर्सन्छ ।

**स्तनयित्नुस्ते वाक् प्रजापते वृषा शुष्मं क्षिपसि भूम्यामधि । अग्नेर्वातान्मधुकशा हि जज्ञे मरुतामुग्रा नप्तिः ॥१०॥**

हे प्रजापति ! मेघको गर्जन तिम्रो वाणी हो । हे जलवर्षक ! तिमी नै भूमिमा आफ्नो बल प्रयोग गर्दछौ । अग्नि र वायुबाट नै मरुत्‌हरूकी प्रचण्ड पुत्रीका रूपमा मधुकशा उत्पन्न भएको छ ।

**यथा सोमः प्रातः सवने अश्विनोर्भवति प्रियः । एवा मे अश्विना वर्च आत्मनि ध्रियताम् ॥११॥**

बिहानीको यज्ञमा सोमरस जसरी अश्विनीदेवताहरूका लागि प्रिय हुन्छ, उसै गरी हे देवताहरू हो ! हामीभित्र तिमीहरू तेजस्विता स्थापित गर ।

**यथा सोमो द्वितीये सवन इन्द्राग्न्योर्भवति प्रियः । एवा म इन्द्राग्नी वर्च आत्मनि ध्रियताम् ॥१२॥**

यज्ञको द्वितीय सवनमा सोमरस जसरी इन्द्राग्नीदेवताहरूका लागि प्रिय हुन्छ, उसै गरी हे देवताहरू हो ! हामीभित्र तिमीहरू तेजस्विता स्थापित गर ।

**यथा सोमस्तृतीये सवन ऋभूणां भवति प्रियः एवा म ऋभवो वर्च आत्मनि ध्रियताम् ॥१३॥**

यज्ञको द्वितीय सवनमा सोमरस जसरी ऋभुदेवताहरूका लागि प्रिय हुन्छ, उसै गरी हे देवताहरू हो ! हामीभित्र तिमीहरू ओजस्विता स्थापित गर ।

**मधु जनिषीय मधु वंशिषीय । पयस्वानग्न आगमं तं मा सं सृज वर्चसा ॥१४॥**

हामी नै मधु उत्पन्न गरौँ र मधुरताको सम्पादन गरौँ । हे अग्निदेवता ! हामी पयोरसलाई समर्पित गर्नका लागि आएका छौँ । त्यसैले हामीलाई तिमी तेजस्विताले सम्पन्न गर ।

**सं माग्ने वर्चसा सृज सं प्रजया समायुषा । विद्युर्मे अस्य देवा इन्द्रो विद्यात् सह ऋषिभिः ॥१५॥**

हे अग्निदेवता ! हामीलाई तिमी तेज, प्रजा र आयुले सम्पन्न गराऊ । देवताहरू र ऋषि आदि सबैले हामीलाई अग्निका सेवक हौँ भन्ने रूपमा चिनून् ।

**यथा मधु मधुकृतः स.भरन्ति मधावधि । एवा मे अश्विना वर्च आत्मनि ध्रियताम् ॥१६॥**
जसरी मधु सङ्ग्रह गर्ने माहुरीहरूले मधुका कणलाई ग्रहण गरेर मह एकत्र गर्ने गर्दछन्, उसै गरी अश्विनीकुमारहरूले हामीभित्र पनि तेजस्विता स्थापित गरून् ।

**यथा मक्षा इदं मधु न्यञ्जन्ति मधावधि । एवा मे अश्विना वर्चस्तेजो बलमोजश्च ध्रियताम् ॥१७॥**
जसरी माहुरीहरूले पुरानो महमा नयाँ महमा नै जम्मा पार्ने गर्दछन्, उसै गरी ती दुवै अश्विनीकुमारहरूले हामीभित्र वर्चस्, तेजस्, बल र ओजस् स्थापित गरून् ।

**यद् गिरिषु पर्वतेषु गोष्वश्वेषु यन्मधु । सुरायां सिच्यमानायां यत् तत्र मधु तन्मयि ॥१८॥**
पहाडपर्वत, गाईअश्व आदि पशु, एवं सिञ्चित भएका कडा औषधिरसमा जुन खालको मधुरता हुने गर्दछ, उही मधुरता हामीभित्र पनि स्थापित होस् ।

**अश्विना सारघेण मा मधुनाङ्क्तं शुभस्पती । यथा वर्चस्वतीं वाचमावदानि जनाँ अनु ॥१९॥**
हे शुभलाई पालन गर्ने अश्विनीकुमारहरू हो ! हामीलाई सार सङ्ग्रह गर्नेहरूले सङ्ग्रह गरेका मधुले तिमीहरू सम्पन्न गराओ । त्यसबाट हामी जनसाधारणका माझमा तेजस्विनी मधुर वाणी बोल्न सकौँ ।

**स्तनयित्नुस्ते वाक् प्रजापते वृषा शुष्मं क्षिपसि भूम्यां दिवि । तां पशव उप जीवन्ति सर्वे तेनो सेषमूर्जं पिपर्ति ॥२०॥**
हे प्रजापालक देवता ! तिमी अभीष्टवर्षक हौ र मेघको गर्जन पनि तिम्रै वाणी हो । तिमी नै द्युलोकदेखि भूमिसम्म वर्षा गराउँछौ । सबै खालका जीवजन्तुले त्यसैमा जीवन यापन गर्दछन् । उसैबाट नै यी पृथ्वीरूपी मधुकशाले अन्न र बलवर्द्धक रसलाई परिपुष्ट गराएको हुन्छ ।

**पृथिवी दण्डोऽन्तरिक्षं गर्भो द्यौः कशा विद्युत् प्रकशो हिरण्ययो बिन्दुः ॥२१॥**
उनै प्रजापतिका लागि भूमि डाँठको रूपमा, अन्तरिक्ष मध्य भागका रूपमा, द्युलोक कशाको रूपमा, विद्युत् प्रकाशको रूपमा र हिरण्य तेजविन्दुको रूपमा लक्षित हुन्छन् ।

**यो वै कशायाः सप्त मधूनि वेद मधुमान् भवति । ब्राह्मणश्च राजा च धेनुश्चानड्वांश्च व्रीहिश्च यवश्च मधु सप्तमम् ॥२२॥**
ब्राह्मण, राजा, गाई, गोरु, चावल, जौ र मधु यी सात वटा मधुरताले युक्त हुन्छन् । जुन मधुकशाले गाईका यी सात किसिमको मधुर रसका विषयमा जानेका छन्, तिनीहरू नै माधुर्यले युक्त हुने गरेका छन् ।

**मधुमान् भवति मधुमदस्याहार्यं भवति । मधुमतो लोकाञ्जयति य एवं वेद ॥२३॥**
जसले यस रहस्यलाई जानेका छन्, उनीहरू माधुर्यले सम्पन्न हुने गर्दछन् । उनीहरू मधुमय भोजन गर्दछन्, मधुरतायुक्त लोकमाथि उनीहरूले नै विजयश्री प्राप्त गर्दछन् ।

**यद् वीध्रे स्तनयति प्रजापतिरेव तत् प्रजाभ्यः प्रादुर्भवति । तस्मात् प्राचीनोपवीतस्तिष्ठे प्रजापतेऽनु मा बुध्यस्वेति । अन्वेनं प्रजा अनु प्रजापतिर्बुध्यते य एवं वेद ॥२४॥**
अन्तरिक्षमा जुन गर्जना हुने गर्दछ, त्यसमा मानौँ प्रजापति नै प्रजाहरूका लागि प्रकट हुने गर्दछन् । त्यसैले पहिले नै यज्ञीय श्रेष्ठ विधानले युक्त सूत्रहरूका रूपमा उपवीत तयार हुने गर्दछ । जसले त्यो कार्य गर्दछन्, उनीहरूलाई प्रजापालक देवताले स्नेहपूर्वक स्मरण गर्दछन् र प्रजाहरू पनि उनका लागि अनुकूलन नै हुने गर्दछन् ।

## काम सूक्त

**ऋषि**- अथर्वा । **देवता**- काम । **छन्द**- त्रिष्टुप्, अतिजगती, जगती, त्रिपदार्ची पङ्क्ति, भुरिक् त्रिष्टुप्, अनुष्टुप्, द्विपदार्ची अनुष्टुप्, चतुष्पदा शक्वरीगर्भा परा जगती ।

**सपत्नहनमृषभं घृतेन कामं शिक्षामि हविषाज्येन । नीचैः सपत्नान् मम पादय त्वमभिष्टुतो महता वीर्येण ॥१॥**
शत्रुनाश गर्ने बलशाली कामनाहरूलाई हामी शिक्षित, संस्कारित वा प्रेरित गर्दछौँ । हे ऋषभ !

हाम्रो प्रार्थनाले तिमी हर्षित भएर ठूलो पराक्रमपूर्वक हाम्रा अनिष्टकारी शत्रुहरूलाई पतित गर ।

**यन्मे मनसो न प्रियं न चक्षुषो यन्मे बभस्ति नाभिनन्दति । तद् दुष्वप्न्यं प्रति मुञ्चामि सपत्ने कामं स्तुत्वोदहं भिदेयम् ॥२॥**

हाम्रो मन र आँखाको शक्तिलाई जुन दुःस्वप्नहरू श्रेयस्कर नहुने गर्दछन्, न त हामीलाई तिनले प्रफुल्लित गर्दछन्, बरु हामीलाई तिरस्कृत गर्दछन्, उनलाई हामी अनिष्टकारी शत्रुतर्फ पठाउँछौं । इच्छाशक्तिले तिनीहरूलाई भेदन गरोस् ।

**दुष्वप्न्यं काम दुरितं च कामाप्रजस्तामस्वगतामवर्तिम् । उग्र ईशानः प्रति मुञ्च तस्मिन् यो अस्मभ्यमंहूरणा चिकित्सात् ॥३॥**

हे सबैका स्वामी पराक्रमी कामदेव ! तिमी अनिष्टकारी स्वप्न, पापकर्म, निःसन्तानरूपी दुर्भाग्य, दारिद्र्य, आपद्‌विपद् आदि सबै खालका अनिष्टहरूलाई उसै शत्रुतर्फ पठाऊ, जुन शत्रुले कुटिलताद्वारा पापमूलक विपत्तिमा हामीलाई फँसाउने दुर्भावना बनाइराखेका हुन्छन् ।

**नुदस्व काम प्र णुदस्व कामावर्तिं यन्तु मम ये सपत्नाः । तेषां नुत्तानामधमा तमांस्यग्ने वास्तूनि निर्दह त्वम् ॥४॥**

हे काम ! तिमी हाम्रो अभावजन्य दरिद्रतालाई हटाएर हाम्रा शत्रुहरूतिर त्यो अभावग्रस्तता उचित तरिकाले पठाइदेऊ । हे अग्निदेवता ! तिमी यी दुष्ट शत्रुलाई अन्धकारमा मुन्ट्याउँदै यिनका घरका वस्तुहरूलाई भस्म बनाइदेऊ ।

**सा ते काम दुहिता धेनुरुच्यते यामाहुर्वाचं कवयो विराजम् । तया सपत्नान् परि वृङ्ग्धि ये मम पर्येनान् प्राणः पशवो जीवनं वृणक्तु ॥५॥**

हे काम ! धेनुको रूपमा रहेका वाणीलाई तिम्री पुत्री भन्ने गरिन्छ र त्यसैलाई कविहरू विशेष तेजस्वी वचन भन्ने गर्दछन् । यसै वाणीले तिमी हाम्रा शत्रुहरूलाई विनाश गर । प्राण, पशु र आयु यिनले शत्रुलाई परित्याग गरून् ।

**कामस्येन्द्रस्य वरुणस्य राज्ञो विष्णोर्बलेन सवितुः सवेन । अग्नेर्होत्रेण प्र णुदे सपत्नाञ्छम्बीव नावमुदकेषु धीरः ॥६॥**

धैर्यशाली धीवरले जसरी पानीमा सावधानीपूर्वक नौका चलाउने गर्दछ, उसै गरी काम, इन्द्र, वरुण राजाका साथै विष्णुदेवताको बल, सवितादेवताको प्रेरणा र अग्निहोत्रले द्रोह गर्ने शत्रुलाई पर भगाउने गर्दछन् ।

**अध्यक्षो वाजी मम काम उग्रः कृणोतु मह्यमसपत्नमेव । विश्वे देवा मम नाथं भवन्तु सर्वे देवा हवमा यन्तु म इमम् ॥७॥**

प्रचण्ड पराक्रमी काम नामका सङ्कल्प हाम्रा अधिष्ठाता देवता हुन् । सत्कर्म प्रधान याज्ञिक कर्मले हामीलाई शत्रुबाट विहीन गराऊन् । समस्त देवताहरू हाम्रा स्वामीको रूपमा यज्ञमण्डपमा आऊन् ।

**इदमाज्यं घृतवज्जुषाणाः कामज्येष्ठा इह मादयध्वम् । कृण्वन्तो मह्यमसपत्नमेव ॥८॥**

हे कामलाई ज्येष्ठ मान्ने देवता ! तिमी घिउसहितको आज्यको आहुति सेवन गर्दै आनन्दित होऊ र हामीलाई शत्रुबाट मुक्त गराऊ ।

**इन्द्राग्नी काम सरथं हि भूत्वा नीचैः सपत्नान् मम पादयाथः । तेषां पन्नानामधमा तमांस्यग्ने वास्तून्यनुनिर्दह त्वम् ॥९॥**

हे इन्द्राग्नि र कामदेव ! तिमीहरू सबै एकै साथ रथमा सवार भएर हाम्रा वैरीहरूलाई तल खसाओ । हे अग्निदेवता ! तिनीहरू खसेपछि गहिरो अन्धकारले छोपेर तिमी तिनीहरूका घरका वस्तुहरूलाई भस्म गराऊ ।

**जहि त्वं काम मम ये सपत्ना अन्धा तमांस्यव पादयैनान् । निरिन्द्रिया अरसाः सन्तु सर्वे मा ते जीविषुः कतमच्चनाहः ॥१०॥**

हे काम ! तिमी हाम्रा शत्रुको संहार गरेर गहन अन्धकाररूपी मृत्युको जिम्मा लगाऊ । तिनीहरू

सबै इन्द्रिय सामर्थ्यले रहित र निर्वीर्य होऊन् र एक दिन पनि जीवित रहने स्थितिमा नहोऊन् ।

**अवधीत् कामो मम ये सपत्ना उरुं लोकमकरन्मह्यमेधतुम् । मह्यं नमन्तां प्रदिशश्चतस्रो मह्यं षडुर्वीर्घृतमा वहन्तु ॥११॥**

कामशक्तिले हाम्रा अनिष्टकारी शत्रुका रूपमा रहेका आन्तरिक दुर्बलतालाई विनाश गरिसकेको छ । हाम्रो उन्नतिका लागि हामीलाई विस्तृत लोक प्रदान गरेको छ । चारै दिशाहरू हाम्रा लागि नम्र र अनुकूल होऊन् र छ वटै भूभागहरूले हाम्रा निम्ति घिउजस्तो सार वस्तु प्रदान गरून् ।

**तेऽधराञ्चः प्र प्लवन्तां छिन्ना नौरिव बन्धनात् । न सायकप्रणुत्तानां पुनरस्ति निवर्तनम् ॥१२॥**

बन्धनविनाको नौका जसरी प्रवाहका कारण तल्लोतिर स्वतः बहने गर्दछ, उसै गरी हाम्रा अनिष्टकारक शत्रुहरू पनि अधोगति लागेर मासिऊन् । बाणले भगाएका शत्रुहरूलाई फेरि फिर्ता भएर आउन सम्भव नहोस् ।

**अग्निर्यव इन्द्रो यवः सोमो यवः । यवयावानो देवा यावयन्त्वेनम् ॥१३॥**

अग्नि, इन्द्र र सोम नामका यी सबै देवताहरूले शत्रुलाई भगाउँदै हामीलाई संरक्षण गरून् । यी सबै देवताले शत्रुहरूलाई परपर पुऱ्याऊन् ।

**असर्ववीरश्चरतु प्रणुत्तो द्वेष्यो मित्राणां परिवर्ग्य१ःस्वानाम् । उत पृथिव्यामव स्यन्ति विद्युत उग्रो वो देवः प्र मृणत् सपत्नान् ॥१४॥**

हामीले लखेटेका शत्रुहरू सबै नै शूरवीर सैनिकविनाका भएर र आफ्ना हितैषि मित्रहरूबाट परित्यक्त भएर भौँतारिऊन् । विद्युत्का तरङ्गले यिनलाई पृथ्वीमा टुक्राटुक्रा पारोस् । पराक्रमी देवताहरूले शत्रुलाई मर्दन गरून् ।

**च्युता चेयं बृहत्यच्युता च विद्युद् बिभर्ति स्तनयित्नूंश्च सर्वान् । उद्यन्नादित्यो द्रविणेन तेजसा नीचैः सपत्नान् नुदतां मे सहस्वान् ॥१५॥**

सबै खालका मेघको गर्जनलाई धारण गर्ने विद्युत् खसेका समयमा अथवा नखसेकै बेलामा पनि स्थायी रूपले उदाउने शक्तिमान् सूर्यलाई आफ्नो तेजस्वितारूपी ऐश्वर्यले हाम्रा अनिष्टकारी शत्रुलाई पतित गराऊन् ।

**यत् ते काम शर्म त्रिवरूथमुद्भु ब्रह्म वर्म विततमनतिव्याध्यं कृतम् । तेन सपत्नान् परि वृङ्ग्धि ये मम पर्येनान् प्राणः पशवो जीवनं वृणक्तु ॥१६॥**

[illegible] कामशक्ति ! तिम्रा सुखदायक तीन वटा संरक्षकहरू श्रेष्ठ सामर्थ्ययुक्त र शस्त्रले भेदन गर्न [illegible]क्ने खालको विस्तृत फैलिएको ज्ञानमय कवच बनेका छन् । तिनीहरूकै सहायताले तिमी [illegible] अनिष्टकारी शत्रुहरूलाई पर लखेट । प्राण, पशु र आयु यी तीनै वटाले हाम्रा शत्रुको साथ [illegible]दिऊन् ।

**येन देवा असुरान् प्राणुदन्त येनेन्द्रो दस्यूनधमं तमो निनाय । तेन त्वं काम मम ये सपत्नास्तानस्माल्लोकात् प्र णुदस्व दूरम् ॥१७॥**

[illegible] शक्तिका भरमा इन्द्रदेवताले आफ्ना शत्रुहरूलाई मृत्युको गहिरो अन्धकारमा फ्याँकिदिएका [illegible] जुन शक्तिले देवताहरूले आसुरी तत्त्वलाई लखेटिरहेका थिए, हे सत्सङ्कल्पले युक्त काम ! [illegible]र्थ्यले तिमी हाम्रा अवरोधक तत्त्वहरूलाई यस लोकबाट पर हटाऊ ।

**यथा देवा असुरान् प्राणुदन्त यथेन्द्रो दस्यूनमधं तमो बबाधे । तथा त्वं काम मम ये सपत्नास्तानस्माल्लोकात् प्र णुदस्व दूरम् ॥१८॥**

[illegible] इन्द्रदेवताले अवरोधक तत्त्वहरूलाई अन्धकाररूपी हीनताभित्र घँच्याटिदिउका थिए र जुन [illegible] देवशक्तिहरूले असुरतालाई पराजित गरेका थिए, उसै गरी हे काम ! हाम्रो प्रगतिमा [illegible] अवाञ्छनीय तत्त्वलाई तिमी हटाइदेऊ ।

**कामो जज्ञे प्रथमो नैनं देवा आपुः पितरो न मर्त्याः । ततस्त्वमसि ज्यायान् विश्वहा**

**महांस्तस्मै ते काम नम इत् कृणोमि ॥१९॥**

सृष्टिको उत्पत्ति कालभन्दा पहिले कामको सङ्कल्प उदायो । देवताहरू, पितृहरू र मानिसले यसलाई भेट्न वा जित्न सकेनन् । त्यसो हुँदा हे काम ! तिमी श्रेष्ठ र महान् छौ, त्यस्ता तिमीलाई हामी नमस्कार गर्दछौँ ।

**यावती द्यावापृथिवी वरिम्णा यावदापः सिष्यदुर्यावदग्निः । ततस्त्वमसि ज्यायान् विश्वहा महांस्तस्मै ते काम नम इत् कृणोमि ॥२०॥**

द्युलोक र पृथ्वी जति विस्तृत रूपमा रहेका छन्, जहाँसम्म जल विस्तृत भएको छ र जति क्षेत्रमा अग्निको विस्तार रहेको छ, हे सत्सङ्कल्पका प्रेरक काम ! तिमी सबै प्राणीहरूमा विस्तृत रहेको भए तापनि तिनीहरूभन्दा श्रेष्ठ र महान् छौ । त्यसो हुँदा हामी तिमीलाई प्रणाम गर्दछौँ ।

**यावतीर्दिशः प्रदिशो विषूचीर्यावतीराशा अभिचक्षणा दिवः । ततस्त्वमसि ज्यायान् विश्वहा महांस्तस्मै ते काम नम इत् कृणोमि ॥२१॥**

जहाँसम्म दिशा र उपदिशाहरू विस्तृत भएका छन् तथा जहाँसम्म स्वर्गीय प्रकाशलाई विस्तार गराउने दिशाहरू रहेका छन्, हे काम ! तिमी तिनीहरूभन्दा पनि श्रेष्ठ एवं महान् छौ । त्यस्ता तिमीलाई हामी नमस्कार गर्दछौँ ।

**यावतीर्भृङ्गा जत्वः कुरूरवो यावतीर्वघा वृक्षसर्प्यो बभूवुः । ततस्त्वमसि ज्यायान् विश्वहा महांस्तस्मै ते काम नम इत् कृणोमि ॥२२॥**

जहाँसम्म भँवरा, भिँगा आदि किरा र नीलगाई आदि पृथ्वीमा विचरण गर्ने पशु तथा चिल्ने खालका बारुलाअरिँगाल आदि र रुखमा चढ्ने खालका तथा घस्रिने खालका जीवहरू रहेका हुन्छन्, हे काम ! तिमी ती सबैभन्दा महान् र श्रेष्ठ छौ, हामी तिमीलाई नमस्कार गर्दछौँ ।

**ज्यायान् निमिषतोऽसि तिष्ठतो ज्यायान्त्समुद्रादसि काम मन्यो । ततस्त्वमसि ज्यायान् विश्वहा महांस्तस्मै ते काम नम इत् कृणोमि ॥२३॥**

हे सङ्कल्पशक्तिरूप काम र मन्यु ! तिमीहरू आँखा भिम्काउने, स्थिर पदार्थ र जलको अथाह भण्डारका रूपमा रहेका समुद्रहरूभन्दा पनि महान् र उत्कृष्ट छौ, तिमीहरूलाई हामी नमस्कार गर्दछौँ ।

**न वै वातश्चन काममाप्नोति नाग्निः सूर्यो नोत चन्द्रमाः । ततस्त्वमसि ज्यायान् विश्वहा महांस्तस्मै ते काम नम इत् कृणोमि ॥२४॥**

वायु, अग्नि, सूर्य र चन्द्रमा यिनीहरूमध्ये कुनै पनि सत्सङ्कल्परूपी कामसित तुलना गर्न योग्य छैनन् । हे काम ! तिनीहरू ती सबैभन्दा महान् र उत्कृष्ट छौ, यस्ता तिमीलाई हामी नमस्कार गर्दछौँ ।

**यास्ते शिवास्तन्वः काम भद्रा याभिः सत्यं भवति यद् वृणीषे । ताभिष्ट्वमस्माँ अभिसंविशस्वान्यत्र पापीरप वेशया धियः ॥२५॥**

हे सङ्कल्प बलका प्रतीक काम ! तिम्रो कल्याणकारी र हितकारी जुन शरीर छ, जसका प्रभावले तिमी जसलाई वरण गर्न स्वीकार गर्दछौ, तिनीहरू सबै सत्यस्वरूप हुने गर्दछन् । ती उत्कृष्टताहरूका साथमा हामी सबैभित्र तिमी प्रवेश गर र आफ्नो दुर्भावग्रस्त विचारलाई हामीदेखि भिन्न अवाञ्छनीय तत्त्वहरूतर्फ प्रेरित गर ।

## ३. शाला सूक्त

**ऋषि**– भृग्वङ्गिरा । **देवता**– शाला । **छन्द**– अनुष्टुप, पथ्यापङ्क्ति, परोष्णिक त्र्यवसाना पञ्चपदातिशक्वरी, पस्तार पङ्क्ति, आस्तार पङ्क्ति, एकावसाना त्रिपदा प्राजापत्या बृहती, एकावसाना साम्नी त्रिष्टुप, एकावसाना त्रिपदा प्रतिष्ठा गायत्री

**उपमितां प्रतिमितामथो परिमितामुत । शालाया विश्ववाराया नद्धानि वि चृतामसि ॥१॥**

सुरचित, प्रत्येक तर्फबाट नापिएको, उपयुक्त अनुपात भएको, गृहका चारैतिर बाँधिएका

बन्धनहरूलाई हामी खोल्दछौँ ।

**यत् ते नद्धं विश्वारे पाशोग्रन्थिश्च यः कृतः । बृहस्पतिरिवाहं बलं वाचा वि स्रंसयामि तत् ॥२॥**

सम्पूर्ण श्रेष्ठताले युक्त भएका हे शाला ! तिमीमा जुन बन्धनहरू छन् र तिम्रा ढोकामा जुन पासो बाँधिएको छ, त्यसलाई उपयोग गर्नका लागि हामी बृहस्पतिदेवताले वाणीलाई खोलेझैँ खोल्दछौँ ।

**आ ययाम सं बबर्ह ग्रन्थींश्चकार ते दृढान् । परूंषि विद्वाञ्छस्तेवेन्द्रेण वि चृतामसि ॥३॥**

सिपालु शिल्पीले तिमीलाई उचित किसिमले उचालेको छ र तिमीमा जुन गाँठाहरूले सुदृढ गराएको छ, ज्ञानी शिल्पीले बनाएका जोर्नीहरू काटेझैँ हामी इन्द्रदेवताका सामर्थ्यले तिम्रा सम्पूर्ण बन्धनहरू खोल्दछौँ ।

**वंशानां ते नहनानां प्राणाहस्य तृणस्य च । पक्षाणां विश्ववारे ते नद्धानि वि चृतामसि ॥४॥**

सबै खालका वरणीय ऐश्वर्यले सम्पन्न हे घररूपी यज्ञशाला ! तिमीमाथि भएका बाँस, बन्धनका स्थान र माथिबाट बाँधिएको खरपरालका पाखाहरू अथवा पासोमा परेका बन्धनहरूलाई हामी खोल्दछौँ ।

**संदंशानां पलदानां परिष्वञ्जल्यस्य च । इदं मानस्य पत्न्या नद्धानि वि चृतामसि ॥५॥**

जोखनापको पत्नीका रूपमा रहेको यस घरमा लगाइएका कैँचीको आकार भएका काठ र गुन्द्रीका चारैतिर लगाई बन्धनहरूलाई हामी उचित किसिमले खोल्दछौँ ।

**यानि तेऽन्तः शिक्यान्याबेधू रण्याय कम् । प्र ते तानि चृतामसि शिवा मानस्य पत्नी न उद्धिता तन्वे भव ॥६॥**

हे सम्मानकी पत्नीका रूपमा रहेका घररूपी यज्ञशाला ! तिमीभित्र सजावटका लागि बाँधेका सुन्दर वस्तुहरू, तिनीहरूलाई बाँध्नका लागि प्रयोग गरिएका जुइनाहरूलाई हामी उचित किसिमले खोल्दछौँ । तिमी कल्याणकारिणी शाला हाम्रो शरीरका लागि सुखदायिनी होऊ ।

**हविर्धानमग्निशालं पत्नीनां सदनं सदः । सदो देवानामसि देवि शाले ॥७॥**

हे दिव्यताले सम्पन्न शाला ! तिमी हविष्यान्नको भण्डारका रूपमा रहेका छौ । तिमी नै यज्ञशालाका रूपमा रहेका छौ, स्त्रीहरूको रहने कोठाका रूपमा रहेका छौ, घरका सामान्य कोठाका रूपमा रहेका छौ र देवशक्तिलाई उपासना गर्ने पूजाकोठाका रूपमा पनि आसनले युक्त भएर रहेका छौ ।

**अक्षुमोपशं विततं सहस्राक्षं विषूवति । अवनद्धमभिहितं ब्रह्मणा वि चृतामसि ॥८॥**

आकाशीय रेखामा माथिल्लोतर्फ हजारौँ अक्ष भएको र जालहरूका रूपमा फैलिएकालाई हामीपले ब्रह्मशक्तिद्वारा अभिमन्त्रित गर्दै खोल्दछौँ ।

**यस्त्वा शाले प्रतिगृह्णाति येन चासि मिता त्वम् । उभौ मानस्य पत्नि तौ जीवतां जरदष्टी ॥९॥**

हे नापनकी पत्नीका रूपमा रहेका घर ! तिमीलाई जसले ग्रहण गर्दछन् र जसले बनाएका हुन्, तिनीहरू दुवै नै वृद्धअवस्थासम्मको पूरा आयु बाँचून् ।

**अमुत्रैनमा गच्छताद् दृढा नद्धा परिष्कृता । यस्यास्ते विचृतामस्यङ्गमङ्गं परुष्परुः ॥१०॥**

हामी जुन घरका अङ्ग र प्रत्येक जोर्नीका गाँठाहरूलाई मुक्त गर्दछौँ, हे शाला ! जसकका कारणले तिमी बलियो, दरिलो र परिष्कृत रूपमा बनाइएका छौ, तिमी त्यसलाई स्वर्ग प्राप्त गर्नका लागि सहायक होऊ ।

**यस्त्वा शाले निमिमाय संजभार वनस्पतीन् । प्रजायै चक्रे त्वा शाले परमेष्ठी प्रजापतिः ॥११॥**

हे शाला ! जसले तिमीलाई निर्माण गरेको हो र जसले रुखबिरुवा काटेर उचित क्रमले कुँदेर

तिमीलाई स्थापित गरेको हो, परमेष्ठी प्रजापतिका प्रेरणाले उसले प्रजाको कल्याणका लागि तिमीलाई बनाएको हो ।

**नमस्तस्मै नमो दात्रे शालापतये च कृण्मः । नमोऽग्नये प्रचरते पुरुषाय च ते नमः ॥१२॥**

वृक्षलाई घरनिर्माणका लागि काट्नेहरू, घरको संरक्षण गर्नेहरू, अग्निलाई आफूभित्र राख्नेहरू र तिमीभित्र बस्ने गरेकाहरूलाई हामी सबैको नमस्कार छ ।

**गोभ्यो अश्वेभ्यो नमो यच्छालायां विजायते । विजावति प्रजावति वि ते पाशांश्चृतामसि ॥१३॥**

शालामा विद्यमान रहने गाई, अश्व आदि पशुका निम्ति यो अन्न राखिएको छ । हे विभिन्न किसिमका प्राणीहरूलाई उत्पादन गर्ने र सन्तान आदिले सम्पन्न घर ! हामी विभिन्न ढङ्गले तिम्रा पाशहरू खोलिदिन्छौँ ।

**अग्निमन्तश्छादयसि पुरुषान् पशुभिः सह । विजावति प्रजावति वि ते पाशांश्चृतामसि ॥१४॥**

हे विविध प्राणीहरूलाई उत्पादन गर्ने र प्रजाले सम्पन्न शाला ! तिमी आफूभित्र पशुहरूका साथै मानिस र अग्निलाई विश्राम दिने गर्दछ्यौ । हामी तिम्रा बन्धनहरू खोलिदिन्छौँ ।

**अन्तरा द्यां च पृथिवीं च यद् व्यचस्तेन शालां प्रति गृह्णामि त इमाम् । यदन्तरिक्षं रजसो विमानं तत् कृण्वेऽहमुदरं शेवधिभ्यः । तेन शालां प्रति गृह्णामि तस्मै ॥१५॥**

पृथ्वी र द्युलोकका बीचमा रहेको जुन विस्तृत आकाश वा यज्ञाग्निका ज्वालाहरू छन्, तिनैका सहायताले हामी तिम्रो यो घर स्वीकार गर्दछौँ । अन्तरिक्ष र पृथ्वीको जुन निर्माणशक्ति छ, उसलाई हामी खजानाका लागि मध्य भागमा स्थापित गर्दछौँ । त्यसैबाट स्वर्ग प्राप्त गर्नका लागि हामी यस घरलाई ग्रहण गर्दछौँ ।

**ऊर्जस्वती पयस्वती पृथिव्यां निमिता मिता । विश्वान्नं बिभ्रती शाले मा हिंसीः प्रतिगृह्णतः ॥१६॥**

बल प्रदान गर्ने, दुध प्रदान गर्ने, पृथ्वीमा नयाँ र सबै किसिमको अन्न निर्माण गर्ने तथा त्यसलाई धारण गर्ने काममा समर्थ हे शाला ! तिमी दान ग्रहण गर्ने प्रतिग्राहीहरूलाई विनाश नगर ।

**तृणैरावृता पलदान् वसाना रात्रीव शाला जगतो निवेशनी । मिता पृथिव्यां तिष्ठसि हस्तिनीव पद्वती ॥१७॥**

घाँसले छोपिएको, खरपरालले बनेका गुन्द्रीसुकुलले छोपिएको, रातजस्तै भएर सबै प्राणीहरूलाई आफूभित्र आश्रय दिने हे शाला ! तिमी पृथ्वीमा जोखनाप गरीकन बनाइएका छौ । उत्तम गोडा भएको ढोई हात्तीजस्तै बलिया स्तम्भले युक्त भएर तिमी स्थिर भइराख ।

**इटस्य ते वि चृताम्यपिनद्धमपोर्णुवन् । वरुणेन समुब्जितां मित्रः प्रातर्व्युब्जतु ॥१८॥**

उहिलेको जस्तै तिमीमाथि बाँधिएको पुललाई हामी छुट्याउनका लागि अलग गराउँदै हामी खोलिदिन्छौँ । वरुणदेवताले खोलिएका हे शाला ! तिमीलाई बिहानीका सूर्यदेवताले फेरि प्रकट गराऊन् ।

**ब्रह्मणा शालां निमितां कविभिर्निमितां मिताम् । इन्द्राग्नी रक्षतां शालाममृतौ सौम्यं सदः ॥१९॥**

मन्त्रले अभिमन्त्रित र क्रान्तदर्शीहरूले प्रमाणित गरेर रचना गरेका यस घरलाई सोमपान गर्ने स्थलमा बसेका अमर इन्द्र अग्नि आदि देवताहरूले संरक्षित गराऊन् ।

**कुलायेऽधि कुलायं कोशे कोशः समुब्जितः । तत्र मर्तो वि जायते यस्माद् विश्वं प्रजायते ॥२०॥**

गुँडभित्र गुँडजस्तै घरका कोठाभित्र कोठा अथवा शरीरभित्रको गर्भाशयमा शरीरकै कोशहरू रहेका हुन्छन् । कोठाभित्र कोठा वा जीवकोशभित्र जीवकोशहरू उचित किसिमले सम्बद्ध होऊन् ।

न्न ठाउँका प्राणधारी जीवलाई मरणधर्मा शरीर विभिन्न किसिमले उत्पन्न हुन्छन्, जसले गर्दा सम्पूर्ण विश्व नै प्रजाले युक्त हुने गर्दछ ।

**या द्विपक्षा चतुष्पक्षा षट्पक्षा या निमीयते । अष्टापक्षां दशपक्षां शालां मानस्य पत्नीमग्निर्गर्भ इवा शये ॥२१॥**

दुई वटा पाखाहरू भएको, चार वटा पाखा भएको, छ वटा पाखाहरू भएको, आठ वटा पाखाहरू भएको र दस वटा पाखाहरू भएको यज्ञशालारूपी घर बनाउने गरिएको छ । त्यस्तो मापनको पत्नीका रूपमा रहेका घरमा हामीले उसै किसिमले आश्रय पाएका हुन्छौँ, जसरी गर्भगृहमा अग्नि लुकेर बसेको हुने गर्दछ ।

**प्रतीचीं त्वा प्रतीचीनः शाले प्रैम्यहिंसतीम् । अग्निर्ह्यन्तरापश्चर्तस्य प्रथमा द्वाः ॥२२॥**

हे घर ! पश्चिमतर्फ मुख गराउने हामीहरू पश्चिमतर्फ फर्केर उभिन्छौँ र हिंसाभावबाट मुक्त भएका घरभित्र प्रवेश गर्दछौँ । ऋत नामको सत्ययज्ञरूपी प्रथम द्वारबाट हामी अग्नि र जलका साथमा प्रवेश गर्दछौँ ।

**इमा आपः प्र भराम्ययक्ष्मा यक्ष्मनाशनीः । गृहानुप प्र सीदाम्यमृतेन सहाग्निना ॥२३॥**

रोगविहीन तथा यक्ष्मा आदि रोगलाई नाश गर्ने जललाई हामी आफ्ना घरमा भरेर राख्दछौँ र अमृतमय अग्निका साथमा घरका नजिकै हामी बस्ने गर्दछौँ ।

**मा नः पाशं प्रति मुचो गुरुर्भारो लघुर्भव । वधूमिव त्वा शाले यत्र कबमं भरामसि ॥२४॥**

हे घर ! नवविवाहिता कन्याजस्तो पारेर तिमीलाई हामी सजाउँछौँ । तिमी आफ्नो पाशलाई हामीतर्फ नफ्याँक । तिम्रो भारी हलुको होस् ।

**प्राच्या दिशः शालाया नमो महिम्ने स्वाहा देवेभ्यः स्वाह्येभ्यः ॥२५॥**

घरका पूर्व दिशाको महिमालाई हामी नमस्कार गर्दछौँ । श्रेष्ठ प्रशंसनीय देवताहरूका निम्ति यो आहुति समर्पित गरिएको छ ।

**दक्षिणाया दिशः शालाया नमो महिम्ने स्वाहा देवेभ्यः स्वाह्येभ्यः ॥२६॥**

घरका दक्षिण दिशाको महिमालाई हामी नमस्कार गर्दछौँ । श्रेष्ठ देवताहरूका निम्ति यो आहुति समर्पित गरिएको छ ।

**प्रतीच्या दिशः शालाया नमो महिम्ने स्वाहा देवेभ्यः स्वाह्येभ्यः ॥२७॥**

घरका पश्चिम दिशाको महिमालाई हामी नमस्कार गर्दछौँ । श्रेष्ठ प्रशंसनीय देवताहरूका निम्ति यो आहुति समर्पित गरिएको छ ।

**उदीच्या दिशः शालाया नमो महिम्ने स्वाहा देवेभ्यः स्वाह्येभ्यः ॥२८॥**

घरका उत्तर दिशाको महिमालाई हामी नमस्कार गर्दछौँ । श्रेष्ठ प्रशंसनीय देवताहरूका निम्ति यो आहुति समर्पित गरिएको छ ।

**ध्रुवाया दिशः शालाया नमो महिम्ने स्वाहा देवेभ्यः स्वाह्येभ्यः ॥२९॥**

घरका ध्रुव दिशाको महिमालाई हामी नमस्कार गर्दछौँ । श्रेष्ठ प्रशंसनीय देवताहरूका निम्ति यो आहुति समर्पित गरिएको छ ।

**ऊर्ध्वाया दिशः शालाया नमो महिम्ने स्वाहा देवेभ्यः स्वाह्येभ्यः ॥३०॥**

घरका ऊर्ध्व दिशाको महिमालाई हामी नमस्कार गर्दछौँ । श्रेष्ठ प्रशंसनीय देवताहरूका निम्ति यो आहुति समर्पित गरिएको छ ।

**दिशोदिशः शालाया नमो महिम्ने स्वाहा देवेभ्यः स्वाह्येभ्यः ॥३१॥**

घरका प्रत्येक दिशा तथा उपदिशाको महिमालाई हामी नमस्कार गर्दछौँ । श्रेष्ठ प्रशंसनीय देवताहरूका निम्ति यो आहुति समर्पित गरिएको छ ।

## ४. ऋषभ सूक्त

**ऋषि**– ब्रह्म । **देवता**– ऋषभ । **छन्द**– त्रिष्टुप्, जगती, भुरिक् त्रिष्टुप्, अनुष्टुप्, उपरिष्टात् बृहती, आस्तरपङ्क्ति ।

**साहस्रस्त्वेष ऋषभः पयस्वान् विश्वा रूपाणि वक्षणासु बिभ्रत् । भद्रं दात्रे यजमानाय शिक्षन् बार्हस्पत्य उस्रियस्तन्तुमातान् ॥१॥**

हजारौँ किसिमका सामर्थ्यले युक्त तेजस्वी ऋषभ दुध या रसको उत्पादक हुनाले पयस्वान् हुन् । यिनले वहन गर्ने क्षमता भएको प्रकृतिरूपी गाईलाई एकाइहरूमा विभिन्न रूप धारण गरेका छन् । बृहस्पतिदेवतासित सम्बन्धित यी दिव्य ऋषभले दाता यजमानलाई श्रेष्ठ शिक्षा दिँदै उत्पादनका लागि विभिन्न परिवेश तयार गर्दछन् ।

**अपां यो अग्रे प्रतिमा बभूव प्रभूः सर्वस्मै पृथिवीव देवी । पिता वत्सानां पतिरघ्न्यानां साहस्रे पोषे अपि नः कृणोतु ॥२॥**

जलको प्रतिमानका रूपमा रहेका, पृथ्वीजस्तै सबैमाथि प्रभुत्व स्थापित गर्ने, बाछाको पिताका रूपमा अवध्य गाईरूपी प्रकृतिको स्वामी जो हुन्, उनै ऋषभले हामीलाई हजारौँ किसिमका पुष्टिहरूले सम्पन्न गराऊन् ।

**पुमानन्तर्वान्त्स्थविरः पयस्वान् वसोः कबन्धमृषभो बिभर्ति । तमिन्द्राय पथिभिर्देवयानैर्हुतमग्निर्वहतु जातवेदाः ॥३॥**

आफूभित्र पुरुषार्थ धारण गरेका, विशाल शरीर भएका पयस्वान् ऋषभले वास प्रदान गर्ने वसुहरूको पेट भरिदिने गर्दछन् । उनै दिइएको आहुतिका रूपमा रहेका ऋषभले जातवेदा अग्नि, इन्द्र आदिलाई देवयानको मार्गबाट लिएर आऊन् ।

**पिता वत्सानां पतिरघ्न्यानामथो पिता महतां गर्गराणाम् । वत्सो जरायु प्रतिधुक् पीयूष आमिक्षा घृतं तद् वस्य रेतः ॥४॥**

बाछाको पिताका रूपमा रहेका वृषभ, अवध्य प्रकृतिरूपी गाई वा गड्गड शब्द निकाल्ने मेघसमूहका पालक हुन् । वत्सका रूपमा, त्यसलाई रक्षा गर्ने जरायुका रूपमा, प्रतिदिन दुहिएको अमृतका रूपमा, दही र घिउका रूपमा अप्रत्यक्ष तरिकाले उनै ऋषभको उत्पादक तेज नै विद्यमान रहेको हुन्छ ।

**देवानां भाग उपनाह एषोऽपां रस ओषधीनां घृतस्य । सोमस्य भक्षमवृणीत शक्रो बृहन्नद्रिरभवद् यच्छरीरम् ॥५॥**

यो उपनाह नामको भाग देवताहरूका निकटमा रहेको छ । औषधिहरू, जल र घिउका रूपमा यो रस हो । यस सोमरसलाई इन्द्रदेवताले ग्रहण गरेका थिए र यसैको शरीर नै पर्वताकारको मेघ बनेको छ ।

**सोमेन पूर्णं कलशं बिभर्षि त्वष्टा रूपाणां जनिता पशूनाम् । शिवास्ते सन्तु प्रजन्व इह या इमा न्य१स्मभ्यं स्वधिते यच्छ या अमूः ॥६॥**

हे ऋषभ ! तिमी सोमरसले भरिएको कलश धारण गर्दछौ । तिमी पशुहरूका उत्पादक, विविध रूपमा रहने शरीरहरूका निर्माता हौ । तिम्रा जुन सन्तानहरू छन्, ती सबै हाम्रा लागि कल्याणकारी होऊन् । हे स्वयं संसारलाई धारण गर्ने स्वधिता ! तिमीसित जेजति उत्पादक शक्ति रहेको छ, त्यो सबै हाम्रा निम्ति प्रदान गर ।

**आज्यं बिभर्ति घृतमस्य रेतः साहस्रः पोषस्तमु यज्ञमाहुः । इन्द्रस्य रूपमृषभो वसानः सो अस्मान् देवाः शिव ऐतु दत्तः ॥७॥**

यस साँढेले ओज वा तेजरूपी घिउ धारण गर्छ र त्यसैले सेचन गर्दछ । हजारौँ किसिमका पुष्टिहरू प्रदान गर्ने भएकाले यसलाई यज्ञ भन्ने गरिन्छ । ऋषभले नै इन्द्रको स्वरूप धारण गरेका छन् । हे देवताहरू हो ! हाम्रा निम्ति ऋषभ कल्याणप्रद होऊन् ।

**इन्द्रस्यौजो वरुणस्य बाहू आश्विनोरंसौ मरुतामियं ककुत् । बृहस्पतिं संभृतमेतमाहुर्ये धीरासः कवयो ये मनीषिणः ॥८॥**

धीर, मनीषी, कवि, विद्वान् आदिले बृहस्पतिदेवता नै ऋषभका रूपमा अवतरित भएका हुन् भन्ने गरेका छन् । यिनका भुजाहरू इन्द्रदेवताका, काँध अश्विनीकुमारका र कोखाका भागहरू मरुत्गणका हुन् भन्ने गरिएको छ ।

**दैवीर्विशः पयस्वाना तनोषि त्वामिन्द्रं त्वां सरस्वन्तमाहुः । सहस्रं स एकमुखा ददाति यो ब्राह्मणा ऋषभमाजुहोति ॥९॥**

हे पयले युक्त भएका ऋषभ ! तिमी दिव्य गुणले सम्पन्न प्रजाहरूलाई रूप प्रदान गर्दछौ । तिमीलाई नै इन्द्र र सरस्वान् पनि भन्ने गरिएको छ । जुन ब्राह्मणले ऋषभका लागि यजन र दान गर्दछन्, उनले एउटै माध्यमबाट हजारौँ किसिमको दान गरेका हुन्छन् ।

**बृहस्पतिः सविता ते वयो दधौ त्वष्टुर्वायोः पर्यात्मा त आभृतः । अन्तरिक्षे मनसा त्वा जुहोमि बर्हिष्टे द्यावापृथिवी उभे स्ताम् ॥१०॥**

हे ऋषभ ! बृहस्पति र सविता दुवै देवताहरूले तिम्रो आयु धारण गरेका छन् र तिम्रो आत्मा त्वष्ट तथा वायुले पूर्ण रहेको छ । मनले तिमीलाई अन्तरिक्षमा समर्पित गरेको छ । द्युलोक र भूलोक दुवै तिम्रा आसनका रूप हुन् ।

**य इन्द्र इव देवेषु गोष्वेति विवावदत् । तस्य ऋषभस्याङ्गानि ब्रह्मा सं स्तौतु भद्रया ॥११॥**

इन्द्रदेवता जसरी देवताहरूमा आउने गर्दछन्, उसै गरी गाईरूपी वाणी वा इन्द्रियका बीचमा शब्द निकाल्दै जो आउने गर्दछन्, त्यस्ता ऋषभका अङ्गहरूको स्तुति ब्रह्मा र मङ्गलमयी वाणीले गरून् ।

**पार्श्वे आस्तामनुमत्या भगस्यास्तामनूवृजौ । अष्ठीवन्तावब्रवीन्मित्रो ममैतौ केवलाविति ॥१२॥**

उनको पार्श्वभाग अनुमतिदेवको र मांसपेशीको भाग जति भगदेवताका हुन् । दुवै घुँडा त हाम्रै हुन् भनेर मित्रदेवताले भनेका थिए ।

**भसदासीदादित्यानां श्रोणी आस्तां बृहस्पतेः । पुच्छं वातस्य देवस्य तेन धूनोत्योषधीः ॥१३॥**

कम्मरको भाग आदित्यदेवताको, फिलाहरू बृहस्पतिदेवताको र पुच्छर वायुदेवताको हो । उसैले उनी औषधिहरूलाई हल्लाउने गर्दछन् ।

**गुदा आसन्त्सिनीवाल्याः सूर्यायास्त्वचमब्रुवन् । उत्थातुरब्रुवन् पद ऋषभं यदकल्पयन् ॥१४॥**

सिनीवाली, सूर्यप्रभा, उत्थाता यी देवताहरूका लागि क्रमशः गुदा, त्वचा र पेय अवयव मानिएको छ । यसै किसिमले विद्वान् पुरुषहरूले यस वृषभका विषयमा कल्पना गरे ।

**क्रोड आसीज्जामिशंसस्य सोमस्य कलशो धृतः । देवाः संगत्य यत् सर्व ऋषभं व्यकल्पयन् ॥१५॥**

जामिशंसको काख वा पेट र कलशरूपी जुराको भाग सोमदेवताले धारण गरेका छन् । यसै गरी समस्त देवताहरूले यी ऋषभका सम्बन्धमा कल्पना गरेका थिए ।

**ते कुष्ठिकाः सरमायै कूर्मेभ्यो अदधुः शफान् । ऊबध्यमस्य कीटेभ्यः श्ववर्तेभ्यो अधारयन् ॥१६॥**

यी ऋषभको पिठ्युँको भाग सरमा तथा खुरको भाग कछुवाका निम्ति निश्चित गरिएको छ । यसको अपक्व अन्नको भागलाई श्वान र किराहरूका भागमा राखिएको छ ।

**शृङ्गाभ्यां रक्ष ऋषत्यवर्तिं हन्ति चक्षुषा । शृणोति भद्रं कर्णाभ्यां गवां यः पतिरघ्न्यः ॥१७॥**

अहिंसित गाई या प्रकृतिका स्वामी ऋषभ आफ्ना कानले कल्याणकारी शब्द सुन्दछन्, सिङले

राक्षसी वृत्तिहरू संहार गर्दछन् र नेत्रले अकालरूपी दारिद्र्य हटाउने गर्दछन् ।

**शतयाजं स यजते नैनं दुन्वन्त्यग्नयः । जिन्वन्ति विश्वे तं देवा यो ब्राह्मण ऋषभमाजुहोति ॥१८॥**

यी ऋषभका निम्ति यजन गर्ने ब्राह्मणहरू सयौँ वटा यज्ञ गरेको पुण्य आर्जन गर्दछन् । समस्त देवताहरूले उनलाई सन्तुष्टि प्रदान गर्दछन् र अग्निका ज्वालाहरूले यिनलाई दुःख सन्ताप दिने छैनन् ।

**ब्राह्मणेभ्य ऋषभं दत्त्वा वरीयः कृणुते मनः । पुष्टिं सो अघ्न्यानां स्वे गोष्ठेऽव पश्यते ॥१९॥**

सत्पात्र ब्राह्मणलाई यी ऋषभ जिम्मा लगाएर जसले आफ्ना मनको उदार भावनाको परिचय दिन्छ, उसले आफ्ना गोठभरि गाईको उन्नति भएको चाँडै देख्न पाउँछ ।

**गावः सन्तु प्रजाः सन्त्वथो अस्तु तनूबलम् । तत् सर्वमनु मन्यन्तां देवा ऋषभदायिने ॥२०॥**

ऋषभ दान गर्नेहरूलाई सबै देवताले आआफ्ना निर्देशनमा गाई, सुसन्तति र शारीरिक शक्ति प्रदान गरून् ।

**अयं पिपान इन्द्र इद् रयिं दधातु चेतनीम् । अयं धेनुं सुदुघां नित्यवत्सां वशं दुहां विपश्चितं परो दिवः ॥२१॥**

सोमरूपी हवि पान गर्दै इन्द्रदेवताले ज्ञानस्वरूप सम्पत्ति प्रदान गरून् । इन्द्रदेवता स्वर्गलोकभन्दा परको ज्ञानयुक्त यस्तो धेनु लिएर आऊन्, धेरै दुध दिने, सधैं लैनो र वशमा रहेको हुने गरेको भएर दुहुन सकिने होस् ।

**पिशङ्गरूपो नभसो वयोधा एन्द्रः शुष्मो विश्वरूपो न आगन् । आयुरस्मभ्यं दधत् प्रजां च रायश्च पोषैरभि नः सचताम् ॥२२॥**

अन्तरिक्षको अन्न धारण गर्ने, खैरो रङ्ग भएका र अनेकौं आकृति वा रूपले युक्त देवताहरूका राजा इन्द्रको सामर्थ्यको बल निकट आइरहेको छ । यस बलले आयु, सुसन्तति र वैभव प्रदान गर्दै हामीलाई पोषक तत्त्वले सम्पन्न गराऊन् ।

**उपेहोपपर्चनास्मिन् गोष्ठ उप पृञ्च नः । उप ऋषभस्य यद् रेत उपेन्द्र तव वीर्यम् ॥२३॥**

हे ऋषभ ! तिमी यसै गोठमा बस र हामीलाई सहायता गर । हे इन्द्रदेवता ! तिम्रो वीर्य रस वृषभको रेतस्का रूपमा हाम्रा नजिक आओस् ।

**एतं वो युवानं प्रति दध्मो अत्र तेन क्रीडन्तीश्चरत वशाँ अनु । मा नो हासिष्ट जनुषा सुभागा रायश्च पोषैरभि नः सचध्वम् ॥२४॥**

हे प्रकृतिको घटकका रूपमा रहेका गाइहरू हो ! तन्नेरी साँढेलाई हामी तिमीहरूको कामका लागि यहाँ राख्दछौं । उनी यस गोठमा मन लाग्दो ठाउँमा भ्रमण गरून् । भे सौभाग्यशालिनी ! हामीलाई तिनी परित्याग नगर र वैभवको पुष्टिले हामीलाई सम्पन्न गराऊ ।

## ५. पञ्चौदन–अज सूक्त

**ऋषि**– भृगु । **देवता**– पञ्चौदन अज । **छन्द**– त्रिष्टुप्, चतुष्पदा पुरोऽतिशक्वरी जगती, जगती, अनुष्टुप्, त्रिपदा अनुष्टुप्, त्रिपदा विराट् गायत्री, पञ्चपदा अनुष्टुप्, उष्णिक् गर्भोपरिष्टात् बार्हता भुरिक् त्रिष्टुप्, पुर उष्णिक् , पञ्चपदा अनुष्टुप् उष्णिक् गर्भोपरिष्टाद् बार्हता विराट् जगती, ककुम्मती अनुष्टुप्, सप्तपदाष्टि, दशपदा प्रकृति, दशपदाकृति, एकावसाना द्विपदा साम्नी त्रिष्टुप् ।

**आ नयैतमा रभस्व सुकृतां लोकमपि गच्छतु प्रजानन् । तीर्त्वा तमांसि बहुधा महान्त्यजो नाकमा क्रमतां तृतीयम् ॥१॥**

यस अजन्मा अजलाई यहाँ ल्याएर, यस्तो सत्कर्म प्रधान यज्ञ प्रारम्भ गरौं, जसबाट यस अजले

पुण्यात्माहरूका लोकलाई चिनेर विभिन्न किसिमका बाक्ला अन्धकारलाई पार गर्दै स्वर्गलोक नामको तृतीय धाम प्राप्त गर्न सकोस् ।

**इन्द्राय भागं परि त्वा नयाम्यस्मिन् यज्ञे यजमानाय सूरिम् । ये नो द्विषन्त्यनु तान् रभस्वानागसो यजमानस्य वीराः ॥२॥**

हे ज्ञानले सम्पन्न अज ! तिमीलाई हामी यस सत्कर्मरूपी यज्ञमा इन्द्रदेवताका लागि यजमान साधकका निकट लिएर आउँछौँ । जसले हामीप्रति दुर्भावना राखेका हुन्छन्, उनीहरूलाई गोडाले कुल्च र यजमानका वीर सन्तानहरूलाई पापबाट मुक्त गराऊ ।

**प्र पदोऽव नेनिग्धि दुश्चरितं यच्चचार शुद्धैः शफैरा क्रमतां प्रजानन् । तीर्त्वा तमांसि बहुधा विपश्यन्नजो नाकमा क्रमतां तृतीयम् ॥३॥**

हे अज ! तिमीले पहिले जुन दुष्कर्महरू गरेका छौ, त्यसका लागि तिमी आफ्ना गोडाहरू पवित्र गराऊ । त्यसपछि मार्ग ठम्याएर पवित्र पाइलाले स्वर्गलोकतर्फ आरोहण गर । अजले अन्धकार पार गर्दै विभिन्न लोकहरूलाई हेर्दै तेस्रो लोकका रूपमा रहेको स्वर्ग प्राप्त गरोस् ।

**अनु च्छ्य श्यामेन त्वचमेतां विशस्तर्यथापर्वसिना माभि मंस्थाः । माभि द्रुहः परुशः कल्पयैनं तृतीये नाके अधि वि श्रयैनम् ॥४॥**

हे विशस्तः ! यस कालो शस्त्रले यसको त्वचालाई तिमी यस किसिमले काट, जसले जोर्नीमा दुखेको अनुभूति नै नहोस् । द्वेष भावनारहित भएर जोर्नीहरूलाई यस किसिमले सक्षम बनाऊ, जसले गर्दा यसले परम उच्च स्थानमा रहेको स्वर्ग धाम प्राप्त गरोस् ।

**ऋचा कुम्भीमध्यग्नौ श्रयाम्या सिञ्चोदकमव धेह्येनम् । पर्याधत्ताग्निना शमितारः शृतो गच्छतु सुकृतां यत्र लोकः ॥५॥**

हामी कुम्भी पात्रलाई अभिमन्त्रित गरेर अगाडि राख्दछौँ । जलले अभिषेक गरिएको पात्रलाई हे शमिताहरू हो ! तिमीहरू यस किसिमले राख, जसले गर्दा आगोका रापले परिपक्व हुँदै त्यो अज त्यसै ठाउँमा जाओस्, जहाँ सत्कर्मीहरूको श्रेष्ठ लोक रहेको छ ।

**उत्क्रामातः परि चेदतप्तस्तप्ताच्चरोरधि नाकं तृतीयम् । अग्नेरग्निरधि सं बभूविथ ज्योतिष्मन्तमभि लोकं जयैतम् ॥६॥**

विभिन्न खालका दुःखले नसताइँदै पनि तिमी सन्तप्त चरुले स्वर्ग नामको तेस्रो धाम जानका लागि आरोहण गर । अग्निको सन्तापले तिमी उही जत्तिकै तेजस्वी भएका छौ । त्यसो हुनाले नै यो तेजोमय लोक आफ्नै सत्कर्मले प्राप्त गर ।

**अजो अग्निरजमु ज्योतिराहुरजं जीवता ब्रह्मणे देयमाहुः । अजस्तमांस्यप हन्ति दूरमस्मिँल्लोके श्रद्दधानेन दत्तः ॥७॥**

यो अजन्मा अज नै अग्नि र ज्योति हुन् । जीवित देहधारीहरूभित्र जुन अज रहेको छ, त्यसलाई ब्रह्मी या दैवी प्रक्रियाका लागि समर्पित गर्नुपर्दछ भन्ने ज्ञानीहरूको भनाइ छ । यस लोकमा श्रद्धासहित समर्पित गरिएका यस अजले पर रहेका स्वर्गधाममा पनि अन्धकार विनाश गर्दछ ।

**पञ्चौदनः पञ्चधा वि क्रमतामाक्रंस्यमानस्त्रीणि ज्योतींषि । ईजानानां सुकृतां प्रहि मध्यं तृतीये नाके अधि वि श्रयस्व ॥८॥**

सूर्य, चन्द्र र अग्निका यी तीन तेजहरूलाई प्राप्त गर्ने यो अजरूपी जीवात्मा पाँच किसिमका तत्त्व र तन्मात्रा भएको भोज्य पदार्थले युक्त भएर पञ्चमहाभूत वा पञ्चेन्द्रिय रूपी कार्यक्षेत्रमा पराक्रम गर्छ । हे पञ्चौदन ! तिमी सत्कर्म गर्नेहरूका बीचमा पुगेर स्वर्ग नामको तेस्रो धाम प्राप्त गर ।

**अजा रोह सुकृतां यत्र लोकः शरभो न चत्तोऽति दुर्गाण्येषः पञ्चौदनो ब्रह्मणे दीयमानः स दातारं तृप्त्या तर्पयाति ॥९॥**

हे अज ! उन्नति गर । हिंस्रक बाघ आदि घातक वृत्तिका पशु वा कणहरूको पहुँचभन्दा पर ... पञ्चमहाभूतको आधार, यो अज परब्रह्मका लागि समर्पित भएर समर्पणदातालाई तृप्त र

सन्तुष्ट गराउनमा सफल होस् ।

**अजस्त्रिनाके त्रिदिवे त्रिपृष्ठे नाकस्य पृष्ठे ददिवांसं दधाति । पञ्चौदनो ब्रह्मणे दीयमानो विश्वरूपा धेनुः कामदुधास्येका ॥१०॥**

यस अजले समर्पणदातालाई तीन किसिमले सुख प्रान गर्दछ, यो तीन किसिमका प्रकाशले युक्त छ र तीन वटा पिठ्युँको आधार भएका स्वर्गधामको स्थल धारण गर्दछ । हे अज ! परब्रह्मका लागि समर्पण गरिएको पञ्चौदन प्रदान गर्नेका रूपमा तिमी विश्वरूपा कामधेनु समान नै भएका छौ ।

**एतद् वो ज्योतिः पितरस्तृतीयं पञ्चौदनं ब्रह्मणेऽजं ददाति । अजस्तमांस्यप हन्ति दूरमस्मिँल्लोके श्रद्दधानेन दत्तः ॥११॥**

हे पितृहरू हो ! जुन तिमीहरूको तेस्रो ज्योति हो त्यसैलाई पञ्चौदनरूपी अज ब्रह्माका लागि समर्पित गरिन्छ । यस लोकमा श्रद्धापूर्वक दिइएको पञ्चौदनरूपी अज परको लोकमा रहेको अन्धकारलाई विनाश गर्न सक्षम हुन्छ ।

**ईजानानां सुकृतां लोकमीप्सन् पञ्चौदनं ब्रह्मणेऽजं ददाति । स व्याप्तिमभि लोकं जयैतं शिवोऽस्मभ्यं प्रतिगृहीतो अस्तु ॥१२॥**

असल यज्ञ आदि गर्नेहरूलाई प्राप्त हुने लोकको कामना गर्ने मानिसहरूले जुन पञ्चौदनरूपी अज ब्राह्मी यज्ञद्वारा अनुशासनका निम्ति प्राप्त गर्दछन् । त्यस्ता किसिमका हे अज ! तिमी व्यापक भएर यस लोकलाई जितोस् । देवताहरूले स्वीकृत भएर तिमी हाम्रो कल्याण गर ।

**अजो ह्य१ग्नेरजनिष्ट शोकाद् विप्रो विप्रस्य सहसो विपश्चित् । इष्टं पूर्तमभिपूर्तं वषट्कृतं तद् देवा ऋतुशः कल्पयन्तु ॥१३॥**

ब्रह्मबलरूपी ज्ञानशक्ति र पराक्रमबलरूपी क्षात्रशक्तिका विशेषज्ञहरू अज अग्निका प्रखर ज्वालामा उद्‌भूत हुने गर्दछ । यिनीहरूले गरेको इच्छापूर्ति र यज्ञीय कृत्यलाई सबै देवशक्तिहरूले ऋतुहरूको अनुसार नै कल्पित गरून् ।

**अमोतं वासो दद्याद्धिरण्यमपि दक्षिणाम् । तथा लोकान्त्समाप्नोति ये दिव्या ये च पार्थिवाः ॥१४॥**

ज्ञानपूर्वक तयार गरिएको स्वर्णिम आवास जसले उरू अजका लागि अर्पित गर्दछन्, ती दानीले द्युलोक र पृथ्वी दुवैमा नै उच्च उपलब्धिहरू आर्जन गर्न सक्दछ ।

**एतास्त्वाजोप यन्तु धाराः सोम्या देवीर्घृतपृष्ठा मधुश्चुतः । स्तभान पृथिवीमुत द्यां नाकस्य पृष्ठेऽधि सप्तरश्मौ ॥१५॥**

हे अज ! यो घिउ र महले भरिउको सोमसम्बन्धी दिव्य रसको धारा तिम्रा नजिक पुगोस् । हे अज ! तिमी सात किरणले युक्त भएका सूर्यका माथिको स्वर्गरूपी पिठ्युँबाट द्युलोक र पृथ्वीलाई कम्पायमान गराऊ ।

**अजोऽस्यज स्वर्गोऽसि त्वया लोकमङ्गिरसः प्राजानन् । तं लोकं पुण्यं प्र ज्ञेषम् ॥१६॥**

हे अज ! तिमी अजन्मा र स्वर्गको रूप हौ । तिमीद्वारा नै अङ्गिराका वंशजहरूले स्वर्गलोकका विषयमा जानकारी प्राप्त गरेका थिए । त्यस पुण्यमय लोकलाई हामीले उचित किसिमले चिनिसकेका छौं ।

**येना सहस्रं वहसि येनाग्ने सर्ववेदसम् । तेनेमं यज्ञं नो वह स्वर्देवेषु गन्तवे ॥१७॥**

हे अग्निदेवता ! जुन सामर्थ्यका कारण तिमी सबै किसिमका सम्पदाहरूलाई प्रदान गर्न सक्ने खालको आहुति हजारौं विधिले देवताहरूसम्म लिएर जाने गर्दछौ, उसै सामर्थ्यले तिमी हाम्रो यस यज्ञलाई स्वर्ग प्राप्तिका लागि देवताहरूका नजिक पुर्‍याऊ ।

**अजः पक्वः स्वर्गे लोके दधाति पञ्चौदनो निर्ऋतिं बाधमानः । तेन लोकान्त्सूर्यवतो जयेम ॥१८॥**

पञ्चौदनरूपी अज परिपक्व भएर स्वर्गलोकमा स्थापित हुने गर्दछ र त्यसले पापदेवतालाई प-

हटाउने गर्दछ । यसैं अजका कारण सूर्यसित सम्बन्धित लोक हामी प्राप्त गर्दछौं ।

**यं ब्राह्मणे निदधे यं च विक्षु या विप्रुष ओदनानामजस्य । सर्वं तदग्ने सुकृतस्य लोके जानीतान्नः संगमने पथीनाम् ॥१९॥**

हामी जसलाई ब्रह्मनिष्ठ र जनसाधारणमा प्रतिष्ठित गर्दछौं, उसै सम्पदाले अजको भोगलाई पूर्ति गर्दछ । हे अग्निदेवता ! यी सबै सम्पदाहरू पुण्यात्माहरूका लोकसम्म पुर्याउने मार्गहरूमा हामीलाई सहायक होऊँ भनेर जान ।

**अजो वा इदमग्रे व्यक्रमत तस्योर इयमभवद् द्यौः पृष्ठम् । अन्तरिक्षं मध्यं दिशः पार्श्वे समुद्रौ कुक्षी ॥२०॥**

यस जगत्मा जो परापूर्व कालदेखि नै निरन्तर रूपमा प्रयत्नशील छ, त्यो अज नै हो । यस अजको छातीयही भूमि हो र पिठ्युँ द्युलोक हो । त्यसै गरी मध्यभाग अन्तरिक्ष र दायाँबायाँका पार्श्वभाग भनेका दिशा र उपदिशाहरू हुन् तथा कोखा भनेका समुद्रहरू हुन् ।

**सत्यं चर्तं च चक्षुषी विश्वं सत्यं श्रद्धा प्राणो विराट् शिरः । एष वा अपरिमितो यज्ञो यदजः पञ्चौदनः ॥२१॥**

उसका आँखा सत्य र ऋतरुका रूपमा रहेर सम्पूर्ण विश्वको अस्तित्त्व बनेको छ । श्रद्धा प्राणका रूपमा रहेको छ भने विराट् पुरुष शीर्षको रूपमा रहेका छन् । यस्तो पञ्चौदनरूपी अज असीमित फल प्रदान गर्नमा सक्षम रहेको छ ।

**अपरिमितमेव यज्ञमाप्नोत्यपरिमितं लोकमव रुन्द्धे । योऽजं पञ्चौदनं दक्षिणाज्योतिषं ददाति ॥२२॥**

जुन मानिस दक्षिणाको तेजस्विताले सम्पन्न भएका भावले अजलाई पञ्चौदन समर्पित गर्दछन्, उनीहरू असङ्ख्य यज्ञफलका पुण्यको अधिकारी हुने गर्दछन् र अपरिमित ऐश्वर्यले सम्पन्न भएर लोकमार्गकालाई आफैँले विस्तृत गराउँदै उद्घाटित गर्दछन् ।

**नास्यास्थीनि भिन्द्यान्न मज्जो निर्धयेत् । सर्वमेनं समादायेदमिदं प्र वेशयेत् ॥२३॥**

यस यज्ञका निम्ति यसका अस्थिहरू नभाँचौं र मांसमज्जा पनि ननिचोरौं; बरु सबैले यो नै हो, यो नै हो भन्दै यसका विशालताभित्र प्रवेश गरून् ।

**इदमिदमेवास्य रूपं भवति तेनैनं सं गमयति । इषं मह ऊर्जमस्मै दुहे योऽजं पञ्चौदनं दक्षिणाज्योतिषं ददाति ॥२४॥**

यही यो यज्ञको रूप हो यसलाई जीवात्मा अथवा यज्ञलेउस परामात्मा या उच्च लोकसित संयुक्त गराउँछौं । जुन मानिस दक्षिणाले देदीप्यमान पञ्चौदन अजको समर्पण गर्दछन्, उनीहरूलाई यस यज्ञले अन्न, महानता र सामर्थ्य दिने गर्दछ ।

**पञ्च रुक्मा पञ्च नवानि वस्त्रा पञ्चास्मै धेनवः कामदुघा भवन्ति । योऽजं पञ्चौदनं दक्षिणाज्योतिषं ददाति ॥२५॥**

जो दक्षिणाले देदीप्यमान पञ्चौदन अजलाई समर्पण गर्ने खालका हुन्, उनीहरूलाई पाँच सुवर्ण, पाँच प्राण, पाँच नवीन वस्त्र, पाँच कोश र पाँच कामधेनुरूपी पञ्चेन्द्रिय प्राप्त हुने गर्दछन् ।

**पञ्च रुक्मा ज्योतिरस्मै भवन्ति वर्म वासांसि तन्वे भवन्ति । स्वर्गं लोकमश्नुते योऽजं पञ्चौदनं दक्षिणाज्योतिषं ददाति ॥२६॥**

दक्षिणाले देदीप्यमान भएका पञ्चभोजी अजलाई जसले समर्पण गर्दछन्, उनीहरूलाई पञ्चरुक्मा ज्योति अर्थात् पाँच किसिमको आभायुक्त ज्योतिले सम्पन्न स्वर्गलोक प्राप्त हुने गर्दछ । त्यो नै उनीहरूका शरीरको कवचका रूपमा प्राप्त भएको हुन्छ ।

**या पूर्वं पतिं वित्त्वाथान्यं विन्दतेऽपरम् । पञ्चौदनं च तावजं ददातो न वि योषतः ॥२७॥**

जुन स्त्रीहरू सूक्ष्म एकाइका रूपमा पहिले पतिको पदार्थका साथमा रहने गर्दछन्, अथवा अन्य पतिको पदार्थ ग्रहण गर्दछन्, त्यस्ता दुवै खालका नारीरूपी एकाइहरूले पञ्चौदनका रूपमा रहेको

अजका रूपमा आफू स्वयंलाई समर्पित गर्दा आफ्ना विशेषताहरूबाट वियुक्त हुँदैनन् ।

**समानलोको भवति पुनर्भुवापरः पतिः । योऽजं पञ्चौदनं दक्षिणाज्योतिषं ददाति ॥२८॥**

जुन व्यक्ति पञ्चौदनरूपी अजलाई दक्षिणाका तेजले युक्त बनाएर समर्पित गर्दछन्, त्यस्तो दोस्रो पति पनि पुनर्विवाहित स्त्रीसित बराबरीको स्थान प्राप्त गर्ने हुन्छ ।

**अनुपूर्ववत्सां धेनुमनड्वाहमुपबर्हणम् । वासो हिरण्यं दत्त्वा ते यन्ति दिवमुत्तमाम् ॥२९॥**

क्रमैसँग प्रत्येक वर्ष बाछो उत्पन्न गर्ने गाई, साँढे, ओढ्ने कवच र सुवर्णले युक्त वस्त्रहरू दान गर्ने श्रेष्ठ व्यक्तिहरू स्वर्गलोकमा जान्छन् ।

**आत्मानां पितरं पुत्रं पौत्रं पितामहम् । जायां जनित्रीं मातरं ये प्रियास्तानुप ह्वये ॥३०॥**

आफ्नो आत्मचेतना, पिता, पुत्र, पौत्र, पितामह, सहधर्मिणी, जन्माउने माता र हाम्रा अन्य जेजति इष्टमित्रहरू छन्, ती सबैलाई हामी आफ्ना नजिक बोलाउँछौं ।

**यो वै नैदाघं नामर्तुं वेद । एष वै नैदाघो नामर्तुर्यदजः पञ्चौदनः । निरेवाप्रियस्य भ्रातृव्यस्य श्रियं दहति भवत्यात्मना । योऽजं पञ्चौदनं दक्षिणाज्योतिषं ददाति ॥३१॥**

यो पञ्चौदन अज नै ग्रीष्म ऋतु हो, यस ग्रीष्म ऋतुका विषयमा जसले जानेको छ र दक्षिणाका तेजले सम्पन्न पञ्चौदन अज समर्पण गर्नेहरू जोजो हुन्छन्, उनीहरू आफ्ना शक्तिले अप्रिय शत्रुको श्रीसम्पत्ति पनि भस्मीभूत गराउँछन् ।

**यो वै कुर्वन्तं नामर्तुं वेद । कुर्वतींकुर्वतीमेवाप्रियस्य भ्रातृव्यस्य श्रियमा दत्ते । एष वै कुर्वन्नामर्तुर्यदजः पञ्चौदनः । निरेवाप्रियस्य भ्रातृव्यस्य श्रियं दहति भवत्यात्मना । योऽजं पञ्चौदनं दक्षिणाज्योतिषं ददाति ॥३२॥**

कर्म वा कुर्वन्त नामको ऋतुका ज्ञाता जो छन्, उनीहरू अप्रिय शत्रुको प्रयत्नमयी श्रीसम्पत्ति हरण गर्दछन् । पञ्चौदन अज नै निश्चय रूपले कुर्वन्त नामको ऋतु हो । जसले दक्षिणाका तेजले सम्पन्न भएको पञ्चौदन अज प्रदान गर्दछन्, उनीहरू आफ्ना दानका प्रभावले अप्रिय कण नामका शत्रुको ऐश्वर्य विनाश गर्दछन् ।

**यो वै संयन्तं नामर्तुं वेद । संयतींसंयतीमेवाप्रियस्य भ्रातृव्यस्य श्रियमा दत्ते । एष वै. संयन्नामर्तुर्यदजः पञ्चौदनः । निरेवाप्रियस्य भ्रातृव्यस्य श्रियं दहति भवत्यात्मना । योऽजं पञ्चौदनं दक्षिणाज्योतिषं ददाति ॥३३॥**

जसले संयन्त नामका ऋतुका विषयमा जानेका छन्, उनीहरू अप्रिय शत्रुले संयमद्वारा उपलब्ध गरेको सम्पदा ग्रहण गर्न सक्छन् । पञ्चौदन अज नै यो संयन्त नामको ऋतु हो । दक्षिणाले देदीप्यमान बनेको पञ्चौदन अज जसले दान गर्दछन्, उनीहरू आफ्ना आत्मशक्तिले अप्रिय शत्रुको धन र श्रीसम्पत्ति विनाश गर्न सक्ने हुन्छन् ।

**यो वै पिन्वन्तं नामर्तुं वेद । पिन्वतींपिन्वतीमेवाप्रियस्य भ्रातृव्यस्य श्रियमा दत्ते । एष वै पिन्वन्नामर्तुर्यदजः पञ्चौदनः । निरेवाप्रियस्य भ्रातृव्यस्य श्रियं दहति भवत्यात्मना । योऽजं पञ्चौदनं दक्षिणाज्योतिषं ददाति ॥३४॥**

जसले पिन्वन्त नामका ऋतुका विषयमा जानेका छन्, उनीहरू अप्रिय शत्रुले पोषणद्वारा उपलब्ध गरेको सम्पदा ग्रहण गर्न सक्छन् । पञ्चौदन अज नै यो पिन्वन्त नामको ऋतु हो । दक्षिणाले देदीप्यमान बनेको पञ्चौदन अज जसले दान गर्दछन्, उनीहरू आफ्ना आत्मशक्तिले अप्रिय शत्रुको धन र श्रीसम्पत्ति विनाश गर्न सक्ने हुन्छन् ।

**यो वा उद्यन्तं नामर्तुं वेद । उद्यतीमुद्यतीमेवाप्रियस्य भ्रातृव्यस्य श्रियमा दत्ते । एष वा उद्यन्नामर्तुर्यदजः पञ्चौदनः । निरेवाप्रियस्य भ्रातृव्यस्य श्रियं दहति भवत्यात्मना । योऽजं पञ्चौदनं दक्षिणाज्योतिषं ददाति ॥३५॥**

जसले उद्यन्त नामका ऋतुका विषयमा जानेका छन्, उनीहरू अप्रिय शत्रुले उद्यमणद्वारा उपलब्ध गरेको सम्पदा ग्रहण गर्न सक्छन् । पञ्चौदन अज नै यो उद्यन्त नामको ऋतु हो । दक्षिणाले

देदीप्यमान बनेको पञ्चौदन अज जसले दान गर्दछन्, उनीहरू आफ्ना आत्मशक्तिले अप्रिय शत्रुको धन र श्रीसम्पत्ति विनाश गर्न सक्ने हुन्छन् ।

**यो वा अभिभुवं नामर्तुं वेद । अभिभवन्तीमभिभवन्तीमेवाप्रियस्य भ्रातृव्यस्य श्रियमा दत्ते । एष वा अभिभूर्नामर्तुर्यदजः पञ्चौदनः । निरेवाप्रियस्य भ्रातृव्यस्य श्रियं दहति भवत्यात्मना । योऽजं पञ्चौदनं दक्षिणाज्योतिषं ददाति ॥३६॥**

जसले अभिभू नामका ऋतुका विषयमा जानेका छन्, उनीहरू अप्रिय शत्रुलाई परास्त गर्न सक्ने सम्पदा ग्रहण गर्न सक्छन् । पञ्चौदन अज नै यो अभिभू नामको ऋतु हो । दक्षिणाले देदीप्यमान बनेको पञ्चौदन अज जसले दान गर्दछन्, उनीहरू आफ्ना आत्मशक्तिले अप्रिय शत्रुको धन र श्रीसम्पत्ति विनाश गर्न सक्ने हुन्छन् ।

**अजं च पचत पञ्च चौदनान् । सर्वा दिशः संमनसः सध्रीचीः सान्तर्देशाः प्रति गृह्णन्तु त एतम् ॥३७॥**

अज र पञ्चौदनका पाँच किसिमका भागहरू परिपक्व बनाऔँ । सबै दिशा र अन्तर्दिशाहरू नै एक मन भएर सहमतिपूर्वक यसलाई स्वीकार गरून् ।

**तास्ते रक्षन्तु तव तुभ्यमेतं ताभ्य आज्यं हविरिदं जुहोमि ॥३८॥**

सबै दिशाहरूले तिम्रा यस यज्ञलाई सुरक्षा गरून् । हामी उनीहरूका लागि घिउ र हवन सामग्रीको आहुति प्रदान गर्दछौँ ।

## ६. अतिथि सत्कार (१)

**ऋषि**- ब्रह्मा । **देवता**- अतिथि, विद्या । **छन्द**- नागी त्रिपदा गायत्री, त्रिपदार्षी गायत्री, साम्नी त्रिष्टुप्, आर्ची अनुष्टुप्, आसुरी गायत्री, त्रिपदा साम्नी जगती, याजुषी त्रिष्टुप्, साम्नी भुरिक् बृहती, साम्नी अनुष्टुप्, विराट् गायत्री, साम्नी निचृत् पङ्क्ति, त्रिपदा विराट् भुरिक् गायत्री ।

**यो विद्यात् ब्रह्म प्रत्यक्षं परूंषि यस्य संभारा ऋचो यस्यानूक्यम् ॥१॥**

जसले विद्यारूपी प्रत्यक्ष ब्रह्मलाई चिनेको छ, जसका अवयव नै यज्ञसामग्री तथा कन्ध र मध्य भाग मेरुदण्डका ऋचाहरू हुन् ... ।

**सामानि यस्य लोमानि यजुर्हृदयमुच्यते परिस्तरणीमिद्धविः ॥२॥**

उसका रौँ नै साम, हृदय यजुर्वेदका रूप हुन् र उसका शरीरको वस्त्ररूपी आच्छादन हवि हो ।

**यद् वा अतिथिपतिरतिथीन् प्रतिपश्यति देवयजनं प्रेक्षते ॥३॥**

जुन गृहस्थले अतिथिहरूतिर हेर्ने गरेको छ, मानौँ उसले देवत्व संवर्द्धक यज्ञलाई नै हेरेको हो ।

**यदभिवदति दीक्षामुपैति यदुदकं याचत्यपः प्र णयति ॥४॥**

अतिथिसित बात मार्नु भनेको नै यज्ञीय कर्म गर्नका लागि दीक्षित हुनुजस्तै हो उसले जलको कामना गरेर प्राप्त गर्नु भनेको नै यज्ञको सफलता हो ।

**या एव यज्ञ आपः प्रणीयन्ते ता एव ताः ॥५॥**

जुन जल यज्ञमा लिएर गइन्छ यो त्यही जल हो, अथवा अतिथिलाई समर्पित गरिएको जल नै यज्ञमा समर्पित हवि हो ।

**यत् तर्पणमाहरन्ति य एवाग्नीषोमीयः पशुर्बध्यते स एव सः ॥६॥**

अतिथिका लागि जुन पदार्थ लगिन्छन्, मानौँ ती सबै अग्नि र सोमलाई अर्पण गर्न पशु बाँधेको जस्तै हो ।

**यदावसथान् कल्पयन्ति सदोहविर्धानान्येव तत् कल्पयन्ति ॥७॥**

अतिथिका लागि भनेर जुन आश्रयस्थलको प्रबन्ध गरिन्छ, मानौँ त्यो यज्ञमा सद् र हविर्धान निर्माण गरेको हो ।

**यदुपस्तृणन्ति बर्हिरेव तत् ॥८॥**
अतिथि सत्कारमा कपडा बिछ्याउनु नै यज्ञका लागि कुश बिछ्याएको जस्तै हो ।
**यदुपरिशयनमाहरन्ति स्वर्गमेव तेन लोकमव रुन्द्धे ॥९॥**
जसले बिछ्यौना ल्याउँछन्, मानौँ उनले स्वर्गलोकको ढोका नै खोलेका हुन् ।
**यत् कशिपूपबर्हणमाहरन्ति परिधय एव ते ॥१०॥**
अतिथिका लागि जुन चादर, तकिया आदि लिएर आउँछन्, त्यो नै मानौ यज्ञको सीमा हो ।
**यदाञ्जनाभ्यञ्जनमाहरन्त्याज्यमेव तत् ॥११॥**
जसले आँखाका लागि अञ्जन बनाउन र शरीर मालिस गर्नका लागि तेल लिएर आउँछन्, मानौँ उनले यज्ञको घिउ बोकेका हुन्छन् ।
**यत् पुरा परिवेषात् खादमाहरन्ति पुरोडाशावेव तौ ॥१२॥**
पस्कनुभन्दा पहिले नै जसले अतिथिका लागि खाने कुरो ल्याउँछन्, मानौँ उनले यज्ञको पुरोडाश ल्याएका हुन् ।
**यदशनकृतं ह्वयन्ति हविष्कृतमेव तद्ध्वयन्ति ॥१३॥**
भोजनका लागि अतिथिलाई बोलाउनु नै यज्ञलाई हविष्यान्न स्वीकार गर्न बोलाएको हो ।
**ये व्रीहयो यवा निरुप्यन्तेऽशव एव ते ॥१४॥**
चामल र जौका रूपमा जुन कुरा देखिन्छन्, तिनीहरू नै सोमरस हुन् ।
**यान्युलूखलमुसलानि ग्रावाण एव ते ॥१५॥**
अतिथि सत्कार गर्ने काममा धान कुट्नका लागि जुन ओखल र मुसलहरू प्रयोग गरिन्छन्, मानौँ ती सोमरस पेल्नका लागि प्रयोग हुने ढुङ्गाहरू हुन् ।
**शूर्पं पवित्रं तुषा ऋजीषाभिषवणीरापः ॥१६॥**
अतिथिसत्कारका उपयोगमा ल्याएको नाङ्लो नै यज्ञमा प्रयुक्त हुने गरेको पवित्राजस्तै हो, धानको भुस सोमरस पेल्दा निस्केको खोस्टाजस्तै हो र भोजनका समयमा प्रयुक्त हुने गरेको जल नै यज्ञीय जल हो ।
**स्रुग् दर्विर्नेक्षणमायवनं द्रोणकलशाः कुम्भ्यो वायव्यानि पात्राणीयमेव कृष्णाजिनम् ॥१७॥**
पस्किने काममा प्रयोग हुने डाडुपुन्यौंहरू सुरो वा स्रुवाजस्तै हुन्, पाक्दाखेरिको अन्न चलाउने का यज्ञको ईक्षण क्रिया हो पकाउने पस्कने पात्रहरू द्रोणकलशजस्तै, अन्य पात्रहरू वायव्य पात्र स्वागतमा बिछ्याएका मृगको छालाहरू कृष्णाजिनजस्तै हुने गर्दछन् ।

## ७. अतिथि सत्कार

**ऋषि**- ब्रह्मा । **देवता**- अतिथि, विद्या । **छन्द**- विराट् पुरस्ताद् बृहती, साम्नी त्रिष्टुप् आसुरी अनुष्टुप्, साम्नी उष्णिक्, साम्नी बृहती, आर्ची अनुष्टुप्, पञ्चपदा विराट् पुरस्ताद् बृहती, आसुरी गायत्री, साम्नी अनुष्टुप्, त्रिपदार्ची त्रिष्टुप्, भुरिक साम्नी बृहती, त्रिपदार्ची पङ्क्ति ।

**यजमानब्राह्मणं वा एतदतिथिपतिः कुरुते । यदाहार्याणि प्रेक्षत इदं भूया३ इदा३मिति ॥१॥**
अतिथि सत्कारका निम्ति यो अधिक वा पर्याप्त हुन्छ भन्ने किसिमले दिन योग्य कुराहरूको ज निरीक्षण गर्दछन् त्यस्तो प्रक्रिया भनेको नै यजमानले ब्राह्मणलाई यज्ञमा गरेको व्यवहार मान्यता राख्ने खालको हुन्छ ।
**यदाह भूय उद्धरेति प्राणमेव तेन वर्षीयांसं कुरुते ॥२॥**
अतिथिका लागि मनग्गे पस्केर देऊ भन्ने खालको कुरो जसले गर्दछन्, तिनले आफ्नो प्राणलाई चिरस्थायी बनाउँछन् ।
**उप हरति हवींष्या सादयति ॥३॥**
जेजस्ता कुरा अतिथिकहाँ लगिन्छन्, त्यसबाट मानौँ हीनतालाई समाप्त गरिन्छ ।

**तेषामासन्नानामतिथिरात्मञ्जुहोति ॥४॥**
त्यसरी पस्किएका पदार्थहरूमध्येबाट केही पदार्थ अतिथिले आफूभित्र हवन गर्दछन् ।

**स्रुचा हस्तेन प्राणे यूपे स्रुक्कारेण वषट्कारेण ॥५॥**
हातरूपी सुरोले, प्राणरूपी यूपमा, भोजन ग्रहण गर्दा मुखबाट आएका सुरुप्प-सुरुप्प शब्दले वषट्कारको ध्वनि उच्चारण गर्दै आफूरूपी अग्निमा अन्नरूपी आहुति प्रदान गरिएको हो ।

**एते वै प्रियाश्चाप्रियाश्चर्त्विजः स्वर्गं लोकं गमयन्ति यदतिथयः ॥६॥**
यी अतिथि प्रिय वा अप्रिय जेजस्ता भए पनि आतिथ्य यज्ञका ऋत्विक्ले यजमानलाई स्वर्गलोकमा लिएर जान्छन् ।

**स य एवं विद्वान् न द्विषन्नश्नीयान्न द्विषतोऽन्नमश्नीयान्न मीमांसितस्य न मीमांसमानस्य ॥७॥**
जसले यस विषयमा राम्रो जानकारी लिएको छ, उसले अतिथिले कसैप्रति द्वेष राखेर भोजन गरेनन् भने, सन्देहास्पद आचरण गर्नेको भोजन नगरून् र सन्देह गर्नेका घरमा अन्न पनि ग्रहण नगरून् ।

**सर्वो वा एष जग्धपाप्मा यस्यान्नमश्नन्ति ॥८॥**
जसका घरमा अतिथिले भोजन गर्दछन्, उनका सबै खालका पाप र कमजोरीहरू सबै नष्ट हुने गर्दछन् ।

**सर्वो वा एषो ऽजग्धपाप्मा यस्यान्नं नाश्नन्ति ॥९॥**
जसका घरमा अतिथिहरूले भोजन गर्न मान्दैनन्, उनका सबै पापहरू जस्ताको तस्तै रहने गर्दछन् ।

**सर्वदा वा एष युक्तग्रावार्द्रपवित्रो वितताध्वर आहुतयज्ञक्रतुर्य उपहरति ॥१०॥**
जुन गृहस्थ अतिथिसेवामा आवश्यक सामग्री उनका सामने लिएर जाने गर्दछन्, उनीहरू सर्वदा सोमरस निकाल्ने ढुङ्गाले युक्त रसका आर्द्रताले पवित्र सोमयज्ञ गर्ने र उसलाई पूर्णता प्रदान गर्नेहरूजत्तिकै हुने गर्दछन् ।

**प्राजापत्यो वा एतस्य यज्ञो विततो य उपहरति ॥११॥**
जसले अतिथिके प्रति समर्पण गर्दछन्, उनीहरू मानौँ उनका प्राजापत्य यज्ञलाई विस्तार गर्ने खालका हुने गर्दछन् ।

**प्रजापतेर्वा एष विक्रमाननुविक्रमते य उपहरति ॥१२॥**
जसले अतिथिसत्कार गर्दछन् उनले प्रजापतिका पदचिह्नको अनुगमन गर्दछन् ।

**योऽतिथीनां स आहवनीयो यो वेश्मनि स गार्हपत्यो यस्मिन् पचन्ति स दक्षिणाग्निः ॥१३॥**
अतिथिलाई आह्वान गर्ने आहवनीय अग्नि हुन्, घरमा रहेका अग्नि नै गार्हपत्य अग्नि हुन् र अन्न पकाउने अग्नि नै दक्षिणाग्नि हुन् ।

## ८. अतिथि सत्कार

**ऋषि**- ब्रह्मा । **देवता**- अतिथि, विद्या । **छन्द**- त्रिपदा पिपीलिक मध्या गायत्री, साम्नी बृहती, पिपीलिक मध्या उष्णिक् ।

**इष्टं च वा एष पूर्तं च गृहाणामश्नाति यः पूर्वोऽतिथेरश्नाति ॥१॥**
जसले अतिथिभन्दा पहिले नै भोजन गर्दछन्, ती गृहस्थका सबै खालका इष्टकर्म र पूर्तफलहरू नै उनीहरूले खाएका हुन्छन् ।

**पयश्च वा एष रसं च गृहाणामश्नाति यः पूर्वोऽतिथेरश्नाति ॥२॥**
जसले अतिथिभन्दा पहिले नै भोजन गर्दछन्, उनीहरूले घरभित्रको दुध र रसलाई नै विनाश गर्दछन् ।

**उर्जां च वा एष स्फातिं च गृहाणामश्नाति यः पूर्वोऽतिथेरश्नाति ॥३॥**
जुन गृहस्थले अतिथिभन्दा पहिले नै भोजन गर्दछन्, उनले घरको अन्नबल नै विनाश गर्दछन् ।

**प्रजां च वा एष पशूंश्च गृहाणामश्नाति यः पूर्वोऽतिथेरश्नाति ॥४॥**

जसले अतिथिभन्दा पहिले नै भोजन गर्दछन्, ती गृहस्थले घरका कुटुम्ब र गाई आदि पशुलाई नै विनाश गर्ने गर्दछन् ।

**कीर्तिं च वा एष यशश्च गृहाणामश्नाति यः पूर्वोऽतिथेरश्नाति ॥५॥**

जसले अतिथिभन्दा पहिले नै भोजन गर्दछन्, ती गृहस्थले घरको कीर्ति र यशस्विता विनाश गर्ने गर्दछन् ।

**श्रियं च वा एष संविदं च गृहाणामश्नाति यः पूर्वोऽतिथेरश्नाति ॥६॥**

जसले अतिथिभन्दा पहिले नै भोजन गर्दछन्, ती गृहस्थले घरको श्री सौन्दर्य र सहमतिको भावनालाई नै विनाश गर्ने गर्दछन् ।

**एष वा अतिथिर्यच्छ्रोत्रियस्तस्मात् पूर्वो नाश्नीयात् ॥६॥**

जो श्रोत्रिय हुन्, उनी निश्चित रूपले अतिथि हुन्, त्यसो भएका कारणले नै उनीहरूभन्दा पहिले भोजन गर्नु उचित हुँदैन ।

**अशितावत्यतिथावश्नीयाद् यज्ञस्य सात्मत्वाय यज्ञस्याविच्छेदाय तद् व्रतम् ॥८॥**

अतिथिद्वारा भोजन ग्रहण गरिसकेपछि गृहस्थ स्वयंले भोजन गरोस् । यज्ञको पूर्णता र निर्विघ्नतापूर्वक समाप्ति गर्नका लागि गृहस्थीहरूद्वारा त्यस्तो व्रत निर्वाह गर्नु आवश्यक छ ।

**एतद् वा उ स्वादीयो यदधिगवं क्षीरं वा मांसं वा तदेव नाश्नीयात् ॥९॥**

गाईका दुधबाट उपलब्ध हुने र अन्य मांस आदिहरू केही पनि अतिथिले भन्दा पहिले गृहस्थले कहिल्यै नखाओस् ।

## ९. अतिथि सत्कार

**ऋषि-** ब्रह्मा । **देवता-** अतिथि, विद्या । **छन्द-** प्राजापत्या अनुष्टुप्, त्रिपदा गायत्री भुरिक् अनुष्टुप्, चतुष्पदा प्रस्तार पङ्क्ति ।

**स य एवं विद्वान् क्षीरमुपसिच्योपहरति ॥१॥**

यस विषयमा राम्रो जानकारी भएर जसले असल पात्रमा दुध ल्याउने गर्दछन् भने ... ।

**यावदग्निष्टोमेनेष्ट्वा सुसमृद्धेनावरुन्द्धे तावदेनेनाव रुन्द्धे ॥२॥**

तिनले आतिथ्य सत्कारबाट अग्निष्टोम यज्ञको यजन गर्दाको जस्तै श्रेष्ठ एवं समृद्ध फल प्राप्त गर्दछन् ।

**स य एवं विद्वान्त्सर्पिरुपसिच्योपहरति ॥३॥**

यस विषयमा राम्रो जानकारी भएर जसले असल पात्रमा घिउ ल्याउने गर्दछन् भने ... ।

**यावदतिरात्रेणेष्ट्वा सुसमृद्धेनावरुन्द्धे तावदेनेनाव रुन्द्धे ॥४॥**

तिनले आतिथ्य सत्कारबाट अतिरात्र यज्ञ गर्दाको जस्तै श्रेष्ठ एवं समृद्ध फल प्राप्त गर्दछन् ।

**स य एवं विद्वान् मधूपसिच्योपहरति ॥५॥**

यस विषयमा राम्रो जानकारी भएर जसले असल पात्रमा मह ल्याउने गर्दछन् भने ... ।

**यावत् सत्रसद्येनेष्ट्वा सुसमृद्धेनावरुन्द्धे तावदेनेनाव रुन्द्धे ॥६॥**

तिनले आतिथ्य सत्कारबाट सत्रसद्य नामको यज्ञ गर्दा पाउने जस्तै श्रेष्ठ एवं समृद्ध फल प्राप्त गर्दछन् ।

**स य एवं विद्वान् मांसमुपसिच्योपहरति ॥७॥**

यस विषयमा राम्रो जानकारी भएर जसले असल पात्रमा मांस ल्याउने गर्दछन् भने ... ।

**यावद् द्वादशाहेनेष्ट्वा सुसमृद्धेनावरुन्द्धे तावदेनेनाव रुन्द्धे ॥८॥**

तिनले आतिथ्य सत्कारबाट द्वादशाह यज्ञ गर्दा पाउने जस्तै श्रेष्ठ र समृद्ध फल प्राप्त गर्दछन्

**स य एवं विद्वानुदकमुपसिच्योपहरति ॥९॥**

यस विषयमा राम्रो जानकारी भएर जसले असल पात्रमा जल ल्याउने गर्दछन् भने ... ।

**प्रजानां प्रजननाय गच्छति प्रतिष्ठां प्रियः प्रजानां भवति य एवं विद्वानुदकमुपसिच्योपहरति ॥१०॥**

उनीहरू प्रजाका प्रिय हुन्छन् र प्रजा उत्पादन तथा तिनेको उन्नतिका लागि स्थायित्व प्राप्त गर्दछन् ।

## १०. अतिथि सत्कार

**ऋषि-** ब्रह्मा । **देवता-** अतिथि, विद्या । **छन्द-** साम्नी उष्णिक्, पुरउष्णिक्, साम्नी भुरिक् बृहती, साम्नी अनुष्टुप्, त्रिपदा निचृत् विषमा गायत्री, त्रिपदा विराट् विषमा गायत्री, त्रिपदा विराट् अनुष्टुप् ।

**तस्मा उषा हिङ्कृणोति सविता प्र स्तौति ॥१॥**

यस्तो आतिथ्य सत्कारका विषयमा जसले जानेका छन्, ती मानिसका लागि उषाले आनन्ददायी सन्देश दिन्छिन् र सवितादेवताले उनीहरूको प्रशंसा गर्दछन् ।

**बृहस्पतिरूर्जयोद् गायति त्वष्ट्य पुष्ट्या प्रति हरति विश्वे देवा निधनम् ॥२॥**

बृहस्पतिदेवताले अन्नरसले उत्पन्न बलले उनीहरूको गुणगान गर्दछन्, त्वष्टादेवताले पुष्टि प्रदान गर्दछन् र अन्य सबै देवताहरूले सोम परिसमाप्तिको वाक्यले उनीहरूको स्तुति गर्दछन् ।

**निधनं भूत्याः प्रजायाः पशूनां भवति य एवं वेद ॥३॥**

जसले यस किसिमको जानकारी प्राप्त गरेका छन्, उनीहरू सम्पत्ति, प्रजा र पशुका लागि आश्रय प्रदान गर्ने हुन्छन् ।

**तस्मा उद्यन्त्सूर्यो हिङ्कृणोति संगवः प्र स्तौति ॥४॥**

उदाएर आउँदै गरेका सूर्यले उनलाई आनन्दको सन्देश ल्याइदिन्छन् र रश्मिले युक्त सूर्यले उनीहरूको प्रशंसा पनि गर्दछन् ।

**मध्यन्दिन् उद्गायत्यपराह्णः प्रति हरत्यस्तंयन् निधनम् । निधनं भूत्याः प्रजायाः पशूनां भवति य एवं वेद ॥५॥**

सूर्यदेवताले उनीहरूका मृत्युलाई पनि विनाश गर्दछन् र मध्याह्नका समयमा उनको गुणगान गर्दछन् र अपराह्नका समयमा पुष्टि प्रदान गर्दछन् । जसले यस किसिमका कुराको जानकारी पाएका छन्, उनीहरू सम्पक्ति प्रजा र पशु उपलब्ध गर्न सक्ने खालका हुन्छन् ।

**तस्मा अभ्रो भवन् हिङ्कृणोति स्तनयन् प्र स्तौति ॥६॥**

आतिथ्य सत्कारका व्रतको जानकारी जससित छ, उनका लागि उत्पन्न हुने मेघले आनन्दको सन्देश प्रदान गर्दछन् र गर्जन गर्दै उनको स्तुति गाउँछन् ।

**विद्योतमानः प्रति हरति वर्षन्नुदगायत्युदगृह्णन् निधनम् । निधनं भूत्याः प्रजायाः पशूनां भवति य एवं वेद ॥७॥**

चम्कमान मेघले पुष्टि प्रदान गर्दछन्, बर्सँदै गुणगान गर्दछन् र उद्ग्रहण गर्दै पालन गर्दछन् । यसै गरी उनीहरू सम्पत्ति, प्रजा र पशुका लागि आश्रय प्रदान गर्न सक्ने हुन्छन् ।

**अतिथीन् प्रति पश्यति हिङ्कृणोत्यभि वदति प्र स्तौत्युदकं याचत्युद् गायति ॥८॥**

अतिथि सत्कारका विषयमा जानकारी भएकाहरू अतिथिलाई दर्शन गर्दै, अभिवादन गर्दै र स्तुति गर्दै आनन्द प्रकट गर्दछन् । त्यस अवस्थामा उनले जल माग्दा मानौँ गान गाएझैँ हुन्छ ।

**उप हरति प्रति हरत्युच्छिष्टं निधनम् ॥९॥**

भोजनलाई अतिथिका नजिक ल्याउँदाखेरि उनले यज्ञको दान ग्रहण गर्नेका रूपमा कार्य गरेका हुन्छन् । अतिथिले भोजन गरिसकेपछि बचेको भोजन त यज्ञको प्रसादसरह नै हुने गर्दछ ।

**निधनं भूत्याः प्रजायाः पशूनां भवति य एवं वेद ॥१०॥**

यस तथ्यलाई जसले बुझेको हुन्छ, उसले सम्पत्ति, प्रजा र पशुहरूलाई पालन गर्न सक्दछ ।

## ११. अतिथि सत्कार

**ऋषि**- ब्रह्मा । **देवता**- अतिथि, विद्या । **छन्द**- आसुरी गायत्री, साम्नी अनुष्टुप्, त्रिपदार्ची पङ्क्ति, एकपदा प्राजापत्या गायत्री, आर्ची बृहती, एकपदासुरी जगती, याजुषी त्रिष्टुप्, एकपदासुरी उष्णिक् ।

**यत् क्षत्तारं ह्वयत्या श्रावयत्येव तत् ॥१॥**

अभीष्ट कार्य गर्नका लागि जसले द्वारपाललाई बोलाउँछन् उनको बोली वेदको वचनसरह हुन्छ ।

**यत् प्रतिशृणोति प्रत्याश्रावयत्येव तत् ॥२॥**

बोलाएको सुन्नेले वेदध्वनि प्रतिश्राव गराएझैँ लाग्दछ ।

**यत् परिवेष्टारः पात्रहस्ताः पूर्वे चापरे च प्रपद्यन्ते चमसाध्वर्यव एव ते ॥३॥**

जब अतिथिका लागि पस्कन भनेर सुरुमै वा पछि पनि हातमा पात्र लिएर जान्छ, मानौँ त्यो यज्ञको चमस पात्र लिएको अध्वर्यु नै हो जस्तो हुन्छ ।

**तेषां न कश्चनाहोता ॥४॥**

यज्ञभन्दा बाहेक यी अतिथिहरूमा केही पनि हुँदैन ।

**यद् वा अतिथिपतिरतिथीन् परिविष्य गृहानुपोदैत्यवभृथमेव तदुपावैति ॥५॥**

जुन गृहस्थले अतिथिका लागि खाने कुरो भाग लगाइदिएर आफू फर्कन्छ, त्यस बेला उसले अवभृथ स्नान गरेर फिर्ता भएझैँ हुन्छ ।

**यत् सभागयति दक्षिणाः सभागयति यदनुतिष्ठत उदवस्यत्येव तत् ॥६॥**

जसले खाने कुराहरू छुट्टाछुट्टै पारेर भाग लगाइदिन्छन्, मानौँ उनले दक्षिणा भाग लगाएका हुन् । अतिथिका लागि अनुकूल भएर जो बसेका हुन्छन्, उनले मानौँ यज्ञको उदवसान गरेका हुन् ।

**स उपहूतः पृथिव्यां भक्षयत्युपहूतस्तस्मिन् यत् पृथिव्यां विश्वरूपम् ॥७॥**

पृथ्वीमा जति खालको रूपरङ्ग भएका अन्नहरू हुन्छन्, आदरपूर्वक आमन्त्रण गर्दाखेरि तिनै अन्न भोजनका रूपमा अतिथिले ग्रहण गर्दछन् ।

**स उपहूतोऽन्तरिक्षे भक्षयत्युपहूतस्तस्मिन् यदन्तरिक्षे विश्वरूपम् ॥८॥**

आदरपूर्वक आमन्त्रित गर्दाखेरि अन्तरिक्षमा जति किसिमका अन्न वा खाद्य सामग्री हुन्छन् अतिथिले ती सबैको भोजन ग्रहण गरेका हुन्छन् ।

**स उपहूतो दिवि भक्षयत्युपहूतस्तस्मिन् यद् दिवि विश्वरूपम् ॥९॥**

आदरपूर्वक आमन्त्रित गर्दाखेरि स्वर्गमा जति किसिमका अन्न वा खाद्य सामग्री हुन्छन् अतिथिले ती सबैको भोजन ग्रहण गरेका हुन्छन् ।

**स उपहूतो देवेषु भक्षयत्युपहूतस्तस्मिन् यद् देवेषु विश्वरूपम् ॥१०॥**

आदरपूर्वक आमन्त्रित गर्दाखेरि देवलोक वा देवताहरूमा जति किसिमका अन्न वा खाद्य सामग्री हुन्छन् अतिथिले ती सबैको भोजन ग्रहण गरेका हुन्छन् ।

**स उपहूतो लोकेषु भक्षयत्युपहूतस्तस्मिन् यल्लोकेषु विश्वरूपम् ॥११॥**

आदरपूर्वक आमन्त्रित गर्दाखेरि अन्य विभिन्न लोकहरूमा जति किसिमका अन्न वा खाद्य सामग्री हुन्छन् अतिथिले ती सबैको भोजन ग्रहण गरेका हुन्छन् ।

**स उपहूत उपहूतः ॥१२॥**

यस धर्तीमा आदरपूर्वक बोलाउने वा बोलाइनेहरू नै परलोकमा पनि बोलाउने वा बोलाइने हुन्छन् ।

**आप्नोतीमं लोकमाप्नोत्यमुम् ॥१३॥**

यस धर्तीमा आदरपूर्वक प्राप्त गरेका वा गराइएकाहरू नै परलोकमा पनि प्राप्त गरिने वा गराइने हुन्छन् ।

**ज्योतिष्मतो लोकाञ्जयति य एवं वेद ॥१४॥**
आतिथ्य सत्कारका व्रतको कुरो जसले जानेको हुन्छ, उनीहरू तेजस्वी भएर ज्योतिर्मय लोक प्राप्त गर्दछन् ।

## १२. गौ सूक्त

**ऋषि**- ब्रह्मा । **देवता**- गौ । **छन्द**- आर्ची बृहती, आर्ची उष्णिक्, आर्ची अनुष्टुप्, साम्नी बृहती, आसुरी गायत्री, त्रिपदा पिपीलिक मध्या निचृत् गायत्री, साम्नी गायत्री, पुर उष्णिक्, साम्नी उष्णिक्, एकपदासुरी जगती, एकपदासुरी पङ्क्ति, याजुषी जगती, आसुरी अनुष्टुप्, एकपदासुरी बृहती, साम्नी भुरिक् बृहती, साम्नी त्रिष्टुप् ।

**प्रजापतिश्च परमेष्ठी च शृङ्गे इन्द्रः शिरो अग्निर्ललाटं यमः कृकाटम् ॥१॥**
गाई अथवा वृषभका रूपमा यस विश्वलाई कल्पना गर्दा दुई सिङ प्रजापति र परमेष्ठी हुन् भने इन्द्रदेवता शिर, अग्नि निधार र यम गलमाला (घाँटीमा हुने छालाको लुर्को) हुन् ।

**सोमो राजा मस्तिष्को द्यौरुत्तरहनुः पृथिव्यधरहनुः ॥२॥**
राजा सोम यसका मस्तिष्क हुन्, द्युलोक माथिल्लो ओठ हो र पृथ्वी तल्लो ओठका रूपमा रहेका छन् ।

**विद्युज्जिह्वा मरुतो दन्ता रेवतीर्ग्रीवाः कृत्तिका स्कन्धा घर्मो वहः ॥३॥**
विद्युत् जिब्रो हो र मरुत्‌हरू दाँत, रेवती घाँटी, कृत्तिका काँध र उष्णता प्रदान गर्ने सूर्य वा गर्मीको महिनालाई जुरोका नजिकैको भागका रूपमा कल्पना गरिएको छ ।

**विश्वं वायुः स्वर्गो लोकः कृष्णद्रं विधरणी निवेष्यः ॥४॥**
समस्त संसारको वायु नै त्यसको प्राणरूप हो भने स्वर्गलोक, कृष्णद्र र विधरणी आदि यी धारक शक्तिले सम्पन्न ढाडको भाग हुन् ।

**श्येनः क्रोडो३न्तरिक्षं पाजस्यं१ बृहस्पतिः ककुद् बृहतीः कीकसाः ॥५॥**
श्येन उसको काखका रूपमा रहेको छ भने अन्तरिक्ष पेट, बृहस्पति जुरो र बृहती कुहिनोका रूपमा कल्पना गरिएका छन् ।

**देवानां पत्नीः पृष्टय उपसदः पर्शवः ॥६॥**
देवशक्तिहरू पिठ्युँको भाग हुन् भने उपसद् इष्टिहरू मांसपेशीका रूपमा कल्पना भएका छन् ।

**मित्रश्च वरुणश्चांसौ त्वष्टा चार्यमा च दोषणी महादेवो बाहू ॥७॥**
मित्र र वरुणदेवता दुवै काँध हुन्, त्वष्टा र अर्यमादेवता बाहुको माथ्लो भाग अर्थात् कुम हुन् र महादेव पाखुरा हुन् ।

**इन्द्राणी भसद् वायुः पुच्छं पवमानो बालाः ॥८॥**
इन्द्रशक्ति वा इन्द्रपत्नी कम्मरको गुह्य भाग हुन् वायु पुच्छर हुन् र पवमान वायु रौं हुन् ।

**ब्रह्म च क्षत्रं च श्रोणी बलमूरू ॥९॥**
ब्राह्मण र क्षत्रियहरू दुईतर्फका फिलाका शक्ति हुन् ।

**धाता च सविता चाष्ठीवन्तौ जङ्घा गन्धर्वा अप्सरसः कुष्ठिका अदितिः शफाः ॥१०॥**
धाता नामका धारक शक्तिले सम्पन्न देवता र सर्वप्रेरक सवितादेवता यी दुवै त्यस विश्वरूपी गाईका घुँडा हुन् भने गन्धर्वहरू त्यसका तिघ्रा हुन्, अप्सराहरू खुरभागको कुण्डिका हुन् र देवमाता अदिति त्यसका खुर हुन् ।

**चेतो हृदयं यकृन्मेधा व्रतं पुरीतत् ॥११॥**
चेतना त्यस विश्वरूपा गाईको हृदय हो र मेधा नै मानौँ त्यसको कलेजो हो भने व्रत नै त्यसका आन्द्रा हुन् ।

**क्षुत् कुक्षिरिरा वनिष्ठुः पर्वताः प्लाशयः ॥१२॥**
भोकका अधिष्ठाता क्षुत् नामका देवता त्यसका कोखा हुन् भने इरा नामको अन्न वा जल त्यसको

ठूलो आन्द्रो हो अनि पहाड उसका सनानतिना आन्द्रहरू हुन् ।

**क्रोधो वृक्कौ मन्युराण्डौ प्रजा शेपः ॥१३॥**

क्रोध उसका दुवै मिर्गौला र स्वस्थ क्रोध अर्थात् होस र जोस उसका अण्डकोश हुनाले प्रजा जन्माउने अङ्गका प्रतीक हुन् ।

**नदी सूत्री वर्षस्य पतय स्तना स्तनयित्नुरूधः ॥१४॥**

नदीहरू जन्म दिने सूत्र नाडी हुन्, वर्षापति मेघ स्तनका रूपमा रहेका छन् र गर्जन गर्ने मेघ उसको दुधले भरिएका थुनका रूपमा रहेका छन् ।

**विश्वव्यचाश्चर्मौषधयो लोमानि नक्षत्राणि रूपम् ॥१५॥**

सर्वव्यापक आकाश नै त्यसको चर्मभाग हो र औषधिहरू यसका रौँ अनि नक्षत्रहरू उसका विचित्र रूपहरू हुन् ।

**देवजना गुदा मनुष्या आन्त्राण्यत्रा उदरम् ॥१६॥**

देवशक्ति त्यसको गुदाको भाग हो र साधारण मानिसहरू त्यसका आँत हुन् र भोजन गर्ने अरू प्राणीहरू त्यसका पेट हुन् ।

**रक्षांसि लोहितमितरजना ऊबध्यम् ॥१७॥**

असुरहरू त्यसका रक्तभाग हुन् भने अन्य तिर्यक् योनी पशुप्राणीहरू त्यसको अपच भएको अन्नको भाग हो ।

**अभ्रं पीबो मज्जा निधनम् ॥१८॥**

मेदका रूपमा मेघ छ भने समस्त धनसम्पदाका रूपमा मज्जाभाग रहेको छ ।

**अग्निरासीन उत्थितोऽश्विना ॥१९॥**

अग्निदेवता त्यसको आसनस्थल हुन् भने दुवै अश्विनीकुमारहरू उभिएको अवस्था हुन् ।

**इन्द्रः प्राङ् तिष्ठन् दक्षिणा तिष्ठन् यमः ॥२०॥**

उसका पूर्व दिशातर्फ विराजमान इन्द्रदेवता हुन् भने दक्षिण दिशातर्फ रहने यमरूप हुन् ।

**प्रत्यङ् तिष्ठन् धातोदङ् तिष्ठन्त्सविता ॥२१॥**

उसका पश्चिमतर्फ विराजमान धाता हुन् भने उत्तरतर्फ सविताको स्वरूप उभिएको छ ।

**तृणानि प्राप्तः सोमो राजा ॥२२॥**

घाँस प्राप्त गरेका अवस्थामा यो विश्वरूपी वृषभ नै राजा सोम हो ।

**मित्र ईक्षमाण आवृत्त आनन्दः ॥२३**

सबै प्राणीहरूलाई कृपाका दृष्टिले हेर्ने गरेको यो मित्रका रूपमा रहेको र परावृत्त भएको हुनाले आनन्दको रूप नै हो ।

**युज्यमानो वैश्वदेवो युक्तः प्रजापतिर्विमुक्तः सर्वम् ॥२४॥**

जोत्ने समयमा समस्त देवताहरूको समष्टि रूप, जोतिसकेपछि प्रजापतिको रूप र बन्धनमुक्त भएपछि सर्वरूपमा यही रहेको हुन्छ ।

**एतद् वै विश्वरूपं सर्वरूपं गोरूपम् ॥२५॥**

यही विश्वरूपी परमात्माको विराट् रूप हो, यो नै सर्वरूप र गाई या वृषभका रूपमा रहेको छ ।

**उपैनं विश्वरूपाः सर्वरूपाः पशवस्तिष्ठन्ति य एवं वेद ॥२६॥**

जसले यस प्रजापतिका यस किसिमका विराट् रूपमा अवस्थित वृषभ या गाईलाई वास्तविक रूपमा जानेको छ, उसलाई विश्वरूप र सर्वरूप पशु उपलब्ध हुने गर्दछन् ।

## १३. यक्ष्मनिवारण सूक्त

**ऋषि**- भृग्वांगिरा । **देवता**- सर्वशीर्षामयाद्य । **छन्द**- अनुष्टुप्, अनुष्टुब्गर्भा ककुम्मती चतुष्पदोष्णिक्, विराट् अनुष्टुप्, विराट् पथ्या बृहती, पथ्यापङ्क्ति ।

**शीर्षक्तिं शीर्षामयं कर्णशूलं विलोहितम् । सर्वं शीर्षण्यं ते रोगं बहिर्निर्मन्त्रयामहे ॥१॥**

टाउको दुख्ने, कान दुख्ने र पहेँलिने खालका यी सबै टाउकोसम्बन्धी रोगहरूलाई तिमीबाट हामी पर गराउँछौँ ।

**कर्णाभ्यां ते कङ्कूषेभ्यः कर्णशूलं विसल्पकम् । सर्वं शीर्षण्यं ते रोगं बहिर्निर्मन्त्रयामहे ॥२॥**

तिम्रा कान र कानको भित्री भागमा विशेष रूपले दुःख दिने विसल्पक नामको रोगलाई हामी हटाउँछौँ र सबै शीर्षरोगहरूलाई तिमीदेखि हामी पर पुऱ्याउँछौँ ।

**यस्य हेतोः प्रच्यवते यक्ष्मः कर्णत आस्यतः । सर्वं शीर्षण्यं ते रोगं बहिर्निर्मन्त्रयामहे ॥३॥**

जसका कारणले गर्दा यक्ष्मा रोग कान र मुखमा देखिन थाल्दछ, ती सबै शीर्ष रोगहरूलाई हामी तिमीबाट बाहिर निकालिदिन्छौँ ।

**यः कृणोति प्रमोतमन्धं कृणोति पूरुषम् । सर्वं शीर्षण्यं ते रोगं बहिर्निर्मन्त्रयामहे ॥४॥**

जुन रोगले मानिसलाई बहिरो र अन्धो बनाइदिन्छ, ती सबै ठूला रोगहरूलाई हामी तिमीदेखि पर पुऱ्याउँछौँ ।

**अङ्गभेदमङ्गज्वरं विश्वाङ्ग्यं विसल्पकम् । सर्वं शीर्षण्यं ते रोगं बहिर्निर्मन्त्रयामहे ॥५॥**

अङ्गभङ्ग गर्ने, ज्वरो आउने, जिउ दुख्ने आदि लक्षण भएको विश्वाङ्ग्य नामको रोग र शिरका सबै रोगहरूलाई हामी तिमीदेखि पर हटाउँछौँ ।

**यस्य भीमः प्रतीकाश उद्वेपयति पूरुषम् । तक्मानं विश्वशारदं बहिर्निर्मन्त्रयामहे ॥६॥**

जसका भयङ्कर उद्वेगले मानिसलाई नै कम्प गराउँछ, त्यस्तो शरत्कालीन ज्वरोलाई हामी तिमीबाट बाहिर निकाल्दछौँ ।

**य ऊरू अनुसर्पत्यथो एति गवीनिके । यक्ष्मं ते अन्तरङ्गेभ्यो बहिर्निर्मन्त्रयामहे ॥७॥**

जुन रोग तिघ्रातिर बढ्दै आउँछ र गवीनिका नामका नाडीमा पुग्दछ, त्यस यक्ष्मा नामका रोगलाई तिम्रा भित्री अङ्गबाट हामी बाहिर निकाल्दछौँ ।

**यदि कामादपकामाद्धृदयाज्जायते परि । हृदो बलासमङ्गेभ्यो बहिर्निर्मन्त्रयामहे ॥८॥**

मनका रहरले वा रहर नगरीकनै पनि जो हृदयका नजिकै उत्पन्न हुने गर्दछ, त्यस्तो कफलाई हृदय र अन्य अङ्गबाट हामी बाहिर निकाल्दछौँ ।

**हरिमाणं ते अङ्गेभ्योऽप्वामन्तरोदरात् । यक्ष्मोधामन्तरात्मनो बहिर्निर्मन्त्रयामहे ॥९॥**

हामी तिम्रो अङ्गबाट रक्तहीन गराउने हरिमा नामको रोगलाई, पेटभित्र पानी जम्मा हुने जलोदर ...लाई र शरीरका भित्री भागमा रहेका यक्ष्मा रोगलाई धारण गर्ने रोगको गुँड नै बाहिर निकाल्दछौँ ।

**आसो बलासो भवतु मुत्रं भवत्वामयत् । यक्ष्माणां सर्वेषां विषं निरवोचमहं त्वत् ॥१०॥**

शरीरबाट कफ बाहिर आओस्, आमदोष मूत्रका रूपमा बाहिर आओस् । सबै खालाका यक्ष्मा ...का विषलाई मन्त्रका सामर्थ्यले हामी बाहिर निकाल्दछौँ ।

**बहिर्बिलं निर्द्रवतु काहाबाहं तवोदरात् । यक्ष्माणां सर्वेषां विष निरवोचमहं त्वत् ॥११॥**

...क्याक् पार्ने कारबाह नामको रोग तिम्रा पेटबाट पग्लिएर बाहिर आओस् । सबै खालका ... रोगका विष र विकृतिहरूलाई हामी मन्त्रको सामर्थ्यले तिम्रो शरीरबाट बाहिर निकाल्दछौँ ।

**उदरात् ते क्लोम्नो नाभ्या हृदयादधि । यक्ष्माणां सर्वेषां विष निरवोचमहं त्वत् ॥१२॥**

... पेटको क्लोम, नाभी र हृदयबाट हामी सबै खालका रोगका विषरूपी विकारहरूलाई ...बाट बाहिर निकाल्दछौँ ।

**याः सीमानं विरुजन्ति मूर्धानं प्रत्यर्षणीः । अहिंसन्तीरनामया निर्द्रवन्तु बहिर्बिलम् ॥१३॥**

सीमा अथवा जोर्नीभागलाई दुखाउने र शिरसम्म बढ्दै जाने गरेका जुन रोगहरू हुन्छन् । ती रोगहरूबाट रोगीलाई कष्ट नहुनका लागि र तिनको विष शरीरका छिद्रहरूबाट तरल पदार्थका रूपमा बाहिर निस्केर जाओस् ।

**या हृदयमुपर्षन्त्यनुतन्वन्ति कीकसाः । अहिंसन्तीरनामया निर्द्रवन्तु बहिर्बिलम् ॥१४॥**

जो हृयद, हँसुली, घाँटी र किकस नामको हड्डीसम्म फैलने हृदयक्षेत्रको रोग हुन् ती सबै दुःख दिन नसक्ने होऊन् र दोष र कष्टरहित बनेर तिनीहरू सबै शरीरका छिद्रहरूबाट तरल पदार्थका रूपमा बाहिर निस्केर जाऊन् ।

**याः पार्श्वे उपर्षन्त्यनुनिक्षन्ति पृष्टीः । अहिंसन्तीरनामया निर्द्रवन्तु बहिर्बिलम् ॥१५॥**

हृदयमा हुने पार्श्वभागका मांसपेशी र पिठ्युँसम्म फैलिएका जुन अस्थिहरू छन्, ती रोगरहित होऊन् । त्यहाँ कुनै पनि रोगहरू मारक नबनेर तिनमा रहेको रोगाणु शरीरका छिद्रहरूबाट तरल रूपमा बग्दै बाहिर जाओस् ।

**यास्तिरश्चीरुपर्षन्त्यर्षणीर्वक्षणासु ते । अहिंसन्तीरनामया निर्द्रवन्तु बहिर्बिलम् ॥१६॥**

तेर्छो गएर जुन हड्डीहरू मांसपेशीमा प्रवेश गरेका छन्, तिनीहरू पनि रोगरहित होऊन् । त्यहाँ कुनै पनि रोगहरू मारक नबनेर तिनमा रहेको रोगाणु शरीरका छिद्रहरूबाट तरल रूपमा बग्दै बाहिर जाओस् ।

**या गुदा अनुसर्पन्त्यान्त्राणि मोहयन्ति च । अहिंसन्तीरनामया निर्द्रवन्तु बहिर्बिलम् ॥१७॥**

गुदाभागसम्म फैलिँदै जुन हड्डीहरूले आँतलाई अवरुद्ध गर्दछन्, तिनमा रोग रहेर कष्ट दिन नसकून् । तिनीहरू कष्ट दिने रोगरहित होऊन् र भएका रोगहरू पनि शरीरका छिद्रबाट बाहिर निस्कून् ।

**या मज्ज्ञो निर्धयन्ति परूंषि विरुजन्ति च । अहिंसन्तीरनामया निर्द्रवन्तु बहिर्बिलम् ॥१८॥**

मज्जाभागलाई जुन हड्डीका रोगले रक्तहीन गराउँछ र जोर्नीहरूमा दुखाउने गर्दछ, त्यस्ता रोगको कारण सबै कष्ट दिन नसक्ने भएर शरीरका छिद्रहरूबाट बाहिर निस्केर जाऊन् ।

**ये अङ्गानि मदयन्ति यक्ष्मासो रोपणास्तव । यक्ष्माणां सर्वेषां विषं निरवोचमहं त्वत् ॥१९॥**

यक्ष्मा आदि रोगलाई हटाउन सक्ने र शरीरका अङ्गमा मांस वृद्धि गराउने जुन औषधिहरूले तिम्रा अङ्गलाई आनन्दित गर्दछन्, उनबाट यक्ष्मा रोगको विषविकृति सबै हामी तिमीबाट पर हटाइदिन्छौँ ।

**विसल्पस्य विद्रधस्य वातीकारस्य वालजेः । यक्ष्माणां सर्वेषां विषं निरवोचमहं त्वत् ॥२०॥**

विसल्प अर्थात् दुखाइ र विद्रध अर्थात् सुन्निने कारणले गर्दा दुःखदायी बनेको वातीकार नामको वातरोग, अलजी आदि विभिन्न नामका रोगहरूका विषलाई हामी तिम्रा शरीरबाट मन्त्रको प्रयोगले पर हटाउने गर्दछौँ ।

**पादाभ्यां ते जानुभ्यां श्रोणिभ्यां परि भंससः । अनूकादर्षणीरुष्णिहाभ्यः शीर्ष्णो रोगमनीनशम् ॥२१॥**

तिम्रा गोडा, घुँडा, कुर्कुच्चा, कम्मर, गोप्य भाग, ढाड, गर्धन आदि सबैतिरका नसाहरू र शिरमा फैलिएको तिम्रो दुखाइलाई हामीले विनाश पारिदिसकेका छौँ ।

**सं ते शीर्ष्णः कपालानि हृदयस्य च यो विधुः । उद्यन्नादित्य रश्मिभिः शीर्ष्णो रोगमनीनशोङ्गभेदमशीशमः ॥२२॥**

सूर्यदेवता तिम्रो शिरमा उदाउनासाथ उनका किरणले तिम्रो रोग विनाश गरिदिएका छन् र चन्द्रदेवताले तिम्रा निधारको भाग र हृदयका अन्य अङ्गका भेदक रोगहरूलाई शान्त गराउँछन् ।

## १४. आत्मा सूक्त

**ऋषि**- ब्रह्मा । **देवता**- वाम, आदित्य, अध्यात्म । **छन्द**- त्रिष्टुप्, जगती ।

**अस्य वामस्य पलितस्य होतुस्तस्य भ्राता मध्यमो अस्त्यश्नः । तृतीयो भ्राता घृतपृष्ठो अस्यात्रापश्यं विश्पतिं सप्तपुत्रम् ॥१॥**

यस सुन्दर संसारका पालक एवं होता सूर्यदेवतालाई हामीले उनका सात पुत्रहरूका साथमा देखेका छौँ । यी सूर्यदेवताका मध्यम भाइका रूपमा सर्वव्यापी अन्तरिक्षनिवासी वायुदेवता रहेका छन् । यिनका तेस्रो भाइ तेजस्वी पीठ भएका अग्निदेवता हुन् ।

**सप्त युञ्जन्ति रथमेकचक्रमेको अश्वो वहति सप्तनामा । त्रिनाभि चक्रमजरमनर्वं यत्रेमा विश्वा भुवनाधि तस्थुः ॥२॥**

एउटा चक्र भएका रथसित यी सातै वटा आबद्ध रहेका छन् । सात नामरङ्कालै एक अश्व भएर एकै पाङ्ग्रो चलाएका छन् । द्युलोक, अन्तरिक्ष र पृथ्वीका रूपमा रहेका तीन नाभीकेन्द्ररूपी धुराले युक्त भएको यो कालचक्र निरन्तर रूपमा गतिशील र अविनाशी हुनाले कहिल्यै थाक्दैन । यसै चक्रभित्र समस्त लोक नै अटाएको छ ।

**इमं रथमधि ये सप्त तस्थुः सप्तचक्रं सप्त वहन्त्यश्वाः । सप्त स्वसारो अभि सं नवन्त यत्र गवां निहिता सप्त नामा ॥३॥**

यी सूर्यदेवताको पोषण चक्रसित सात खालका किरण वा कालका सात वटा विभाजनहरू आबद्ध रहेका छन् । यसै सातले चक्र वा अश्वका रूपमा रहेर यस रथलाई चलाउने गरेको छ । जहाँ वाणीरूपी गाईमा सात नाम वा सात स्वर लुकेका हुन्छन्, त्यहाँ सात दिदीबहिनीका रूपमा स्तुतिहरूले यिनको वन्दना गर्दछन् ।

**को ददर्श प्रथमं जायमानमस्थन्वन्तं यदनस्था बिभर्ति । भूम्या असुरसृगात्मा क्वस्वित् को विद्वांसमुप गात् प्रष्टुमेतत् ॥४॥**

जो हाडमासुको शरीर नभए पनि हाडमासुले बनेको शरीर धारण गर्ने प्राणीको पोषण गर्नमा समर्थ ती स्वयंभूलाई कसले देखेको छ ? यस भूमिमा प्राण, रक्त र आत्मा कहाँबाट आएका हुन् ? यस सम्बन्धमा सोधपुछ गर्नका लागि कोसँग को जाने गर्दछ ?

**इह ब्रवीतु य ईमङ्ग वेदास्य वामस्य निहितं पदं वेः । शीर्ष्णः क्षीरं दुह्रते गावो अस्य वव्रिं वसाना उदकं पदापुः ॥५॥**

जसले यी सुन्दर र गतिमान सूर्यको उत्पत्तिका विषयमा सबै रहस्य जानेका छन्, उनले त्यस गुप्त रहस्यलाई यहाँ आएर स्पष्ट गर्दै यी सूर्यका सर्वोत्तम गौरूपी किरणले पानीलाई दोहन गर्दछन् र बर्साउँछन् भनून् । उनै सूर्यका किरणले ग्रीष्मकालमा तेजस्वी बनेर हाम्रो गोडाभन्दा तल रहेका जमिनको पानी सुकाउने गर्दछ ।

**पाकः पृच्छामि मनसाविजानन् देवानामेना निहिता पदानि । वत्से बष्कयेऽधि सप्त तन्तून् वि तत्निरे कवय ओतवा उ ॥६॥**

हामी अच्कल्टो बुद्धि भएकाहरू यी देवताको गोप्य पदका सम्बन्धमा जान्नका लागि मन लगाएर सोध्ने गर्दछौँ । गाईको सुन्दर युवा बाछो अर्थात् बहरका रूपमा रहेका यी सूर्यले विज्ञ आदि देवताहरूका लागि आफ्ना सात किसिमका तन्तुहरू कसरी फैलाउने गर्दछन् ?

**अचिकित्वांश्चिकितुषश्चिदत्र कवीन् पृच्छामि विद्मनो न विद्वान् । वि यस्तस्तम्भ षडिमा रजांस्यजस्य रूपे किमपि स्विदेकम् ॥७॥**

जसले यी छ वटै लोकहरूलाई स्थिर गराए, ती अजन्मा प्रजापतिरूपी तत्त्व कस्ता छन् ? उनको स्वरूप कस्तो छ ? यस किसिमका तत्त्वज्ञानसित अपरिचित हामीहरू सबै जानकारी पाउनका लागि तत्त्ववेत्ताहरूसित सोध्ने गर्दछौँ ।

**माता पितरमृत आ बभाज धीत्यग्रे मनसा सं हि जग्मे । सा विभत्सुर्गर्भरसा निविद्धा नमस्वन्त इदुपवाकमीयुः ॥८॥**

माता पृथ्वीले ऋत नामका सत्ययज्ञका लागि पिता द्युलोकलाई सेवन वा सेवा गरिन् । क्रियाभन्दा पहिले मनले नै उनीहरूको सम्पर्क भयो । माताको उर्वरता धारण गरेका गर्भमा रसले सेचन भयो । त्यसपछि गर्भलाई विकसित गराउनका लागि नमनपूर्वक वा नम्र किसिमका अथवा नमस्कारसहितको वा आदरपूर्ण वचन वा बोलीव्यवहारको आदानप्रदान भयो ।

**युक्ता मातासीद् धुरि दक्षिणाया अतिष्ठद् गर्भो वृजनीष्वन्तः । अमीमेद् वत्सो अनु गामपश्यद् विश्वरूप्यं त्रिषु योजनेषु ॥९॥**

समर्थ सूर्यदेवताको धारण क्षमतामा नै माता पृथ्वी पनि आधारित छन् । गर्भरूपी उर्वरशक्तिका रूपमा प्राणपर्जन्य वा झरीवर्षा गमनशील वायु वा बादलका बीचमा रहने गरेको छ । बाछोका रूपमा कल्पना गरिएको बादल गाईरूपी किरणलाई देखेर कराउँदै पछि लाग्दछ । त्यसपछि तीनै वटाको संयोगले विश्वलाई रूपवान् बनाउँछ ।

**तिस्रो मातृस्त्रीन् पितॄन् बिभ्रदेक ऊर्ध्वस्तस्थौ नेमव ग्लापयन्त । मन्त्रयन्ते दिवो अमुष्य पृष्ठे विश्वविदो वाचमविश्वविन्नाम् ॥१०॥**

यी स्रष्टा प्रजापति एक्लै नै पृथ्वी, अन्तरिक्ष र द्युलोकरूपी तीन माता अनि अग्नि, वायु र सूर्यरूपी तीन पिताको भरणपोषण गर्दै सबैभन्दा पर रहेका छन् । यिनलाई थकाइ लाग्दैन । विश्वको रहस्य जानेर पनि अखिल विश्वभन्दा बाहिर रहने प्रजापतिका वाणीरूपी शक्तिका सम्बन्धमा यिनले द्युलोकका पृष्ठ भागमा विचार गर्दछन् ।

**पञ्चारे चक्रे परिवर्तमाने यस्मिन्नातस्थुर्भुवनानि विश्वा । तस्य नाक्षस्तप्यते भूरिभारः सनादेव न च्छिद्यते सनाभिः ॥११॥**

अयन, महिना आदि पाँच अर भएका यस कालचक्रले युक्त रथमा समस्त लोकहरू नै विद्यमान छन् । यी धेरै लोकहरूको भारी बोके पनि यस चक्रको अक्ष न तात्दछ, न भाँचिन्छ ।

**पञ्चपादं पितरं द्वादशाकृतिं दिव आहुः परे अर्धे पुरीषिणाम् । अथेमे अन्य उपरे विचक्षणे सप्तचक्रे षडर आहुरर्पितम् ॥१२॥**

अयन, महिना, ऋतु, पक्ष, दिन र रातरूपी पाँच गोडा भएको, महिनारूपी बाह्र आकृतिले युक्त, र जल बर्साउने पिता नै सूर्यका रूपमा दिव्यलोकका आधा भागमा रहेका छन् भन्ने मान्यता रहेको छ । अन्य विद्वान्हरूका अनुसार यी सूर्य नै ऋतुरूपी छ वटा अर र अयन, मास, ऋतु, पक्ष, दिन, रात एवं मुहूर्त गरी सात वटा चक्र भएको रथमा आरुढ भएका छन् ।

**द्वादशारं नहि तज्जराय वर्वर्ति चक्रं परि द्यामृतस्य । आ पुत्रा अग्ने मिथुनासो अत्र सप्त शतानि विंशतिश्च तस्थुः ॥१३॥**

यी ऋतयज्ञजस्ता सृष्टिका सञ्चालक सूर्यका बाह्र वटा अररूपी राशिहरू भएको चक्र द्युलोकका चारैतिर घुमिरहेको हुन्छ । यो चक्र कहिल्यै रोकिने वा पुरानो हुने खालको छैन । हे अग्निदेवता ! संयुक्त रूपमा नै सात सय बीस पुत्रहरू यहाँ रहेका छन् ।

**सनेमि चक्रमजरं वि वावृत उत्तानायां दश युक्ता वहन्ति । सूर्यस्य चक्षू रजसैत्यावृत यस्मिन्नातस्थुर्भुवनानि विश्वा ॥१४॥**

धुराका नियन्त्रणले युक्त भएको, कहिल्यै क्षय नहुने यो सृष्टिचक्र सधैं नै चलिरहेको हुन्छ । अ... व्यापक प्रकृति उत्पन्न भएकाले यसलाई पाँच वटा प्राण र पाँच वटा उपप्राणरूपी दस वटा घोडा... चलाउने गरेका छन् । सूर्यरूपी नेत्रको प्रकाश जलले छेकिएर गतिमान् हुने गर्दछ । त्यसैमा नै ... सारा लोक विद्यमान रहेको छ ।

**स्त्रियः सतीस्ताँ उ मे पुंस आहुः पश्यदक्षण्वान् न वि चेतदन्धः । कविर्यः पुत्रः स ईमा चिकेत यस्ता विजानात् म पितुष्पितासत् ॥१५॥**

सूर्यको यो किरण स्त्री हो र पनि पुरुषले झैँ गर्भधारण गराउनमा समर्थ छ । यो तथ्य सूक्ष्म दृष्टि भएकाले नै बुझ्न सक्दछन् । दूरदर्शी पुत्रले नै यस खालको कुरो अनुभव गर्द सक्दछ । जसले यस विषयमा जानेको हुन्छ ऊ पिताको पनि पिता अर्थात् सर्वस्रष्टाका विषयमा पनि जान्ने हुन्छ ।

**साकंजानां सप्तथमाहुरेकजं षडिद्यमा ऋषयो देवजा इति । तेषामिष्यनि विहितानि धामश स्थात्रे रेजन्ते विकृतानि रूपशः ॥१६॥**

एकै साथमा जन्मेका, जोडैं बनेर रहने गरेका, छैटौँ र सातौँ यी सबै एउटै कालचक्रमा उत्पन्न भएका हुन् । यी देवत्वबाट उत्पन्न भएका ऋषि नै हुन् । आफ्ना बदलिएका सबै रूपहरूमा, आआफ्ना इष्टहरूमा, आआफ्ना धामहरूमा रहेर उनीहरू सक्रियतापूर्वक गमन गर्दछन् ।

**अवः परेण पर एनावरेण पदा वत्सं बिभ्रती गौरुदस्थात् । सा कद्रीची कं स्विदर्धं परागात् क्व स्वित् सूते नहि यूथे अस्मिन् ॥१७॥**

गाईरूपी किरणहरू द्युलोकबाट तल्लोतर्फ र यस पृथ्वीभन्दा माथितर्फ निरन्तर गतिमान रहेका छन् । बाछारूपी जीवनतत्त्वलाई तिनले धारण गरेर कुन लक्ष्यमा जाँदै छन् ? यी कुन आधा भागबाट निस्केर जन्माउँछन् ? यस समूहका माझमा त जन्माउँदैनन् ?

**अवः परेण पितरं यो अस्य वेदावः परेण पर एनावरेण । कवीयमानः क इह प्र वोचद् देवं मनः कुतो अधि प्रजातम् ॥१८॥**

जो द्युलोकभन्दा तल यस पृथ्वीका पिता सूर्यदेवता तथा पृथ्वीभन्दा माथि रहेका अग्निदेवतालाई जान्दछन्, पक्का पनि उनीहरू नै विद्वान् हुन् । यो दिव्यताले छोपिएको मन कहाँबाट उत्पन्न भयो होला ? यस रहस्यलाई जानकारी गराउने ज्ञानी को छ होला ? उसले यहाँ आएर हामीलाई बताओस् ।

**ये अर्वाञ्चस्ताँ उ पराच आहुर्ये पराञ्चस्ताँ उ अर्वाच आहुः । इन्द्रश्च या चक्रथुः सोम तानि धुरा न युक्ता रजसो वहन्ति ॥१९॥**

यस गतिशील विश्वमा नजिकिँदै आउनेलाई पर जाँदै गरेको पनि भन्न सकिन्छ वा अनुभव गर्न सकिन्छ र पर जाँदै गरेकालाई नजिकिँदै आएको पनि भन्न सकिन्छ । हे सोमदेवता ! तिमी र इन्द्रदेवताले जुन चक्र चलाएका छौ, त्यो धुराले जोडिएको हुनाले सबै लोकहरूलाई नै वहन गर्दछ ।

**द्वा सुपर्णा सयुजा सखाया समानं वृक्षं परि षस्वजाते । तयोरन्यः पिप्पलं स्वाद्वत्त्यनश्नन्नन्यो अभि चाकशीति ॥२०॥**

साथसाथै रहने गरेका दुई वटा सुन्दर पक्षीहरू एउटै वृक्षमा बसेका छन् । तिनीमध्ये एउटाले स्वादिष्ट फल खाने गर्दछ र अर्को त्यसलाई नखाईकन केवल हेरेर मात्रै बसेको हुन्छ । यी दुई पक्षी जीवात्मा र परमात्मा हुन् । भोग गर्ने जीवात्मा हो र तटस्थ साक्षी बनेर रहने परमात्मा हो ।

**यस्मिन् वृक्षे मध्वदः सुपर्णा निविशन्ते सुवते चाधि विश्वे । तस्य यदाहुः पिप्पलं स्वाद्वग्रे तन्नोन्नशद्यः पितरं न वेद ॥२१॥**

यस संसाररूपी वृक्षमा प्राणको रस पान गर्ने जीवात्माहरू नै रहेका छन् । जो प्रज्ञाको वृद्धि गर्नमा समर्थ हुन्छ, ऊ वृक्षमाथि मधुर फल लागेका भए पनि तिनलाई र परमात्मारूपी पितालाई जान्दैनन्, उनले ती मधुर सत्कर्मरूपी फलको आनन्द लिन पाउँदैनन् ।

**यत्रा सुपर्णा अमृतस्य भक्षमनिमेषं विदथाभिस्वरन्ति । एना विश्वस्य भुवनस्य गोपाः स मा धीरः पाकमत्रा विवेश ॥२२॥**

यस प्रकृतिरूपी वृक्षमा बसेका संसारमा लिप्त रहेका मरणशील जीवात्माहरू सुखदुःखरूपी फललाई भोग गर्दै आफ्नै शब्दले परामात्माको स्तुति गर्दछन् । यी लोकका स्वामी संरक्षक

परमात्मा अज्ञानले भरिपूर्ण हामी जीवात्माभित्र पनि विद्यमान छन् ।

## १५. आत्मा सूक्त

**ऋषि**- ब्रह्मा । **देवता**- गौ, विराट्, अध्यात्म, मित्रावरुण । **छन्द**- त्रिष्टुप्, जगती, भुरिक त्रिष्टुप्, पञ्चपदातिशक्वरी, चतुष्पदा पुरस्कृति भुरिक् अतिजगती ।

**यद् गायत्रे अधि गायत्रमाहितं त्रैष्टुभं वा त्रैष्टुभान्निरतक्षत । यद्वा जगज्जगत्याहितं पदं य इत् तद् विदुस्ते अमृतत्वमानशुः ॥१॥**

पृथ्वीमा गायत्री, अन्तरिक्षमा त्रिष्टुप् र आकाशमा जगती छन्दलाई स्थापित गर्नेहरूलाई जसले जानेको छ, उसले अमरत्व प्राप्त गर्दछ ।

**गायत्रेण प्रति मिमीते अर्कमर्केण साम त्रैष्टुभेन वाकम् । वाकेन वाकं द्विपदा चतुष्पदाक्षरेण मिमते सप्त वाणीः ॥२॥**

परमात्माले गायत्री छन्दद्वारा प्राणको रचना गरे, ऋचाहरूका समूहले सामवेद बनाए, त्रिष्टुप् छन्दले यजुर्वेदका वाक्यहरूको रचना गरे र दुई पद तथा चार पद भएका अक्षरहरूले सात किसिमका छन्दमय वाणीहरू उत्पन्न भए ।

**जगता सिन्धुं दिव्यस्कभायद् रथंतरे सूर्यं पर्यपश्यत् । गायत्रस्य समिधस्तिस्र आहस्ततो मह्ना प्र रिरिचे महित्वा ॥३॥**

गतिमान् सूर्यदेवताद्वारा प्रजापतिल द्युलोकमा जल स्थपित गराए । वर्षाका माध्यमबाट जल, सूर्यदेवता र पृथ्वी संयुक्त हुने गर्दछन्, त्यस बेला सूर्य र द्युलोकमा सन्निहित प्राण, जलको वर्षाद्वारा यस पृथ्वीमा प्रकट हुने गर्दछ । गायत्रीका तीन पाउ अग्नि, विद्युत् र सूर्य हुन् । उनै प्रजापतिका तेजस्विताले नै यी तीन पाऊ बलशाली हुने गर्दछन् भन्ने गरिएको छ ।

**उप ह्वये सुदुघां धेनुमेतां सुहस्तो गोधुगुत दोहदेनाम् । श्रेष्ठं सवं सविता साविषन्नोऽभीद्धो घर्मस्तदु षु प्र वोचत् ॥४॥**

सुखरूपी दुध प्रदान गर्ने गाईरूपी प्रकृतिप्रवाहलाई हामी आह्वान गर्दछौँ । यस गाईको दुधरूपी श्रेष्ठ प्राण हामीलाई प्राप्त होस् । तपस्वी एवं तेजस्वी जीवन्त साधकले नै यसलाई ग्रहण गर्न सक्छन् भन्ने गरेको पाइन्छ ।

**हिङ्कृण्वती वसुपत्नी वसूनां वत्समिच्छन्ती मनसाभ्यागात् । दुहामश्विभ्यां पयो अघ्न्येयं सा वर्धतां महते सौभगाय ॥५॥**

कहिल्यै पनि वध नगर्न योग्य गाईले मानिसका लागि अन्न, दुध घिउ आदि ऐश्वर्य प्रदान गर्ने कामनाले आफ्ना बाछालाई मनैदेखि स्नेहले सम्झँदै कराउँदै बाछाका छेउमा आउने गर्दछ । त्यस गाईले मानिसका समुदायको महान् सौभाग्यलाई बढाउँदै प्रचुर मात्रामा दुध प्रदान गर्दछ ।

**गौरमीमेदभि वत्सं मिषन्तं मूर्धानं हिङ्ङकृणोन्मातवा उ । सृक्वाणं घर्ममभि वावशाना मिमाति मायुं पयते पयोभिः ॥६॥**

स्नेहपूर्वक आँखा बन्द गरेका त्यस गाईले बाछाका छेउमा गएर कराउँछ । बाछाको शिरलाई चाट्नका लागि स्नेहपूर्वक कराउँछ । त्यसका मुखका नजिकै आफ्नो दुधले भरिएको थुन ल्याउँछ र कराउँछ । त्यसले दुध खुवाउँदै प्रेमपूर्वक शब्द निकाल्दै बाछालाई सन्तुष्ट गराउँछ ।

**अयं स शिङ्क्ते येन गौरभीवृता मिमाति मायुं ध्वसनावधि श्रिता । सा चित्तिभिर्नि हि चकार मर्त्यान् विद्युद्भवन्ती प्रति वव्रिमौहत ॥७॥**

बाछो गाईका चारैतिर घुम्दै शब्द नै ननिकालीकन आफ्नो कुरो अभिव्यक्त गर्दछ । गाई कराउँदै आफ्नो भावनाभरिको चेष्टाले मानिसलाई लज्जित गराउँछ । गाईले उज्ज्वल दुध उत्पन्न गर्न आफ्नो भाव प्रकाशित गर्दछ ।

**अनच्छये तुरगातु जीवमेजद् ध्रुवं मध्य आ पस्त्यानाम् । जीवो मृतस्य चरति स्वधाभिरमर्त्यो मर्त्येना सयोनिः ॥८॥**

श्वासप्रश्वासमा आफ्नो अस्तित्त्व दर्साउने चञ्चल प्राणले जब शरीरलाई छोडेर जान्छ, अनि त्यस बेला यो शरीर निश्चल भएर जहाँको तहीँ अलपत्र पर्दछ । मरणशील शरीरका साथमा रहेको आत्मा भने अविनाशी नै छ । त्यसो हुनाले अविनाशी आत्माले आफूलाई धारण गर्ने शक्तिले सम्पन्न बनाएर सर्वत्र निर्बाध हुँदै विचरण गर्दछ ।

**विधुं दद्राणं सलिलस्य पृष्ठे युवानं सन्तं पलितो जगार । देवस्य पश्य काव्यं महित्वाद्या ममार स ह्यः समान ॥९॥**

युद्धमा शौर्य प्रदर्शित गर्दै शत्रुको सेनालाई लखेट्ने गरेका बलशाली इन्द्रदेवताका प्रभावले कपाल फुलेका शक्तिहीन बुढाहरू पनि फुर्तिला हुने गर्दछन् । हे स्तोताहरू हो ! महान् इन्द्रदेवताको पराक्रमको विवेचना गर्ने विचित्र काव्यलाई हेर, जुन काव्य आजको उच्चारणपछि समाप्त हुन्छ तापनि भविष्यमा समेत नवीन मन्त्रका रूपमा फेरिफेरि पनि प्रकट हुनेछ ।

**य ईं चकार न सो अस्य वेद य ईं ददर्श हिरुगिन्नु तस्मात् । स मातुर्योना परिवीतो अन्तर्बहुप्रजा निर्ऋतिरा विवेश ॥१०॥**

जसले यस जीवको रचना गरेका हुन्, उनले पनि यसलाई जान्दैनन् । जसले यसलाई देखेका छन्, उनीसितै यो लुकेको छ । यो त माताको प्रजनन अङ्गमा नै ओगटिएर बसेको छ । यसले प्रजालाई उत्पत्ति गर्दै स्वयं आफ्नो अस्तित्त्व गुमाउँदछ ।

**अपश्यं गोपामनिपद्यमानमा च परा च पथिभिश्चरन्तम् । स सध्रीचीः स विषूचीर्वसान आ वरीवर्तिभुवनेष्वन्तः ॥११॥**

नजिक वा टाढाका ठाउँहरूमा रहेका मार्गमा गतिमान सूर्यदेवता निरन्तर गतिशील भएर पनि कहिल्यै पनि खस्दैनन् । उनले सम्पूर्ण विश्वलाई संरक्षण गर्दछन् । चारैतिर फैलिने गरेका र तेजस्विता धारण गर्दै समस्त लोकमा विराजमान भएका सूर्यदेवतालाई हामीले देखेका छौँ ।

**द्यौर्नः पिता जनिता नाभिरत्र बन्धुर्नो माता पृथिवी महीयम् । उत्तानयोश्चम्वो३र्योनिरन्तरत्रा पिता दुहितुर्गर्भमाधात् ॥१२॥**

द्युलोकमा रहेका सूर्यदेवता हाम्रा पिता तथा बन्धुका रूप हुन् । उनी नै संसारको नाभीरूप पनि हुन् । यी विशाल पृथ्वी हाम्री माता हुन् । दुई पत्रको बीचमा रहेका सूर्यदेवता आफूले उत्पन्न गरेका पृथ्वीका गर्भमा जीवनलाई स्थापित गर्दछन् ।

**पृच्छामि त्वा परमन्तं पृथिव्याः पृच्छामि वृष्णो अश्वस्य रेतः । पृच्छामि विश्वस्य भुवनस्य नाभिं पृच्छामि वाचः परमं व्योम ॥१३॥**

यस धर्तीको अन्तिम किनारा कहाँ छ ? सबै भुवनहरूको केन्द्र कहाँ छ ? अश्वको शक्ति कहाँ छ र वाणीको उद्गम स्थान कहाँ छ ? भनेर हामी सोध्छौँ ।

**इयं वेदिः परो अन्तः पृथिव्या अयं सोमो वृष्णो अश्वस्य रेतः । अयं यज्ञो विश्वस्य भुवनस्य नाभिर्ब्रह्मायं वाचः परमं व्योम ॥१४॥**

यो यज्ञको वेदिका नै पृथ्वीको अन्तिम किनारा हो, यो संसार नै चक्रको धुरो हो, यो सोम नै अश्वको शक्ति हो र यो ब्रह्म नै वाणीको उद्गम स्थान हो ।

**न वि जानामि यदिवेदमस्मि निण्यः संनद्धो मनसा चरामि । यदा मागन् प्रथमजा ऋतस्यादिद् वाचो अश्नुवे भागमस्याः ॥१५॥**

म कस्तो छु भनेर आफू जान्दिनँ । म मूर्खको जस्तै मनले बाँधिएर चल्ने गरेको छु । जब पहिले नै प्रकट भएको सत्य मेरा सामु आयो, त्यसपछि मात्रै मलाई यो वाणी प्राप्त भयो ।

**अपाङ् प्राङेति स्वधया गृभीतोऽमर्त्यो मर्त्येना सयोनिः । ता शश्वन्ता विषूचीना वियन्ता न्यऽन्यं चिक्युर्न नि चिक्युरन्यम् ॥१६॥**

यो आत्मा अविनाशी भए पनि मरणशील शरीरका साथमा आबद्ध भएका कारणले गर्दा विभिन्न योनीहरूमा पुग्ने गर्दछ । यो आफ्ना धारणक्षमताले नै ती शरीरहरूमा आउँछ र शरीरबाट पृथक् नै भएर रहेको हुन्छ । शरीर र आत्मा यी दुवै शाश्वत एवं गतिशील हुँदाहुँदै पनि विपरीत गतिले युक्त छन् । मानिसहरूले यिनीमध्ये एउटा शरीरका विषयमा त जानेका छन् तर अर्को आत्मालाई भने जान्दैनन् ।

**सप्तार्धगर्भा भुवनस्य रेतो विष्णोस्तिष्ठन्ति प्रदिशा विधर्मणि । ते धीतिभिर्मनसा ते विपश्चितः परिभुवः परि भवन्ति विश्वतः ॥१७॥**

सम्पूर्ण विश्वको निर्माण नै अपरा प्रकृतिको मन, प्राण र पञ्च महाभूतका सात पुत्रहरूबाट भएको हो । यी सबै तत्त्वहरू नै सर्वव्यापक प्रजापतिका निर्देशअनुसार नै कर्तव्य निर्वाह गर्छन् । तिनीहरू आफ्नो ज्ञानशीलता, व्यापकता र आफ्ना सङ्कल्पशक्तिले सम्पूर्ण विश्वमा नै व्याप्त भएर रहेका छन् ।

**ऋचो अक्षरे परमे व्योमन् यस्मिन् देवा अधि विश्वे निषेदुः । यस्तन्न वेद किमृचा करिष्यति य इत् तद् विदुस्ते अमी समासते ॥१८॥**

ऋचाहरू अविनाशी परम व्योममा भरिएर रहेका छन् र सम्पूर्ण देवशक्तिहरू पनि त्यहीँ रहेका छन् । जसले यस तथ्यलाई जानेको छैन त्यसका लागि ऋचाले के गर्न सक्छ र ? जसले यस तथ्यलाई जानेका छन् उनीहरूले मात्रै यी ऋचाहरूलाई सदुपयोग गर्दछन् ।

**ऋचः पदं मात्रया कल्पयन्तोऽर्धर्चेन चाक्लृपुर्विश्वमेजत् । त्रिपाद् ब्रह्म पुरुरूपं वि तष्ठे तेन जीवन्ति प्रदिशश्चतस्रः ॥१९॥**

ओंकारका पदलाई मात्राद्वारा कल्पित गर्दै उसको आधा भागले यस चैतन्य जगत्लाई समर्थ गर्दछौं । ती पाउले युक्त ज्ञान अनेकौं रूपमा स्थिर रहने गर्दछ । तयसको एक मात्र मात्राले चारै दिशाहरूले जीवन व्याप्त गराउँछन् ।

**सूयवसाद् भगवती हि भूया अधा वयं भगवन्तः स्याम । अद्धि तृणमघ्न्ये विश्वदानीं पिब शुद्धमुदकमाचरन्ती ॥२०॥**

माताजस्ता हे अवध्य गाई ! तिमीहरू श्रेष्ठ पौष्टिक घाँसको आहारा ग्रहण गर्दै सौभाग्यशालिनी होओ । तिमीहरूसित हामी सबै सौभाग्यशाली होओ । तिमीहरू घाँस खाएर र शुद्ध जल पिएर सर्वत्र विचरण गर ।

**गौरिन्मिमाय सलिलानि तक्षत्येकपदी द्विपदी सा चतुष्पदी । अष्टापदी नवपदी बभूवुषी सहस्राक्षरा भुवनस्य पङ्क्तिस्तस्याः समुद्रा अधि वि क्षरन्ति ॥२१॥**

गाईरूपी वाणी निश्चित शब्द गर्दै जलरूपी रसलाई हल्लाएर तरङ्गित गराउँछन् । उनी गाईहरू काव्यमयी वाणीका रूपमा एक, दुई, चार, आठ अथवा नौ पदका छन्दमा विभाजित हुँदै सहस्र अक्षरले युक्त हुने गर्दछन् । त्यसका रस नै समुद्रमा क्षरित हुँदै प्रवाहित हुने गर्दछ ।

**कृष्णं नियानं हरयः सुपर्णा अपो वसाना दिवमुत्पतन्ति । त आववृत्रन्त्सदनादृतस्यादिद घृतेन पृथिवीं व्यूदुः ॥२२॥**

श्रेष्ठतम गति भएका सूर्यको किरणले आफूसित जल लिएर हिँड्छ । सबैका आकर्षणको केन्द्र बनेको यानरूपी सूर्यमण्डलका नजिक पुग्दछ । त्यहाँ अन्तरिक्षका मेघमा भएको जल बर्साउँदै पृथ्वीलाई सेचन गर्दछ ।

**अपादेति प्रथमा पद्वतीनां कस्तद् वां मित्रावरुणा चिकेत । गर्भो भारं भरत्या चिदस्या ऋतं पिपर्त्यनृतं नि पाति ॥२३॥**

हे मित्र र वरुणदेवताहरू हो ! दिन र रात्रिरूपी तिमीहरू दुईका सामर्थ्यले गोडाविनाकी उषा पनि

गोडा भएका प्राणीहरूभन्दा पहिले नै पुग्ने गर्दछिन् । तिमीहरू दुवैका गर्भबाट उत्पन्न भएर शिशुरूपी सूर्यले संसारलाई पालनपोषण गर्ने दायित्व निर्वाह गरेका छन् । यिनै सूर्यदेवताले असत्यरूपी अन्धकारलाई दूर गरेर सत्यरूपी आलोक फिँजाउने गर्दछन् ।

**विराड् वाग् विराट् पृथिवी विराडन्तरिक्षं विराट् प्रजापतिः । विराण्मृत्युः साध्यानामधिराजो बभूव तस्य भूतं भव्यं वशे स मे भूतं भव्यं वशे कृणोतु ॥२४॥**

विराट् ब्रह्मरूपी वाणी नै भूमि, अन्तरिक्ष, प्रजापति, एवं मृत्युका रूप हुन् । उनी नै सबै खालका साध्यहरूका अधिकारी र शासक हुन् । भूत-भविष्य पनि उनकै अधीनमा छन् अनि भूत र भविष्यलाई हाम्रा वशमा गराऊन् ।

**शकमयं धूममारादपश्यं विषूवता पर एनावरेण । उक्षाणं पृश्निमपचन्त वीरास्तानि धर्माणि प्रथमान्यासन् ॥२५॥**

हामीले धेरै परबाट धुवाँ देख्यौँ । चारै दिशामा व्याप्त भएको धुवाँका मध्य भागमा अग्निलाई देख्यौँ । उसै अग्निको सहायताले प्रत्येक उत्तम कार्य गर्नुभन्दा पहिले ऋत्विक्गण शक्तिदायी सोमरस पकाउने गर्दछन् ।

**त्रयः केशिन ऋतुथा वि चक्षते संवत्सरे वपत एक एषाम् । विश्वमन्यो अभिचष्टे शचीभिर्ध्राजिरेकस्य ददृशे न रूपम् ॥२६॥**

सूर्य, अग्नि र वायुका रूपमा तीन किसिमका किरण भएको पदार्थ ऋतुअनुसारले नै देखा पर्ने गर्दछ । यी तीनमध्येका एक सूर्यले संस्कारको बीजारोपण गर्दछन् । अर्को एक अग्निले आफ्ना शक्तिद्वारा विश्वलाई प्रकाशित गर्दछन् । अर्को तेस्रो वायुको चाहिँ प्रत्यक्ष रूप देखा पर्दैन ।

**चत्वारि वाक् परिमिता पदानि तानि विदुर्ब्राह्मणा ते मनीषिणः । गुहा त्रीणि निहिता नेङ्गयन्ति तुरीयं वाचो मनुष्या वदन्ति ॥२७॥**

मनीषीहरूले वाणीका चार रूप हुन्छन् भनेर पत्तो लगाइसकेका छन् । यी चार रूपमध्ये परा, पश्यन्ती र मध्यमा नामका तीन रूप प्रकट हुने गरेका छैनन् । सबै मानिसले चौथो रूप बोल्ने गरेका छन्; त्यसको नाम वैखरी हो ।

**इन्द्रं मित्रं वरुणमग्निमाहुरथो दिव्यः स सुपर्णो गरुत्मान् । एकं सद् विप्रा बहुधा वदन्त्यग्निं यमं मातरिश्वानमाहुः ॥२८॥**

एउटै सत्यका रूप परमेश्वरलाई विद्वान्हरूले विभिन्न किसिमका नाम, गुण र स्वरूपका आधारमा विभिन्न प्रकारले वर्णन गर्ने गर्दछन् । उनै परमात्मालाई ऐश्वर्यसम्पन्न इन्द्र, हितकारी मित्र, श्रेष्ठ वरुण र प्रकाशक अग्नि हुन् भनिएको छ । उचित किसिमले पालनपोषण गर्ने पनि उनै परमात्मा नै सुपर्ण हुन् र शक्ति सम्पन्न गरूत्मान पनि उनै हुन् ।

**॥इति नवमं काण्डम् ॥**

नवौँ काण्ड सकियो ।

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# अथर्ववेद – संहिता

# ॥अथ दशमं काण्डम् ॥

## १. कृत्यादूषण सूक्त

**ऋषि-** प्रत्यङ्गिरस । **देवता-** कृत्यादूषण । **छन्द-** अनुष्टुप्, महाबृहती, विराट् गायत्री, पथ्यापङ्क्ति, पङ्क्ति, उरो बृहती, चतुष्पदा विराट् जगती, त्रिष्टुप्, प्रस्तार पङ्क्ति, चतुष्पदा जगती, विराट् प्रस्तार पङ्क्ति, एकावसाना द्विपदार्ची उष्णिक्, त्रिपदा भुरिक् विषमा गायत्री, त्रिपदा गायत्री, मध्ये ज्योतिष्मती जगती, द्व्यनुष्टुप् गर्भा पञ्चपदातिजगती ।

**यां कल्पयन्ति वहतौ वधूमिव विश्वरूपां हस्तकृतां चिकित्सवः । सारादेत्वप नुदाम एनाम् ॥१॥**

जसरी विवाह कालमा वधुलाई अनेक तरिकाले सजाउने गरिन्छ कृत्या नामको घातक प्रयोगका निर्माताहरू आफ्नै हातले उसै किसिमले अनेकौँ ढङ्गका घातक प्रयोगका साधन बनाउँछन् ।

**शीर्षण्वती नस्वती कर्णिनी कृत्याकृता संभृता विश्वरूपा । सारादेत्वप नुदाम एनाम् ॥२॥**

अनेकौँ खालका रूप भएको, अनेकौँ शीर्ष भएको, अनकौँ नाक, कान आदि भएको कृत्या नै घातक अभिचार हो । त्यो अभिचार हामीलाई हानी नगरीकन पर जाओस् । निवारण गर्ने विधि प्रयोग गर्दै हामी त्यसलाई पर हटाउँछौँ ।

**शूद्रकृता राजकृता स्त्रीकृता ब्रह्मभिःकृता । जाया पत्या नुत्तेव कर्तारं बन्ध्वृच्छतु ॥३॥**

शूद्र, राजा, स्त्री अथवा ब्राह्मणले गरेका अभिचार तथा मारक प्रयोगहरू सबै उनै प्रयोगकर्ता भएका ठाउँमा उसै रूपमा नै फिर्ता जाऊन्, जसरी पतिले परित्याग गरेकी स्त्री आफ्ना पिता वा दाजुभाइकहाँ जाने गर्दछन् ।

**अनयाहमोषध्या सर्वाः कृत्या अदूदुषम् । यां क्षेत्रे चक्रुर्यां गोषु यां वा ते पुरुषेषु ॥४॥**

खेतमा, गाईमा अथवा पुरुषमा गरिएको कृत्या प्रयोगलाई हामी अपामार्ग नामको औषधिले पहिले नै शक्तिहीन गराउँछौँ ।

**अघमस्त्वघकृते शपथः शपथीयते । प्रत्यक् प्रतिप्रहिण्मो यथा कृत्याकृतं हनत् ॥५॥**

हिंस्रक पापरूपी कृत्या प्रयोगकर्तातिर र शपथरूपी शाप आदि पनि प्रयोगकर्ता भएकै ठाउँमा पुगून् । जसो गर्दा प्रयोगकर्ताको विनाश निश्चय नै हुन सक्छ उसै गरी हामी अभिचार कर्मलाई प्रयोगकर्तातर्फ नै फिर्ता पठाउँछौँ ।

**प्रतीचीन आङ्गिरसोऽध्यक्षो नः पुरोहितः । प्रतीचीः कृत्या आकृत्यामून् कृत्याकृतो जहि ॥६॥**

अभिचार कर्मलाई फिर्ता गर्नमा समर्थ आङ्गिरसी विद्याका ज्ञाता पुरोहित नै हाम्रा अध्यक्ष वा अगुवा नेता हुन् । हे पुरोहित ! तिम्रा नजिक आउन लागेको कृत्यालाई छिन्नभिन्न गराउँदै त्यसले अभिचारकलाई नै विनाश गराऊ ।

**यस्त्वोवाच परेहीति प्रतिकूलमुदाय्यम् । तं कृत्येऽभिनिवर्तस्वमास्मानिच्छो अनागसः ॥७॥**

हे कृत्या ! तिमीलाई जुन प्रयोक्ताले अगाडि जाऊ भन्ने गर्दछन्, ती विरोधी शत्रुकै छेउमा तिमी फिर्ता भएर जाऊ । हामीजस्ता निरपराधीलाई दुःख दिने विचार नगर ।

**यस्ते परूंषि संदधौ रथस्येवर्भुर्धिया । तं गच्छ तत्र तेऽयनमज्ञातस्तेऽयं जनः ॥८॥**

जसरी शिल्पकारले विचारपूर्वक रथका पाङ्ग्राहरूलाई जोडजाम गर्दछ, उसै गरी जसले घातक

प्रयोगका अवयवहरूलाई मन्त्रशक्तिले जोडेको छ । हे कृत्या ! तिमी उसैका सामु फिर्ता जाऊ, तिम्रो अनुकूल स्थान उही हो । यस मानिसले त तिमीलाई चिनेको पनि छैन ।

**ये त्वा कृत्वालेभिरे विद्वला अभिचारिणः । शम्भ्वी३दं कृत्यादूषणं प्रतिवर्त्म पुनःसरं तेन त्वा स्नपयामसि ॥९॥**

हे कृत्या ! धूर्त अभिचारकहरूले तिमीलाई बनाएर धारण गरेका छन् । तिमी घातक प्रयोगलाई प्रतिकार गर्न सक्ने कल्याणकारी साधन पनि प्रयोगकर्तालाई फिर्ता गर्न सक्ने छौ । त्यसो हुँदा तिमीलाई हानी नुहाइदिन्छौं, त्यसो भएर सबै खालका दोषहरू निवारण होऊन् ।

**यद् दुर्भगां प्रस्नपितां मृतवत्सामुपेयिम । अपैतु सर्वं मत् पापं द्रविणं मोप तिष्ठतु ॥१०॥**

मृत पुत्र जन्माउने, दुभार्ग्य र शोकमा स्नान गराउने जुन कृत्याले हामीलाई फेला पारेको छ ती सबै पाप वा दोषहरू हामीबाट दूर होऊन् र हामीसित प्रचुर धन स्थिर भएर रहोस् ।

**यत् ते पितृभ्यो ददतो यज्ञे वा नाम जगृहुः । संदेश्या३त् सर्वस्मात् पापादिमा मुञ्चन्तु त्वौषधीः ॥११॥**

हे मानिसहरू हो ! पितृहरूका निम्ति श्रद्धाञ्जली दिने बेलामा उनीहरूको प्राण अन्त्य हुने दोष तिमीमाथि लगाउँदै आरोपित गरिन्छ भनेदेखि अथवा त्यस किसिमको कुनै पाप तिमीबाट भएको छ भनेदेखि ती सबै खालका पापबाट यी औषधिले तिमीलाई संरक्षित गरून् ।

**देवैनसात् पित्र्यान्नामग्राहात् संदेश्या दभिनिष्कृतात् । मुञ्चन्तु त्वा वीरुधो वीर्येण ब्रह्मण ऋग्भिः पयस ऋषीणाम् ॥१२॥**

हे मानिसहरू हो ! देवताहरूलाई अपहेला गरेका वा त्यस्तै कुनै देवतासित सम्बन्धित पाप, पितृहरूसित सम्बन्धित पाप, अपमान वा अपशब्दबाट उत्पन्न भएको पाप, यी सबै खालका पापलाई यी औषधि, मन्त्रशक्ति, ज्ञानसामर्थ्य र ऋषिहरूका आशीर्वादरूपी पयस्का साथमा हामीलाई रक्षा गर ।

**यथा वातश्च्यावयति भूम्या रेणुमन्तरिक्षाच्चाभ्रम् । एवा मत् सर्वं दुर्भूतं ब्रह्मनुत्तमपायति ॥१३॥**

वायुदेवताले जसरी भूमिबाट धुलोका कणहरू र अन्तरिक्षबाट बादल उडाउँछ, उसै गरी सबै खालका दुष्प्रभावहरू मन्त्रशक्तिले प्रभावहीन भएर पर हटून् ।

**अप क्राम नानदती विनद्धा गर्दभीव । कर्तृन् नक्षस्वेतो नुत्ता ब्रह्मणा वीर्यावता ॥१४॥**

हे कृत्या ! तिमी मन्त्रशक्तिले प्रभावहीन भएर आफ्नै प्रयोक्ताछेउ दौडँदै जाऊ र बन्धनबाट छुटेको नोथी गधालाई हिर्काउँदा कराउँदै दुई वटै लात्ती बजार्दछ उसै किसिमले उसलाई विनाश गराऊ ।

**अयं पन्थाः कृत्येति त्वा नयामोऽभिप्रहितां प्रति त्वा प्र हिण्मः । तेनाभि याहि भञ्जत्यनस्वतीव वाहिनी विश्वरूपा कुरूटिनी ॥१५॥**

हे कृत्या ! तिम्रो मार्ग यही हो, शत्रुले पठाएका तिमीलाई फेरि हामी उतैतिर पठाउँछौं । यसै अभिचारक क्रियाद्वारा तिमी अनेकौं साधन र सामर्थ्यले सम्पन्न भएर पृथ्वीमा शब्दको ध्वनि गर्दै तेनी सेनाजस्तै भएर हाम्रा शत्रुमाथि आक्रमण गर ।

**पराक् ते ज्योतिरपथं ते अर्वागन्यत्रास्मदयना कृणुष्व । परेणेहि नवतिं नाव्या३ अति दुर्गाः स्रोत्या मा क्षणिष्ठाः परेही ॥१६॥**

हे कृत्या ! फिर्ता जानका लागि तिमीलाई प्रकाश देखा परोस् तर यतातिर आउनका लागि भने कुनै बाटो देखा नपरोस् । हामीलाई छोडेर तिमी अन्य कतै पनि नजाऊ । नौकामा जान योग्य दुर्गम, नब्बे नदीहरूलाई पार गरेर तिमी टाढा जाऊ । हामीलाई हिंसित नगरीकन तिमी पर जाऊ ।

**वात इव वृक्षान् नि मृणीहि पादय मा गामश्वं पुरुषमुच्छिष एषाम् । कर्तृन् निवृत्येतः कृत्येऽप्रजास्त्वाय बोधय ॥१७॥**

वायुले जसरी वृक्षहरूलाई भाँच्दछ, उसै गरी हे कृत्या ! तिमी हिंस्रक शत्रुलाई नाश गर्दै उनलाई

उखेलेर फ्याँक । उनीहरूका गाई, घोडा र पुरुषहरूलाई पनि बाँकी नराख । आफ्ना निर्माताहरूलाई आफू सन्तानविहीन भएछौँ भन्ने कुराको आभास गराउँदै यहाँबाट हटाऊ ।

**यां ते बर्हिषि यां श्मशाने क्षेत्रे कृत्यां वगलं वा निचख्नुः । अग्नौ वा त्वा गार्हपत्येऽभिचेरुः पाकं सन्तं धीरतरा अनागसम् ॥१८॥**

अभिचार कृत्य गर्दै तिमीबाट जुन अन्न, श्मशान र खेतमा गाड्न लगाइएका छन्; तिनी निरपराध हुँदा हुँदै पनि अभिचारकहरूले जुन घातक प्रयोग गरेका छन्, हामी तिनलाई निष्प्रभाव गराउँछौँ ।

**उपाहृतमनुबुद्धं निखातं वैरं त्सार्यन्वविदाम कर्त्रम् । तदेतु यत आभृतं तत्राश्व इव वि वर्ततां हन्तु कृत्याकृतः प्रजाम् ॥१९॥**

ल्याइएका, जानिएका, गाडिएका र छलपूर्वक प्रयोग गरिएका वैररूपी घातक अभिचारलाई हामी प्रयोगकर्तातर्फ नै छोड्दछौँ । जुन स्थानबाट त्यो आएको छ, घोडाको जस्तै तीव्र गतिमा उतै फिर्ता जाओस् र अभिचारकलाई नै सन्तानविहीन गराओस् ।

**स्वायसा असयः सन्ति नो गृहे विद्मा ते कृत्ये यतिधा परूंषि । उत्तिष्ठैव परेहीतोऽज्ञाते किमिहेच्छसि ॥२०॥**

हे कृत्या ! हाम्रा घरमा उत्तम फलामको तरबार छ । हामीले तिम्रा हड्डीका जोर्नीहरू पनि राम्ररी चिनेका छौँ । ती कुन स्थितिमा र कति किसिमका छन् भन्ने पनि हामीलाई थाहा छ । त्यो हुँदा तिमी यहाँबाट उठेर धेरै पर शत्रुहरू भएतर्फ जाऊ । हामीले नचिनेका हे मारण प्रयोग ! तिमी यहाँबाट फिर्ता हुन वा मर्न के चाहन्छौ ?

**ग्रीवास्ते कृत्ये पादौ चापि कर्त्स्यामि निर्द्रव । इन्द्राग्नी अस्मान् रक्षतां यौ प्रजानां प्रजावती ॥२१॥**

हे अभिचार कृत्य ! हामी तिम्रा दुवै गोडा र गर्धन पनि काटिदिन्छौँ, त्यसैले यहाँबाट धेरै पर भाग । प्रजाहरूका संरक्षक इन्द्र र अग्निदेवताले हामीलाई संरक्षण गर ।

**सोमो राजाधिपा मृडिता च भूतस्य नः पतयो मृडयन्तु ॥२२॥**

राजा सोम संसारका समस्त प्राणीहरूका सुखदाता हुन् । सबैका पालक उनै सोमदेवता हाम्रा लागि पनि सुख प्रदान गर्ने होऊन् ।

**भवाशर्वावस्यतां पापकृते कृत्याकृते । दुष्कृते विद्युतं देवहेतिम् ॥२३॥**

भव र शर्व नामका यी दुवै देवताले विद्युत्का रूपमा रहेका देवताका आयुधहरूलाई दुराचारी शत्रुमाथि फालिदिऊन् ।

**यद्येयथ द्विपदी चतुष्पदी कृत्याकृता संभृता विश्वरूपा । सेतोऽष्टापदी भूत्वा पुनः परेहि दुच्छुने ॥२४॥**

मारण नामको कृत्या यदि कुनै प्रयोक्ताद्वारा प्रयोग भएर अनेकौँ रूप धारण गर्दै दुई खुट्टे अथवा चार खुट्टे बनेर हाम्रा नजिक आइरहेको छ भनेदेखि हे दुःख दिने कृत्या ! तिमी यहाँबाट आठ खुट्टे भएर दोब्बर तीव्र गतिका साथ फिर्ता भएर जाऊ ।

**अभ्य१क्ताक्ता स्वरंकृता सर्वं भरन्ती दुरितं परेहि । जानीहि कृत्ये कर्तारं दुहितेव पितरं स्वम् ॥२५॥**

घिउले सेचन गरिएको, उचित किसिमले अलङ्कृत र सबै दुर्दशाहरूलाई धारण गर्ने हे कृत्या ! यहाँबाट तिमी पर भाग । पुत्रीले जसरी आफ्ना पितालाई चिन्दछे, उसै गरी तिमी आफ्ना उत्पादनकर्तालाई चिन !

**परेहि कृत्ये मा तिष्ठो विद्धस्येव पदं नय । मृगः स मृगयुस्त्वं न त्वा निकर्तुमर्हति ॥२६॥**

हे कृत्या ! यहाँ नअडिएर तिमी पर जाऊ । सिकारीले जसरी खोज्दै गएर घाइते भएको सिकार फेला पादर्छ, उसरी नै तिमी शत्रु भएका स्थानमा जाऊ । तिमी सिकारीका रूपमा र तिमीलाई प्रयोग गर्ने सिकारजस्तै हौ । उसले तिमीलाई नाश गर्न सक्दैन, त्यसैले तिमी फिर्ता जाऊ ।

उत हन्ति पूर्वासिनं प्रत्यादायापर इष्वा । उत पूर्वस्य निघ्नतो नि हन्त्यपरः प्रति ॥२७॥
हलेदेखि नै बसिरहेकालाई अर्को व्यक्तिले विषालु बाण हानेर घाइते पार्छ र मार्ने घातकोलाइ
यल व्यक्तिले विनाश गर्दछ । यसै किसिमले ती दुवै नाश हुन्छन् ।

एतद्धि शृणु मे वचोऽथेहि यत एयथ । यस्त्वा चकार तं प्रति ॥२८॥
म्रा भनाइको अभिप्राय बुझेर जहाँबाट तिमी आएका हौ, त्यहीँ फिर्ता भएर फेरि जाऊ । हे
त्या ! तिमीलाई जसले प्रयोग गरेको हो, तिमी त्यसैतिर जाऊ ।

अनागोहत्या वै भीमा कृत्ये मा नो गामश्वं पुरुषं वधीः । यत्रयत्रासि निहिता ततस्त्वोत्थापयामसि पर्णाल्लघीयसी भव ॥२९॥
कृत्या ! निरपराध प्राणीको हिंसा गर्नु भनेको भयङ्कर कार्य हो । त्यसो हुनाले तिमी हाम्रा गाई,
डा र मानिसहरूलाई हनन नगर । जहाँजहाँ तिमीलाई स्थापित गरिएको छ, त्यहाँबाट हामी
मीलाई हटाउँछौँ; तिमी पातभन्दा पनि सूक्ष्म होऊ ।

यदि स्थ तमसावृता जालेनाभिहिता इव । सर्वाः संलुप्येतः कृत्याः पुनः कर्त्रे प्र हिण्मसि ॥३०॥
कृत्या नामका अभिचार ! यदि तिमी अन्धकारका जालले छोपिएका छौ भनेदेखि तिम्रा ती सबै
तक प्रयोगहरू लुकाएर हामी यहाँबाट प्रयोगकर्ता भएकै ठाउँमा फिर्ता पठाउँछौँ ।

कृत्याकृतो वलगिनोऽभिनिष्कारिणः प्रजाम् । मृणीहि कृत्ये मोच्छिषोऽमून् कृत्याकृतो जहि ॥३१॥
कृत्या ! जुन कपटी घातक प्रयोगकर्ताले सन्तानको विनाश गर्न खोजेको छ, तिमी त्यसलाई
नि नाश गर । ती अभिचारहरूमा कुनै पनि शेष नरहून्, ती सबै अभिचारकहरूलाई पनि मार ।

यथा सूर्यो मुच्यते तमसस्परि रात्रिं जहात्युषसश्च केतून् । एवाहं सर्वं दुर्भूतं कर्त्रं कृत्याकृता कृतं हस्तीव रजो दुरितं जहामि ॥३२॥
सूर्यदेवता जसरी अन्धकारबाट निवृत्त हुन्छन् र रात्रि तथा उषाको ध्वजा परित्याग गर्दछन्, उसै गरी
ामी पनि अभिचारीले प्रयोग गरेका दुष्कृत्यहरूलाई परित्याग गर्दछौँ । हात्तीले धुलो
ट्क्याएजस्तै सजिलैसित शत्रुको अभिचार प्रयोगलाई हामी पर हटाउँछौँ ।

## २. ब्रह्मप्रकाशन सूक्त

**ऋषि**- नारायण । **देवता**- ब्रह्मप्रकाशन, पुरुष । **छन्द**- अनुष्टुप्, त्रिष्टुप्, जगती, भुरिक् बृहती ।

केन पार्ष्णी आभृते पूरुषस्य केन मांसं संभृतं केन गुल्फौ । केनाङ्गुलीः पेशनीः केन खानि केनोच्छ्लङ्खौ मध्यतः कः प्रतिष्ठाम् ॥१॥
मानिसका कुर्कुच्चा र घुँडाहरूलाई कसले भरेर स्वस्थ बनायो ? सुन्दर औँलाहरू, इन्द्रियका
ालहरूलाई र पैतालाहरूलाई कसले पोषण दियो ? अनि बीचमा आश्रय प्रदान गर्ने को हो ?

कस्मान्नु गुल्फावधरावकृण्वन्नष्ठीवन्तावुत्तरौ पूरुषस्य । जङ्घे निर्ऋत्य न्यदधुः क स्विज्जानुनोः सन्धी क उ तच्चिकेत ॥२॥
मानिसका तल्ला गोलीगाँठाहरू र माथिका घुँडाहरूलाई कसले बनायो ? जाङ वा तिघ्राहरू
कसले छुट्टाछुट्टै बनाएर त्यस ठाउँमा स्थापित गरेको हो ? घुँडाहरूको जोड कहाँ छ ? यसलाई
जान्न कसले सकेको छ ?

चतुष्टयं युज्यते संहितान्तं जानुभ्यामूर्ध्वं शिथिरं कबन्धम् । श्रोणी यदूरू क उ तज्जजान याभ्यां कुसिन्धं सुदृढं बभूव ॥३॥
कुन किसिमले अन्त्यमा संयुक्त गराइएको शिथिल शरीरको गिँडलाई पेट र घुँडाभन्दा माथि
जोडिएको छ । जसले गर्दा शरीर अधिक सुदृढ भयो ती फिला र जाङलाई कसले बनायो ?

**कति देवाः कतमे त आसन् य उरो ग्रीवाश्चिक्युः पूरुषस्य । कति स्तनौ व्यदधुः कः कफोडौ कति स्कन्धान् कति पृष्टीरचिन्वन ॥४॥**

मानिसको छाती र घाँटीका विषयमा जसले जानेको छ, उनीहरू कति जना र कुन देवता हुन् ? कति किसिमका देवताहरूले स्तन भाग र कुहुनाको निर्माण गरेका हुन् ? कति किसिमका जोर्नीहरूले काँध र मांसपेशीहरूलाई संयुक्त गरिन्छ ?

**को अस्य बाहू समभरद् वीर्यं करवादिति । अंसौ को अस्य तद् देवः कुसिन्धे अध्या दधौ ॥५॥**

कुन देवताले मानिसको वीर्य र भुजाहरूलाई परिपुष्ट गरेका हुन् ? कुन देवताले काँधलाई बलियो बनाएका हुन् र कसले शरीरको टाउकामुनिको भागमा शारीरिक अङ्गहरू स्थापित गरेका हुन् ?

**कः सप्त खानि वि ततर्द शीर्षणि कर्णाविमौ नासिके चक्षणी मुखम् । येषां पुरुत्रा विजयस्य मह्मनि चतुष्पादो द्विपदो यन्ति यामम् ॥६॥**

मानिसका शिरमा दुई कान, दुई नाक, दुई आँखा र एउटा मुख गरी जम्मा यसरी सात वटा छिद्रहरू छन्, यिनलाई कुन देवताले बनाएका हुन् ? कुन देवताको विजयी महिमाका लागि दुई खुट्टे र चार खुट्टे प्राणीहरू विभिन्न मार्ग अनुसरण गर्दै यमराजका स्थानमा जाने गर्दछन् ?

**हन्वोर्हि जिह्वामदधात् पुरूचीमधा महीमधि शिश्राय वाचम् । स आ वरीवर्ति भुवनेष्वन्तरपो वसानः क उ तच्चिकेत ॥७॥**

विभिन्न ठाउँमा पुग्न सक्ने जिब्रोलाई कसले ओठहरूका बीचमा लगेर राखेको हो र त्यसमा प्रभावपूर्ण वाणी कसले स्थापित गरेको हो ? जल धारण गर्ने ती देवताहरू प्राणीभित्र विचरण गर्दछन् भन्ने कुरो कसले जान्न सकेको छ ?

**मस्तिष्कमस्य यतमो ललाटं ककाटिकां प्रथमो यः कपालम् । चित्वा चित्यं हन्वोः पूरुषस्य दिवं रुरोह कतमः स देवः ॥८॥**

यस मानिसको मस्तिष्कको निधारको भाग, शिरमाथिको तालुको भाग, तालु र ओठहरूलाई जोडेको भाग चयन गरेर जुन देवताले सर्वप्रथम द्युलोकमा आरोहण गरे, ती देवता को हुन् ?

**प्रियाप्रियाणि बहुला स्वप्नं संबाधतन्द्र्यः । आनन्दानुग्रो नन्दांश्च कस्माद् वहति पूरुषः ॥९॥**

यस्ता प्रचण्ड पुरुषले प्रिय वा अप्रिय धेरै किसिमका स्वप्न, पीडा, थकाइ, आनन्द र हर्षका वाणीहरू कुन देवताका प्रभावले धारण गरेको हो ?

**आर्तिरवर्तिर्निर्ऋतिः कुतो नु पूरुषेऽमतिः । राद्धिः समृद्धिरव्यृद्धिर्मतिरुदितयः कुतः ॥१०॥**

मानिसभित्र पीडा, दरिद्रता, पाप र दुर्बुद्धिजस्ता यी दुष्प्रवृत्तिहरू कहाँबाट प्रवेश गर्दछन् र पूर्णता, समृद्धि, विशिष्ट ऋद्धि, सद्बुद्धि एवं उदय उन्नतिहरूजस्ता यी सहज वृत्तिहरू कताबाट आउँछन् ?

**को अस्मिन्नापो व्यदधाद् विषूवृतः पुरूवृतः सिन्धुसृत्याय जाताः । तीव्रा अरुणा लोहिनीस्ताम्रधूम्रा ऊर्ध्वा अवाचीः पुरुषे तिरश्चीः ॥११॥**

मानिसका यस शरीरमा विशेष किसिमका विचारशील, सर्वत्र भ्रमणशील, नदीझैँ प्रवाहित हुनका लागि बनाइएका रातो वर्णका, लोहित वर्णका, ताँबा अथवा धुवाँको वर्णका माथि, तल र तेर्सो वेगले गमन गर्ने जलप्रवाहहरूलाई कसले स्थापित गरेको होला ?

**को अस्मिन् रूपमदधात् को मह्मानं च नाम च । गातुं को अस्मिन् कः केतुं कश्चरित्राणि पूरुषे ॥१२॥**

यस मानिसका शरीरमा रूपको सौन्दर्य, महिमा, नामयश, गतिशीलता, ज्ञानपिपासा र आचरणसम्बन्धी गुण कुन देवताले प्रतिष्ठित गराएका होलान् ?

**को अस्मिन् प्राणमवयत् को अपानं व्यानमु । समानमस्मिन् को देवोऽधि शिश्राय पूरुषे ॥१३॥**

यस मानिसका शरीरमा प्राण, अपान, व्यान र समान नामका वायुहरूलाई कुन देवताले प्रतिष्ठित गराएको हो ?

**को अस्मिन् यज्ञमदधादेको देवोऽधि पूरुषे । को अस्मिन्त्सत्यं कोऽनृतं कुतो मृत्युः कुतोऽमृतम् ॥१४॥**

मानिसका यस शरीरमा परस्परको सहयोग, सहकारी भावना, यज्ञीय भावना र सत्यनिष्ठालाई कुन देवताले प्रमुख रूपमा स्थापित गर्दछन् ? कसले असत्य, मृत्य र अमरत्वलाई मानिसका यस शरीरमा स्थापित गर्दछन् ?

**को अस्मै वासः पर्यदधात् को अस्यायुरकल्पयत् । बलं को अस्मै प्रायच्छत् को अस्याकल्पयज्जवम् ॥१५॥**

मानिसको यस शरीरलाई जेले छोपेको छ, त्यो छाला वा लुगा वा मर्यादाको आवरण कसले पहिराएको हो ? आयुको कल्पना कसले गरेको हो ? यसलाई बल र सामर्थ्य कसले दिएको हो र यसमा गतिशीलता कसले स्थापित गरेको हो ?

**केनापो अन्वतनुत केनाहरकरोद् रुचे उषसं केनान्वैद्ध केन सायंभवं ददे ॥१६॥**

जलको विस्तार कसले गरेको हो ? यसलाई प्रकाश प्रदान गर्नका लागि दिन कसले बनाए ? उषालाई कसले प्रकट गरेका हुन् र साँझ आदि सन्ध्याकालहरू कुन देवताले दिएका हुन् ?

**को अस्मिन् रेतो न्यदधात् तन्तुरा तायतामिति । मेधां को अस्मिन्नध्यौहत् को बाणं को नृतो दधौ ॥१७॥**

सन्तान बढाउनका लागि प्रजनन सामर्थ्य कसले स्थापित गरेको होला ? यसमा विचारशक्ति कसले प्रतिष्ठित गरायो ? वाणीको शक्ति र नृत्यका हाउभाउलाई कुन देवताले मानिसभित्र प्रतिष्ठित गरेका हुन् ?

**केनेमां भूमिमौर्णोत् केन पर्यभवद् दिवम् । केनाभि मह्ना पर्वतान् केन कर्माणि पूरुषः ॥१८॥**

कुन सामर्थ्यले यस भूमि र द्युलोकलाई आच्छादित गरेको हो ? कुन महानताले पर्वतहरूलाई ढाकिदिएको थियो र यो मानिस कसका प्रेरणाले कर्ममा प्रवृत्त हुने गर्दछ ?

**केन पर्जन्यमन्वेति केन सोमं विचक्षणम् । केन यज्ञं च श्रद्धां च केनास्मिन् निहितं मनः ॥१९॥**

यो मानिसले कुन देवताको सामर्थ्यले पर्जन्य, ज्ञानवान् सोम, यज्ञ र श्रद्धा आदिलाई प्राप्त गर्दछ ? कसका कारणले मानिसको मन सत्कर्मतर्फ प्रेरित भएको हो ?

**केन श्रोत्रियमाप्नोति केनेमं परमेष्ठिनम् । केनेममग्निं पूरुषः केन संवत्सरं ममे ॥२०॥**

कुन देवताको सामर्थ्यले यो पुरुष श्रोत्रिय, परमात्मज्ञान र अग्निलाई जान्ने तथा संवत्सर काल आदिको मापन गर्ने कार्यमा समर्थ हुने गर्दछन् ?

**ब्रह्म श्रोत्रियमाप्नोति ब्रह्मेमं परमेष्ठिनम् । ब्रह्मेममग्निं पूरुषो ब्रह्म संवत्सरं ममे ॥२१॥**

ब्रह्म नै श्रोत्रिय, परमेष्ठी प्रजापति र अग्निलाई संव्याप्त गर्दछन् र ब्रह्मज्ञान नै संवत्सर आदि कालको मापन गर्नमा समर्थ भएका छन् ।

**केन देवाँ अनु क्षियति केन दैवजनीर्विशः । केनेदमन्यन्नक्षत्रं केन सत् क्षत्रमुच्यते ॥२२॥**

कुन सामर्थ्यका कारण मानिस देवताहरूको अनुकूल भएर रहन सकेको हो ? दिव्यतायुक्त जनहरूको अनुकूल कसरी रहन सकिन्छ ? केले क्षत्रबलहीन र केले उत्तम क्षत्रबल सम्पन्न बनाउँछ ?

**ब्रह्म देवाँ अनु क्षियति ब्रह्म दैवजनीर्विशः । ब्रह्मेदमन्यन्नक्षत्रं ब्रह्म सत् क्षत्रमुच्यते ॥२३॥**

ब्रह्मले नै देवताका अनुशासनमा त्यस मानिसलाई बाँच्न सिकाएको हुन्छ । ब्रह्मले नै दिव्यतासम्पन्न प्रजाहरूलाई अनुकूल आवास प्रदान गर्दछ । ब्रह्मले नै उत्तम क्षत्रबल सम्पन्न र ब्रह्मले नै क्षत्रबलरहित बनाउँछ ।

**केनेयं भूमिर्विहिता केन द्यौरुत्तरा हिता । केनेदमूर्ध्वं तिर्यक् चान्तरिक्षं व्यचो हितम् ॥२४॥**

यस भूमिलाई विशिष्टतापूर्वक कसले स्थापित गरेको हो ? द्युलोकलाई धेरै माथि र अन्तरिक्षलाई तेर्छो पारेर माथि कसले स्थापित गरेको हो ?

**ब्रह्मणा भूमिर्विहिता ब्रह्म दौरुत्तरा हिता । ब्रह्मेदमूर्ध्वं तिर्यक् चान्तरिक्षं व्यचो हितम् ॥२५**

ब्रह्मले नै यस भूमिका उच्च भागमा द्युलोकलाई र तेर्छो रूपमा फैलाएर अन्तरिक्षलाई स्थापित गरेका हुन्, उनी नै यिनका निर्माता हुन् ।

**मूर्धानमस्य संसीव्याथर्वा हृदयं च यत् । मस्तिष्कादूर्ध्वः प्रैरयत् पवमानोऽधि शीर्षतः ॥२६॥**

प्रजापतिले शिर र हृदयलाई आपसमा जोडे, त्यसपछि ऊर्ध्व पवमान वायुले यसको मस्तिष्क र शीर्षभागलाई प्रेरित गरेका हुन् ।

**तद् वा अथर्वणः शिरो देवकोशः समुब्जितः । तद् प्राणो अभि रक्षति शिरो अन्नमथो मनः ॥२७॥**

अथर्वा अर्थात् प्रजापतिद्वारा दिइएको शिर वा शीर्ष भाग सरलतापूर्वक विद्यमान रहेको छ र यो देवताहरूको सुरक्षित निधि हो । त्यस शिरलाई प्राण, अन्न र मनले संरक्षण गर्दछन् ।

**ऊर्ध्वो नु सृष्ट्या३स्तिर्यङ्नु सृष्ट्या३ः सर्वा दिशः पुरुष आ बभूवाँ३ । पुरं यो ब्रह्मणो वेद यस्याः पुरुष उच्यते ॥२८॥**

ब्रह्मका नगरीका विषयमा जुन पुरुषले जानकारी राखेको छ, जसका कारणले नै उसलाई पुरुष भनिएको छ, उही पुरुष उपल्लो दिशा, तेर्छा दिशाहरू र सबै अन्य दिशाहरूमा उत्पन्न भएर आफ्नो प्रभावको परिचय दिने गर्दछ ।

**यो वै तां ब्रह्मणो वेदामृतेनावृतां पुरम् । तस्मै ब्रह्म च ब्राह्माश्च चक्षुः प्राणं प्रजां ददुः ॥२९॥**

अमृतले परिपूर्ण भएका ब्रह्मका नगरीका विषयमा जसले निश्चित रूपमा जानेको छ, उनलाई ब्रह्म र अन्य देवताले नेत्र, प्राण र सन्तति प्रदान गर्दै आएका छन् ।

**न वै तं चक्षुर्जहाति न प्राणो जसरः पुरा । पुरं यो ब्रह्मणो वेद यस्याः पुरुष उच्यते ॥३०॥**

जसका कारणले उसलाई पुरुष भनिएको हो, ब्रह्मका नगरीका विषयमा जानकारी भएका त्यस ज्ञातालाई बुढो हुनुभन्दा पहिले नै उसका आँखा र प्राणले साथ छोड्दैनन् ।

**अष्टचक्रा नवद्वारा देवानां पूरयोध्या । तस्यां हिरण्ययः कोशः स्वर्गो ज्योतिषावृतः ॥३१॥**

आठ वटा चक्र र नौ वटा द्वार भएको जुन देवशक्तिको नगरी छ, त्यो अयोध्या हो । त्यसमा नै तेजस्वी कोशहरू छन् । त्यही तेजस्विताले युक्त भएर स्वर्गीय आनन्दले हामी परिपूर्ण भएका छौं ।

**तस्मिन् हिरण्यये कोशे त्र्यरे त्रिप्रतिष्ठिते । तस्मिन् यद् यक्षमात्मन्वत् तद् वै ब्रह्मविदो विदुः ॥३२॥**

तीन वटा अर भएको, तीन वटा केन्द्रमा रहेको, तजस्वी कोशमा जो आत्मवान् यक्षरूपी पूजनीय आत्माको स्थान छ, त्यसलाई पक्का पनि ब्रह्मज्ञानीहरूले मात्रै जानेका हुन्छन् ।

**प्रभाजमानां हरिणीं यशसा संपरीवृताम् । पुरं हिरण्ययीं ब्रह्मा विवेशापराजिताम् ॥३३॥**

देदीप्यमान, दुःखनाशक, यशले सम्पन्न र अपराजेय यस्ता प्रकाशमान नगरीमा ब्रह्मले नै प्रवेश गर्दछन् ।

## ३. सपत्नक्षयणवरणमणि सूक्त

**ऋषि**- अथर्वा । **देवता**- वरणमणि, वनस्पति, चन्द्रमा । **छन्द**- अनुष्टुप्, भुरिक् त्रिष्टुप्, पथ्यापङ्क्ति, भुरिक् अनुष्टुप्, षट्पदा जगती ।

**अयं मे वरणो मणिः सपत्नक्षयणो वृषा । तेना रभस्व त्वं शत्रून् प्र मृणीहि दुरस्यतः ॥१॥**

वरण नामको यो मणि शत्रुले उत्पन्न गरेको अनिष्ट निवारण गर्नमा सक्षम छ र अभीष्ट फलको वर्षा पनि गराउँछ । त्यसका सहयोगले तिमी प्रयत्नशील होऊ र दुर्भावनाले ग्रस्त भएका शत्रुहरूलाई विनाश गर ।

**प्रैणाञ्छृणीहि प्र मृणा रभस्व मणिस्ते अस्तु पुरएता पुरस्तात् । अवारयन्त वरणेन देवा अभ्याचारमसुराणां श्वःश्वः ॥२॥**

वरण नामको यो मणि तिम्रो उद्देश्यमा अगाडि लागेर हिँडोस्, तिमी यी शत्रुलाई कुच्याऊ र आफ्ना वशमा गराऊ । यस मणिका सहयोगले देवताहरूले प्रतिदिन राक्षसको अभिचार कृत्यलाई निवारण गरेका छन् ।

**अयं मणिर्वरणो विश्वभेषजः सहस्राक्षो हरितो हिरण्ययः । स ते शत्रूनधरान् पादयाति पूर्वस्तान् दभ्नुहि ये त्वा द्विषन्ति ॥३॥**

वरणमणि विश्वभेषज अर्थात् सबै खालका रोगको औषधि हो । यो मणि सहस्राक्षजस्तै पराक्रमी, दुःख हरण गर्ने, सुन वा सार वस्तुलाई जनाउने हिरण्यकै रूप हो । हामीसित जुन शत्रुले द्वेष गर्दछन्, तिनलाई पतन गराउन यो सक्षम छ, तिमीहरू ती शत्रुलाई दमन गर ।

**अयं ते कृत्यां विततां पौरुषेयादयं भयात् । अयं त्वा सर्वस्मात् पापाद् वरणो वारयिष्यते ॥४॥**

वरणमणिले चारै तिरबाट फैलाइएका अभिचार कृत्यहरूलाई तिमीभन्दा परै राख्दछ । मानिसबाट उत्पन्न भएका भयलाई हटाएर यस वरणमणिले तिमीलाई सबै खालका पापबाट छुट्टा राख्नछ ।

**वरणो वारयाता अयं देवो वनस्पतिः । यक्ष्मो यो अस्मिन्नाविष्टस्तमु देवा अवीवरन् ॥५॥**

यस वरणमणिले हाम्रो रोगरूपी शत्रुलाई निवारण गरोस् । रोगी मानिसमा जुन यक्ष्मा नामको रोगले प्रवेश गरिसकेको छ, देवशक्तिहरूले त्यसलाई निवारण गरून् ।

**स्वप्नं सुप्त्वा यदि पश्यासि पापं मृगः सृतिं यति धावादजुष्टाम् । परिक्षवाच्छकुनेः पापवादादयं मणिर्वरणो वारयिष्यते ॥६॥**

हे पुरुष ! यदि तिमी सुतेका बेला स्वप्नमा पापका दृश्य देख्दछौ भनेदेखि अनुपयुक्त दिशातर्फ पशु भाग्दै गरेको भएदेखि, त्यस्ता अपशकुनहरू, शकुनी नामका चराको कठोर शब्द र नाक फर्फराउने दोषबाट पनि यस मणिले तिमीलाई संरक्षित गर्नेछ ।

**अरात्यास्त्वा निर्ऋत्या अभिचारादथो भयात् । मृत्योरोजीयसो वधाद् वरणो वारयिष्यते ॥७॥**

हे पुरुष ! यस वरणमणिले तिमीलाई शत्रु, पापदेवता, अभिचार प्रयोग, मृत्युको भयानक संहार र अन्य भयबाट सुरक्षित गर्नेछ ।

**यन्मे माता यन्मे पिता भ्रातरो यच्च मे स्वा यदेनश्चकृमा वयम् । ततो नो वारयिष्यतेऽयं देवो वनस्पतिः ॥८॥**

हाम्रा मातापिता, बन्धुबान्धवजन र आत्मीय परिजनहरूद्वारा प्रमादवश जेजस्ता पापकर्म गरेका भए तापनि यी वनस्पतिदेवताले हामीलाई ती दोषबाट संरक्षण गर्नेछन् ।

**वरणेन प्रव्यथिता भ्रातृव्या मे सबन्धवः । असूर्तं रजो अप्यगुस्ते यन्त्वधमं तमः ॥९॥**

यस वरणमणि र हाम्रा बन्धुबान्धवसित शत्रुको समुदाय नै भयपीडित होस् । उनीहरू अन्धकारपूर्ण विस्तृत, धुलोयुक्त स्थानमा पुगून् र भयानक अन्धकारले ढाकिऊन् ।

**अरिष्टोऽहमरिष्टगुरायुष्मान्त्सर्वपूरुषः । तं मायं वरणो मणिः परि पातु दिशोदिशः ॥१०॥**
हामी अनिष्टरहित भएर शान्ति लाभ गरिरहेका छौं । समस्त परिवारजनका साथमा हामी दीर्घायु प्राप्त गर्न सकौं । यस वरणमणिले हामीलाई सबै दिशा र उपदिशाबाट रक्षा गरोस् ।

**अयं मे वरण उरसि राजा देवो वनस्पतिः । स मे शत्रून् वि बाधतामिन्द्रो दस्यूनिवासुरान् ॥११॥**
दिव्यतायुक्त, वनस्पतिले निर्मित यो वरणमणि दीप्तिमान भएर हाम्रो हृदयक्षेत्रमा प्रतिष्ठित भएको छ । जसरी इन्द्रदेवताले असुरहरूलाई सताउने गरेका छन्, उसै गरी यस वरणमणिले हामीलाई दुःख दिने गरेका कष्टप्रद शत्रुलाई पीडित गरोस् ।

**इमं बिभर्मि वरणमायुष्माञ्छतशारदः स मे राष्ट्रं च क्षत्रं च पशूनोजश्च मे दधत् ॥१२॥**
यस वरणमणिद्वारा हामीभित्र राष्ट्रिय प्रेम, रक्षण सामर्थ्य, गाई आदि पशुको प्राप्ति तथा शारीरिक, मानसिक, आत्मिक, बलको स्थापना होस् । सय वर्षको आयु बाँच्नका लागि नै हामी यस वरणमणिलाई धारण गर्दछौं ।

**यथा वातो वनस्पतीन् वृक्षान् भनक्त्योजसा । एवा सपत्नान् मे भङ्ग्धि पूर्वाञ्जातॉं उतापरान् वरणस्त्वाभि रक्षतु ॥१३॥**
वायुदेवताले जसरी आफ्नो तीव्र वेगरूपी बलले वृक्ष एवं वनस्पतिहरूलाई भाँच्ने गर्दछन्, उसै गरी यस वरणमणिले पहिलेदेखि नै बनिएका र पछि बन्न लागेका अन्य शत्रुहरूलाई विनाश गरोस् । हे यजमान ! यस वरणमणिले तिम्रो संरक्षण गरोस् ।

**यथा वातश्चाग्निश्च वृक्षान् प्सातो वनस्पतिन् । एवा सपत्नान् मे प्साहि पूर्वाञ्जातॉं उतापरान् वरणस्त्वाभि रक्षतु ॥१४॥**
अग्नि र वायु मिलेर जसरी पृथ्वीमा रहेका वृक्षवनस्पतिलाई विनाश गर्दछन्, उसै गरी हे वरामणि ! तिमी पहिलेदेखि नै बनिएका र पछि बन्न लागेका अन्य शत्रुहरूलाई विनाश गर । हे यजमान ! यस वरणमणिले तिम्रो संरक्षण गरोस् ।

**यथा वातेन प्रक्षीणा वृक्षाः शेरे न्यर्पिताः । एवा सपत्नांस्त्वं मम प्र क्षिणीहि न्यर्पय पूर्वाञ्जातॉं उतापरान् वरणस्त्वाभि रक्षतु ॥१५॥**
कमजोर भएका वृक्षहरूलाई वायुले जसरी भुइँमा पछार्दछन् उसै गरी हे वरामणि ! तिमी पहिलेदेखि नै बनिएका र पछि बन्न लागेका अन्य शत्रुहरूलाई विनाश गर । हे यजमान ! यस वरणमणिले तिम्रो संरक्षण गरोस् ।

**तांस्त्वं प्र च्छिद्धि वरण पुरा दिष्ट्यात् पुरायुषः । य एनं पशुषु दिप्सन्ति ये चास्य राष्ट्रदिप्सवः ॥१६॥**
हे वरणमणि ! यी यजमानका गाई आदि पशु र राष्ट्रिय स्वाभिमानका घातक राष्ट्रद्रोही शत्रु जोजो छन्, तिनी तिनलाई आयु क्षीण होउन्जेल पूर्वनिश्चित प्रारब्ध भोग्ने अवसर पाउनुभन्दा पहिले नै विनाश गर ।

**यथा सूर्यो अतिभाति यथास्मिन् तेज आहितम् । एवा मे वरणो मणिः कीर्तिं भूतिं नि यच्छतु तेजसा मा समुक्षतु यशसा समनक्तु मा ॥१७॥**
जसरी सूर्यदेवता अत्यन्त प्रकाशमान र तेजस्वितायुक्त छन्, उसै गरी यो वरणमणिले हामीलाई कीर्ति र ऐश्वर्य प्रदान गरेर तेजस्वी र यशस्वी बनाओस् ।

**यथा यशश्चन्द्रमस्यादित्ये च नृचक्षसि । एवा मे वरणो मणिः कीर्तिं भूतिं नि यच्छतु तेजसा मा समुक्षतु यशसा समनक्तु मा ॥१८॥**
जसरी सबैका लागि दर्शनीय चन्द्रमा र आदित्य यशले युक्त छन्, उसै गरी यो वरणमणिले हामीलाई कीर्ति र ऐश्वर्य प्रदान गरेर तेजस्वी र यशस्वी बनाओस् ।

**यथा यशः पृथिव्यां यथास्मिञ्जातवेदसि । एवा मे वरणो मणिः कीर्तिं भूतिं नि यच्छतु तेजसा मा समुक्षतु यशसा समनक्तु मा ॥१९॥**

जसरी पृथ्वी र जातवेदा अग्निदेवता यशयुक्त छन्, उसै गरी यो वरणमणिले हामीलाई कीर्ति र ऐश्वर्य प्रदान गरेर तेजस्वी र यशस्वी बनाओस् ।

**यथा यशः कन्यायां यथास्मिन्त्संभृते रथे । एवा मे वरणो मणिः कीर्तिं भूतिं नि यच्छतु तेजसा मा समुक्षतु यशसा समनक्तु मा ॥२०॥**

जसरी कन्याका लागि र युद्धमा जानका लागि रथहरू यशयुक्त छन्, उसै गरी यो वरणमणिले हामीलाई कीर्ति र ऐश्वर्य प्रदान गरेर तेजस्वी र यशस्वी बनाओस् ।

**यथा यशः सोमपीथे मधुपर्के यथा यशः । एवा मे वरणो मणिः कीर्तिं भूतिं नि यच्छतु तेजसा मा समुक्षतु यशसा समनक्तु मा ॥२१॥**

जसरी सोमपीथ वा सोमपान गर्ने यज्ञ र मधुपर्क यशयुक्त छन्, उसै गरी यो वरणमणिले हामीलाई कीर्ति र ऐश्वर्य प्रदान गरेर तेजस्वी र यशस्वी बनाओस् ।

**यथा यशोऽग्निहोत्रे वषट्कारे यथा यशः । एवा मे वरणो मणिः कीर्तिं भूतिं नि यच्छतु तेजसा मा समुक्षतु यशसा समनक्तु मा ॥२२॥**

जसरी अग्निहोत्र र वषट्कार यशयुक्त छन्, उसै गरी यो वरणमणिले हामीलाई कीर्ति र ऐश्वर्य प्रदान गरेर तेजस्वी र यशस्वी बनाओस् ।

**यथा यशो यजमाने यथास्मिन् यज्ञ आहितम् । एवा मे वरणो मणिः कीर्तिं भूतिं नि यच्छतु तेजसा मा समुक्षतु यशसा समनक्तु मा ॥२३॥**

जसरी यजमान र यज्ञ यशयुक्त छन्, उसै गरी यो वरणमणिले हामीलाई कीर्ति र ऐश्वर्य प्रदान गरेर तेजस्वी र यशस्वी बनाओस् ।

**यथा यशः प्रजापतौ यथास्मिन् परमेष्ठिनि । एवा मे वरणो मणिः कीर्तिं भूतिं नि यच्छतु तेजसा मा समुक्षतु यशसा समनक्तु मा ॥२४॥**

जसरी प्रजापति र परमेष्ठी यशयुक्त छन्, उसै गरी यो वरणमणिले हामीलाई कीर्ति र ऐश्वर्य प्रदान गरेर तेजस्वी र यशस्वी बनाओस् ।

**यथा देवेष्वमृतं यथैषु सत्यमाहितम् । एवा मे वरणो मणिः कीर्तिं भूतिं नि यच्छतु तेजसा मा समुक्षतु यशसा समनक्तु मा ॥२५॥**

जसरी जसरी देवशक्तिमा अमृत र सत्य प्रतिष्ठि छन्, उसै गरी यो वरणमणिले हामीलाई कीर्ति र ऐश्वर्य प्रदान गरेर तेजस्वी र यशस्वी बनाओस् ।

## ४. सर्पविषदूरीकरण सूक्त

**ऋषि**- गरुत्मान् । **देवता**- तक्षक । **छन्द**- अनुष्टुप्, पथ्यापङ्क्ति, त्रिपदा यवमध्या गायत्री, पथ्या बृहती, उष्णिक् गर्भा परात्रिष्टुप्, भुरिक गायत्री, त्रिपदा प्रतिष्ठा गायत्री, ककुम्मती अनुष्टुप्, त्रिष्टुप्, त्र्यवसाना षट्पदा बृहती गर्भा ककुम्मती भुरिक् त्रिष्टुप ।

**इन्द्रस्य प्रथमो रथो देवानामपरो रथो वरुणस्य तृतीय इत् । अहीनामपमा रथः स्थाणुमारदथार्षत् ॥१॥**

जसरी पहिलो रथ इन्द्रदेवताका लागि, दोस्रो रथ देवताहरूका लागि तेस्रो तहको रथ वरुणदेवता का हुन् । सर्पका रथलाई अपमा भन्ने नामले चिनिन्छ । त्यो सुकेका काठका खम्बामा पनि जान सक्छ र त्यहाँबाट कुशलतासाथ भाग्नमा पनि सफल हुन्छ ।

**दर्भः शोचिस्तरूणकमश्वस्य वारः परुषस्य वारः । रथस्य बन्धुरम् ॥२॥**

जसरी खालका सर्पका लागि यो कुश नै शोकप्रद हुन्छ, अश्व नामको औषधिले सर्पको विष नाश गर्छ र पुरुष नामका औषधिले विषनिवारण गर्दछ । रथको धुरा र तरुणक नामको विशेष प्रकारको घाँस यी सबै नै सर्पको विष हटाउनमा सहायक हुन्छन् ।

**अव श्वेत पदा जहि पूर्वेण चापरेण च । उदप्लुतमिव दार्वहीनामरसं विषं वारुग्रम् ॥३॥**
हे सेतो सरस्युँ नामका औषधि ! तिमी दायाँबायाँ दुवै गोडाले पाइला चाल्दै सर्पको विष नष्ट गर । नदीको प्रवाहमा काठ खसेजस्तै मन्त्रका शक्तिले सर्पका विषको प्रभावलाई सारहीन होस् । भयानक विषलाई पनि तिमी निवारण गर ।

**अरंघुषो निमज्ज्योन्मज्ज्य पुनरब्रवीत् । उदप्लुतमिव दार्वहीनामरसं विषं वारुग्रम् ॥४॥**
अलङ्घुष नामका औषधिले विषनिवारण गर्नका लागि प्रवेश गरिसकेर बाहिर आएपछि नदीका प्रवाहमा काठ खसेको जस्तै गरी सर्पको विष सारहीन भएको छ भन्यो । हे औषधि ! तिमी विषको निवारण गर ।

**पैद्वो हन्ति कसर्णीलं पैद्वः श्वित्रमुतासितम् । पैद्वो रथर्व्याः शिरः सं बिभेद पृदाक्वाः ॥५॥**
पैद्व नामको औषधि कसर्णील, श्वित्र र असित नामका काला खालका सर्पको विषलाई प्रभावहीन बनाउने खालको छ । यसले रथर्व्या र पृदाकु नामका ठूला सर्पको शीर्ष भागलाई छिन्नभिन्न पारेको थियो ।

**पैद्व प्रेहि प्रथमोऽनु त्वा वयमेमसि । अहीन् व्यस्यतात् पथो येन स्मा वयमेमसि ॥६॥**
हे पैद्व नामका औषधि ! तिमी प्रमुख हौ, त्यसैले यहाँ आऊ भनेर हामी तिम्रो स्तुति गर्दछौँ । जुन मार्गमा हामी जाने विचार गर्दछौँ ती मार्गबाट सर्पहरू दूर भागून् ।

**इदं पैद्वो अजायतेदमस्य परायणम् । इमान्यर्वतः पदाहिघ्न्यो वाजिनीवतः ॥७॥**
सर्पको विष निवारण गर्ने यो पैद्व नामको फुर्तिलो औषधि प्रकट भइसकेको छ, यसको प्रिय स्थल पनि यही हो । यी उसै सर्पनाश गर्ने गतिशीलका पाइलाका चिह्नहरू हुन् ।

**संयतं न वि ष्परद् व्यात्तं न सं यमत् । अस्मिन् क्षेत्रे द्वावही स्त्री च पुमांश्च तावुभावरसा ॥८॥**
सर्पको बन्द मुख बन्द नै रहोस् र हामीलाई डस्नका लागि खोलेको मुख खुला नै रहोस् । यस ठाउँमा भाले वा पोथी जुन सर्पहरू छन्, ती दुवै खालका मन्त्रका प्रभावल सारहीन होऊन् ।

**अरसास इहाहयो ये अन्ति ये च दूरके । घनेन हन्मि वृश्चिकमहिं दण्डेनागतम् ॥९॥**
जुन सर्प हाम्रो वरिपरि रहने गरेका छन् र जुन परपरका जङ्गलमा वा मानिस नभएका ठाउँमा रहने गरेका छन्, ती सबै नै विषहीन होऊन् । हामी सर्पलाई लौराले हानेर र बिच्छीलाई हथौडाले हिर्काएर मार्दछौँ ।

**अघाश्वस्येदं भेषजमुभयोः स्वजस्य च । इन्द्रो मेऽहिमघायन्तमहिं पैद्वो अरन्धयत् ॥१०॥**
अघाश्व नामको एउटा र विना कुनै विशेष उद्देश्यले उत्पन्न भएको स्वज नामको अर्को गरी यी दुवै औषधि हामीसित छन् । इन्द्रदेवताले प्राणघातक पापकर्मी पैद्व नामको औषधिलाई हाम्रा अधीनमा बनाइदिएका छन् ।

**पैद्वस्य मन्महे वयं स्थिरस्य स्थिरधाम्नः । इमे पश्चा पृदाकवः प्रदीध्यत आसते ॥११॥**
अचल प्रभावयुक्त, स्थिर नामको पैद्वको पृष्ठ भागमा अर्थात् पछाडि यी सर्पहरू शोकग्रस्त भएर उभिने गरेका छन् भन्ने हाम्रो मान्यता रहेको छ ।

**नष्टासवो नष्टविषा हता इन्द्रेण वज्रिणा । जघानेन्द्रो जघ्निमा वयम् ॥१२॥**
वज्रधारण गर्ने इन्द्रदेवताले यी सर्पको प्राणशक्ति र विषको प्रभावलाई विनाश गरिसकेका थिए । देवताका राजा इन्द्रले संहार गर्न खोजेका सर्पलाई हामी मार्दछौँ ।

**हतास्तिरश्चिराजयो निपिष्टासः पृदाकवः । दर्विं करिक्रतं श्वित्रं दर्भेष्वसितं जहि ॥१३॥**
तेर्छो धर्का भएको तिरश्चिराजी नामको सर्प मन्त्रका प्रभावले विनाश भएको छ र कुत्सित फुङ्कार गर्ने पृदाकु नामको सर्प पनि पिसिइसकेको छ । हे यजमान ! करैत नामका कालो, श्वित्र नामको छिर्के सर्प र कृष्णकाय नामका सर्पहरू सबैलाई नै कुशका बीचमा राखेर मार ।

**कैरातिका कुमारिका सका खनति भेषजम् । हिरण्ययीभिरभ्रिभिर्गिरीणामुप सानुषु ॥१४॥**
किराँत जातिका यी कुमारी कन्याहरू हिरण्यी नामको सुनजस्तो चमकदार तथा तेजिलो धार भएको कोदालोले पर्वतीय शिखरमा रहेका औषधिहरु खन्ने गर्दछन् ।

**आयमगन् युवा भिषक् पृश्निहापराजितः । स वै स्वजस्य जम्भन उभयोर्वृश्चिकस्य च ॥१५॥**
यो सबै खालका विषलाई निवारण गर्ने अपराजित नामको पराजित नहुने वैद्यहरूको युवा नायक उपचारका लागि आएको छ । उसै वैद्यले स्वज नामका साप र बिच्छीका दुवै खालका विषहरूलाई नष्ट गराउन सक्छ ।

**इन्द्रो मेऽहिमरन्धयन्मित्रश्च वरुणश्च । वातापर्जन्योऽभा ॥१६॥**
इन्द्र, सूर्य, वरुण, वायु र पर्जन्य यी सबै देवताहरू हाम्रा नजिकै आउने सर्पलाई संहार गर्दछन् ।

**इन्द्रो मेऽहिमरन्धयत् पृदाकुं च पृदाक्वम् । स्वजं तिरश्चिराजिं कसर्णीलं दशोनसिम् ॥१७॥**
इन्द्रदेवताले पृदाकु, पृदाक्व, स्वज, तिरश्चिराजी, कसर्णील र दशोनसी आदि यी सबै सर्पलाई हाम्रो कल्याणका लागि नियन्त्रित गरिएको छ ।

**इन्द्रो जघान प्रथमं जनितारमहे तव । तेषामु तृह्यमाणानां कः स्वित् तेषामसद् रसः ॥१८॥**
हे सर्प ! तिम्रा जन्मदातालाई इन्द्रदेवताले पहिले नै समाप्त गरिदिएका थिए । उनले सर्पलाई संहार गर्ने बेलामा कुनै सर्प सामर्थ्यवान् भएर रहन सकेका थिए र ?

**सं हि शीर्षाण्यग्रभं पौञ्जिष्ठ इव कर्वरम् । सिन्धोर्मध्यं परेत्य व्यनिजमहेर्विषम् ॥१९॥**
कुशल डुङ्गा चलाउनेहरू जसरी कुशलताका साथ नदीका माझमा पुगेर पनि सकुशल फिर्ता हुन सक्छन् उसरी नै सर्पलाई नियन्त्रण गर्नमा सिपालु, हामीहरू सर्पको गर्धनमा पक्रन्छौँ र तिनको विषलाई विशेष रीतिले शोधित गर्दछौँ ।

**अहीनां सर्वेषां विषं परा वहन्तु सिन्धवः । हतास्तिरश्चिराजयो निपिष्टासः पृदाकवः ॥२०॥**
सबै खालका सर्पहरूको विषजति नदीले बगाएर लैजाऊन् । तिरश्चिराजी नामको र पृदाकु आदि महासर्पहरू नष्ट भइसकेका छन् ।

**ओषधीनामहं वृण उर्वरीरिव साधुया । नयाम्यर्वतीरिवाहे निरैतु ते विषम् ॥२१॥**
हामी आफ्नो कल्याणकारी प्रेरणाले औषधिहरूलाई उब्जाउ भूमिमा धान आदि उमारेझैँ नै प्राप्त गर्दछौँ । हे सर्प ! तिमीहरूका विषको निवारण होस् ।

**यदग्नौ सूर्ये विषं पृथिव्यामोषधीषु यत् । कान्दाविषं कनक्नकं निरैत्वैतु ते विषम् ॥२२॥**
अग्नि, सूर्य, भूमि, कन्दरा, कन्दमूल, वनस्पति आदिमा जुन विष विद्यमान रहेको छ, त्यो सम्पूर्ण विष विशेष खालका वनस्पतिमा आओस् र त्यस वनस्पतिद्वारा त्यो विष पूर्ण रूपले निवारण होस् ।

**ये अग्निजा ओषधिजा अहीनां ये अप्सुजा विद्युत आबभूवुः । येषां जातानि बहुधा महान्ति तेभ्यः सर्पेभ्यो नमसा विधेम ॥२३॥**
अग्नि, औषधि, जल र सर्पमा उत्पन्न भएको मानिसलाई प्रकम्पित गर्ने बिजुलीजस्तो तीव्र विष जुन हुन्छन्, जुन कारण विशाल कर्म गर्न सकिएको थियो, ती सर्पलाई हामी हविष्यान्न समर्पित गर्दछौँ ।

**तौदी नामासि कन्या घृताची नाम वा असि । अधस्पदेन ते पदमा ददे विषदूषणम् ॥२४॥**
तौदी र घृताची नामका यी सुन्दर औषधिहरू छन् । हे औषधि ! तलतिर गोडा पारेर विषनाशक भागजति हामी फेला पार्दछौँ ।

**अङ्गादङ्गात् प्र च्यावय हृदयं परि वर्जय । अधा विषस्य यत् तेजोऽवाचीनं तदेतु ते ॥२५॥**
हे रोगी मानिस ! हामी तिम्रो हृदयक्षेत्रलाई संरक्षित गर्दै प्रत्येक अङ्गअवयवबाट विष निकालौँ,

त्यसपछि त्यस विषको प्रभाव तल झर्दै अति पर पुगोस् ।

**आरे अभूद् विषमरौद् विषे विषमप्रागपि । अग्निर्विषमहेर्निरधात् सोमो निरणयीत् । दंष्टारमन्वगाद् विषमहिरमृत ॥२६॥**

विष निवारण भएको, विष बाँधिदिएको, औषधिमा मिसिएर पहिलेको जस्तो प्रभावबाट शून्य बनिसकेको छ । अग्निले डढाएर पनि सर्पको विष निवारण भइसकेको छ । सोम औषधिले सर्पको विष हटाउँछ । डस्ने खालका सर्पको विष मेटियो र त्यसले गर्दा सर्पको मृत्यो भयो ।

## ५. विजयप्राप्ति सूक्त

**ऋषि**- सिन्धु द्वीप, कौशिक, ब्रह्मा, विहव्य । **देवता**- आपः, चन्द्रमा, विष्णुक्रम, मृत्यु, मन्त्रोक्त, प्रजापति । **छन्द**- त्रिपदा पुरोऽभिकृति ककुम्मतीगर्भापङ्क्ति, चतुष्पदा जगतीगर्भा जगती, त्र्यवसाना पञ्चपदा विपरीतपादलक्ष्मा बृहती, पथ्यापङ्क्ति, चतुरवसाना दशपदा त्रैष्टुभगर्भाअतिधृति, चतुरवसाना दशपदा त्रैष्टुभगर्भा कृति, अनुष्टुप्, त्रिपदा विराट् गायत्री, त्र्यवसाना षट्पदा यथाक्षरं शक्वरी र अतिशक्वरी, पंचपदा अतिशाक्वर अतिजागतगर्भा अष्टि, विराट् पुरस्ताद् बृहती पुर उष्णिक्, आर्षीगायत्री, विराट् विषमा गायत्री, त्रिपदा गायत्री गर्भा अनुष्टुप्, त्रिष्टुप् ।

**इन्द्रस्यौज स्थेन्द्रस्य सह स्थेन्द्रस्य बलं स्थेन्द्रस्य वीर्यं स्थेन्द्रस्य नृम्णं स्थ । जिष्णवे योगाय ब्रह्मयोगैर्वो युनज्मि ॥१॥**

हे दिव्य प्रवाह ! तिमी इन्द्रदेवताको ओज, बल, शत्रुलाई पराजित गर्ने पराक्रम र ऐश्वर्य हौ । यस्तो गुणसम्पन्न तिमीलाई विजय प्राप्त गर्नका लागि हामी ब्रह्मयोगसित संयुक्त गर्दछौं ।

**इन्द्रस्यौज स्थेन्द्रस्य सह स्थेन्द्रस्य बलं स्थेन्द्रस्य वीर्यं स्थेन्द्रस्य नृम्णं स्थ । जिष्णवे योगाय क्षत्रयोगैर्वो युनज्मि ॥२॥**

हे दिव्य प्रवाह ! तिमी इन्द्रदेवताको ओज, बल, सङ्घर्षशक्ति र ऐश्वर्य हौ । विजय प्राप्त गर्नका लागि हामी तिमीलाई क्षात्रबलसित सम्बन्धित गराउँछौं ।

**इन्द्रस्यौज स्थेन्द्रस्य सह स्थेन्द्रस्य बलं स्थेन्द्रस्य वीर्यं स्थेन्द्रस्य नृम्णं स्थ । जिष्णवे योगायेन्द्रयोगैर्वो युनज्मि ॥३॥**

हे दिव्य प्रवाह ! तिमी इन्द्रदेवताको ओज, बल, सङ्घर्षशक्ति र ऐश्वर्य हौ । विजय प्राप्त गर्नका लागि हामी तिमीलाई इन्द्रयोग नामको सङ्गठनशक्तिसित सम्बन्धित गराउँछौं ।

**इन्द्रस्यौज स्थेन्द्रस्य सह स्थेन्द्रस्य बलं स्थेन्द्रस्य वीर्यं स्थेन्द्रस्य नृम्णं स्थ । जिष्णवे योगाय सोमयोगैर्वो युनज्मि ॥४॥**

हे दिव्य प्रवाह ! तिमी इन्द्रदेवताको ओज, बल, सङ्घर्षशक्ति र ऐश्वर्य हौ । विजय प्राप्त गर्नका लागि हामी तिमीलाई इन्द्रयोग नामको सोम आदि योगसित सम्बन्धित गराउँछौं ।

**इन्द्रस्यौज स्थेन्द्रस्य सह स्थेन्द्रस्य बलं स्थेन्द्रस्य वीर्यं स्थेन्द्रस्य नृम्णं स्थ । जिष्णवे योगायाप्सुयोगैर्वो युनज्मि ॥५॥**

हे दिव्य प्रवाह ! तिमी इन्द्रदेवताको ओज, बल, सङ्घर्षशक्ति र ऐश्वर्य हौ । विजय प्राप्त गर्नका लागि हामी तिमीलाई इन्द्रयोग नामको जल आदि योगसित सम्बन्धित गराउँछौं ।

**इन्द्रस्यौज स्थेन्द्रस्य सह स्थेन्द्रस्य बलं स्थेन्द्रस्य वीर्यं स्थेन्द्रस्य नृम्णं स्थ । जिष्णवे योगाय विश्वानि मा भूतान्युप तिष्ठन्तु युक्ता म आप स्थ ॥६॥**

हे दिव्य प्रवाह ! तिमी इन्द्रदेवताको ओज, बल, सङ्घर्षशक्ति र ऐश्वर्य हौ । विजय प्राप्त गर्नका लागि सबै प्राणीका नजिकै तिमी बस ।

**अग्नेर्भाग स्थ । अपां शुक्रमापो देवीर्वर्चो अस्मासु धत्त । प्रजापतेर्वो धाम्नास्मै लोकाय सादये ॥७॥**

हे दिव्य प्रवाह ! तिमी अग्निका अंश हौ । जलका शुक्ररूपी उत्पादक अंशका रूपमा हामीभित्र

तिमी तेज स्थापना गर । प्रजापतिका धाममा आएका तिमीलाई यस लोकमा सुनिश्चित स्थान दिनेछौँ ।

**इन्द्रस्य भाग स्थ । अपां शुक्रमापो देवीर्वर्चो अस्मासु धत्त । प्रजापतेर्वो धाम्नास्मै लोकाय सादये ॥८॥**

हे दिव्य प्रवाह ! तिमी इन्द्रका अंश हौ । जलका शुक्ररूपी उत्पादक अंशका रूपमा हामीभित्र तिमी तेज स्थापना गर । प्रजापतिका धाममा आएका तिमीलाई यस लोकमा सुनिश्चित स्थान दिनेछौँ ।

**सोमस्य भाग स्थ । अपां शुक्रमापो देवीर्वर्चो अस्मासु धत्त । प्रजापतेर्वो धाम्नास्मै लोकाय सादये ॥९॥**

हे दिव्य प्रवाह ! तिमी सोमका अंश हौ । जलका शुक्ररूपी उत्पादक अंशका रूपमा हामीभित्र तिमी तेज स्थापना गर । प्रजापतिका धाममा आएका तिमीलाई यस लोकमा सुनिश्चित स्थान दिनेछौँ ।

**वरुणस्य भाग स्थ । अपां शुक्रमापो देवीर्वर्चो अस्मासु धत्त । प्रजापतेर्वो धाम्नास्मै लोकाय सादये ॥१०॥**

हे दिव्य प्रवाह ! तिमी वरुणका अंश हौ । जलका शुक्ररूपी उत्पादक अंशका रूपमा हामीभित्र तिमी तेज स्थापना गर । प्रजापतिका धाममा आएका तिमीलाई यस लोकमा सुनिश्चित स्थान दिनेछौँ ।

**मित्रावरुणयोर्भाग स्थ । अपां शुक्रमापो देवीर्वर्चो अस्मासु धत्त । प्रजापतेर्वो धाम्नास्मै लोकाय सादये ॥११॥**

हे दिव्य प्रवाह ! तिमी मित्रावरुणका अंश हौ । जलका शुक्ररूपी उत्पादक अंशका रूपमा हामीभित्र तिमी तेज स्थापना गर । प्रजापतिका धाममा आएका तिमीलाई यस लोकमा सुनिश्चित स्थान दिनेछौँ ।

**यमस्य भाग स्थ । अपां शुक्रमापो देवीर्वर्चो अस्मासु धत्त । प्रजापतेर्वो धाम्नास्मै लोकाय सादये ॥१२॥**

हे दिव्य प्रवाह ! तिमी यमका अंश हौ । जलका शुक्ररूपी उत्पादक अंशका रूपमा हामीभित्र तिमी तेज स्थापना गर । प्रजापतिका धाममा आएका तिमीलाई यस लोकमा सुनिश्चित स्थान दिनेछौँ ।

**पितृणां भाग स्थ । अपां शुक्रमापो देवीर्वर्चो अस्मासु धत्त । प्रजापतेर्वो धाम्नास्मै लोकाय सादये ॥१३॥**

हे दिव्य प्रवाह ! तिमी पितृका अंश हौ । जलका शुक्ररूपी उत्पादक अंशका रूपमा हामीभित्र तिमी तेज स्थापना गर । प्रजापतिका धाममा आएका तिमीलाई यस लोकमा सुनिश्चित स्थान दिनेछौँ ।

**देवस्य सवितुर्भाग स्थ । अपां शुक्रमापो देवीर्वर्चो अस्मासु धत्त । प्रजापतेर्वो धाम्नास्मै लोकाय सादये ॥१४॥**

हे दिव्य प्रवाह ! तिमी सवितादेवताका अंश हौ । जलका शुक्ररूपी उत्पादक अंशका रूपमा हामीभित्र तिमी तेज स्थापना गर । प्रजापतिका धाममा आएका तिमीलाई यस लोकमा सुनिश्चित स्थान दिनेछौँ ।

**यो व आपोऽपां भागोऽप्स्व१न्तर्यजुष्यो देवयजनः । इदं तमति सृजामि तं माभ्यवनिक्षि । तेन तमभ्यतिसृजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । तं वधेयं तं स्तृषीयानेन ब्रह्मणानेन कर्मणानया मेन्या ॥१५॥**

हे जलप्रवाहहरू हो ! तिमीहरूको जुन पानीले भरिएको भाग छ, रसभित्र यज्ञ आदि यजनीय अंश जुन छ, त्यसलाई हामी त्यो शत्रुतर्फ पठाउँछौँ । त्यसले हामीलाई पुष्टि प्रदान गरोस् र जजसले हामीसित द्वेष गर्दछन् वा हामी जोसित द्वेष गर्दछौँ, यस ज्ञानका प्रयोगले र यस अभिचार शक्तिले

अनि यस इच्छाशक्तिले उनको वध गर र उनलाई नष्ट गराओ ।

**यो व आपोऽपामूर्मिरस्व१न्तर्यजुष्यो देवयजनः । ईदं तमति सृजामि तं माभ्यवनिक्षि । तेन तमभ्यतिसृजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । तं वधेयं तं स्तृषीयानेन ब्रह्मणानेन कर्मणानया मेन्या ॥१६॥**

हे जलप्रवाहहरू हो ! तिमीहरूको जुन गतिशील लहर छ, रसभित्र यज्ञ आदि यजनीय अंश जुन छ, त्यसलाई हामी त्यो शत्रुतर्फ पठाउँछौं । त्यसले हामीलाई पुष्टि प्रदान गरोस् र जजसले हामीसित द्वेष गर्दछन् वा हामी जोसित द्वेष गर्दछौं, यस ज्ञानका प्रयोगले र यस अभिचार शक्तिले अनि यस इच्छाशक्तिले उनको वध गर र उनलाई नष्ट गराओ ।

**यो व आपोऽपां वत्सोऽप्स्व१न्तर्यजुष्यो देवयजनः । ईदं तमति सृजामि तं माभ्यवनिक्षि । तेन तमभ्यतिसृजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । तं वधेयं तं स्तृषीयानेन ब्रह्मणानेन कर्मणानया मेन्या ॥१७॥**

हे जलप्रवाहहरू हो ! तिमीहरूको विकासमान वत्स नामको अंश छ, रसभित्र यज्ञ आदि यजनीय अंश जुन छ, त्यसलाई हामी त्यो शत्रुतर्फ पठाउँछौं । त्यसले हामीलाई पुष्टि प्रदान गरोस् र जजसले हामीसित द्वेष गर्दछन् वा हामी जोसित द्वेष गर्दछौं, यस ज्ञानका प्रयोगले र यस अभिचार शक्तिले अनि यस इच्छाशक्तिले उनको वध गर र उनलाई नष्ट गराओ ।

**यो व आपोऽपां वृषभोऽप्स्व१न्तर्यजुष्यो देवयजनः । ईदं तमति सृजामि तं माभ्यवनिक्षि । तेन तमभ्यतिसृजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । तं वधेयं तं स्तृषीयानेन ब्रह्मणानेन कर्मणानया मेन्या ॥१८॥**

हे जलप्रवाहहरू हो ! तिमीहरूको बलशाली वा वर्षणशील वृषभ नामको अंश छ, रसभित्र यज्ञ आदि यजनीय अंश जुन छ, त्यसलाई हामी त्यो शत्रुतर्फ पठाउँछौं । त्यसले हामीलाई पुष्टि प्रदान गरोस् र जजसले हामीसित द्वेष गर्दछन् वा हामी जोसित द्वेष गर्दछौं, यस ज्ञानका प्रयोगले र यस अभिचार शक्तिले अनि यस इच्छाशक्तिले उनको वध गर र उनलाई नष्ट गराओ ।

**यो व आपोऽपां हिरण्यगर्भोऽप्स्व१न्तर्यजुष्यो देवयजनः । ईदं तमति सृजामि तं माभ्यवनिक्षि । तेन तमभ्यतिसृजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । तं वधेयं तं स्तृषीयानेन ब्रह्मणानेन कर्मणानया मेन्या ॥१९॥**

हे जलप्रवाहहरू हो ! तिमीहरूभित्र हिरण्यगर्भ नामको रूप छ, रसभित्र यज्ञ आदि यजनीय अंश जुन छ, त्यसलाई हामी त्यो शत्रुतर्फ पठाउँछौं । त्यसले हामीलाई पुष्टि प्रदान गरोस् र जजसले हामीसित द्वेष गर्दछन् वा हामी जोसित द्वेष गर्दछौं, यस ज्ञानका प्रयोगले र यस अभिचार शक्तिले अनि यस इच्छाशक्तिले उनको वध गर र उनलाई नष्ट गराओ ।

**यो व आपोऽपामश्मा पृश्निर्दिव्योऽप्स्व१न्तर्यजुष्यो देवयजनः । ईदं तमति सृजामि तं माभ्यवनिक्षि । तेन तमभ्यतिसृजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । तं वधेयं तं स्तृषीयानेन ब्रह्मणानेन कर्मणानया मेन्या ॥२०॥**

हे जलप्रवाहहरू हो ! तिमीहरूभित्र अश्म नामको ढुङ्गाजस्तो बलियो र सूर्यजस्तो दिव्य रूप छ, रसभित्र यज्ञ आदि यजनीय अंश जुन छ, त्यसलाई हामी त्यो शत्रुतर्फ पठाउँछौं । त्यसले हामीलाई पुष्टि प्रदान गरोस् र जजसले हामीसित द्वेष गर्दछन वा हामी जोसित द्वेष गर्दछौं, यस ज्ञानका प्रयोगले र यस अभिचार शक्तिले अनि यस इच्छाशक्तिले उनको वध गर र उनलाई नष्ट गराओ ।

**यो व आपोऽपामग्नयोऽप्स्व१न्तर्यजुष्या देवयजनः । ईदं तानति सृजामि तान् माभ्यवनिक्षि । तैस्तमभ्यतिसृजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । तं वधेयं तं स्तृषीयानेन ब्रह्मणानेन कर्मणानया मेन्या ॥२१॥**

हे जलप्रवाहहरू हो ! तिमीहरूभित्र अग्निजस्तो तातोपनाले भरिएको शक्ति वा भाग छ, रसभित्र यज्ञ आदि यजनीय अंश जुन छ, त्यसलाई हामी त्यो शत्रुतर्फ पठाउँछौं । त्यसले हामीलाई पुष्टि प्रदान गरोस् र जजसले हामीसित द्वेष गर्दछन् वा हामी जोसित द्वेष गर्दछौं, यस ज्ञानका प्रयोगले र

यस अभिचार शक्तिले अनि यस इच्छाशक्तिले उनको वध गर र उनलाई नष्ट गराओ ।

**यदर्वाचीनं त्रैहायणादनृतं किं चोदिम । आपो मा तस्मात् सर्वसमाद् दुरितात् पान्त्वंहसः ॥२२॥**

तीन वर्षको अन्तरालमा हामीले जेजति असत्य वचन बोलेका छौँ, ती सबै दुर्गति प्रदान गर्ने पापकृत्यहरूबाट हामीलाई दिव्य जलले संरक्षित गरोस् ।

**समुद्रं वः प्र हिणोमि स्वां योनिपपीतन । अरिष्यः सर्वहायसो मा च नः किं चनाममत् ॥२३॥**

हे दिव्य जलका प्रवाह ! तिमीलाई हामी समुद्रतर्फ र त्यहाँबाट अन्तरिक्षतर्फ पठाउँछौँ । तिमी आफ्नो उद्‌गम स्थानमा विलीन होऊ । तिम्रो गति सबै ठाउँमा रहेको छ । तिमी हिंसा निवारक हौ, त्यसैले कुनै पनि शत्रुले हामीलाई संहार गर्न नसकोस् ।

**अरिप्रा आपो अप रिप्रमस्मत् । प्रास्मदेनो दुरितं सुप्रतीकाः प्र दुष्वप्न्यं प्र मलं वहन्तु ॥२४॥**

दिव्य अप् प्रवाह निर्दोष र निर्मल छ । उसले हामी सबैको पाप र दोष मेटाउँछ । उत्तम रूप भएको यो प्रवाह हामीबाट दुर्गतियुक्त पाप, दुष्ट स्वप्नबाट उत्पन्न पापकर्म र मलविक्षेप आदिलाई बगाएर धेरै पर लैजान्छ ।

**विष्णोः क्रमोऽसि सपत्नहा पृथिवीसंशितोऽग्नितेजाः । पृथिवीमनु वि क्रमेऽहं पृथिव्यास्तं निर्भजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । स मा जीवीत् तं प्राणो जहातु ॥२५॥**

तिम्रो पराक्रम पालनपोषण गर्ने विष्णुदेवताको जस्तै छ । शत्रुलाई नाश गर्ने तिमी पृथ्वीमा प्रशंसित र अग्निको जस्तै तेजस्विताले युक्त छौ । पृथ्वीमा तिमी विशेष पराक्रम गर । हामी पृथ्वीबाट तिनलाई हटाउँछौँ, जसले हामीमाथि द्वेष गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ; प्राणतत्त्वले उनीहरूलाई परित्याग गरोस्, उनीहरू जीवित नरहून् ।

**विष्णोः क्रमोऽसि सपत्नहान्तरिक्षसंशितो वायुतेजाः । अन्तरिक्षमनु वि क्रमेऽहमन्तरिक्षात् तं निर्भजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । स मा जीवीत् तं प्राणो जहातु ॥२६॥**

तिम्रो पराक्रम पालनपोषण गर्ने विष्णुदेवताको जस्तै छ । शत्रुलाई नाश गर्ने तिमी अन्तरिक्षमा प्रशंसित र वायुको जस्तै तेजस्विताले युक्त छौ । पृथ्वीमा तिमी विशेष पराक्रम गर । हामी अन्तरिक्षबाट तिनलाई हटाउँछौँ, जसले हामीमाथि द्वेष गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ; प्राणतत्त्वले उनीहरूलाई परित्याग गरोस्, उनीहरू जीवित नरहून् ।

**विष्णोः क्रमोऽसि सपत्नहा द्यौसंशितः सूर्यतेजाः । दिवमनु वि क्रमेऽहं दिवस्तं निर्भजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । स मा जीवीत् तं प्राणो जहातु ॥२७॥**

तिम्रो पराक्रम पालनपोषण गर्ने विष्णुदेवताको जस्तै छ । शत्रुलाई नाश गर्ने तिमी द्युलोकमा प्रशंसित र सूर्यको जस्तै तेजस्विताले युक्त छौ । पृथ्वीमा तिमी विशेष पराक्रम गर । हामी द्युलोकबाट तिनलाई हटाउँछौँ, जसले हामीमाथि द्वेष गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ; प्राणतत्त्वले उनीहरूलाई परित्याग गरोस्, उनीहरू जीवित नरहून् ।

**विष्णोः क्रमोऽसि सपत्नहा दिक्संशितो मनस्तेजाः । दिशोऽनु वि क्रमेऽहं दिग्भ्यस्तं निर्भजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । स मा जीवीत् तं प्राणो जहातु ॥२८॥**

तिम्रो पराक्रम पालनपोषण गर्ने विष्णुदेवताको जस्तै छ । शत्रुलाई नाश गर्ने तिमी दिशाहरूमा प्रशंसित र मनको तेजस्विताले युक्त छौ । पृथ्वीमा तिमी विशेष पराक्रम गर । सबै दिशाबाट तिनलाई हटाउँछौँ, जसले हामीमाथि द्वेष गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ; प्राणतत्त्वले उनीहरूलाई परित्याग गरोस्, उनीहरू जीवित नरहून् ।

**विष्णोः क्रमोऽसि सपत्नहाशासंशितो वाततेजाः । आशा अनु वि क्रमेऽहमाशाभ्यस्तं निर्भजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । स मा जीवीत् तं प्राणो जहातु ॥२९॥**

तिम्रो पराक्रम पालनपोषण गर्ने विष्णुदेवताको जस्तै छ । शत्रुलाई नाश गर्ने तिमी उपदिशामा

प्रशंसित र वायुको तेजस्विताले युक्त छौ । पृथ्वीमा तिमी विशेष पराक्रम गर । हामी उपदिशाहरूबाट तिनलाई हटाउँछौँ, जसले हामीमाथि द्वेष गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ; प्राणतत्त्वले उनीहरूलाई परित्याग गरोस्, उनीहरू जीवित नरहून् ।

**विष्णोः क्रमोऽसि सपत्नह ऋक्संशितः सामतेजाः । ऋचोऽनु वि क्रमेऽहमृग्भ्यस्तं निर्भजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । स मा जीवीत् तं प्राणो जहातु ॥३०॥**

तिम्रो पराक्रम पालनपोषण गर्ने विष्णुदेवताको जस्तै छ । शत्रुलाई नाश गर्ने तिमी ऋक्वेदको ज्ञान र सामवेदको तेजस्विताले युक्त छौ । ऋक्विज्ञानमा तिमी विशेष पराक्रम गर । ऋग्वेदका ऋचाबाट तिनलाई हटाउँछौँ, जसले हामीमाथि द्वेष गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ; प्राणतत्त्वले उनीहरूलाई परित्याग गरोस्, उनीहरू जीवित नरहून् ।

**विष्णोः क्रमोऽसि सपत्नहा यज्ञसंशितो ब्रह्मतेजाः । यज्ञमनु वि क्रमेऽहं यज्ञात् तं निर्भजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । स मा जीवीत् तं प्राणो जहातु ॥३१॥**

तिम्रो पराक्रम पालनपोषण गर्ने विष्णुदेवताको जस्तै छ । शत्रुलाई नाश गर्ने तिमी यज्ञले तेजस्वी र ज्ञानेको तेजले युक्त छौ । पृथ्वीमा तिमी विशेष पराक्रम गर । हामी यज्ञबाट तिनलाई हटाउँछौँ, जसले हामीमाथि द्वेष गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ; प्राणतत्त्वले उनीहरूलाई परित्याग गरोस्, उनीहरू जीवित नरहून् ।

**विष्णोः क्रमोऽसि सपत्नहौषधीसंशितः सोमतेजाः । ओषधीरनु वि क्रमेऽहमोषधीभ्यस्तं निर्भजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । स मा जीवीत् तं प्राणो जहातु ॥३२॥**

तिम्रो पराक्रम पालनपोषण गर्ने विष्णुदेवताको जस्तै छ । शत्रुलाई नाश गर्ने तिमी औषधिले तीक्ष्ण हुन्छौ र सोमले यशस्वी भएका छौ । औषधिमा तिमी विशेष पराक्रम गर । हामी औषधिबाट तिनलाई हटाउँछौँ, जसले हामीमाथि द्वेष गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ; प्राणतत्त्वले उनीहरूलाई परित्याग गरोस्, उनीहरू जीवित नरहून् ।

**विष्णोः क्रमोऽसि सपत्नहाप्सुसंशितो वरुणातेजाः । अपोऽनु वि क्रमेऽहमद्भ्यस्तं निर्भजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । स मा जीवीत् तं प्राणो जहातु ॥३३॥**

तिम्रो पराक्रम पालनपोषण गर्ने विष्णुदेवताको जस्तै छ । शत्रुलाई नाश गर्ने तिमी जलले तीक्ष्ण हुन्छौ र औषधिले यशस्वी भएका छौ । जल प्रवाहमा तिमी विशेष पराक्रम गर । हामी जलबाट तिनलाई हटाउँछौँ, जसले हामीमाथि द्वेष गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ; प्राणतत्त्वले उनीहरूलाई परित्याग गरोस्, उनीहरू जीवित नरहून् ।

**विष्णोः क्रमोऽसि सपत्नहा कृषिसंशितोऽन्नतेजाः । कृषिमनु वि क्रमेऽहं कृष्यास्तं निर्भजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । स मा जीवीत् तं प्राणो जहातु ॥३४॥**

तिम्रो पराक्रम पालनपोषण गर्ने विष्णुदेवताको जस्तै छ । शत्रुलाई नाश गर्ने तिमी कृषिले तेजस्वी र अन्नका तेजले यशस्वी भएका छौ । कृषिमा तिमी विशेष पराक्रम गर । हामी कृषिबाट तिनलाई हटाउँछौँ, जसले हामीमाथि द्वेष गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ; प्राणतत्त्वले उनीहरूलाई परित्याग गरोस्, उनीहरू जीवित नरहून् ।

**विष्णोः क्रमोऽसि सपत्नहा प्राणसंशितः पुरुषतेजाः । प्राणमनु वि क्रमेऽहं प्राणात् तं निर्भजामो योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । स मा जीवीत् तं प्राणो जहातु ॥३५॥**

तिम्रो पराक्रम पालनपोषण गर्ने विष्णुदेवताको जस्तै छ । शत्रुलाई नाश गर्ने तिमी प्राणले तेजस्वी र पुरुषका तेजले यशस्वी भएका छौ । प्राणमा तिमी विशेष पराक्रम गर । हामी प्राणबाट तिनलाई हटाउँछौँ, जसले हामीमाथि द्वेष गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ; प्राणतत्त्वले उनीहरूलाई परित्याग गरोस्, उनीहरू जीवित नरहून् ।

**जितमस्माकमुद्भिन्नमस्माकमभ्यष्ठां विश्वाः पृतना आरातीः । इदमहमामुष्यायणस्यामुष्याः पुत्रस्य वर्चस्तेजः प्राणमायुर्नि वेष्टयामीदमेनमधराञ्चं पादयामि ॥३६॥**

हामीले जितेर र खोसेर लुटेर ल्याएका पदार्थसमूह हाम्रै हुन् । हामी सम्पूर्ण शत्रुसेनालाई वशमा

गराउँदैछौँ । अमुक गोत्रको, अमुक माताका पुत्रहरू जो हाम्रो शत्रु बनेका छन्, उनीहरूको वर्चस्, तेजस्, प्राण र आयुलाई हामी उचित किसिमले छेक्दछौँ र तिनलाई ओरालोतिर घच्याइदिन्छौँ ।

**सूर्यस्यावृतमन्वावर्ते दक्षिणामन्वावृतम् । सा मे द्रविणं यच्छतु सा मे ब्राह्मणवर्चसम् ॥३७॥**

दक्षिण दिशातिर विस्तारयुक्त सूर्यले तय गरेको मार्गलाई हामी पछ्याउँछौँ । दक्षिण दिशाले हामीलाई ऐश्वर्य तथा ब्रह्मतेजले सम्पन्न गराओस् ।

**दिशो ज्योतिष्मतीरभ्यावर्ते । ता मे द्रविणं यच्छन्तु ता मे ब्राह्मणवर्चसम् ॥३८॥**

देदीप्यमान दिशाहरूमा गमन गर्दै हामीलाई ती दिशाले ऐश्वर्य एवं ब्रह्मवर्चस प्रदान गरून् भन्ने हामी कामना गर्दछौँ ।

**सप्तऋषीनभ्यावर्ते । ते मे द्रविणं यच्छन्तु ते मे ब्राह्मणवर्चसम् ॥३९॥**

हामी सप्तर्षिका सामु उपस्थित भएर उनीहरूसित ऐश्वर्य एवं ब्रह्मवर्चसको कामना गर्दछौँ ।

**ब्रह्माभ्यावर्ते । तन्मे द्रविणं यच्छन्तु तन्मे ब्राह्मणवर्चसम् ॥४०॥**

हामी मन्त्रशक्तिका सामु उपस्थित भएर ऊसित ऐश्वर्य एवं ब्रह्मवर्चसको कामना गर्दछौँ ।

**ब्राह्मणाँ अभ्यावर्ते । ते मे द्रविणं यच्छन्तु ते मे ब्राह्मणवर्चसम् ॥४१॥**

हामी ज्ञाननिष्ठ ब्राह्मणको मार्ग अनुसरण गर्दै ऐश्वर्य एवं ब्रह्मवर्चसको कामना गर्दछौँ ।

**यं वयं मृगयामहे तं वधै स्तृणवामहै । व्यात्ते परमेष्ठिनो ब्रह्मणापीपदाम तम् ॥४२॥**

हामीले जुन दुष्टलाई खोजेका छौँ, उनलाई प्राणघातक हतियारले छोप्दछौँ र परमेश्वरको खुला अग्निरूपी मुखमा मन्त्रका प्रभावले तिनलाई घच्याउदछौँ ।

**वैश्वानरस्य दंष्ट्राभ्यां हेतिस्तं समधादभि । इयं तं प्सात्वाहुतिः समिद् देवी सहीयसी ॥४३॥**

समिधारूपी यस हतियारले शत्रुलाई वैश्वानर अग्निका दाह्रामा हामी हालिदिन्छौँ । ज्योतिले सम्पन्न र शत्रुलाई पराजित गराउने यस आहुतिले शत्रुलाई खाइदेओस् ।

**राज्ञो वरुणस्य बन्धो ऽसि । सो३मुमामुष्यायणममुष्याः पुत्रमन्ने प्राणे बधान ॥४४॥**

हे राजा वरुणका बन्धनरूपी मन्त्र ! तिमी अमुक गोत्र, अमुक माताका पुत्रहरूका लागि अन्न र प्राणमा अवरोध गराउने होऊ ।

**यत् ते अन्नं भुवस्पत आक्षियति पृथिवीमनु । तस्य नस्त्वं भुवस्पते संप्रयच्छ प्रजापते ॥४५॥**

हे पृथ्वीका अधिष्ठाता प्रजापतिदेवता ! तिम्रो जुन अन्न पृथ्वीका लागि आश्रय बनेको छ, त्यसको सारतत्त्वजति हाम्रा लागि प्रदान गर ।

**अपो दिव्या अचायिषं रसेन समपृक्ष्महि । पयस्वानग्न आगमं तं मा सं सृज वर्चसा ॥४६॥**

दिव्य जलप्रवाहलाई हामीले सङ्ग्रह गरेका छौँ । तिनलाई हामी आफैँ नै सुसङ्गठित पनि गर्दछौँ । हे अग्निदेवता ! जलका साथै हामी तिम्रा नजिक उपस्थित भएका छौँ । त्यसैले हामीलाई तेजस्विताले तिमी सम्पन्न गराऊ ।

**सं माग्ने वर्चसा सृज सं प्रजया समायुषा । विद्युर्मे अस्य देवा इन्द्रो विद्यात् सह ऋषिभिः ॥४७॥**

हे अग्निदेवता ! हामीलाई तिमी तेजस्विता, सुसन्तति र आयुले सम्पन्न गराऊ । देवशक्तिहरूले हाम्रो यो अभिप्राय बुझुन् । ऋषिहरूका साथै इन्द्रदेवताले हाम्रो अभीष्ट भाव बुझिदिऊन् ।

**यदग्ने अद्य मिथुना शपातो यद्वाचस्तृष्टं जनयन्त रेभाः । मन्योर्मनसः शरव्या३ जायते या तया विध्य हृदये यातुधानान् ॥४८॥**

हे अग्निदेवता ! जुन वक्ताले आफ्ना वाणीलाई दुरूपयोग गर्दछ, जोजो मिलेर शाप आदि दिने गर्छन् त्यस्ता राक्षसहरूका हृदयमा ती बाणले छेडिदेऊ, जुन रिस वा उत्साहरूपी मन्युका कारण उत्पन्न प्रकट भएका हुन्छन् ।

**परा शृणीहि तपसा यातुधानान् पराग्ने रक्षो हरसा शृणीहि । परार्चिषा मूरदेवाञ्छृणीहि परासुतृपः शोशुचतः शृणीहि ॥४९॥**

हे अग्निदेवता ! तिमी आफ्ना तापले राक्षसहरूलाई पर बलपूर्वक भगाइदेऊ । आफ्ना ज्वालाका बलले ती मूर्खहरूलाई पर उछिट्याऊ । अर्काको प्राणलाई शोषण गरेर खुसी वा तृप्त हुनेहरूलाई शोकले सन्तप्त गराउँदै भगाऊ ।

**अपामस्मै वज्रं प्र हरामि चतुर्भृष्टिं शीर्षभिद्याय विद्वान् । सो अस्याङ्गानि प्र शृणातु सर्वा तन्मे देवा अनु जानन्तु विश्वे ॥५०॥**

मन्त्रशक्तिको प्रयोग गर्ने हामीहरू यी शत्रुको शिर फोर्नका लागि चतुर्भृष्टि नामको जलवज्र प्रहार गर्दछौँ । यस वज्रास्त्रले यिनीहरूका सबै अङ्गप्रत्यङ्ग काटिदेओस् । यस सम्बन्धमा सबै देवताहरू हाम्रो अनुकूल रहेर उचित परामर्श दिऊन् ।

## ६. मणिबन्धन सूक्त

**ऋषि-** बृहस्पति । **देवता-** फालमणि, वनस्पति, आपः । **छन्द-** अनुष्टुप्, गायत्री, षट्पदा जगती, सप्तपदा विराट् शक्वरी, त्र्यवसानाष्टपदाष्टि, त्र्यवसाना नवपदाधृति, पथ्यापङ्क्ति, त्र्यवसाना षट्पदा शक्वरी, त्र्यवसाना षट्पदा जगती, पञ्चपदा त्र्यनुष्टुप् गर्भा जगती ।

**अरातीयोर्भ्रातृव्यस्य दुर्हार्दो द्विषतः शिरः । अपि वृश्चाम्योजसा ॥१॥**

हृदयमा दुर्भावना राख्ने शत्रुको शिर वा तिनको विचारलाई हामी आफ्ना ओजले छिन्नभिन्न गर्दछौँ ।

**वर्म मह्यमयं मणिः फालाज्जातः करिष्यति । पूर्णो मन्थेन मागमद् रसेन सह वर्चसा ॥२॥**

मन्थनद्वारा रसले परिपूर्ण भएर यो मणि तेजका साथ हाम्रा निकट आएको छ । फालीबाट उत्पन्न हुने यो मणि कवचजस्तै भएर हाम्रो संरक्षण गर्दछ ।

**यत् त्वा शिक्वः परावधीत् तक्षा हस्तेन वास्या । आपस्त्वा तस्माज्जीवलाः पुनन्तु शुचयः शुचिम् ॥३॥**

तिमीलाई शिक्व नामका कुशल कारीगरले छाँटेका छन् र तक्षक नामका सिकर्मीले हातमा शस्त्र लिएर तिमीलाई गढेका हुन् । तिमी स्वच्छ उपकरण हुनाले तिमीलाई शुद्ध जलले पवित्र बनाउँछ ।

**हिरण्यस्रगयं मणिः श्रद्धां यज्ञं महो दधत् । गृहे वसतु नोऽतिथिः ॥४॥**

यो सुनको मालाजस्तो मणि श्रद्धा, भक्ति र यज्ञले प्रभावशाली भएर अतिथिझैँ हाम्रा भवनमा निवास गर ।

**तस्मै घृतं सुरां मध्वन्नमन्नं क्षदामहे । स नः पितेव पुत्रेभ्यः श्रेयः श्रेयश्चिकित्सतु भूयोभूयः श्वःश्वो देवेभ्यो मणिरेत्य ॥५॥**

हामी यस मणिका लागि घिउ, कडा खालको औषधिरस, मह र अन्न समर्पित गर्दछौँ । पिताले पुत्रको हित साधन गरेझैँ यो मणि हाम्रा लागि परम कल्याणकारी होस् । देवताहरूका नजिक बारम्बार आएर यस मणिले हाम्रा लागि कल्याणकारी योजना बनाओस् ।

**यमबध्नाद् बृहस्पतिर्मणिं फालं घृतश्चुतमुग्रं खदिरमोजसे । तमग्निः प्रत्यमुञ्चत सो अस्मै दुह आज्यं भूयोभूयः श्वःश्वस्तेन त्वं द्विषतो जहि ॥६॥**

घिउको जस्तै पौष्टिक तत्त्व प्रदान गर्ने र प्रचण्ड प्रभावयुक्त खयरको हलोमा जडिएका फालबाट उत्पन्न गरेको मणिलाई बृहस्पतिदेवताले बलबुद्धि वृद्धि गर्नका लागि धारण गरे । अग्निदेवताले आफ्ना शरीरमा त्यो बाँध्न लगाएका थिए । अग्निका लागि यस मणिले दिनहुँ बारम्बार घिउको सार तत्त्व उपलब्ध गरायो । त्यस मणिका सामर्थ्यले तिमी शत्रु हनन गर ।

**यमबध्नाद् बृहस्पतिर्मणिं फालं घृतश्चुतमुग्रं खदिरमोजसे । तमिन्द्रः प्रत्यमुञ्चतौजसे वीर्याय कम् । सो अस्मै बलमिद् दुहे भूयोभूयः श्वःश्वस्तेन त्वं द्विषतो जहि ॥७॥**

घिउको जस्तै पौष्टिक तत्त्व प्रदान गर्ने र प्रचण्ड प्रभावयुक्त खयरको हलोमा जडिएका फालीले उत्पन्न गरेको मणिलाई बृहस्पतिदेवताले बलबुद्धि वृद्धि गर्नका लागि धारण गरे । इन्द्रदेवताले ओज र वीर्य प्राप्त गर्नका लागि आफ्ना शरीरमा त्यो बाँध्न लगाएका थिए । इन्द्रदेवताका लागि यस मणिले दिनहुँ बारम्बार घिउरूपी सार तत्त्व उपलब्ध गरायो । त्यस मणिका सामर्थ्यले तिमी शत्रु हनन गर ।

**यमबध्नाद् बृहस्पतिर्मणिं फालं घृतश्चुतमुग्रं खदिरमोजसे । तं सोमः प्रत्यमुञ्चत महे श्रोत्राय चक्षसे । सो अस्मै वर्च इद् दुहे भूयोभूयः श्वःश्वस्तेन त्वं द्विषतो जहि ॥८॥**

घिउको जस्तै पौष्टिक तत्त्व प्रदान गर्ने र प्रचण्ड प्रभावयुक्त खयरको हलोमा जडिएका फालीले उत्पन्न गरेको मणिलाई बृहस्पतिदेवताले बलबुद्धि वृद्धि गर्नका लागि धारण गरे । सोमदेवताले महिमामय श्रवणशक्ति र दृष्टिशक्ति प्राप्त गर्नका लागि आफ्ना शरीरमा त्यो बाँध्न लगाएका थिए । इन्द्रदेवताका लागि यस मणिले दिनहुँ बारम्बार घिउरूपी सार तत्त्व उपलब्ध गरायो । त्यस मणिका सामर्थ्यले तिमी शत्रु हनन गर ।

**यमबध्नाद् बृहस्पतिर्मणिं फालं घृतश्चुतमुग्रं खदिरमोजसे । तं सूर्यः प्रत्यमुञ्चत तेनेमा अजयद् दिशः । सो अस्मै भूतिमिद् दुहे भूयोभूयः श्वःश्वस्तेन त्वं द्विषतो जहि ॥९॥**

घिउको जस्तै पौष्टिक तत्त्व प्रदान गर्ने र प्रचण्ड प्रभावयुक्त खयरको हलोमा जडिएका फालीले उत्पन्न गरेको मणिलाई बृहस्पतिदेवताले बलबुद्धि वृद्धि गर्नका लागि धारण गरे । सूर्यदेवताले महिमामय समस्त दिशाहरूमा विजय प्राप्त गर्नका लागि आफ्ना शरीरमा त्यो बाँध्न लगाएका थिए । इन्द्रदेवताका लागि यस मणिले दिनहुँ बारम्बार घिउरूपी सार तत्त्व उपलब्ध गरायो । त्यस मणिका सामर्थ्यले तिमी शत्रु हनन गर ।

**यमबध्नाद् बृहस्पतिर्मणिं फालं घृतश्चुतमुग्रं खदिर मोजसे । तं बिभ्रच्चन्दमा मपणमसुराणां पुरोऽजयद् दानावानां हिरण्ययीः । सो अस्मै श्रियमिद् दुहे भूयोभूयः श्वःश्वस्तेन त्वं द्विषतो जहि ॥१०॥**

घिउको जस्तै पौष्टिक तत्त्व प्रदान गर्ने र प्रचण्ड प्रभावयुक्त खयरको हलोमा जडिएका फालीले उत्पन्न गरेको मणिलाई बृहस्पतिदेवताले बलबुद्धि वृद्धि गर्नका लागि धारण गरे । चन्द्रदेवताले असुर र दानवहरूका सुनौला सहरहरूमाथि अधिकार प्राप्त गर्नका लागि आफ्ना शरीरमा त्यो बाँध्न लगाएका थिए । इन्द्रदेवताका लागि यस मणिले दिनहुँ बारम्बार घिउरूपी सार तत्त्व उपलब्ध गरायो । त्यस मणिका सामर्थ्यले तिमी शत्रु हनन गर ।

**यमबध्नाद् बृहस्पतिर्वाताय मणिमाशवे । सो अस्मै वाजिनं दुहे भूयोभूयः श्वःश्वस्तेन त्वं द्विषतो जहि ॥११॥**

फालीले उत्पन्न गरेको मणिलाई बृहस्पतिदेवताले बलबुद्धि वृद्धि गर्नका लागि धारण गरे । त्यसलाई वायुदेवताले गतिशील बनाउनका लागि आफ्ना शरीरमा त्यो बाँध्न लगाएका थिए । त्यस मणिका सामर्थ्यले तिमी शत्रु हनन गर ।

**यमबध्नाद् बृहस्पतिर्वाताय मणिमाशवे । तेनेमां मणिना कृषिमश्विनावभि रक्षतः । स भिषग्भ्यां महो दुहे भूयोभूयः श्वःश्वस्तेन त्वं द्विषतो जहि ॥१२॥**

फालीले उत्पन्न गरेको मणिलाई बृहस्पतिदेवताले बलबुद्धि वृद्धि गर्नका लागि धारण गरे । त्यसलाई अश्विनीकुमारले कृषिको सुरक्षा गर्नका लागि आफ्ना शरीरमा त्यो बाँध्न लगाएका थिए । त्यस मणिले अश्विनीकुमारहरूलाई बारम्बार जल प्रदान गर्दछ । हे मणि धारण गर्ने मानिस ! त्यस मणिका सामर्थ्यले तिमी शत्रु हनन गर ।

**यमबध्नाद् बृहस्पतिर्वाताय मणिमाशवे । तं विभ्रद् सविता मणिं तेनेदमजयत् स्वः । सो अस्मै सूनृतां दुहे भूयोभूयः श्वःश्वस्तेन त्वं द्विषतो जहि ॥१३॥**

फालीले उत्पन्न गरेको मणिलाई बृहस्पतिदेवताले बलबुद्धि वृद्धि गर्नका लागि धारण गरे । त्यसलाई सवितादेवताले स्वर्गमा विजय प्राप्त गर्नका लागि आफ्ना शरीरमा त्यो बाँध्न लगाएका थिए । त्यस मणिले सवितादेवतालाई प्रत्येक दिन बारम्बार शुभ र सत्य वाणी उच्चारण गर्दछ । हे मणि धारण गर्ने मानिस ! त्यस मणिका सामर्थ्यले तिमी शत्रु हनन गर ।

**यमबध्नाद् बृहस्पतिर्वाताय मणिमाशवे । तमापो बिभ्रतीर्मणिं सदा धावन्त्यक्षिताः । सो आभ्योऽमृतमिद् दुहे भूयोभूयः श्वःश्वस्तेन त्वं द्विषतो जहि ॥१४॥**

फालीले उत्पन्न गरेको मणिलाई बृहस्पतिदेवताले बलबुद्धि वृद्धि गर्नका लागि धारण गरे । त्यसलाई धारण गरेर जल सधैँभरि अक्षय रूपमा बगिरहन्छ । जल प्रवाहलाई यस मणिले प्रत्येक दिन बारम्बार अमृत प्रदान गर्दछ । हे मणि धारण गर्ने मानिस ! त्यस मणिका सामर्थ्यले तिमी शत्रु हनन गर ।

**यमबध्नाद् बृहस्पतिर्वाताय मणिमाशवे । तं राजा वरुणो मणिं प्रत्यमुञ्चत शंभुवम् । सो अस्मै सत्यमिद् दुहे भूयोभूयः श्वःश्वस्तेन त्वं द्विषतो जहि ॥१५॥**

फालीले उत्पन्न गरेको मणिलाई बृहस्पतिदेवताले बलबुद्धि वृद्धि गर्नका लागि धारण गरे त्यसलाई धारण गरेर वरुणदेवता सधैँभरि अक्षय सत्य प्राप्त गर्दछन् । हे मणि धारण गर्ने मानिस ! त्यस मणिका सामर्थ्यले तिमी शत्रु हनन गर ।

**यमबध्नाद् बृहस्पतिर्वाताय मणिमाशवे । तं देवा बिभ्रतो मणिं सर्वांल्लोकान् युधाजयन् स एभ्यो जितिमिद् दुहे भूयोभूयः श्वःश्वस्तेन त्वं द्विषतो जहि ॥१६॥**

फालीले उत्पन्न गरेको मणिलाई बृहस्पतिदेवताले बलबुद्धि वृद्धि गर्नका लागि धारण गरे त्यसलाई धारण गरेर देवताहरूले सधैँभरि युद्धमा सबै लोकहरूमा आधिपत्य प्राप्त गर्दछन् देवताहरूका लागि यो मणि सधैँ बारम्बार विजय प्रदान गर्ने होस् । हे मणि धारण गर्ने मानिस त्यस मणिका सामर्थ्यले तिमी शत्रु हनन गर ।

**यमबध्नाद् बृहस्पतिर्वाताय मणिमाशवे । तमिमं देवता मणिं प्रत्यमुञ्चन्त शंभुवम् । स आभ्यो विश्वमिद् दुहे भूयोभूयः श्वःश्वस्तेन त्वं द्विषतो जहि ॥१७॥**

फालीले उत्पन्न गरेको मणिलाई बृहस्पतिदेवताले बलबुद्धि वृद्धि गर्नका लागि धारण गरे त्यसलाई धारण गरेर वायुले तीव्रताका लागि धारण गरे । त्यस सुखदायी मणिलाई देवताहरू पनि धारण गरे । देवताहरूका लागि यो मणि सधैँ बारम्बार विश्वको सुख प्रदान गर्ने होस् मणि धारण गर्ने मानिस ! त्यस मणिका सामर्थ्यले तिमी शत्रु हनन गर ।

**ऋतवस्तमबध्नतार्तवास्तमबध्नत । संवत्सरस्तं बद्ध्वा सर्वं भूतं वि रक्षति ॥१८॥**

ऋतुहरू र ऋतुका अङ्गका रूपमा रहेका महिनाहरूले यस मणिलाई धारण गरेका थिए । धारण गरेर संवत्सरले सबै प्राणीहरूको संरक्षण गर्दछन् ।

**अन्तर्देशा अबध्नत प्रदिशस्तमबध्नत । प्रजापतिसृष्टो मणिर्द्विषतो मेऽधराँ अकः ॥१९॥**

अन्तर्दिशा र प्रदिशाहरूले यस मणिलाई धारण गरेका थिए । प्रजापालक परमेश्वरद्वारा निर्मित मणिले शत्रुलाई दुर्गतिमा पुर्‍याइदेओस् ।

**अथर्वाणो अबध्नताथर्वणा अबध्नत । तैर्मेदिनो अङ्गिरसो दस्यूनां बिभिदुः पुरस्तेन द्विषतो जहि ॥२०॥**

अथर्ववेदको ज्ञान भएका ऋषिहरू र अथर्ववेदका मन्त्रहरूले यस मणिलाई धारण गरेका त्यसबाट शक्तिशाली भएका अङ्गिराहरूले शत्रुको नगर भत्काए । यस्तो मणि धारण शत्रुलाई संहार गरून् ।

**तं धाता प्रत्यमुञ्चत स भूतं व्यकल्पयत् । तेन त्वं द्विषतो जहि ॥२१॥**

त्यस मणिलाई धारण गरेर धाता देवता प्राणीहरूको रचना गर्नमा समर्थ भएका थिए । त्यस मणिले तिमी विध्वंसक तत्त्वलाई विनाश गर ।

**यमबध्नाद् बृहस्पतिर्देवेभ्यो असुरक्षितिम् । स मायं मणिरागमद् रसेन सहवर्चसा ॥२२॥**

असुर विनाशक यस मणिलाई बृहस्पतिदेवताले देवशक्तिहरूका लागि धारण गरेका थिए । त्यो मणि रस र तेजका साथमा हाम्रा नजिकै आइपुगेको छ ।

**यमबध्नाद् बृहस्पतिर्देवेभ्यो असुरक्षितिम् । स मायं मणिरागमत् सह गोभिरजाविभिरन्नेन प्रजया सह ॥२३॥**

जुन असुरसंहारक मणिलाई देवताहरूका निम्ति बृहस्पतिदेवताले धारण गरेका थिए, त्यो मणि गाई, बाख्रा, पोषक अन्न र प्रजाका साथमा हाम्रा नजिकै आइपुगेको छ ।

**यमबध्नाद् बृहस्पतिर्देवेभ्यो असुरक्षितिम् । स मायं मणिरागमत् सह व्रीहियवाभ्यां महसा भूत्या सह ॥२४॥**

बृहस्पतिदेवताले जुन असुरसंहारक मणिलाई देवताहरूका निम्ति बाँधेका थिए, त्यो मणि जौ, चामल र ऐश्वर्यका साथमा हाम्रा नजिकै आइपुगेको छ ।

**यमबध्नाद् बृहस्पतिर्देवेभ्यो असुरक्षितिम् । स मायं मणिरागमन्मधोर्घृतस्य धारया कीलालेन मणिः सह ॥२५॥**

बृहस्पतिदेवताले जुन असुरसंहारक मणिलाई देवताहरूका निम्ति बाँधेका थिए, त्यो मणि घिउका धारा, मह र अन्नका साथ हाम्रा नजिकै आइपुगेको छ ।

**यमबध्नाद् बृहस्पतिर्देवेभ्यो असुरक्षितिम् । स मायं मणिरागमदूर्जया पयसा सह द्रविणेन श्रिया सह ॥२६॥**

बृहस्पतिदेवताले जुन असुरसंहारक मणिलाई देवताहरूका निम्ति बाँधेका थिए, त्यो मणि अन्न, बल, धन र सम्पत्तिका साथ हाम्रा नजिकै आइपुगेको छ ।

**यमबध्नाद् बृहस्पतिर्देवेभ्यो असुरक्षितिम् । स मायं मणिरागमत् तेजसा त्विष्या सह यशसा कीर्त्या सह ॥२७॥**

बृहस्पतिदेवताले जुन असुरसंहारक मणिलाई देवताहरूका निम्ति बाँधेका थिए, त्यो मणि तेज, दीप्ति, यश र कीर्तिका साथ हाम्रा नजिकै आइपुगेको छ ।

**यमबध्नाद् बृहस्पतिर्देवेभ्यो असुरक्षितिम् । स मायं मणिरागमत् सर्वाभिर्भूतिभिः सह ॥२८॥**

बृहस्पतिदेवताले जुन असुरसंहारक मणिलाई देवताहरूका निम्ति बाँधेका थिए, त्यो मणि सबै खालका ऐश्वर्यका साथ हाम्रा नजिकै आइपुगेको छ ।

**तमिमं देवता मणिं मह्यं ददतु पुष्टये । अभिभुं क्षत्रवर्धनं सपत्नदम्भनं मणिम् ॥२९॥**

यो मणि शत्रुनाशक, क्षात्रतेज बढाउने र शत्रुलाई पराजित गर्ने खालको छ । यो मणि देवताहरूले पोषण क्षमताका लागि हामीलाई प्रदान गरून् ।

**ब्रह्मणा तेजसा सह प्रति मुञ्चामि मे शिवम् । असपत्नः सपत्नहा सपत्नान् मेऽधराँ अकः ॥३०॥**

हामी यस कल्याणकारी मणिलाई ज्ञान र तेजका साथमा धारण गर्दछौं । यो मणि शत्रुरहित र शत्रुसंहारक छ । हे मणि ! तिमी हाम्रा शत्रुहरूलाई दुर्दशाग्रस्त गराऊ ।

**उत्तरं द्विषतो मामयं मणिः कृणोतु देवजाः । यस्य लोका इमे त्रयः पयो दुग्धमुपासते । स मायमधि रोहतु मणिः श्रैष्ठ्याय मूर्धतः ॥३१॥**

देवताहरूले उत्पन्न गरेका यस मणिले हामीलाई शत्रुबाट जोगाएर उत्तम स्थितिमा राखोस् । जुन मणिको दुध र जलरूपी उत्पादन तीनै लोकले गर्दछन्, यस किसिमको यो मणि श्रेष्ठता प्राप्त

गर्नका लागि हामीले धारण गर्नुपर्दछ ।

**यं देवाः पितरो मनुष्या उपजीवन्ति सर्वदा । स मायमधि रोहतु मणिः श्रैष्ठ्याय मूर्धतः ॥३२॥**

देवता, मानिस र पितृहरूले जुन मणिमाथि सधैँभरि भरोसा गरेर बसेका छन्, त्यस मणिले हामीलाई उत्तम स्थानतर्फ अग्रसर गराओस् ।

**यथा बीजमुर्वरायां कृष्टे फालेन रोहति । एवा मयि प्रजा पशवोऽन्नमन्नं वि रोहतु ॥३३॥**

फालीले जोतखन गरेपछि जसरी पृथ्वीमा रोप्नेछर्ने काम गरेर बिउ उम्रन्छ उसै गरी यो मणि हामीलाई सन्तान, पशु र खाद्यान्न उत्पन्न गराउने होस् ।

**यस्मै त्वा यज्ञवर्धन मणे प्रत्यमुचं शिवम् । तं त्वं शतदक्षिण मणे श्रैष्ठ्याय जिन्वतात् ॥३४॥**

हे यज्ञवर्द्धक मणि ! तिमी मङ्गलकारिणी हौ र तिमीलाई जुन कुरो प्राप्त गर्नका लागि हामीले धारण गरिरहेका छौँ, त्यस्ता सयौँ खालका सहयोग अनुदान दिने हे मणि ! तिमी ती वस्तुको प्रयोजनलाई श्रेष्ठतातर्फ बढाऊ ।

**एतमिध्मं समाहितं जुषाणो अग्ने प्रति हर्य होमैः । तस्मिन् विदेम सुमतिं स्वस्ति प्रजां चक्षुः पशून्त्समिद्धे जातवेदसि ब्रह्मणा ॥३५॥**

हे अग्निदेवता ! तिमी उचित किसिमले स्थापित गरिएको इन्धनलाई सेवन गर्दै आहुतिले प्रदीप्त होऊ । मन्त्रको सामर्थ्ययुक्त ज्ञानले प्रदीप्त हुने ती अग्निदेवतासित हामी सद्बुद्धि, कल्याण, सन्तान, दर्शनशक्ति र पशु प्राप्त गर्न सकौँ ।

## ७. सर्वाधारवर्णन सूक्त

**ऋषि-** अथर्वा क्षुद्र । **देवता-** स्कम्भ, आत्मा, अध्यात्म । **छन्द-** अनुष्टुप्, विराट् जगती, भुरिक् त्रिष्टुप्, परोष्णिक्, उपरिष्टात् बृहती, उपरिष्टात् ज्योति जगती, त्र्यवसाना षट्पदा जगती, बृहतिगर्भा अनुष्टुप्, मध्येज्योति जगती, उपरिष्टात् विराट् बृहती, पराविराट् अनुष्टुप्, चतुष्पदा जगती, त्रिष्टुप्, आर्षी त्रिपदा गायत्री, एकावसान पञ्चपदा निचृत्पदपङ्क्ति द्विपदार्ची अनुष्टुप् ।

**कस्मिन्नङ्गे तपो अस्याधि तिष्ठति कस्मिन्नङ्ग ऋतमस्याध्याहितम् । क्व व्रतं क्व श्रद्धास्य तिष्ठति कस्मिन्नङ्गे सत्यमस्य प्रतिष्ठितम् ॥१॥**

यस स्कम्भ नामका जीवन धारक शरीरका कुन अङ्गमा तपःशक्ति रहेको छ ? कुन अङ्गमा ऋत नामको यज्ञ रहेको छ ? यसको श्रद्धा कुन ठाउँमा अडिएको छ र व्रत कहाँ स्थित भएको हुन्छ ? यसका कुन अङ्गमा सत्यको निवास रहेको हुन्छ ?

**कस्मादङ्गाद् दीप्यते अग्निरस्य कस्मादङ्गात पवते मातरिश्वा । कस्मादङ्गाद् वि मिमीतेऽधि चन्द्रमा मह स्कम्भस्य मिमानो अङ्गम् ॥२॥**

यस शरीरका कुन अङ्गमा अग्नि प्रदीप्त हुने गरेको छ ? कुन अङ्गबाट वायु प्रवाहित हुने गर्दछ ? त्यस महान् स्कम्भका कुन अङ्गलाई मापन गर्दै चन्द्रमा प्रकाशित हुने गर्दछ ?

**कस्मिन्नङ्गे तिष्ठति भूमिरस्य कस्मिन्नङ्गे तिष्ठत्यन्तरिक्षम् । कस्मिन्नङ्गे तिष्ठत्याहिता द्यौः कस्मिन्नङ्गे तिष्ठत्युत्तरं दिवः ॥३॥**

यसका कुन अङ्गमा भूमिको निवास रहेको छ ? कुन अङ्गमा अन्तरिक्ष रहेको हुन्छ ? कुन अङ्गमा द्युलोक सुरक्षित द्युलोक रहन्छ र कुन अङ्गमा उच्चतर द्युलोकको उत्तर भाग रहेको हुन्छ ?

**क्व१ प्रेप्सन् दीप्यत ऊर्ध्वो अग्निः क्व१ प्रेप्सन् पवते मातरिश्वा । यत्र प्रेप्सन्तीरभियन्त्यावृतः स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥४॥**

मास्तिर उकालिएका अग्निले कहाँ जाने विचार गरेको हुन्छ ? वायु कहाँ जाने गर्दै बगेको हुन्छ ? त्यस स्कम्भलाई भन त्यो कुन ठाउँ हो, जहाँ जाने रहर गर्दै प्राणीहरू आवागमनका चक्रमा फस्छन्

हुन्छन् ?

**क्वार्धमासाः क्व यन्ति मासाः संवत्सरेण सह संविदानाः । यत्र यन्त्यृतवो यत्रार्तवाः स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥५॥**

संवत्ससँग सम्बन्ध भएका पक्ष र महिनाहरू कहाँ जाने गर्दछन् ? जहाँ यी ऋतुहरू र तिनबाट उत्पन्न भएका पदार्थहरू जान्छन्, त्यस स्कम्भलाई भनिदेऊ कि त्यो कुन हो ?

**क्व१ प्रेप्सन्ती युवती विरूपे अहोरात्रे द्रवतः संविदाने । यत्र प्रेप्सन्तीरभियन्त्यापः स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥६॥**

विपरीत किसिमको रूप भएका युवतीजस्ता दिन र रातहरू निरन्तर कुदेर कता जाँदै हुन्छन् ? त्यो कुन स्कम्भ हो, जहाँ पान गर्ने वा प्राप्त गर्ने इच्छा भएको जल जाने गरेको छ, त्यो ठाउँ कुन हो ?

**यस्मिन्त्स्तब्ध्वा प्रजापतिर्लोकान्त्सर्वाँ अधारयत् । स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥७॥**

प्रजापतिले जेमाथि आधारित भएर समस्त लोकहरूलाई धारण गरेको छ, त्यो स्कम्भ कुन हो भन ।

**यत् परममवमं यच्च मध्यमं प्रजापतिः ससृजे विश्वरूपम् । कियता स्कम्भः प्र विवेश तत्र यन्न प्राविशत् कियत् तद् बभूव ॥८॥**

प्रजापतिले जुन श्रेष्ठ नामको परम, अवर नामको निकृष्ट र मध्यम नामको मझौला खालको विश्वरूपको रचना गरेका छन्, त्यसमा यस स्कम्भको कति अंस प्रवेश गरेको छ र त्यो प्रवेश नगरेको अंश कति रहेको छ ?

**कियता स्कम्भः प्र विवेश भूतं कियद् भविष्यदन्वाशयेऽस्य । एकं यदङ्गमकृणोत् सहस्रधा कियता स्कम्भः प्र विवेश तत्र ॥९॥**

यो सर्वाधार स्कम्भ भूतकालमा कति अंशमा प्रविष्ट भएको थियो, भविष्यतमा कति अंशले शयन गरिरहेका छ र जसले आफ्ना एकै अङ्गलाई हजारौँ प्रकारमा प्रकट गर्दछ, त्यो वर्तमानमा कति अंशमा प्रवेश गरिरहेको छ ?

**यत्र लोकांश्च कोशांश्चापो ब्रह्म जना विदुः । असच्च यत्र सच्चान्तः स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥१०॥**

जसमा सबै लोक, कोश, ब्राह्मी अप् निवास गर्दछन् भन्ने कुरो सबैले जानेका छन्, सत् र असत् जसभित्र नै समाहित छन्, त्यस स्कम्भका विषयमा भन ।

**यत्र तपः पराक्रम्य व्रतं धारयत्युत्तरम् । ऋतं च यत्र श्रद्धा चापो ब्रह्म समाहिताः स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥११॥**

जहाँ तप र व्रत गरेर श्रेष्ठ पुरुषहरू प्रतिष्ठित हुने गर्दछन् र जहाँ ऋत, श्रद्धा र अप ब्रह्म समाहित छन्, त्यस स्कम्भका विषयमा भन ।

**यस्मिन् भूमिरन्तरिक्षं द्यौर्यस्मिन्नध्याहिता । यत्राग्निश्चन्द्रमाः सूर्यो वातस्तिष्ठन्त्यार्पिताः स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥१२॥**

जसमा पृथ्वी, अन्तरिक्ष र द्युलोक स्थित छन् र अग्नि, सूर्य, चन्द्र एवं वायुले जसको आश्रय लिएर रहेका छन्, त्यस स्कम्भका विषयमा भन ।

**यस्य त्रयस्त्रिंशद् देवा अङ्गे सर्वे समाहिताः । स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥१३॥**

जुन स्कम्भका अङ्गहरूमा समस्त तेत्तीसै देवताहरू स्थिर रहेका छन्, त्यसका विषयमा भन ।

**यत्र ऋषयः प्रथमजा ऋचः साम यजुर्मही । एकर्षिर्यस्मिन्नार्पितः स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥१४॥**

जसमा प्रथम ऋषि, ऋक्, साम, यजुष् र मही नामको महती विद्या विद्यमान छन्, जसमा मुख्य रूपले एउटै अथर्वा ऋषि समर्पित छन् वा अथर्ववेद प्रकट भएको छ, त्यस स्कम्भका विषयमा

हामीलाई भन ।

**यत्रामृतं च मृत्युश्च पुरुषेऽधि समाहिते । समुद्रो यस्य नाड्यः पुरुषेऽधि समाहिताः स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥१५॥**

जहाँ पुरुष, अमृत र मृत्यु उचित किसिमले समाहित भएका छन् अनि समुद्र नै जसको नाडी बनेको छ, त्यो स्कम्भ कुन हो ?

**यस्य चत्रस्रः प्रदिशो नाड्यस्तिष्ठन्ति प्रथमाः । यज्ञो यत्र पराक्रान्तः स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥१६॥**

जसका नाडीहरू पहिले चारै दिशामा र पछि यज्ञसम्म पुग्छन्, त्यस स्कम्भका विषयमा भन ।

**ये पुरुषे ब्रह्म विदुस्ते विदुः परमेष्ठिनम् । यो वेद परमेष्ठिनं यश्च वेद प्रजापतिम् । ज्येष्ठं ये ब्राह्मणं विदुस्ते स्कम्भमनुसंविदुः ॥१७॥**

जुन पुरुषले ब्रह्मलाई जानेको छ, उसले परमेष्ठीलाई पनि जानेको हुन्छ । जसले परमेष्ठी, प्रजापति र ज्येष्ठ ब्राह्मणलाई जानेको छ, उसले यस स्कम्भका विषयमा पनि जानेको छ ।

**यस्य शिरो वैश्वानरश्चक्षुरङ्गिरसोऽभवन् । अङ्गानि यस्य यातवः स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥१८॥**

जसको शिर वैश्वानर हो र नेत्र अङ्गिरा वंशी ऋषिहरू हुन्, यातु जसको अङ्ग हो, त्यस स्कम्भका विषयमा भन ।

**यस्य ब्रह्म मुखमाहुर्जिह्वां मधुकशामुत । विराजमूधो यस्याहुः स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥१९॥**

जसको मुख ब्रह्म, जिब्रो मधुकशा र ऐन नानको दुग्धाशय वा स्तनलाई विराट भनिन्छ त्यो स्कम्भ भनेको कुन हो ?

**यस्मादृचो अपातक्षन् यजुर्यस्मादपाकषन् । सामानि यस्य लोमान्यथर्वाङ्गिरसो मुखं स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥२०॥**

जसबाट ऋचाहरू प्रकट भए, यजुर्वेदका मन्त्रहरू प्रकट भए, जसका रौँका रूपमा सामवेद रहेको छ र अथर्ववेद जसको मुख हो त्यस स्कम्भका विषयमा भन ।

**असच्छाखां प्रतिष्ठन्तीं परममिव जना विदुः । उतो सन्मन्यन्तेऽवरे ये ते शाखामुपासते ॥२१॥**

असत्‌बाट उत्पन्न भएको एक प्रतिष्ठित शाखालाई मानिसहरूले परमश्रेष्ठ मान्दछन् तर अरू एक खालका मानिसहरू सत् रूपबाट प्रकट भएकालाई नै स्वीकार गर्दै त्यसैको उपासना गर्दछन् ।

**यत्रादित्याश्च रुद्राश्च वसवश्च समाहिताः । भूतं च यत्र भव्यं च सर्वे लोकाः प्रतिष्ठिताः स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥२२॥**

जसमा सूर्य, रुद्र तथा वसुहरू निवास गर्दछन् र जसमा भूत, वर्तमान र भविष्यसहित समस्त लोक नै समाहित भएको छ, त्यस स्कम्भका विषयमा भन ।

**यस्य त्रयस्त्रिंशद् देवा निधिं रक्षन्ति सर्वदा । निधिं तमद्य को वेद यं देवा अभिरक्षथ ॥२३॥**

तेत्तीस देवताहरूले जसका निधिको रक्षा गरेका छन् र त्यसलाई र उसका त्यही निधिलाई कसले जानेको छ ?

**यत्र देवा ब्रह्मविदो ब्रह्म ज्येष्ठमुपासते । यो वै तान् विद्यात् प्रत्यक्षं स ब्रह्मा वेदिता स्यात् ॥२४॥**

ब्रह्मवेत्ताहरूले जहाँ ज्येष्ठ ब्रह्मको उपासना गर्दछन् र जसले उनलाई निश्चयपूर्वक प्रत्यक्ष जानेको छ, त्यस विषयलाई जान्ने नै ब्रह्मा हुन सक्दछ ।

**बृहन्तो नाम ते देवा येऽसतः परि जज्ञिरे । एकं तदङ्गं स्कम्भस्यासदाहुः परो जनाः ॥२५॥**
असत् वा प्रकृतिबाट उत्पन्न भएका बृहत् नामका देवता जो हुन् उनी नै त्यस स्कम्भका अङ्ग हुन् । मानिसहरू उनलाई असत् तर श्रेष्ठ भनेर चिन्दछन् ।

**यत्र स्कम्भः प्रजनयन् पुराणं व्यवर्तयत् । एकं तदङ्गं स्कम्भस्य पुराणमनुसंविदुः ॥२६॥**
जहाँ स्कम्भरूपी सर्वाधार आत्माले निर्माणका क्रममा पुराणतत्त्वलाई विवर्तित गरेको छ, स्कम्भको त्यस अङ्गलाई पुराणकै नामले चिन्ने गरिएको छ ।

**यस्य त्रयस्त्रिंशद् देवा अङ्गे गात्रा विभेजिरे । तान् वै त्रयस्त्रिंदश् देवानेके ब्रह्मविदो विदुः ॥२७॥**
तेत्तीसै देवताहरूले जसका शरीरका अङ्गका रूपमा शोभा पाउने गरेका छन्, उनै तेत्तीस देवताहरूलाई केवल ब्रह्मज्ञानीहरूले नै चिनेका हुन्छन् ।

**हिरण्यगर्भं परममनत्युद्यं जना विदुः । स्कम्भस्तदग्रे प्रासिञ्चद्धिरण्यं लोके अन्तरा ॥२८॥**
जुन परम हिरण्यगर्भलाई मानिसहरूले अवर्णनीय भनेर जानेका छन्, त्यस हिरण्यगर्भलाई पहिले स्कम्भले नै यस लोकमा उचित किसिमले सेचन गरेको थियो ।

**स्कम्भे लोकाः स्कम्भे तपः स्कम्भेऽध्यृतमाहितम् । स्कम्भं त्वा वेद प्रत्यक्षमिन्द्रे सर्वं समाहितम् ॥२९॥**
त्यस स्कम्भमा लोक, तप र ऋत समाहित भएका छन् । हे स्कम्भ ! जसले तिमीलाई प्रत्यक्ष रूपमा जान्दछ, उसले आत्मारूपी इन्द्रमा नै सबै कुरो समाहित छ भन्ने पनि जानेको हुन्छ ।

**इन्द्रे लोका इन्द्रे तप इन्द्रेऽध्यृतमाहितम् । इन्द्रं त्वा वेद प्रत्यक्षं स्कम्भे सर्वं प्रतिष्ठितम् ॥३०॥**
इन्द्रमा नै लोक, तप र ऋत समाहित भएका छन् । हे इन्द्रदेवता ! मैले तिमीलाई प्रत्यक्ष रूपमा जानेको छु । स्कम्भमा नै सबै कुरो समाहित छ भन्ने पनि मैले जानेको हुन्छ ।

**नाम नाम्ना जोहवीति पुरा सूर्यात् पुरोषसः । यदजः प्रथमं संबभूव स ह तत् स्वराज्यमियाय यस्मान्नान्यत् परमस्ति भूतम् ॥३१॥**
सूर्योदयभन्दा पहिले, उषाकालभन्दा पहिले ब्राह्ममुहूर्तमा जुन नामरूप ईश्वरलाई यस सर्वाधार नामले पुकार्ने गर्दछ, वा जप गर्दछ, त्यस अजन्मा आत्माले स्वराज्य प्राप्त गर्दछ । त्यसभन्दा ठूलो कुनै पदार्थ पहिले पनि कहिल्यै भएको थिएन; त्यसैले त्यो अज हो अर्थात् त्यो अजन्मा नै रहेको थियो ।

**यस्य भूमिः प्रमान्तरिक्षमुतोदरम् । दिवं यश्चक्रे मूर्धानं तस्मै जेष्ठाय ब्रह्मणे नमः ॥३२॥**
भूमि जसको पैतालाजस्तो भएको छ, अन्तरिक्ष जसको पेटजस्तो छ र द्युलोक नै जसको शिरका रूपमा रहेको छ, त्यस्ता ब्रह्मलाई नमस्कार छ ।

**यस्य सूर्यश्चक्षुश्चन्द्रमाश्च पुनर्णवः । अग्निं यश्चक्र आस्यं तस्मै ज्येष्ठाय ब्रह्मणे नमः ॥३३॥**
नित्य नवीन बनेर देखा पर्ने सूर्य र विभिन्न कलाका आधारमा फेरिने गरेको चन्द्रमा जसका नेत्रका रूपमा रहेका छन्, अग्निलाई जसले आफ्नो मुख बनाएका छन्, त्यस्ता श्रेष्ठ ब्रह्मलाई नमस्कार छ ।

**यस्य वातः प्राणापानौ चक्षुरङ्गिरसोऽभवन् । दिशो यश्चक्रे प्रज्ञानीस्तस्मै ज्येष्ठाय ब्रह्मणे नमः ॥३४॥**
प्राण र अपान जसका वायु हुन्, अङ्गिरस् जसका आँखा हुन्, जसको उत्कृष्टता दिशाहरूले ज्ञापन गर्दछन्, त्यस्ता ज्येष्ठ श्रेष्ठ ब्रह्मलाई नमस्कार छ ।

**स्कम्भो दाधार द्यावापृथिवी उभे इमे स्कम्भो दाधारोर्वन्तरिक्षम् । स्कम्भो दाधार प्रदिशः षडुर्वीः स्कम्भ इदं विश्वं भुवनमा विवेश ॥३५॥**
द्यावापृथिवी एवं विशाल अन्तरिक्षलाई स्कम्भले धारण गरेर राखेको छ । छ वटा धर्ती र

प्रदिशाहरूलाई स्कम्भले नै धारण गरेर राखेको छ र स्कम्भ नै यस विश्वमा प्रविष्ट भएको छ ।

**यः श्रमात् तपसो जातो लोकान्त्सर्वान्त्समानशे । सोमं यश्चक्रे केवलं तस्मै ज्येष्ठाय ब्रह्मणे नमः ॥३६॥**

जो श्रमपूर्वक गरिएका तपले प्रकट हुने गर्दछ र समस्त लोकलाई व्याप्त गराएको हुन्छ । जसले केवल सोम नै मात्र प्रवाहित गरेको छ, उसै श्रेष्ठ ब्रह्मलाई नमस्कार छ ।

**कथं वातो नेलयति कथं न रमते मनः । किमापः सत्यं प्रेप्सन्तीर्नेलयन्ति कदा चन ॥३७॥**

वायु किन स्थिर रहँदैन, मन किन रमाउँदैन र जलले कुन सत्य प्राप्त गर्ने इच्छाले गर्दा प्रवाहित हुने गरेको छ ?

**महद् यक्षं भुवनस्य मध्ये तपसि क्रान्तं सलिलस्य पृष्ठे । तस्मिञ्छ्रयन्ते य उ के च देवा वृक्षस्य स्कन्धः परित इव शाखाः ॥३८॥**

यस विश्वमा एक परम पूज्य छ, जो सलिल पृष्ठमा कान्तिवान् हुने गर्दछ, त्यसलाई तपःले प्राप्त गर्न सकिन्छ । वृक्षका काण्डमा हाँगाबिँगाहरू जसरी आधारित हुन्छन्, उसै गरी समस्त देवताहरू उनैको आश्रय लिन्छन् ।

**यस्मै हस्ताभ्यां पादाभ्यां वाचा श्रोत्रेण चक्षुषा । यस्मै देवाः सदा बलिं प्रयच्छन्ति विमितेऽमितं स्कम्भं तं ब्रूहि कतमः स्विदेव सः ॥३९॥**

देवताहरू जसका लागि हात, गोडा, वाणी, कान र नेत्रबाट निरन्तर आहुति प्रदान गर्दछन्, देवताहरूले जसका विमित शरीरमा अमित उपहार प्रदान गर्दछन्, त्यस स्कम्भका विषयमा भन, त्यो स्कम्भ भनेको को हो ?

**अप तस्य हतं तमो व्यावृत्तः स पाप्मना । सर्वाणि तस्मिञ्ज्योतींषि यानि त्रीणि प्रजापतौ ॥४०॥**

जसले स्कम्भका विषयमा जानेको छ, उसलाई अज्ञानरूपी अन्धकारले नाश गर्न सक्दैन । त्यस्तो मानिस पापबाट निवृत्त हुने गर्दछ । प्रजापतिमा जुन तीन वटा ज्योतिहरू हुन्छन्, उसले ती प्राप्त गर्दछ ।

**यो वेतसं हिरण्ययं तिष्ठन्तं सलिले वेद । स वै गुह्यः प्रजापतिः ॥४१॥**

जुन सलिल अन्तरिक्षमा रहेको तेजोमय वेतस्रूपी संसारले जान्दछ, त्यो नै गुह्य प्रजापति हो ।

**तन्त्रमेके युवती विरूपे अभ्याक्रामं वयतं षण्मयूखम् । प्रान्या तन्तूंस्तिरते धत्ते अन्या नाप वृञ्जाते न गमातो अन्तम् ॥४२॥**

विपरीत रूप भएका दुई युवतीझैँ देखिने उषा र रात्रिहरू छन् । तिनीहरू छ वटा खुट्टारूपी छ ऋतुहरूले युक्त भएका विश्वरूपी जाललाई बुनिरहेका छन् । एकले तन्तुरूपी किरणलाई फिँजाउँछ र अर्को तिनलाई आफूमा धारण गर्दै समेट्ने गरेको छ । यी दुवैले न त विश्राम गर्दछन्, न यिनीहरूका कार्यको अन्त्य नै हुने गर्दछ ।

**तयोरहं परिनृत्यन्त्योरिव न वि जानामि यतरा परस्तात् । पुमानेनद् वयत्युद् गृणत्ति पुमानेनद् वि जभाराधि राके ॥४३॥**

नृत्य गरेको जत्तिकै श्रम गर्दै, ती दुई युवतीहरूमा पहिलो युवती को हुन् भन्ने कुरो हामीले जानेका छैनौँ । यसलाई एउटा पुरुषले बुन्ने गर्दछ भने अर्को पुरुषले उधार्ने गर्दछ । यसलाई उसले स्कम्भ धारण गर्दछ ।

**इमे मयूखा उप तस्तभुर्दिवं सामानि चक्रुस्तसराणि वातवे ॥४४॥**

ती मयूखहरूले नै द्युलोकलाई थामेर राखेका हुन्छन् । तालमेलका साथ चल्ने सामका निरन्तर प्रवाहले त्यस तन्तुजाललाई बनाएर राखेको हुन्छ ।

## ८. ज्येष्ठब्रह्मवर्णन सूक्त

**ऋषि-** कुत्स । **देवता-** आत्मा, अध्यात्म । **छन्द-** त्रिष्टुप्, उपरिष्टात् विराट बृहती, बृहतीगभा अनुष्टुप्, भुरिक् अनुष्टुप्, अनुष्टुप्, परात्रृहती त्रिष्टुप्, अनुष्टुप् गर्भा त्रिष्टुप्, जगती, पुरोबृहती त्रिष्टुप् गर्भार्षी पङ्क्ति, भुरिक् बृहती, पुर उष्णिक्, द्व्युष्णिक् गर्भा अनुष्टुप्, भुरिक त्रिष्टुप्, बृहती गर्भा त्रिष्टुप्, विराट् गायत्री ।

**यो भूतं च भव्यं च सर्वं यश्चाधितिष्ठती । स्व१र्यस्य च केवलं तस्मै ज्येष्ठाय ब्रह्मणे नमः ॥१॥**

त, वर्तमान तथा भविष्यत् कालमा सबैको अधिष्ठाता जो हुन्, जसको केवल प्रकाशमय रूप छ, मी उनै ज्येष्ठ ब्रह्मलाई नमस्कार गर्दछौं ।

**स्कम्भेनेमे विष्टभिते द्यौश्च भूमिश्च तिष्ठतः । स्कम्भ इदं सर्वमात्मन्वद यत् प्राणन्निमिषच्च यत् ॥२॥**

णयुक्त र आँखा झिम्क्याउने चेष्टा एवं द्रष्टा चेत भएक, सबै आत्मासित युक्त जो सर्वाधार हुन्, ी स्कम्भले द्यौ र पृथ्वीलोकलाई स्थिर गरेका हुन् ।

**तिस्रो ह प्रजा अत्यायमायन् न्य१न्या अर्कमभितोऽविशन्त । बृहन् ह तस्थौ रजसो विमानो हरितो हरिणीरा विवेश ॥३॥**

त्विक, राजस् र तामस् यी ती किसिमका प्रजाहरू आवागमनमा अत्यधिक परिरहेका हुन्छन् । ीहरूमध्ये एक सत्त्वगुणी प्रजाहरू सवितामण्डलमा आश्रय लिएका हुन्छन् । ज्यादै चमकदार नस् प्रजाहरू यशस्वी लोकमा फैलिएका हुन्छन् र तेस्रो किसिमको हरण र परिवर्तनशील ाहरू या दिनको शक्ति हरण गर्ने खालका देवताहरूका अधिकारमा रहेका हुन्छन् ।

**द्वादश प्रधयश्चक्रमेकं त्रीणि नभ्यानि क उ तच्चिकेत । तत्राहतास्त्रीणि शतानि शङ्कवः षष्टिश्च खीला अविचाचला ये ॥४॥**

ह् वटा प्रधि, एउटा चक्र र तीन वटा नाभी भएका त्यसलाई कसले चिनेको छ ? त्यहाँ तीन सय ठी वटा अविचल खम्बा र त्यत्ति नै उस्तै किलाहरू पनि छन् ।

**इदं सवितर्वि जानीहि षड् यमा एक एकजः । तस्मिन् हापित्वमिच्छन्ते य एषामेक एकजः ॥५॥**

सविता ! तिमी यो जानिराख कि यहाँ छ जोडा छन्, एउटा एक्लो छ । यिनीहरूमा जुन एक्लो त्यससित संयुक्त हुन सबैले खोजेका हुन्छन् ।

**आविः सन्निहितं गुहा जरन्नाम महत् पदम् । तत्रेदं सर्वमार्पितमेजत् प्राणत् प्रतिष्ठितम् ॥६॥**

काशवान् आत्मा यस देहरूपी गुफामा विराजमान छ । जरत् नामको गतिशील महान् पदमा यो चेष्ट तथा प्राणयुक्त आत्मा प्रतिष्ठित छ ।

**एकचक्रं वर्तत एकनेमि सहस्राक्षरं प्र पुरो नि पश्चा । अर्धेन विश्वं भुवनं जजान यदस्यार्धं क्व१ तद् बभूव ॥७॥**

टा नाभी, एउटा चक्र, हजारौं अक्ष वा अक्षर वा अक्षय शक्ति भएको एउटा चक्र अगाडि र छाडि घुमिरहेको हुन्छ । उनसले आफ्ना आधा भागले विश्वको निर्माण गरेको छ तर जो शेष धा भाग छ त्यो चाहिँ कता छ ?

**पञ्चवाही वहत्यग्रमेषां प्रष्टयो युक्ता अनुसंवहन्ति । अयातमस्य ददृशे न यातं परं नेदीयोऽवरं दवीयः ॥८॥**

नीहरूमध्ये जुन पाँचलाई वहन गर्ने आत्मा हो, ऊ प्रगति गर्दछ या अन्त्यमा परमात्मासँम दछ । जो वहनकर्ता घोडाका रूपमा रहेका छन् ती उचित किसिमले वहन गर्दछन् । यो लेको त देखिन्छ तर चलायमान भएको देखिँदैन । यो त नजिकै भए पनि पर छ र परसम्म

सञ्चरण गर्दा पनि नजिकै रहेको छ ।

**तिर्यग्बिलश्चमस ऊर्ध्वबुध्नस्तस्मिन् यशो निहितं विश्वरूपम् । तदासत ऋषयः सप्त साकं ये अस्य गोपा महतो बभूवुः ॥९॥**

तेर्छो मुख, मास्तिर ओडार फर्किएको चमस नामको पात्र छ । त्यसैमा विश्वरूपी यश निहित छ । त्यसमा सात ऋषिगण यस महान् शरीरको रक्षाका लागि विराजमान भएका छन् ।

**या पुरस्ताद् युज्यते या च पश्चाद् या विश्वतो युज्यते या च सर्वतः । यया यज्ञः प्राङ् तायते तां त्वा पृच्छामि कतमा सर्चाम् ॥१०॥**

विश्वमा जो योजित छ; त्यो अगाडि पनि योजित छ, पछि पनि योजित छ र सबैतिर योजित छ । ऋचाहरूमा यस्तो कुन ऋचा होला, जसले यज्ञको विस्तार गरिएको हुन्छ ?

**यदेजति पतति यच्च तिष्ठति प्राणदप्राणन्निमिषच्च यद् भुवत् । तद् दाधार पृथिवीं विश्वरूपं तत् संभूय भवत्येकमेव ॥११॥**

जो कम्पन गर्दछ, गति गर्दछ र पनि स्थिर नै रहन्छ, जसले प्राणलाई धारण गर्दछ, प्राणरहित हुन्छ, जो आँखाका परेली झिम्क्याउँछ र जसको सत्ता छ, त्यो नै यस विश्वलाई, यस पृथ्वीलाई धारण गर्दछ र पुनः प्रलयकालमा एक पारेर मिलाउँछ ।

**अनन्तं विततं पुरुत्रानन्तमन्तवच्चा समन्ते । ते नाकपालश्चरति विचिन्वन् विद्वान् भूतमुत भव्यमस्य ॥१२॥**

विभिन्न खालका रूपमा उहाँ अनन्त भएर प्रकट हुन्छ । यसै अनन्तमा ससीम भएर समाहित भएको छ र निःसीमभित्र ससीम समाहित भएको छ । यसको भूत, भविष्यत् र वर्तमान कालका समस्त सम्बन्धलाई जान्ने उसै परमात्माले यस जगत्लाई चलाएको छ ।

**प्रजापतिश्चरति गर्भे अन्तरदृश्यमानो बहुधा वि जायते । अर्धेन विश्वं भुवनं जजान यदस्यार्धं कतमः स केतुः ॥१३॥**

उसै प्रजापति जगत्का गर्भभित्र अदृश्य रूपमा विचरण गर्दै नानारूपमा प्रकट हुने गरेका छन् । उनैले आफ्ना आधार भागले समस्त भुवनहरूलाई उत्पन्न गरेका छन्, यसको शेष भाग जुन रहेको छ, त्यो ज्ञानमय पुरुष भनेको को हो ?

**ऊर्ध्वं भरन्तमुदकं कुम्भेनेवोदहार्यम् । पश्यन्ति सर्वे चक्षुषा न सर्वे मनसाविदुः ॥१४॥**

भरिएका घैंलालाई माथि उचाल्ने कुनै त हुन्छ । यस घटनाक्रमलाई मानिसहरू आँखाले देख्दछन् तर यस विश्वरूपी भरिएको घैंले कसले माथि उचालेको छ भन्ने कुराको बोध मनले कसैले पनि गर्दैन ।

**दूरे पूर्णेन वसति दूर ऊनेन हीयते । महद् यक्षं भुवनस्य मध्ये तस्मै बलिं राष्ट्रभृतो भरन्ति ॥१५॥**

अपूर्ण एवं पूर्ण दुवैबाट नै यो पूजनीय देवताको महान् विश्व ब्रह्माण्डका मध्य भागमा अडिएको छ र त्यस विराट्का लागि राष्ट्रसेवक बलिले आहार आदि प्रदान गर्दछन् ।

**यतः सूर्य उदेत्यस्तं यत्र च गच्छति । तदेव मन्येऽहं ज्येष्ठं तदु नात्येति किं चन ॥१६॥**

जसबाट सूर्य उदाउँछन् र जसमा अस्त हुन्छन्, हामी उसैलाई नै ज्येष्ठ ब्रह्म मान्दछौं । त्यसको अतिक्रम कसैले पनि गर्न सक्दैन ।

**ये अर्वाङ् मध्य उत वा पुराणं वेदं विद्वांसमभितो वदन्ति । आदित्यमेव ते परि वदन्ति सर्वे अग्नीं द्वितीयं त्रिवृतं च हंसम् ॥१७॥**

जो प्राचीन, मध्य र वर्तमान कालमा स्थित यस सर्वज्ञानमय पुरुषको वर्णन गर्न सक्दछ, उनले आदित्यको नै वर्णन गर्दछ । त्यसभन्दा दोस्रो अग्निको वर्णन गर्दछ र तेस्रो त्रिवृत् हंसको वर्णन गर्दछ ।

**सहस्राह्ण्यं वियतावस्य पक्षौ हरेर्हंसस्य पततः स्वर्गम् । स देवान्त्सर्वानुरस्युपदद्य संपश्यन् याति भुवनानि विश्वा ॥१८॥**

हजारौँ दिनका प्रयासले यस हंसरूपी शरीरस्थ जीवका आवागमनरूपी पँखेटा खस्ने गर्दछन् । त्यस बेला उसले आफ्नो मुक्त स्वरूपमा स्थित हुन सक्छ । त्यस मुक्तात्माले समस्त देवतालाई हृदयमा धारण गरेर समस्त धामहरूको अवलोकन गर्दै आफ्नो लक्ष्य परमधाम जान्छ ।

**सत्येनोर्ध्वस्तपति ब्रह्मणार्वाङ् वि पश्यति । प्राणेन तिर्यङ् प्राणति यस्मिञ्ज्येष्ठमधि श्रितम् ॥१९॥**

सत्यद्वारा जो माथि जाने गर्दछ, ज्ञानद्वारा यस तल्लो लोकलाई हेर्दछ र प्राणद्वारा तिर्यक जगत्लाई जीवन्त राख्दछ, उसैमा ज्येष्ठ ब्रह्म स्थित रहेको हुन्छ ।

**यो वै ते विद्यादरणी याभ्यां निर्मथ्यते वसु । स विद्वाञ्ज्येष्ठं मन्येत स विद्याद् ब्राह्मणं महत् ॥२०॥**

जुन आत्मज्ञानरूप धनलाई मन्थन गर्ने ती विद्या तथा अविद्यारूपी अरणीहरूलाई चिन्दछ, उसले जान्नुपर्ने ज्येष्ठ ब्रह्मलाई पनि जान्न सकेको हुन्छ ।

**अपादग्रे समभवत् सो अग्रे स्व१राभरत् । चतुष्पाद् भूत्वा भोग्यः सर्वमादत्त भोजनम् ॥२१॥**

प्रारम्भमा जब त्यो पाउरहित थियो, त्यस बेला उसले यस समस्त जगत्लाई आफूमा धारण गरेको थियो । पछि त्यो नै चारपाउले सम्पन्न भएर जरायुज, अण्डज, उद्भिज र स्वेदजका रूपमा भोग्य बन्यो र प्रलय कालरूपी अन्त्यमा उसले समस्त भोजन निलिदियो ।

**भोग्यो भवदथो अन्नमदद् बहु । यो देवमुत्तरावन्तमुपासातै सनातनम् ॥२२॥**

भोग्य भए पनि यस ज्येष्ठ ब्रह्मलाई जसले धेरै किसिमको यज्ञद्वारा अन्न प्रदान गर्दछ, त्यसले सर्वोत्कृष्ट पद प्राप्त गर्दै यस सनातनदेवरूपी ज्येष्ठ ब्रह्मको नै उपासना गरेको हुन्छ ।

**सनातनमेनमाहुरुताद्य स्यात् पुनर्णवः । अहोरात्रे प्र जायेते अन्यो अन्यस्य रूपयोः ॥२३॥**

यसैलाई सनातन पुरुष भन्दछन् तर पनि त्यो आजसम्म नितनवीन छ । जसरी दिन र रात एक अर्कामा अन्योन्याश्रित हुनाले सधैं नयाँ रूपमा उत्पन्न हुँदा पनि सनातन नै हुन्छन् ।

**शतं सहस्रमयुतं न्यर्बुदमसंख्येयं स्वमस्मिन् निविष्टम् । तदस्य घ्नन्त्यभिपश्यत एव तस्माद् देवो रोचत एष एतत् ॥२४॥**

सयौँ, हजारौँ, लाखौँ मात्र होइन, असङ्ख्य स्वत्व वा आत्मतत्त्व यस ज्येष्ठ ब्रह्ममा निहित छन् । उनीहरू यसैमा लीन हुने गर्दछन् । यी देव नै साक्षीरूपले सबैमा प्रकाशित भएका हुन्छन् ।

**बालादेकमणीयस्कमुतैकं नेव दृश्यते । ततः परिष्वजीयसी देवता सा मम प्रिया ॥२५॥**

...को रौँभन्दा पनि सूक्ष्म छ र एक भएर पनि देखिँदैन त्यस्तो अत्यन्त सूक्ष्मतम जड र चेतन उही ... जुन दिव्य शक्तिले यी दुवैलाई आलिङ्गन गर्दछ, उही चेतन आद्यशक्ति नै मलाई प्रिय छ ।

**इयं कल्याण्य१जरा मर्त्यस्यामृता गृहे । यस्मै कृता शये स यश्चकार जजार सः ॥२६॥**

...को घररूपी देहमा यो कल्याणकारी चितशक्ति अर र अमर रूपमा फिरेर निवास गर्दछ । ...को लागि जसले उपासना गर्दछन् उनीहरू यस लोकमा पूजा र सम्मान प्राप्त गर्दछन् ।

**त्वं स्त्री त्वं पुमानसि त्वं कुमार उत वा कुमारी । त्वं जीर्णो दण्डेन वञ्चसि त्वं जातो भवसि विश्वतोमुखः ॥२७॥**

तिमी नै स्त्री हौ, तिमी नै पुरुष हौ, तिमी नै युवक हौ र तिमी नै युवती हौ । वृद्ध भएपछि लौरो ... तिमी नै हिँड्छौ अर्थात् विभिन्न रूपमा तिमी नै रहेका छौ ।

**उतैषां पितोत वा पुत्र एषामुतैषां ज्येष्ठ उत वा कनिष्ठः । एको ह देवो मनसि प्रविष्टः प्रथमो जातः स उ गर्भे अन्तः ॥२८॥**

... पिता र पुत्रका रूपमा ज्येष्ठ र कनिष्ट देव एउटै छन् र उनी मनमा प्रविष्ट छन् । उनी नै ... पनि उत्पन्न भएका थिए र उनी नै बारम्बार गर्भमा आउने गर्दछन् ।

**पूर्णात् पूर्णमुदचतिपूर्णं पूर्णेन सिच्यते । उतो तदद्य विद्याम यतस्तत् परिषिच्यते ॥२९॥**
पूर्ण परमेश्वरबाट नै पूर्ण जगत् उत्पन्न हुन्छ । पूर्णले नै पूर्णको सेचन हुन्छ । आज यस्तो बोध हुनाले नै हामीले यसको सेचन कहाँबाट हुन्छ भन्ने जानेका छौं ।

**एषा सनत्नी सनमेव जातैषा पुराणी परि सर्वं बभूव । मही देव्युषसो विभाती सैकेनैकेन मिषता वि चष्टे ॥३०॥**
यो सनातन शक्ति सनातन कालदेखि नै विद्यमान छ । यो पुरातन शक्ति नै समस्त संसारमा व्याप्त भएर रहेको छ । यसैले नै महान् उषादेवीलाई आभामयी बनाउँछ । ऊ एक्लै रहेर नै पनि समस्त प्राणीहरूलाई देख्ने गर्दछ ।

**अविर्वै नाम देवतर्तेनास्ते परीवृता । तस्या रूपेणेमे वृक्षा हरिता हरितस्रजः ॥३१॥**
अवि नामको रक्षण गर्ने प्रकृति देवी ऋतले ढाकिएको छ । उसैका रूपले यस वृक्षका पत्ताहरू हरिया भएका छन् ।

**अन्ति सन्तं न जहात्यन्ति सन्तं न पश्यति । देवस्य पश्य काव्यं न ममार न जीर्यति ॥३२॥**
नजिकै आएका शरणागतलाई यसले छोड्दैन र यो नजिकै रहेकालाई पनि देख्दैन । यस देवताको काव्यरूपी वेदज्ञानलाई हेर, जुन कहिल्यै न त मर्दछ र न जीर्ण हुने गर्दछ ।

**अपूर्वेणेषिता वाचस्ता वदन्ति यथायथम् । वदन्तीर्यत्र गच्छन्ति तदाहुर्ब्राह्मणं महत् ॥३३॥**
जसभन्दा पहिले कोही पनि थिएन, ती परमेश्वरबाट प्रेरित भएका वेदवाणीरूपी वचन यथार्थ वर्णन गर्दै जहाँसम्म जान्छन्, त्यो नै ज्येष्ठ ब्रह्म कहलाउँछ ।

**अत्र देवाश्च मनुष्याश्चारा नाभाविव श्रिताः । अपां त्वा पुष्पं पृच्छामि यत्र तन्मायया हितम् ॥३४॥**
जसर चक्रका अरहरू उनका नाभीसित आश्रित हुन्छन्, उसै गरी देवता एवं मानिसहरू उसमा आश्रित छन् । जो मायाद्वारा ढाकिएको हुन्छ, अपतत्त्वले त्यसका विषयमा हामीलाई बताओस् ।

**येभिर्वात इषितः प्रवाति ये ददन्ते पञ्च दिशः सध्रीचीः । य आहुतिमत्यमन्यन्त देवा अपां नेतारः कतमे त आसन् ॥३५॥**
जसबाट प्रेरित भएर वायु बहने गर्दछ, जसमा पाँच वटा दिशाहरू मिलीजुलीकन अस्तित्त्व प्रदान गर्दछन् जुन देवता आहुतिलाई नै सर्वाधिक मान्छन् त्यस्ता अप् प्रवाहका नेता को हुन् ?

**इमामेषां पृथिवीं वस्त एकोऽन्तरिक्षं पर्येको बभूव । दिवमेषां ददते यो विधर्ता विश्वा आशाः प्रति रक्षन्त्येके ॥३६॥**
उनै एउटाले पृथ्वीलाई आच्छादित गरेका छन्, एक उनै अन्तरिक्षका चारैतिर स्थित छन् । उनी नै धारण गर्ने भएर द्युलोकलाई धारण गर्दछन् । अनि कतिपय देवताले समस्त दिशाहरूलाई रक्षा गर्दछन् ।

**यो विद्यात् सूत्रं विततं यस्मिन्नोताः प्रजा इमाः । सूत्रं सूत्रस्य यो विद्यात् स विद्याद् ब्राह्मणं महत् ॥३७॥**
जसभित्र यी समस्त प्रजाहरू ओतप्रोत छन्, जो यस विस्तृत प्रकृतिरूपी सूत्रलाई र यसका कारणरूप सूत्रलाई पनि जान्दछन्, वास्तवमा उनैले ज्येष्ठ ब्रह्मलाई पनि जान्दछन् ।

**वेदाहं सूत्रं विततं यस्मिन्नोताः प्रजा इमाः । सूत्रं सूत्रस्याहं वेदाथो यद् ब्राह्मणं महत् ॥३८॥**
जसभित्र यी समस्त प्रजाहरू ओतप्रोत छन्, म उसै प्रकृतिरूपी विस्तृत सूत्रलाई र उसका पनि कारणभूत सूत्रलाई ज्येष्ठ ब्रह्म उनै हुन् भनेर जान्दछु ।

**यदन्तरा द्यावापृथिवी अग्निरैत् प्रदहन् विश्वदाव्यः । यत्रातिष्ठन्नेकपत्नीः परस्तात् क्वे वासीन्मातरिश्वा तदानीम् ॥३९॥**
प्रलय काल आउँदा जब द्यावापृथिवीमध्य रहेका समस्त संसारलाई भस्म गराउने अग्निदेव व्याप्त हुन्छन्, त्यस बेला आज्ञा पालन गर्ने एक मात्र संवरण शक्ति नै पत्नीका रूपमा रहेको हुन्छ । त्यस अवस्थामा मातरिश्वा वायु कहाँ रहेका हुन्छन् ?

**अप्स्वा सीन्मातरिश्वा प्रविष्टः प्रविष्य देवाः सलिलान्यासन् । बृहन् ह तस्थौ रजसो विमानः पवमानो हरित आ विवेश ॥४०॥**

त्यस बेलामा वायु सृष्टिको उत्पादक मूल सक्रिय अप् नामको तत्त्वमा प्रविष्ट भएको हुन्छ र अन्य देवहरू पनि उसैमा प्रवेश गर्दछन् । त्यस बेला संसारको त्यो रचनाकार सबैको सञ्चालक महान् परमेश्वर विद्यमान रहन्छ । सबै दिशाहरू जाज्वल्यमान रहनाले ऊ पनि व्याप्त रहेकै हुन्छ ।

**उत्तरेणेव गायत्रीममृतेधि वि चक्रमे । साम्ना ये साम संविदुरजस्तद् ददृशे क्व ॥४१॥**

जुन साधक प्राणरूपी गयले उत्तरोत्तर रहेका अमृत प्रवाहलाई प्राप्त गरेर गायत्री महाविद्यामा गतिशील हुन्छन्, जो सामरूपी आत्मतत्त्वले सामरूपी परमात्मतत्त्वलाई जान्दछन् उनीहरूले नै अज नामको अजन्मा परमात्माको प्रत्यक्ष साक्षात्कार कहाँ हुन्छ भनेर जानेका हुन्छन् ।

**निवेशनः संगमनो वसूनां देव इव सविता सत्यधर्मा । इन्द्रो न तस्थौ समरे धनानाम् ॥४२॥**

आफ्ना शक्तिलाई निवेश गरेर साधनाको पूर्वोक्त धाराका साथमा गतिमान् साधकले दिव्य सम्पदाहरूका लागि गरिने सङ्ग्राममा सत्य धर्मका पालक सवितादेवता र इन्द्रदेवताको जस्तै विजयशील भएर स्थिर हुने गरेका छन् ।

**पुण्डरीकं नवद्वारं त्रिभिर्गुणेभिरावृतम् । तस्मिन् यद् यक्षमात्मन्वत् तद् वै ब्रह्मविदो विदुः ॥४३॥**

नौ वटा द्वार भएको पुण्डरीक अर्थात् जीवनरूपी कमल सत्, रज, तम यी तीन गुणहरूले ओगटिएको छ । त्यहाँ वन्दनीय आत्माको जुन स्थान छ, त्यसका विषयमा ब्रह्मज्ञानीले नै जानेको हुन्छ ।

**अकामो धीरो अमृतः स्वयंभू रसेन तृप्तो न कुतश्चनोनः । तमेव विद्वान् न बिभाय मृत्योरात्मानं धीरमजरं युवानम् ॥४४॥**

निष्काम, धैर्यवान्, अमर र स्वयंभू ब्रह्म आफ्नै रसले तृप्त हुने गरेको छ । ऊ कुनै विषयमा पनि न्यून रहेको छैन । त्यस धैर्यवान्, अजर र नित्य युवा आत्मालाई जान्ने मानिस मृत्युबाट भयभीत कहिल्यै हुँदैन ।

## ९. शतौदनागौ सूक्त

**ऋषि–** अथर्वा । **देवता–** शतौदना, गौ । **छन्द–** अनुष्टुप्, त्रिष्टुप्, पथ्यापङ्क्ति, द्व्युष्णिक् गर्भानुष्टुप्, पञ्चपदा बृहती अनुष्टुप् उष्णिक् गर्भा जगती, पञ्चपदाति जागतानुष्टुब्गर्भा शक्वरी ।

**अघायतामपि नह्या मुखानी सपत्नेषु वज्रमर्पयैतम् । इन्द्रेण दत्ता प्रथमा शतौदना भ्रातृव्यघ्नी यजमानस्य गातुः ॥१॥**

हत्या गर्ने पापीहरूको मुख बन्द गर । ती शत्रुहरूमाथि वज्र प्रहार गर । इन्द्रदेवताले पहिले नै दिएको यो शतौदनाले शत्रुलाई विनाश गर्ने र यजमानलाई मार्गदर्शन गराउने गर्दछ ।

**वेदिष्टे चर्म भवतु बर्हिर्लोमानि यानि ते । एषा त्वा रशनाग्रभीद् ग्रावा त्वैषोऽधि नृत्यतु ॥२॥**

हे शतौदन ! तिम्रो चर्म वेदिका बनोस् र रोमहरू कुश होऊन् । यस यज्ञक्रियारूपी डोरीले तिमीलाई बाँधिएको छ । यो रस निकाल्ने ग्रावा तिमीमाथि हर्षित भएर नृत्य गरोस् ।

**बालास्ते प्रोक्षणीः सन्तु जिह्वा सं माष्टर्वघ्न्ये । शुद्धा त्वं यज्ञिया भूत्वा दिवं प्रहि शतौदने ॥३॥**

हे अहिंसनीय शतौदन ! तिम्रो रौं कुच्चो बनोस् । तिमी पूज्य र पवित्र हुँदै द्युलोकमा गमन गर ।

**यः शतौदनां पचति कामप्रेण स कल्पते । प्रीता ह्यस्यर्त्विजः सर्वे यन्ति यथायथम् ॥४॥**

जुन मानिस शतौदनको परिपाक गर्दछन् उनीहरू कामनापूर्तिमा समर्थ हुन्छन् र यसबाट हर्षित भएर ऋत्विक्गण यथायोग्य मार्गबाट फिर्ता हुने गर्दछन् ।

स स्वर्गमा रोहति यत्रादस्त्रिदिवं दिवः । अपुपनाभिं कृत्वा यो ददाति शतौदनाम् ॥५॥
शतौदनलाई अपुङ्गो वा मालपुवाका रूपमा जसले प्रदान गर्दछन् उनीहरू अन्तरिक्षमा रहेको स्वर्गलोक प्राप्त गर्दछन् ।

**स तांल्लोकान्त्समाप्नोति ये दिव्या ये च पार्थिवाः । हिरण्यज्योतिषं कृत्वा यो ददाति शतौदनाम् ॥६॥**

जसले शतौदना गाईलाई हिरण्य ज्योतियुक्त गराएर यज्ञीय ऊर्जा या अन्तरिक्षीय प्रकाशमान प्रवाहले संयुक्त हुँदै दान गर्दछन्, उनीहरू ती लोक प्राप्त गर्दछन् र जो दिव्य तथा पार्थिव हुन् ।

**ये ते देवि शमितारः पक्तारो ये च ते जनाः । ते त्वा सर्वे गोप्स्यन्ति मैभ्यो भैषीः शतौदने ॥७॥**

तिम्रो शान्तिका लागितथा तिमीलाई परिपक्व बनाउनका लागि जोजो लागेका छन्, ती सबैको सुरक्षा तिमीले गर । हे देवी ! तिनीहरूदेखि तिमी भयभीत नहोऊ ।

**वसवस्त्वा दक्षिणत उत्तरान्मरुतस्त्वा । आदित्याः पश्चाद् गोप्स्यन्ति साग्निष्टोममति द्रव ॥८॥**

दक्षिणतिरको दिशाबाट वसुदेवताले तिमीहरूलाई सुरक्षा गर्दछन्, उत्तर तर्फबाट मरुत्‌गणलेर पछिल्तिरबाट आदित्यगणले तिम्रो सुरक्षा गर्दछन्। त्यसो भएकाले तिमी अग्निष्टोम यज्ञभन्दा पारि गमन गर ।

**देवाः पितरो मनुष्या गन्धर्वाप्सरसश्च ये । ते त्वा सर्वे गोप्स्यन्ति सातिरात्रमति द्रव ॥९॥**

देव, पितृ, मानिस, गन्धर्व तथा अप्सराहरू यी सबैले तिम्रो सुरक्षा गरून् । तिमी अतिरात्र यज्ञभन्दा पर्तिर पुग ।

**अन्तरिक्षं दिवं भूमिमादित्यान् मरुतो दिशः । लोकान्त्स सर्वानाप्नोति यो ददाति शतौदनाम् ॥१०॥**

जसले शतौदन दान गर्दछन्, उनीहरूले अन्तरिक्ष, द्युलोक, पृथ्वी, सूर्य, मरुत् तथा दिशाहरू आदिका सम्पूर्ण लोकहरू नै प्राप्त गर्दछन् ।

**घृतं प्रोक्षान्ती सुभगा देवी देवान् गमिष्यति । पक्तारमघ्न्ये मा हिंसीर्दिवं प्रेहि शतौदने ॥११॥**

हे अहिंसनीय सुभगा देवी ! तिमी घिउ सेचन गर्दै देवताहरूलाई प्राप्त गर । तिमी पकाउनलाई हिंसा नगर, उनीहरूलाई स्वर्गतर्फ प्रेरित गर ।

**ये देवा दिविषदो अन्तरिक्षसदश्च ये ये चेमे भूम्यामधि । तेभ्यस्त्वं धुक्ष्व सर्वदा क्षीरं सर्पिरथो मधु ॥१२॥**

जुन देवता स्वर्ग, अन्तरिक्ष र धर्तीमा निवास गर्दछन्, उनीहरूका लागि सधैं दुध, घिउ र महको दोहन गर ।

**यत् ते शिरो यत् ते मुखं यौ कर्णौ ये च ते हनू । आमिक्षां दुह्रतां दात्रे क्षीरं सर्पिरथो मधु ॥१३॥**

तिम्रा शिर, मुख, कान र चिउँडो आदिले दातालाई दुध, दही, घिउ र मधु प्रदान गरून् ।

**यौ त ओष्ठौ ये नासिके ये शृङ्गे ये च तेऽक्षिणी । आमिक्षां दुह्रतां दात्रे क्षीरं सर्पिरथो मधु ॥१४॥**

तिम्रा ओठ, नाक, आँखा र सिङले दातालाई दुध, दही, घिउ र मह प्रदान गरून् ।

**यत् ते क्लोमा यद् हृदयं पुरीतत् सहकण्ठिका । आमिक्षां दुह्रतां दात्रे क्षीरं सर्पिरथो मधु ॥१५॥**

तिम्रा फोक्सो, हृदय, मलाशय र कण्ठ भागले दातालाई दुध, दही, घिउ र मह प्रदान गरून् ।

**यत् ते यकृद् ये मतस्ने यदान्त्रं याश्च ते गुदाः । आमिक्षां दुह्रतां दात्रे क्षीरं सर्पिरथो मधु ॥१६॥**

तिम्रा कलेजो, मिर्गौला, आन्द्रा र गुदाले दातालाई दुध, दही, घिउ र मह प्रदान गरून् ।

**यस्ते प्लाशियों वनिष्ठुर्यौ कुक्षी यच्च चर्म ते । आमिक्षां दुह्रतां दात्रे क्षीरं सर्पिरथो मधु ॥१७॥**

तिम्रा प्लिहा, गुदाभाग, कोखा, चर्म आदिले दातालाई दुध, दही, घिउ र मह प्रदान गरून् ।

**यत् ते मज्जा यदस्थि यन्मांसं यच्च लोहितम् । आमिक्षां दुह्रतां दात्रे क्षीरं सर्पिरथो मधु ॥१८॥**

तिम्रा मज्जा, अस्थि, मांस र रुधिरले दातालाई दुध, दही, घिउ र मह प्रदान गरून् ।

**यौ ते बाहू ये दोषणी यावंसौ या च ते ककुत् । आमिक्षां दुह्रतां दात्रे क्षीरं सर्पिरथो मधु ॥१९॥**

तिम्रा बाहु, भुजा, काँध र कुमले दातालाई दुध, दही, घिउ र मह प्रदान गरून् ।

**यास्ते ग्रीवा ये स्कन्धा याः पृष्टीर्याश्च पर्शवः । आमिक्षां दुह्रतां दात्रे क्षीरं सर्पिरथो मधु ॥२०॥**

तिम्रा गर्धन, पिठ्युँ, काँध र मांसपेशीले दातालाई दुध, दही, घिउ र मह प्रदान गरून् ।

**यौ त ऊरू अष्ठीवन्तौ ये श्रोणी या च ते भसत् । आमिक्षां दुह्रतां दात्रे क्षीरं सर्पिरथो मधु ॥२१॥**

तिम्रा जाङ, घुँडा, कुहुना र गुह्य अङ्गले दातालाई दुध, दही, घिउ र मह प्रदान गरून् ।

**यत् ते पुच्छं ये ते बाला यदूधो ये च ते स्तनाः । आमिक्षां दुह्रतां दात्रे क्षीरं सर्पिरथो मधु ॥२२॥**

तिम्रा पुच्छर, रौँ, दुग्धाशय र थुनले दातालाई दुध, दही, घिउ र मह प्रदान गरून् ।

**यास्ते जङ्घा याः कुष्ठिका ऋच्छरा ये च ते शफाः । आमिक्षां दुह्रतां दात्रे क्षीरं सर्पिरथो मधु ॥२३॥**

तिम्रा पिँडुला, खुट्टी, खुर र नाडीको भागले दातालाई दुध, दही, घिउ र मह प्रदान गरून् ।

**यत् ते चर्म शतौदने यानि लोमान्यघ्न्ये । आमिक्षां दुह्रतां दात्रे क्षीरं सर्पिरथो मधु ॥२४॥**

हे शतौदन ! हे अघ्न्या ! तिम्रा छाला र रौँले दातालाई दुध, दही, घिउ र मह प्रदान गरून् ।

**क्रोडौ ते स्तां पुरोडाशावाज्येनाभिघारितौ । तौ पक्षौ देवि कृत्वा सा पक्तारं दिवं वह ॥२५॥**

हे देवी ! तिम्रो पार्श्वभाग भनेको घिउले सेचन भएको पुरोडाश हो । हे शतौदन ! तिनलाई पँखेटा बनाएर तिमी पकाउनेलाई स्वर्गमा लिएर जाऊ ।

**उलूखले मुसले यश्च चर्मणि यो वा शूर्पे तण्डुलः कणः । यं वा वातो मातरिश्वा पवमानो ममाथाग्निष्टद्धोता सुहुतं कृणोतु ॥२६॥**

ओखल, मुसल, चर्म र सुपोमा जुन चामलका कणहरू रहेका छन्, अथवा जसलाई मातरिश्वाले शुद्ध गराएर मन्थन गरेका छन्, त्यसलाई होता बनेका अग्निदेवताले श्रेष्ठ हविका रूपमा तयार गराऊन् ।

**अपो देवीर्मधुमतीर्घृतश्चुतो ब्रह्मणां हस्तेषु प्रपृथक् सादयामि । यत्काम इदमभिषिञ्चामि वोऽहं तन्मे सर्वं सं पद्यतां वयं स्याम पतयो रयीणाम् ॥२७॥**

मधुयुक्त घिउ प्रदान गर्ने दिव्य जलधाराहरूलाई हामी ब्राह्मणका हातमा अलगअलग प्रदान गर्दछौँ । हे ब्राह्मणहरू हो ! जुन कामनाका लागि तिनीहरूलाई हामीले अभिषेक गरेका छौँ त्यो सबै हामीलाई प्राप्त होस् र हामी धनले सम्पन्न बनौँ ।

## १०. वशागौ सूक्त

**ऋषि**- कश्यप । **देवता**- वशा । **छन्द**- अनुष्टुप्, ककुम्मती अनुष्टुप्, पञ्चपदाति जागतानुष्टुप्, गर्भा स्कन्धोग्रीवी बृहती, विराट् अनुष्टुप्, बृहती, उपरिष्टात् बृहती, आस्तारपङ्क्ति, शङ्कुमती अनुष्टुप्, त्रिपदा विराट् गायत्री, उष्णिक् गर्भा अनुष्टुप्, विराट् पथ्या बृहती ।

**नमस्ते जायमानायै जाताया उत ते नमः । बालेभ्यः शफेभ्यो रूपायाघ्न्ये ते नमः ॥१॥**
हे अहिंसनीय गौ ! उत्पन्न भइसकेका र उत्पन्न हुँदै गरेका तिमीलाई नमस्कार छ । तिम्रा रौँ, खुर तथा विभिन्न रूपहरूलाई नमस्कार छ ।

**यो विद्यात् सप्त प्रवतः सप्त विद्यात् परावतः । शिरो यज्ञस्य यो विद्यात् स वशां प्रति गृह्णीयात् ॥२॥**
वशा गौका सात जीवनप्रवाह, सात अन्तरस्थान तथा सात यज्ञका शिरलाई जसले जानेको छ, उसैले नै वशा गौलाई स्वीकार गर्न सक्दछ ।

**वेदाहं सप्त प्रवतः सप्त वेद परावतः । शिरो यज्ञस्याहं वेद सोमं चास्यां विचरक्षणम् ॥३॥**
सात जीवन प्रवाह, सात अन्तरस्थान र सात यज्ञका शिरलाई हामीले जानेका छौँ ! यसमा विशेष आलोकित हुने सोमदेवता हुन् र उनलाई पनि हामीले जानेका छौँ ।

**यया द्यौर्यया पृथिवी ययापो गुपिता इमाः । वशां सहस्रधारां ब्रह्मणाच्छावदामसि ॥४॥**
जसले द्यावापृथिवी र समस्त जलको सुरक्षा गरेका छन्, उस सहस्रधारा प्रदान गर्ने वशा गौसित हामी ज्ञानपूर्वक वार्तालाप गर्दछौँ ।

**शतं कंसाः शतं दोग्ध्मारः शतं गोप्तारो अधि पृष्ठे अस्याः । ये देवास्तस्यां प्राणन्ति ते वशां विदुरेकधा ॥५॥**
यसका पृष्ठमा दुधका सयौँ किसिमका वर्तनहरू छन्, सयौँ किसिमका दुध दुहुनेहरू छन् र सयौँ किसिमका संरक्षकहरू छन् । जुन देवता त्यस्ता गाईसित जीवित रहेका छन्, उनीहरू नै त्यसको महत्त्व जान्दछन् भन्ने सबैको एकमत छ ।

**यज्ञपदीराक्षीरा स्वधाप्राणा महीलुका । वशा पर्जन्यपत्नी देवाँ अप्येति ब्रह्मणा ॥६॥**
यज्ञमा विशेष स्थान पाएको, दुध प्रदान गर्ने, अन्नरूपी प्राणलाई धारण गर्ने हुनाले धर्तीमा प्रसिद्ध तथा पर्जन्यकी पत्नीका रूपमा रहेको वशा नामको उर्वरताले ब्रह्मरूपी अन्नद्वारा देवताहरूलाई प्राप्त गर्दछ ।

**अनु त्वाग्निः प्राविशदनु सोमो वशे त्वा । ऊधस्ते भद्रे पर्जन्यो विद्युतस्ते स्तना वशे ॥७॥**
हे वशा गौ ! अग्निदेवता र सोमदेवता तिमीभित्र प्रवेश गरेका छन् । हे कल्याणकारी गाई ! पर्जन्य तिम्रो दुधका स्थान हुन् र हे वशा ! विद्युत् तिम्रा स्तन हुन् ।

**अपस्त्वं धुक्षे प्रथमा उर्वरा अपरा वशे । तृतीयं राष्ट्रं धुक्षेऽन्नं क्षीरं वशे त्वम् ॥८॥**
हे वशा गौ ! सबैभन्दा पहिले तिमी जल प्रदान गर्दछौ, त्यसपछि उर्वरक भूमि प्रदान गर्दछौ अनि फेरि तेस्रो राष्ट्रिय शक्ति प्रदान गर्दछौ र हे वशा ! त्यसपछि तिमी अन्न र दुध प्रदान गर्दछौ ।

**यदादित्यैर्हूयमानोपातिष्ठ ऋतावरि । इन्द्रः सहस्रं पात्रान्त्सोमं त्वापाययद् वशे ॥९॥**
हे ऋतावरी ! तिमीलाई जब आदित्यले बोलाए त्यस बेला तिमी उनका छेउमा गयौ । त्यस बेला हे वशा ! इन्द्रदेवताले तिमीलाई हजारौँ पात्रले सोमरस पान गराएका थिए ।

**यदनूचीन्द्रमैरात् त्व ऋषभो ऽह्वयत् । तस्मात् ते वृत्रहा पयः क्षीरं क्रुद्धो हरद् वशे ॥१०॥**
हे गाई ! जब तिमी आफ्नो अनुकूलताका कारण इन्द्रदेवताका नजिकै थियौ, त्यस बेला वृषभले तिमीलाई आफ्ना नजिक बोलाएको थियो । यसै कारण क्रोधित भएर वृत्रहन्ता इन्द्रदेवताले तिम्रो दुध र जल खोसे ।

**यत् ते क्रुद्धो धनपतिरा क्षीरमहरद् वशे । इदं तदद्य नाकस्त्रिषु पात्रेषु रक्षति ॥११॥**
हे वशा गौ ! जब क्रोधित भएर धनपतिले तिम्रो दुध खोसे, त्यस बेलादेखि आजसम्म यो स्वर्ग ने सोमरूपी तीन पात्रमा त्यसलाई सुरक्षा गर्दै आउँदै छ ।

**त्रिषु पात्रेषु तं सोममा देव्य हरद् वशा । अथर्वा यत्र दीक्षितो बर्हिष्यास्त हिरण्यये ॥१२॥**
जुन ठाउँमा अथर्वा ऋषि दीक्षित भएर मनोहर आसनमा बस्दछन्, उनका नजिक वशा नामकी देवी पनि तीन पात्रमा राखिएको सोमरस लिएर जान्छिन् ।

**सं हि सोमेनागत समु सर्वेण पद्वता । वशा समुद्रमध्यष्ठाद् गन्धर्वैः कलिभिः सह ॥१३॥**
सोम तथा समस्त किसिमका गोडा भएका प्राणी वशा नामको गाईसँग सुसङ्गत हुने गर्दछन्

उसले ध्वनि गर्ने कलि नामका गन्धर्वका साथमा समुद्रमा प्रतिष्ठित हुने गर्दछ ।

**सं हि वातेनागत समु सर्वैः पतत्रिभिः । वशा समुद्रे प्रानृत्यदृचः सामानि बिभ्रती ॥१४॥**

वायु र समस्त गोडा भएका प्राणीहरू वशा नामको गाईसँग सुसङ्गत हुने गर्दछन् । यसले ऋचा तथा सामलाई धारण गर्दै समुद्रमा नर्तन गर्दछ ।

**सं हि सूर्येणागत समु सर्वेण चक्षुषा । वशा समुद्रमत्यख्यद् भद्रा ज्योतिंषि बिभ्रती ॥१५॥**

सूर्य तथा समस्त नेत्र भएकाहरूसित मिसिँदै ज्योतिहरूलाई धारण गर्दै कल्याणकारी वशा समुद्रभन्दा पनि बढी विख्यात भएको छ ।

**अभीवृता हिरण्येन यदतिष्ठ ऋतावरि । अश्वः समुद्रो भूत्वाध्यस्कन्ददद् वेश त्वा ॥१६॥**

हे अन्न प्रदान गर्ने गाई ! तिमी जब सुनौला आभूषणले सम्पन्न भएर उभिएकी थियौ, त्यस बेला हे वशा ! तिम्रा नजिकै अश्व बनेर समुद्र आएका थिए ।

**तद् भद्राः समगच्छन्त वशा देष्ट्र्यथो स्वधा । अथर्वा यत्र दीक्षितो बर्हिष्यास्त हिरण्यये ॥१७॥**

जहाँ दीक्षित भएर अथर्वा ऋषि सुनौला आसनमा विराजमान हुन्छन्, त्यहाँ देष्ट्री र स्वधा प्रदान गर्ने तथा तृप्त गराउने भएर वशा पुग्ने गर्दछ ।

**वशा माता राजन्यस्य वशा माता स्वधे तव । वशाया यज्ञ आयुधं ततश्चित्तमजायत ॥१८॥**

क्षत्रियहरूकी माता वशा हुन् । हे स्वधा ! तिम्री माता वशा हुन् । वशाबाटै आयुधहरू उत्पन्न भएका हुन् र उसैबाट चित्त पनि निर्माण भएको हो ।

**ऊर्ध्वो बिन्दुरुदचरद् ब्रह्मणः ककुदादधि । ततस्त्वं जज्ञिषे वशे ततो होताजायत ॥१९॥**

ब्रह्मको जुरोजस्तो उच्च भागबाट एउटा थोपो माथितिर उछिट्टियो । हे वशा ! त्यसबाट तिमी प्रकट भयौ । त्यसपछि होताहरू उत्पन्न भए ।

**आस्नस्ते गाथा अभवन्नुष्णिहाभ्यो बलं वशे । पाजस्याज्जज्ञे यज्ञ स्तनेभ्यो रश्मयस्तव ॥२०॥**

हे वशा ! तिम्रा मुखबाट गाथाहरू बनेका छन् । गर्धनका भागबाट बल प्रकट भएको छ, दुग्धाशयबाट यज्ञ प्रकट भएको छ र स्तनबाट किरण प्रकट भएको छ ।

**ईर्माभ्यामयनं जातं सक्थिभ्यां च वशे तव । आन्त्रेभ्यो जज्ञिरे अत्रा उदरादधि वीरुधः ॥२१॥**

हे वशा ! तिम्रा बाहु र गोडाले गमन हुन्छ । तिम्रा आन्द्राबाट विभिन्न खालका पदार्थ र पेटबाट वनस्पतिहरू उत्पन्न भएका छन् ।

**यदुदरं वरुणस्यानुप्राविशथा वशे । ततस्त्वा ब्रह्मोदह्वयत् स हि नेत्रमवेत् तव ॥२२॥**

हे वशा ! जब तिमीले वरुणदेवताका पेटमा प्रवेश गर्‍यौ त्यस बेला ब्रह्माले तिमीलाई बोलाए र उनैले नै तिम्रा नेत्रलाई चिन्न सकेका थिए ।

**सर्वे गर्भादवेपन्त जायमानादसूस्वः । ससूव हि तामाहुर्वशेति ब्रह्मभिः क्लृप्तः स ह्यस्या बन्धुः ॥२३॥**

सबै प्राणीहरू नै गर्भबाट उत्पन्न हुनका लागि डराउँछन्, त्यस बेला यस वशाले नै उनीहरूलाई उत्पन्न गराउँछ; मन्त्रले समर्थ हुने गरेको कर्म उसको दाजुभाइ हो भन्ने गरिन्छ ।

**युध एकः सं सृजति यो अस्या एक इद् वशी । तरांसि यज्ञा अभवन् तरसां चक्षुरभवद् वशा ॥२४॥**

वशाको अर्को एउटा दाजुभाइले सङ्घर्षपूर्वक सिर्जना गर्दछ । एउटाले यज्ञबाट पार लगाउँछ । पार हुनेहरूको नेत्र भनेको वशा नै हो ।

**वशा यज्ञं प्रत्यगृह्णाद् वशा सूर्यमधारयत् । वशायामन्तरविशदोदनो ब्रह्मणा सह ॥२५॥**

वशाले यज्ञलाई स्वीकार गरेको छ । उसले नै सूर्यलाई धारण गरेको छ । ब्रह्माका साथमा वशामा ओदन पनि प्रवेश गरेको छ ।

**वशावेवामृतमाहुर्वशां मृत्युमुपासते । वशेदं सर्वमभवद्देवा मनुष्या३ असुराः पितर**

**ऋषयः ॥२६॥**
देवगण वशालाई अमृत पनि भन्दछन् र उसैलाई मृत्यु पनि भन्ने ठानेर उपासना गर्दछन् । देव, मानव, असुर, पितृ र ऋषि यी सबै नै वशामय छन् ।

**य एवं विद्यात् स वशां प्रति गृह्णीयात् । तथा हि यज्ञः सर्वपाद् दुहे दात्रेऽनपस्फुरन् ॥२७॥**
यस ज्ञानलाई जसले जानेको छ, उसले वशालाई प्रतिग्रहण गरोस् । वशाका दातालाई यज्ञले अविचलित भावे सबै खालका फल प्रदान गर्दछ ।

**तिस्रो जिह्वा वरुणस्यान्तर्दीद्यत्यासनि । तासां या मध्ये राजति सा वशा दुष्प्रतिग्रहा ॥२८॥**
वरुणदेवताका मुखभित्र तीन खालका जिब्राहरू चम्कने गर्दछन् । तिनीहरूमध्ये बीचको एउटा बढी चमकदार छ र त्यो नै वशा हो । त्यसैले त्यसलाई दानमा लिन साह्रै गाहारो छ ।

**चतुर्धा रेतो अभवद् वशायाः । आपस्तुरीयममृतं तुरीयं यज्ञस्तुरीयं पशवस्तुरीयम् ॥२९॥**
वशा नामका गाईको वीर्य चार भागमा विभाजित छ । त्यसको चौथाइ भाग जल, चौथाइ भाग अमृत, चौथाइ भाग यज्ञ र चौथाइ भाग पशु हुन् ।

**वशा द्यौर्वशा पृथिवी वशा विष्णुः प्रजापतिः । वशाया दुग्धमपिबन्त्साध्या वसवश्च ये ॥३०॥**
वशा नै द्युलोक र धर्ती हुन्, वशा नै प्रजापालक विष्णु हुन् । जो वसु, देवगण र साध्यले वशाको नै दुध पान गर्दछ ।

**वशाया दुग्धं पीत्वा साध्या वसवश्च ये । ते वै ब्रध्नस्य विष्टपि पयो अस्या उपासते ॥३१॥**
वशाको दुध पान गर्ने साध्य र वसु सूर्यमण्डलमा विद्यमान देवताका स्थानमा दुधको नै उपासना गर्दछन् ।

**सोममेनामेके दुह्रे घृतमेक उपासते । य एवं विदुषे वशां ददुस्ते गतास्त्रिदिवं दिवः ॥३२॥**
यिनीहरूमा एकले सोमलाई दोहन गर्दछन् भने एकले घिउ प्राप्त गर्नका लागि साधना गर्दछन् । जसले यस किसिमको ज्ञानी गाई प्रदान गर्दछ, उसले स्वर्गलोक जान पाउँछ ।

**ब्राह्मणेभ्यो वशां दत्त्वा सर्वांल्लोकान्त्समश्नुते । ऋतं ह्यस्यामर्पितमपि ब्रह्माथो तपः ॥३३॥**
मानिसहरू ब्राह्मणलाई वशा दान गरेर समस्त लोक प्राप्त गर्दछन् । यस वशामा सत्य, ब्रह्म र तप आश्रित हुन्छन् ।

**वशां देवा उप जीवन्ति वशां मनुष्या उत । वशेदं सर्वमभवद् यावत् सूर्यो विपशयति ॥३४॥**
देवगण वशामा नै जीवन व्यतीत गर्दछन् र मानिसहरू पनि वशामा नै जीवन व्यतीत गरिरहेका छन् । जहाँसम्म आदित्यदेवताको आलोक पुग्न सक्दछ, त्यहाँसम्म सबै नै वशा रहेको हुन्छ ।

## ॥इति दशमं काण्डम् ॥

दसौँ काण्ड सकियो ।

ॐ

**ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।**

**अथर्ववेद - संहिता**

# ॥अथैकादशं काण्डम् ॥

## १. ब्रह्मौदन सूक्त

**ऋषि—** ब्रह्मा । **देवता—** ब्रह्मौदन । **छन्द—** त्रिष्टुप्, अनुष्टुब्गर्भा भुरिक् पङ्क्ति, बृहतीगर्भा विराट् त्रिष्टुप्, चतुष्पदा शाक्वरगर्भा जगती, भुरिक् त्रिष्टुप्, उष्णिक्, विराट् गायत्री, शक्वरातिजागतगर्भा जगती, विराट् पुरोऽतिजगती विराट् जगती, जगती, विराट् जगती, अतिजागतगर्भा परातिजागता विराट् अतिजगती, अतिजागतगर्भा परशाक्वरा चतुष्पदा भुरिक् जगती, अतिजागतगर्भा जगती, भुरिक् विराट् जगती, चतुष्पदा ककुम्मती उष्णिक्, पुरोविराट् त्रिष्टुप् ।

**अग्ने जायस्वादितिर्नाथितेयं ब्रह्मौदनं पचति पुत्रकामा । सप्तऋषयो भूतकृतस्ते त्वा मन्थन्तु प्रजया सहेह ॥१॥**

हे अग्निदेवता ! तिमी प्रकट होऊ । यी देवमाता अदिति सुसन्ततिको कामना गर्दै ब्रह्मौदनका नामको हविष्यान्न पकाउँछिन् । इन्द्रियविजयी शक्तिले सम्पन्न सप्तर्षिहरूले प्राणीलाई उत्पन्न गर्छन् । हे अग्निदेवता ! देवताका यज्ञमा याजकहरूले मन्थन गर्दा तिमी उत्पन्न होऊ ।

**कृणुत धूमं वृषणः सखायोऽद्रोघाविता वाचमच्छ । अयमग्निः पृतनाषाट् सुवीरो येन देवा असहन्त दस्यून् ॥२॥**

हे सामर्थ्यले सम्पन्न मित्रहरू हो ! तिमीहरू मन्थन गरेर अग्नि उत्पन्न गर । यी अग्निदेवता द्रोहरहित साधकहरूलाई संरक्षण गर्दछन्, कुसंस्काररूपी शत्रुका सेनालाई पराजित गराउने उत्तम वीर हुन् र यिनकै सहायताले देवताहरूले दस्युहरूलाई आफ्ना वशमा पारे ।

**अग्नेऽजनिष्ठा महते वीर्याय ब्रह्मौदनाय पक्तवे जातवेदः । सप्तऋषयो भूतकृतस्ते त्वाजीजनन्नस्यै रयिं सर्ववीरं नि यच्छ ॥३॥**

हे सम्पूर्ण किसिमका ज्ञानले सम्पन्न अग्निदेवता ! तिमी महान् पराक्रम गर्नका लागि उत्पन्न हुने गर्दछौ । ज्ञान वृद्धि गराउने ब्रह्मौदन नामको हविष्यान्न पकाउनका लागि, सम्पूर्ण प्राणीहरूलाई उत्पन्न गर्ने सप्तर्षिहरूले तिमीलाई प्रकट गरेका छन् । त्यसै हुनाले तिमी यी माताहरूलाई वीरताको भावनाले सम्पन्न सन्तान दिएर सम्पन्न गराऊ ।

**समिद्धो अग्ने समिधा समिध्यस्व विद्वान् देवान् यज्ञियाँ एह वक्षः । तेभ्यो हविः श्रपयञ्जातवेद उत्तमं नाकमधि रोहयेमम् ॥४॥**

हे अग्निदेवता ! समिधाहरूले प्रदीप्त भएपछि तिमी यज्ञीय देवताहरूलाई लिएर यहाँ आऊ । हे ज्ञानले सम्पन्न अग्निदेवता ! तिमी देवताहरूका लागि हविष्यान्न पकाउँदै देहावसान गरिसकेका यजमानहरूलाई स्वर्गको अत्यन्त श्रेष्ठ स्थानमा प्रतिष्ठित गराऊ ।

**त्रेधा भागो निहितो यः पुरा वो देवानां पितॄणां मर्त्यानाम् । अंशाञ्जानीध्वं वि भजामि तान् वो यो देवानां स इमां पारयाति ॥५॥**

देवता, पितृ र मानिसहरूका लागि जजसले तीन किसिमका भाग लगाएर राखिसकेका थिए, हामी उनका लागि उसै रूपमा ती भागहरू समर्पित गर्दछौं । उनीहरूले आआफ्ना भागको अभिप्राय जानून् । यसमध्ये देवताको अंशजति आहुतिका रूपमा अग्निमा समर्पित भएर यी यजमानकी पत्नीका रूपमा रहेकी देवमाता अदितिलाई समर्पित गरियोस् ।

**अग्ने सहस्वानभिभूरभीदसि नीचो न्युब्ज द्विषतः सपत्नान् । इयं मात्रा मीयमाना मिता च सजातांस्ते बलिहृतः कृणोतु ॥६॥**

हे बलशाली अग्निदेवता ! तिमी शत्रुलाई पराजित गर्ने हौ । त्यसो हुनाले विद्वेषी शत्रुहरूलाई तलतिर मुन्ट्याऊ । हे यजमान ! यो सीमित क्षेत्रमा मापन गरिएको यज्ञशाला तिम्रा सजातीय वीरले तिमीलाई द्रव्यभेटी प्रदान गर्नका लागि योग्य बनाऊन् ।

**साकं सजातैः पयसा सहैध्युदुब्जैनां महते वीर्याय । ऊर्ध्वो नाकस्याधि रोह विष्टपं स्वर्गो लोक इति यं वदन्ति ॥७॥**

हे याजकहरू हो ! तिमीहरू आआफ्ना दौंतरीसँगै उन्नति गर । उच्च पराक्रम गर्नका लागि यस किसिमको ब्रह्मौदन तयार गर । स्वर्ग भन्ने नाम दिइएको श्रेष्ठ लोकमा आरोहण गर ।

**इयं मही प्रति गृहणातु चर्म पृथिवी देवी सुमनस्यमाना । अथ गच्छेम सुकृतस्य लोकम् ॥८॥**

देवीका रूपको अत्यन्त विस्तृत पृथ्वी असल सङ्कल्पले युक्त होस् र चर्मको ढालका रूपमा माथिल्लो सतहलाई आफ्नो संरक्षणका लागि धारण गरोस् । त्यसकै सहायताले हामी पुण्यलोक प्राप्त गर्न सकौँ ।

**एतौ ग्रावाणौ सयुजा युङ्ग्धि चर्मणि निर्भिन्ध्यंशून् यजमानाय साधु । अवघ्नती नि जहि य इमां पृतन्यव ऊर्ध्वं प्रजामुद्भरन्त्युदूह ॥९॥**

हे ऋत्विक्हरू हो ! यी नजिकनजिकै एकै ठाउँमा रहने गरेका ग्रावा नामका, सोम पेल्ने ढुङ्गाका उपकरणलाई पृथ्वीको त्वचारूपी सतहमा राख । यजमानका लागि सोमरस पेलेर निकाल । यी अदितिका रूपमा रहेकी स्त्रीमाथि जसले आक्रमण गर्दछ, उसलाई विनाश गर । हे अदिति ! सोमरस पेल्दै र सबैलाई भरणपोषण गर्दै तिमी आफ्ना प्रजाहरूलाई श्रेष्ठ पदमा आसीन गराऊ ।

**गृहाण ग्रावाणौ सकृतौ वीर हस्त आ ते देवा यज्ञिया यज्ञमगुः । त्रयो वरा यतमां स्त्वं वृणीषे तास्ते समृद्धीरिह राधयामि ॥१०॥**

हे वीर ऋत्विक्हरू हो ! तिमीहरू आआफ्ना हातमा ग्रावा धारण गर । पूजनीय देवताहरू तिम्रा यज्ञमा आऊन् । हे यजमानहरू हो ! तिमीहरूले कामना गरेका तीन किसिमका वीरहरूलाई म यज्ञले सिद्ध वा उपलब्ध गराउँछु ।

**इयं ते धीतिरिदमु ते जनित्रं गृह्णातु त्वामदितिः शूरपुत्रा । परा पुनीहि य इमां पृतन्यवोऽस्यै रयिं सर्ववीरं नि यच्छ ॥११॥**

हे अग्निदेवता ! यो तिम्रै धारण शक्ति हो र जन्मको प्रक्रिया पनि यही हो । शूरवीरकी माता अदितिले तिमीलाई धारण गरून् । वीरहरूको सेनाले सम्पन्न भएकी यी देवीलाई जजसले दुःख दिन्छन्, तिनलाई पर हटाऊ र यी देवीलाई वीरहरूले सम्पन्न गराऊ ।

**उपश्वसे द्रुवये सीदता यूयं वि विच्यध्वं यज्ञियासस्तुषैः । श्रिया समानानति सर्वान्त्स्यामाधस्पदं द्विषतस्पादयामि ॥१२॥**

हे यज्ञको कामना गर्ने याजक र अन्न आदिहरू हो ! तिमीहरू जीवन यात्राका लागि स्थिर होओ विकार र विकृतिरूपी तुषहरूलाई केलाओ र अरूभन्दा श्रेष्ठ बन । विद्वेष गर्नेहरूलाई हामी गोडाले मिच्न सकौँ ।

**परेहि नारि पुनरेहि क्षिप्रमपां त्वा गोष्ठोऽध्यरुक्षद् भराय । तासां गृह्णीताद् यतमा यज्ञिया असन् विभाज्य धीरीतरा जहीतात् ॥१३॥**

हे नेतृत्वशक्तिले सम्पन्न स्त्री वा मन्त्रका रूपमा रहेका नारीहरू हो ! तिमीहरू पर गए पनि चाँडै फर्केर आओ । तिमीहरूलाई जलको आपूर्ति गर्नका लागि गोष्ठमा पुऱ्याउँछौँ । त्यहाँबाट यज्ञीय जलका कणहरू ग्रहण गर र बुद्धिमत्तापूर्वक काम नलाग्ने भाग त्यहीँ छोडिदेओ ।

**एमा अगुर्योषितः शुम्भमाना उत्तिष्ठ नारि तवसं रभस्व । सुपत्नी पत्या प्रजया प्रजावत्या त्वागन् यज्ञः प्रति कुम्भं गृभाय ॥१४॥**

यी देवीहरू सुसज्जित भएर आएका छन् । उनीहरू उठून् र पराक्रम गर्न थालून् । स्वामीहरूमा श्रेष्ठ स्वामी तथा सन्तानहरूमा श्रेष्ठ सन्तान भएकी हे स्त्री ! तिमीले यज्ञ प्राप्त गरेकी छ्यौ । यस कुम्भरूपी भर्नुपर्ने पात्रलाई पनि ग्रहण गर ।

**उर्जो भागो निहितो यः पुरा व ऋषिप्रशिष्ट्यप आ भरैताः । अयं यज्ञो गातुविन्नाथवित् प्रजाविदुग्रः पशुविद् वीरविद् वो अस्तु ॥१५॥**

हे जलदेवता ! तिम्रो शक्तिप्रदायक भाग पहिलेदेखि नै निश्चित गरिएको छ । ऋषिहरूका निर्देशले उनीहरूकै लागि तयार गरेर यहाँ लिएर आऊ । तिम्रा लागि सम्पन्न गरिने यो यज्ञ पथप्रदर्शक, ऐश्वर्यवर्द्धक, सुसन्तानदायक, पराक्रमवर्द्धक, गाई, अश्व आदि पशुप्रदायक र वीर सन्तानप्रदायक होस् ।

**अग्ने चरुर्यज्ञियस्त्वाध्यरुक्षच्छुचिस्तपिष्ठस्तपसा तपैनम् । आर्षेया दैवा अभिसङ्गत्य भागमिमं तपिष्ठा ऋतुभिस्तपन्तु ॥१६॥**

हे अग्निदेवता ! यज्ञका लागि उपयुक्त, पवित्र र तपस्याका सामर्थ्यले सम्पन्न चरुरूपी अन्न उपलब्ध भएको छ । त्यसो हुँदा तिमी यसलाई आफ्ना तापले तताऊ । ऋषि र देवताहरूले पनि यसलाई तताऊन् र ऋतुहरूका लागि उपयुक्त बनाऊन् ।

**शुद्धाः पूता योषितो यज्ञिया इमा आपश्चरुमव सर्पन्तु शुभ्राः । अदुः प्रजां बहुलान् पशून् नः पक्तौदनस्य सुकृतामेतु लोकम् ॥१७॥**

पवित्र गराउने सक्ने, शुद्ध र मिसाइनुपर्ने जल यज्ञका लागि योग्य यस शुभ्र वर्णका चरुका स्थालीमा प्रवेश गरोस् । यस जलले हामीलाई सुसन्तति र श्रेष्ठ पशु प्रदान गरोस् । ज्ञानले सम्पन्न पोषक प्रवाहका रूपमा रहेका यस ब्रह्मौदनलाई पकाउने यजमानहरूले स्वर्गलोकको उच्च स्थान प्राप्त गरून् ।

**ब्रह्मणा शुद्धा उत पूता घृतेन सोमस्यांशवस्तण्डुला यज्ञिया इमे । अपः प्र विशत प्रति गृह्णातु वश्चरुरिमं पक्त्वा सुकृतामेत लोकम् ॥१८॥**

मन्त्रले पवित्र गरिएको र घिउ आदिमा पकाइएको यो दोषरहित खाद्य सोमकै अंशका रूपमा रहेको छ । त्यसै हुनाले हे यज्ञीय चामलहरू हो ! तिमीहरू चरुका थालीमा रहेर जलमा प्रवेश गर । ज्ञानले सम्पन्न पोषक प्रवाहका रूपमा रहेका यस ब्रह्मौदनलाई पकाउने यजमानहरूले स्वर्गलोकको उच्च स्थान प्राप्त गरून् ।

**उरुः प्रथस्व महता महिम्ना सहस्रपृष्ठः सुकृतस्य लोके । पितामहाः पितरः प्रजोपजाहं पक्ता पञ्चदशस्ते अस्मि ॥१९॥**

हे ब्रह्मौदन ! तिमी बढ र आफ्ना महत्ता प्राप्त गर । हे सहस्रपृष्ठ ! तिमी पुण्यलोकमा प्रवेश गर । पितामह, पिता, सन्तानहरू र तिनका सन्तानहरूका क्रममा पकाउने म पन्ध्रौं पुस्ताको हुँ ।

**सहस्रपृष्ठः शतधारो अक्षितो ब्रह्मौदनो देवयानः स्वर्गः । अमूंस्त आ दधामि प्रजया रेषयैनान् बलिहाराय मृडतान्मह्यमेव ॥२०॥**

हे यजमानहरू हो ! यो सहस्रपृष्ठ र सयौँ धाराले युक्त भएको ब्रह्मौदन देवयानका मार्गबाट स्वर्गको प्राप्ति गराउनका लागि योग्य छ । यसलाई म विशेष रूपले तिमीहरूका लागि धारण गर्दछु । यसलाई सन्तानका साथमा रहनका लागि प्रेरित गर र हामीलाई सुखी गराओ ।

**उदेहि वेदिं प्रजया वर्धयैनां नुदस्व रक्षः प्रतरं धेह्येनाम् । श्रिया समानानति सर्वान्त्स्यामाधस्पदं द्विषतस्पादयामि ॥२१॥**

यज्ञदेवता यज्ञवेदीमाथि उदाऊन् र यस ब्रह्मौदनलाई ऊर्ध्व गति प्रदान गरून् । शत्रुलाई नष्ट गराएर यस ब्रह्मौदनलाई विशेष रूपले धारण गरून् । सबै समानतायुक्त पुरुषका तुलनामा हाम्रा

विशिष्ट बनौँ र विद्वेष गर्ने शत्रुहरूलाई गोडाले मिचौँ ।

**अभ्यावर्तस्व पशुभिः सहैनां प्रत्यङेनां देवताभिः सहैधि । मा त्वा प्रापच्छपथो माभिचारः स्वे क्षेत्रे अनमीवा वि राज ॥२२॥**

हे ब्रह्मज्ञानले सम्पन्न ओदन ! तिमी यस भूमिलाई प्राप्त गर । देवताहरू सँगै यसैसित मिसिएर बस । तिमीलाई शाप नलागोस् र बाधक अभिचारले प्रभावित नगरोस् । तिमी आफ्ना निवास क्षेत्रमा निरोगी बनेर प्रकाशित होऊ ।

**ऋतेन तष्टा मनसा हितैषा ब्रह्मौदनस्य विहिता वेदिरग्रे । अंसद्रीं शुद्धामुप धेहि नारि तत्रौदनं सादय दैवानाम् ॥२३॥**

यज्ञले निर्माण गरेको र मनले स्थापना गरेको यो ब्रह्मौदनको वेदिका नजिकै राखिएको छ । त्यसमाथि थाली राखेर त्यसैमा देवताहरूका लागि अन्न तयार गरौँ ।

**अदितेर्हस्तां स्रुचमेतां द्वितीयां सप्तऋषयो भूतकृतो यामकृण्वन् । सा गात्राणि विदुष्योदनस्य दर्विर्वेद्यामध्येनं चिनोतु ॥२४॥**

सबै प्राणीहरूका स्रष्टा सप्तर्षिहरूले देवमाता अदितिका अर्का हातलाई स्रुवा बनाउन लगाए । त्यही स्रुवाले ज्ञाननिष्ठ ओदन पाकेको थाहा भएपछि वेदीका मध्यभागमा स्थापना गर्दछ ।

**शृतं त्वा हव्यमुप सीदन्तु दैवा निःसृप्याग्नेः पुनरेनान् प्र सीद । सोमेन पूतो जठरे सीद ब्रह्मणामार्षेयास्ते मा रिषन् प्राशितारः ॥२५॥**

यज्ञको ओदन तयार भएपछि त्यसका नजिकै पूजनीय देवताको समूह नै आउँछ । हे ओदन ! तिमी अग्निबाट बाहिर आएपछि यी देवताहरूलाई प्रसन्न गराऊ । सोमरसले पवित्र भएर ब्रह्मनिष्ठहरूका पेटमा पस । तिमीलाई ग्रहण गर्ने ऋषिहरू दुःखी नहोऊन् ।

**सोम राजन्त्संज्ञानमा वपैभ्यः सुब्राह्मणा यतमे त्वोपसीदान् । ऋषीनार्षेयांस्तपसोऽधि जातान् ब्रह्मौदने सुहवा जोहवीमि ॥२६॥**

हे राजाजस्तो सम्मानित सोम ! तिम्रा नजिक बसेका जति पनि ब्रह्मज्ञानी ब्राह्मणहरू छन्, ती सबैलाई श्रेष्ठ ज्ञानले सम्पन्न गराऊ । हामी ती ऋषिपुत्र र ऋषिहरूलाई ब्रह्मौदन प्राप्त गर्नका लागि बारम्बार आह्वान गर्दछौँ ।

**शुद्धाः पूता योषितो यज्ञिया इमा ब्रह्मणां हस्तेषु प्रपृथक् सादयामि । यत्काम इदमभिषिञ्चामि वोऽहमिन्द्रो मरुत्वान्त्स ददादिदं मे ॥२७॥**

शुद्ध, पापरहित र अरूलाई पनि पवित्र गराउने जललाई विप्रहरूका हातमा छोड्दछौँ । हे जल ! हामी जुन अभिलाषले तिमीलाई अभिषेकका लागि प्रयोग गर्दछौँ, त्यो अभीष्ट मरुत्हरूका साथसाथै इन्द्रदेवताले पनि हामीलाई पूरा गराऊन् ।

**इदं मे ज्योतिरमृतं हिरण्यं पक्वं क्षेत्रात् कामदुघा म एषा । इदं धनं नि दधे ब्राह्मणेषु कृण्वे पन्थां पितृषु यः स्वर्गः ॥२८॥**

यो स्वर्ण अमर ज्योतिको रूप हो र खेतबाट प्राप्त गरिएको परिपक्व ओदन कामधेनुकै अर्को रूप हो । ती दुवै कुराहरू हामी दक्षिणाका रूपमा ज्ञानीहरूलाई प्रदान गर्दछौँ । स्वर्गमा पुगेपछि यी असङ्ख्य गुणाले वृद्धि होऊन् । यिनै कुराले हाम्रा पितृहरूलाई स्वर्गलोकको मार्ग प्रशस्त गराउँछन् ।

**अग्नौ तुषाना वप जातवेदसि परः कम्बूकाँ अप मृड्ढि दूरम् । एतं शुश्रुम गृहराजस्य भागमथो विद्म निर्ऋते भागधेयम् ॥२९॥**

यस अन्नको विकारजति सबै सर्वज्ञानसम्पन्न अग्निमा हालौँ; बोक्राजति पर फ्याँकौँ । यो अन्न सद्गृहस्थका घरको अंश हो भन्ने हामीले सुनेका छौँ । यो बढता भएको जति निर्ऋति देवताको भाग हो भन्ने कुरो हामीले जानेका छौँ ।

**श्राम्यतः पचतो विद्धि सुन्वतः पन्थां स्वर्गमधि रोहयैनम् । येन रोहात् परमापद्य यद् वय उत्तमं नाकं परमं व्योम ॥३०॥**

हे ज्ञानसम्पन्न ओदन ! तिमी तपस्याको साधना गर्ने र सोमरस पेल्ने काम गर्ने याजकहरूलाई चिनेर स्वर्गतर्फ तिनीहरूलाई प्रेरित गर । दुःखबाट मुक्ति पाइने स्वर्ग नामको जुन अन्तरिक्ष छ, त्यसमा यी यजमानहरू उत्तम बाजपक्षीभैँ जसरी भए पनि आरोहण गरून् भन्ने प्रयास गर ।

**बभ्रेरध्वर्यो मुखमेतद् वि मृड्ढ्याज्याय लोकं कृणुहि प्रविद्वान् । घृतेन गात्रानु सर्वा वि मृड्ढि कृण्वे पन्थां पितृषु यः स्वर्गः ॥३१॥**

हे अध्वर्यु ! यस पोषक ओदनको माथिल्लो भाग राम्रोसित सफा गर, त्यसपछि ओदनको मध्य भाग घिउले सेचन गर्नका लागि खाल्टोजस्तो ठाउँ बनाऊ र सबैतिर राम्ररी घिउले मुछ । जुन मार्ग पितृहरूका नजिक स्वर्गतर्फ हामीलाई लिएर जान्छ, ओदनका माध्यमबाट हामी त्यस्तो मार्ग निर्माण गर्दछौँ ।

**बभ्रे रक्षः समदमा वपैभ्योऽब्राह्मणा यतमे त्वोपसीदान् । पुरीषिणः प्रथमानाः पुरस्तादार्षेयास्ते मा रिषन् प्राशितारः ॥३२॥**

हे ब्रह्मौदन ! ब्रह्मवृत्ति नभएका जुन अब्राह्मणहरू खाने रहर गर्दै तिम्रा नजिकै आउँछन्, तिनीहरूमध्येका अहङ्कारी राक्षसहरूलाई पर भगाऊ । तिम्रो सेवन गर्दै अन्नको कामना गर्ने ऋषिहरू कहिल्यै पनि विनाश नहोऊन् ।

**आर्षेयेषु नि दध ओदन त्वा नानार्षेयाणामप्यस्त्यत्र । अग्निर्मे गोप्ता मरुतश्च सर्वे विश्वे देवा अभि रक्षन्तु पक्वम् ॥३३॥**

हे ओदन ! तिमीलाई हामी ऋषिपुत्रहरूमा स्थापित गर्दछौँ, ऋषिपुत्रहरूभन्दा भिन्न अरूलाई यसको भाग लाग्दैन । अग्निदेवता र मरुत्गण यसका संरक्षक हुन् तथा सम्पूर्ण देवताहरू पनि यस परिपक्व ज्ञानले सम्पन्न ब्रह्मौदनलाई चारै तिरबाट संरक्षण गरून् ।

**यज्ञं दुहानं सदमित् प्रपीनं पुमांसं धेनुं सदनं रयीणाम् । प्रजामृतत्वमुत दीर्घमायू रायश्च पोषैरुप त्वा सदेम ॥३४॥**

यो ब्रह्मौदन खालका यज्ञको उत्पादक हुनाले सधैँभरि प्रवृद्ध गराउन र धारण गर्न सक्षम हुनुका साथै सम्पत्तिको घर पनि हो । हे ज्ञानले सम्पन्न ओदन ! तिम्रै कारणले हामी पुत्रपौत्रादि प्रजाका निम्ति पुष्टि, दीर्घायु र धनसम्पदा प्राप्त गरौँ ।

**वृषभोऽसि स्वर्ग ऋषीनार्षेयान् गच्छ । सुकृतां लोके सीद तत्र नौ संस्कृतम् ॥३५॥**

हे अभीष्टपूरक ओदन ! तिमी स्वर्गलोक प्रदान गर्न योग्य छौ । त्यसो हुनाले हामीले प्रदान गरेपछि तिमी ऋषिपुत्र ऋषिहरूका लागि प्राप्त होऊ । त्यसपछि पुण्यात्माहरूका स्वर्गधाममा स्थिर होऊ । त्यसै लोकमा हामी दुईको भोक्ता र भोज्य रूपमा हुनुपर्ने संस्कार उत्पन्न हुनेछ ।

**समाचिनुष्वानुसंप्रयाह्यग्ने पथः कल्पय देवयानान् । एतैः सुकृतैरनु गच्छेम यज्ञं नाके तिष्ठन्तमधि सप्तरश्मौ ॥३६॥**

हे ओदन ! तिमी सुव्यवस्थित भएर गन्तव्यस्थलमा जाऊ । हे अग्निदेवता ! तिमी देवयानको मार्ग रचना गर । हामी पनि पुण्यकर्मका प्रभावले सात किसिमका किरणले युक्त स्वर्गलोकमा स्थिर रहने यज्ञलाई पछ्याउँदै त्यहाँसम्म पुग्नेछौँ ।

**येन देवा ज्योतिषा द्यामुदायन् ब्रह्मौदनं पक्त्वा सुकृतस्य लोमक् । तेन गेष्म सुकृतस्य लोकं स्वरारोहन्तो अभि नाकमुत्तमम् ॥३७॥**

ज्ञानयुक्त ब्रह्मौदनरूपी अन्नका प्रभावले इन्द्र आदि देवताहरू देवयानका मार्गबाट स्वर्गलोकमा पुगेका छन् । हामी पनि उसै ब्रह्मौदनलाई पकाएर स्वर्गमा आरूढ हुँदै श्रेष्ठ लोकमा पुग्नेछौँ ।

## २. रुद्र सूक्त

**ऋषि–** अथर्वा । **देवता–** रुद्र । **छन्द–** अनुष्टुप्, परातिजागता विराट् जगती, अनुष्टब्गर्भा पञ्चपदा विराट् जगती, चतुष्पदा स्वराट् उष्णिक्, आर्षी गायत्री, महाबृहती, आर्षी त्रिष्टुप्, पुरः कृति त्रिपदा विराट् त्रिष्टुप्, पञ्चपदा विराट् जगतीगर्भा शक्वरी, भुरिक् त्रिष्टुप्, विराट् गायत्री, भुरिक् गायत्री, त्रिपदा विषमपादलक्ष्मा महाबृहती, जगती, पञ्चपदा शतिशक्वरी, त्रिष्टुप्, चुष्पदोष्णिक्, त्र्यवसाना षट्पदा विपरीतपादलक्ष्मा त्रिष्टुप् ।

**भवाशर्वौ मृडतं माभि यातं भूतपती पशुपती नमो वाम् । प्रतिहितामायतां मा वि स्राष्टं मा नो हिंसिष्टं द्विपदो मा चतुष्पदः ॥१॥**

हे भव र शर्व नाम गरेका देवताहरू हो ! तिमीहरू दुवैले हामीलाई सुखी बनाओ । हाम्रो संरक्षणका लागि नजिकै रहिदेओ । हे प्राणीहरूका पालक र पशुपति नाम भएका दुई देवताहरू हो ! तिमीहरूलाई नमस्कार छ । तिमीहरू आआफ्ना धनुषमा चढाएर तानिएको बाण हामीमाथि प्रहार नगर । हाम्रा दुई खुट्टे र चार खुट्टेलाई दुःख नदेओ ।

**शुने क्रोष्ट्रे मा शरीराणि कर्तमलिक्लवेभ्यो गृध्रेभ्यो ये च कृष्णा अविष्यवः । मक्षिकास्ते पशुपते वयांसि ते विघसे मा विदन्त ॥२॥**

हे संहारकर्ता देवताहरू हो ! तिमीहरू दुवैले हाम्रो शरीरलाई कुकुर, स्याल, गिद्ध र काला कागजस्ता हिंस्रकलाई ठुङ्न नदेओ । भिँगा र पक्षीले यी काटिएका शरीरलाई खान नपाऊन् ।

**क्रन्दाय ते प्राणाय याश्च ते भव रोपयः । नमस्ते रुद्र कृण्मः सहस्राक्षायामर्त्य ॥३॥**

हे सर्व उत्पादक देवता ! तिम्रा क्रन्दनरूपी शब्द र प्राणवायुलाई हामी नमस्कार गर्दछौं । मायामोहतर्फ प्रेरित गराउने तिम्रा शरीरलाई हामी प्रणाम गर्दछौं । हे अविनाशी रुद्रदेवता ! हजारौं आँखाले युक्त तिमीलाई हाम्रो प्रणाम ।

**पुरस्तात् ते नमः कृण्म उत्तरादधरादुत । अभीवर्गाद् दिवस्पर्यन्तरिक्षाय ते नमः ॥४॥**

हे रुद्रदेवता ! पूर्व, उत्तर र दक्षिण दिशामा हामी तिमीलाई नमस्कार गर्दछौं । अन्तरिक्ष मण्डलका मध्य भागमा सर्व नियन्ताका रूपमा रहेका तिमीलाई हामी नमस्कार गर्दछौं ।

**मुखाय ते पशुपते यानि चक्षूंषि ते भव । त्वचे रूपाय संदृशे प्रतीचीनाय ते नमः ॥५॥**

हे पशुपालक भवदेव ! तिम्रो मुख, आँखा, त्वचा र नीलो, पहेँलो आदि वर्णलाई हामी नमस्कार गर्दछौं । तिम्रो समानतायुक्त दृष्टि र पिठ्युँको भागलाई हामी नमस्कार गर्दछौं ।

**अङ्गेभ्यस्त उदराय जिह्वाया आस्याय ते । दद्भ्यो गन्धाय ते नमः ॥६॥**

हे पशुपतिदेवता ! तिम्रो पेट, जिब्रो, मुख, दाँत, नाक र अन्य सबै अङ्गलाई हामी नमस्कार गर्दछौं ।

**अस्त्रा नीलशिखण्डेन सहस्राक्षेण वाजिना । रुद्रेणार्धकघातिना तेन मा समरामहि ॥७॥**

नीलो कपाल भएका, हजारौं आँखा भएका, तीव्र गति भएका, शत्रुका आधासरो सेना विनाश गर्ने रुद्रदेवताबाट हामी कहिल्यै पनि पीडित हुनु नपरोस् ।

**स नो भवः परि वृणक्तु विश्वत आप इवाग्निः परि वृणक्तु नो भवः । मा नोऽभि मांस्त नमो अस्त्वस्मै ॥८॥**

उत्पत्तिकर्ता भवदेवताले सबै किसिमका दुःखहरूबाट हामीलाई मुक्त गराऊन् । अग्निदेवताले जललाई त्याग गरेझैँ रुद्रदेवताले पनि हामीलाई मुक्ति प्रदान गर्दछन् । उनले हामीलाई कुनै किसिमको कष्ट नदिऊन् । तिनै भवदेवतालाई हामी नमस्कार गर्दछौं ।

**चतुर्नमो अष्टकृत्वो भवाय दश कृत्वः पशुपते नमस्ते । तवेमे पञ्च पशवो विभक्ता गावो अश्वाः पुरुषा अजावयः ॥९॥**

हे शर्वदेवता ! तिमीलाई चार पटक र हे भवदेवता ! तिमीलाई आठ पटक हामी नमस्का

गर्दछौँ । हे पशुपतिदेवता ! तिमीलाई दस पटक हामी नमस्कार गर्दछौँ । यी गाई, घोडा, भेडा, बाख्रा र पुरुष आदि मानिसहरू सबै तिनीहरूकै आश्रयमा छन् ।

**तव चतस्रः प्रदिशस्तव द्यौस्तव पृथिवी तवेदमुग्रोर्व१न्तरिक्षम् । तवेदं सर्वमात्मन्वद् यत् प्राणत् पृथिवीमनु ॥१०॥**

हे प्रचण्ड बलशाली रुद्रदेवता ! यी चारै दिशाहरू तिम्रै हुन् । यो स्वर्गलोक, पृथ्वी र विशाल अन्तरिक्ष पनि तिम्रै शरीर हुन् । पृथ्वीमा जीवन प्रक्रिया तिम्रै अनुशासनमा चल्ने गर्दछ । त्यसरी सबैप्रति अनुग्रह गर्ने भएकाले तिमी नै वन्दनीय भएका छौ ।

**उरुः कोशो वसुधानस्तावायं यस्मिन्निमा विश्वा भुवनान्यन्तः । स नो मृड पशुपते नमस्ते परः क्रोष्टरो अभिभाः श्वानः परो यन्त्वघरुदो विकेश्यः ॥११॥**

हे पशुपालक रुद्रदेवता ! यो सम्पूर्ण लोक जसमा अडिएको छ, त्यस्तो वसुहरूको निवासका रूपमा रहेको विश्वरूपी अण्ड भाँडाको विशाल कोश तिमीमा नै रहेको छ । त्यस्ता अवस्थामा रहेर हामीलाई तिमी सुख प्रदान गर भनेर तिमीलाई हाम्रो नमस्कार गर्दछौँ । मांसभोजी स्याल र कुकुर आदि सबै हामीदेखि पर होऊन् । अमङ्गलकारी शब्दले रुने, केश फुकाएर कराउने जस्ता पिशाच प्रवृत्तिहरू हामीभन्दा टाढा अन्यत्र कतै जाऊन् ।

**धनुर्बिभर्षि हरितं हिरण्ययं सहस्रघ्नि शतवधं शिखण्डिन् । रुद्रस्येषुश्चरति देवहेतिस्तस्यै नमो यतमस्यां दिशीऽतः ॥१२॥**

हे रुद्रदेवता ! तिम्रा सुनौला धनुषलाई एक पटक चलाउँदा नै त्यसले हजारौँ प्राणीलाई समाप्त गरिदिन्छ । यस्ता खालको शिखण्डी नामको धनुषलाई हाम्रो प्रणाम गर्दछौँ । देवताको यो आयुध जुन दिशामा छ, त्यतैतिर हामी नमस्कार गर्दछौँ ।

**योऽभियातो निलयते त्वां रुद्र निचिकीर्षति । पश्चादनुप्रयुङ्क्षे तं विद्धस्य पदनीरिव ॥१३॥**

हे रुद्रदेवता ! जो भाग्दछन् अथवा जो लुकेर तिम्रो हानी गर्ने विचार गर्दछन्, तिनलाई घाइते शत्रु भेल्याएझैँ खोजेर तिमीले वध गरिदिन्छौ ।

**भवारुद्रौ सयुजा संविदानावुभावुग्रौ चरतो वीर्याय । ताभ्यां नमो यतमस्यां दिशीऽतः ॥१४॥**

भव र रुद्रदेवता एकै किसिमको बुद्धि व्यवहारका छन् । उनीहरू प्रचण्ड पराक्रमी हुनाले आफ्नो शौर्य प्रदर्शन गर्दै सर्वत्र विचरण गर्दछन् । उनीहरू जुन दिशामा छन्, त्यतैतिर हामी उनलाई नमस्कार गर्दछौँ ।

**नमस्तेऽस्त्वायते नमो अस्तु परायते । नमस्ते रुद्र तिष्ठत आसीनायोत ते नमः ॥१५॥**

हे रुद्रदेवता ! हामीतिर आउँदा, फिर्ता जाँदा, बसेका बेलामा र उभिएका बेला अथवा जुनसुकै अवस्थामा तिमीलाई हाम्रो नमस्कार गर्दछौँ ।

**नमः सायं नमः प्रातर्नमो रात्र्या नमो दिवा । भवाय च शर्वाय चोभाभ्यामकरं नमः ॥१६॥**

हे रुद्रदेवता ! विहान, साँझ, राति र दिउँसोका सबै कालमा तिमीलाई हाम्रो नमस्कार छ । भव र शर्व नामका दुवै देवताहरूलाई हामी नमस्कार गर्दछौँ ।

**सहस्राक्षमतिपश्यं पुरस्ताद् रुद्रमस्यन्तं बहुधा विपश्चितम् । मोपाराम जिह्वयेयमानम् ॥१७॥**

हजारौँ आँखा भएका, अति सूक्ष्मद्रष्टा, पूर्वतर्फ अनेकौँ बाण हुइँक्याउने, मेधावी र जिब्राले नै सम्पूर्ण विश्वलाई भक्षण गर्नका लागि सर्वत्र व्याप्त रहेका रुद्रदेवताका नजिक हामीले कहिल्यै जानु नपरोस् ।

**श्यावाश्वं कृष्णमसितं मृणन्तं भीमं रथं केशिनः पादयन्तम् । पूर्वे प्रतीमो नमो अस्त्वस्मै ॥१८॥**

श्याम वर्णका अश्व भएका, कालो र अपवित्रतालाई विनाश गर्ने, केशी नामका राक्षसको रथ

भत्काउने उनै भयङ्कर महाकाललाई हामी पहिलेदेखि नै जान्दछौँ र उनले हाम्रो प्रणाम स्वीकार गरून् ।

**मा नोऽभि स्रा मत्यं देवहेतिं मा नः क्रुधः पशुपते नमस्ते । अन्यत्रास्मद् दिव्यां शाखां वि धूनु ॥१९॥**

हे पशुपतिदेवता ! आफ्नो हतियार हामीतिर प्रहार नगर । हामीसँग तिमी नरिसाऊ, तिमीलाई हाम्रो नमस्कार छ । तिम्रो दिव्यास्त्र हामीभन्दा धेरै पर हुइँक्याऊ ।

**मा नो हिंसीरधि नो ब्रूहि परि णो वृङ्ग्धि मा क्रुधः । म त्वया समरामहि ॥२०॥**

हामीलाई तिमी हिंसा नगर, राम्रो नराम्रो जानकारी गराऊ । हामीसँग नरिसाईकन संरक्षण प्रदान गरिराख । तिमीसँग हाम्रो विरोध कहिल्यै नहोस् ।

**मा नो गोषु पुरुषेषु मा गृधो नो अजाविषु । अन्यत्रोग्र वि वर्तय पियारूणां प्रजां जहि ॥२१॥**

हे उग्र वीर ! हाम्रा गाई, मानिस, भेडाबाख्रा आदिको तिमी लोभ नगर । तिमी आफ्ना शस्त्रलाई अन्यत्र रहेका देवहिंस्रक र उनका प्रजामाथि प्रहार गरेर उनीहरूलाई विनाश गर ।

**यस्य तक्मा कासिका हेतिरेकमश्वस्येव वृषणः क्रन्द एति । अभिपूर्वं निर्णयते नमो अस्त्वस्मै ॥२२॥**

जुन रुद्रदेवताले क्षय, ज्वर र खोकी आदिलाई आफ्नो आयुध बनाएका छन् र जसलाई लक्ष्य बनाएर ती आयुध प्रहार गर्दा बलियो घोडा हिल्लिएझैँ शब्द निकाल्दै टुङ्गामा पुग्दछन्, उनै उग्र रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ ।

**योऽन्तरिक्षे तिष्ठति विष्टभितोऽयज्वनः प्रमृणन् देवपीयून् । तस्मै नमो दशभिः शक्वरीभिः ॥२३॥**

जुन रुद्रदेवता अन्तरिक्ष मण्डलमा रहँदाखेरि यज्ञीय भावनाविहीन देवताका विरोधीलाई नाश गर्दछन्, उनै रुद्रदेवतालाई दसै वटा शक्तिरूपी औँलाले हामी नमस्कार गर्दछौँ ।

**तुभ्यमारण्याः पशवो मृगा वने हिता हंसाः सुपर्णाः शकुना वयांसि । तव यक्षं पशुपते अप्स्व१न्तस्तुभ्यं क्षरन्ति दिव्या आपो वृधे ॥२४॥**

हे पशुपति ! जङ्गली मृग आदि पशु, हाँस, गरूड, शकुनि र अन्य वनेलु पशुप्राणी जति छन् ती सबै तिम्रै हुन् । तिम्रो पूजनीय आत्मतेज जलका प्रवाहमा स्थित छ, त्यसैले तिमीलाई अभिषिक्त गर्नका लागि नै दिव्य जलका प्रवाहहरू बगिरहन्छन् ।

**शिंशुमारा अजगराः पुरीकया जषा मत्स्या रजसा येभ्यो अस्यसि । न ते दूरं न परिष्ठास्ति ते भव सद्यः सर्वान् परि पशयसि भूमिं पूर्वस्माद्धंस्युत्तरस्मिन् त्समुद्रे ॥२५॥**

सुस, अजिँगर, कछुवा, माछा आदि सबै जलचर प्राणीहरूमाथि तिमी आफ्ना तेज आयुधहरू प्रहार गर्दछौ । हे रुद्रदेवता ! तिम्रो सीमाभन्दा बाहिर कुनै कुरो छैन । तिमी सम्पूर्ण भूमण्डललाई एकै दृष्टिले देख्न सक्छौ । तिमी पूर्व र उत्तरका समुद्रसम्म फैलिएका पृथ्वीमाथि आघात पनि गर्दछौ

**मा नो रुद्र तक्मना मा विषेण मा नः सं स्रा दिव्येनाग्निना । अन्यत्रास्मद् विद्युत पातयैताम् ॥२६॥**

हे रुद्रदेवता ! तिमी ज्वरो आदि रोगले हामीलाई दुःख नदेऊ । स्थावरजङ्गमका विषबाट हामीलाई जोगाऊ । विद्युत्का रूपमा रहेका आग्नेय अस्त्रहरूलाई हामीदेखि पर कुनै अन्य स्थानमा खसाऊ ।

**भवो दिवो भव ईशे पृथिव्या भव आ पप्र उर्व१न्तरिक्षम् । तस्मै नमो यतमस्यां दिशीऽतः ॥२७॥**

भवदेवता द्युलोकका अधीश्वर हुन् र भूलोकका स्वामी पनि उनै हुन् । उनले द्युलोक र पृथ्वीका मध्य भागमा विस्तृत बनेर रहेको अन्तरिक्षलोकलाई पनि आफ्ना तेजले परिपूर्ण गराएका छन्

त्यस्ता उत्पत्तिकर्ता देवता जता र जुन दिशामा छन्, उनैतिर हामी नमस्कार गर्दछौँ ।

**भव राजन् यजमानाय मृड पशूनां हि पशुपतिर्बभूथ । यः श्रद्दधाति सन्ति देवा इति चतुष्पदे द्विपदेऽस्य मृड ॥२८॥**

हे सृष्टिकर्ता देवताका राजा ! तिमी याज्ञिक यजमानहरूलाई सुखी बनाऊ । पशुहरूका राजा तिमी नै हौ । जुन श्रद्धालु मानिसले इन्द्र आदि देवतालाई आफ्नो संरक्षक मानेका छन्, उनीहरूका दुई खुट्टे र चार खुट्टे जीवहरू सबैलाई सुख प्रदान गर ।

**मा नो महान्तमुत मा नो अर्भकं मा नो वहन्तमुत मा नो वक्ष्यतः । मा नो हिंसीः पितरं मातरं च स्वां तन्वं रुद्र मा रीरिषो नः ॥२९॥**

हे रुद्रदेवता ! हाम्रा बालकहरू, वृद्धहरू र समर्थ व्यक्तिहरूलाई संहार नगर । हाम्रा वीर पुरुषहरूलाई विनाश नगर । तिमी हाम्रो शरीर र मातापिताहरूलाई दुःख नदेऊ ।

**रुद्रस्यैलबकारेभ्योऽसंसूक्तगिलेभ्यः । इदं महास्येभ्यः श्वभ्यो अकरं नमः ॥३०॥**

रुद्रदेवताका प्रेरणायुक्त कर्ममा तत्पर प्रमथगण र कटुभाषी गणलाई हामी नमस्कार गर्दछौँ । सिकार खेल्नका लागि किराँत वेश धारण गरेका भवदेवताका मुख बाएका कुकुरलाई हामी नमस्कार गर्दछौँ ।

**नमस्ते घोषिणीभ्यो नमस्ते केशिनीभ्यः । नमो नमस्कृताभ्यो नमः सम्भुञ्जतीभ्यः । नमस्ते देव सेनाभ्यः स्वस्ति नो अभयं च नः ॥३१॥**

हे रुद्रदेवता ! विशाल शब्द निकाल्ने, लामो कपाल भएका, नमस्कार गर्दा सुन्दर देखिएका र सँगसँगै भोजन गर्ने सेनालाई हामी नमस्कार गर्दछौँ । हे देवता ! तिम्रा कृपाले हामीलाई मङ्गल र निर्भयता प्राप्त होस् ।

## ३. ओदन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** बार्हस्पत्यौदन । **छन्द–** आसुरी गायत्री, त्रिपदा समविषमा गायत्री, आसुरी पङ्क्ति, साम्नी अनुष्टुप्, साम्नी उष्णिक्, प्राजापत्यानुष्टुप्, आसुर्यनुष्टुप्, भुरिक आर्ची अनुष्टुप्, याजुषी जगती, आसुरी बृहती, त्रिपदा प्राजापत्या बृहती, आर्ची उष्णिक्, साम्नी बृहती, याजुषी त्रिष्टुप्, अल्पशः, याजुषी पङ्क्ति

**तस्यौदनस्य बृहस्पतिः शिरो ब्रह्म मुखम् ॥१॥**

*यस अन्नको शिर बृहस्पतिदेवता हुन् र ब्रह्म उसका मुख हुन् ।*

**द्यावापृथिवी श्रोत्रे सूर्याचन्द्रमसावक्षिणी सप्तऋषयः प्राणापानाः ॥२॥**

द्युलोक–पृथिवी यस अन्नका दुई कान हुन्, सूर्य–चन्द्रमा यस अन्नका आँखा हुन् र मरीचि आदि सप्तर्षिहरू यस अन्नतत्त्वका प्राण र अपान हुन् ।

**चक्षुर्मुसलं काम उलूखलम् ॥३॥**

धान कुट्ने मुसल नै यस अन्नको दृष्टि हो र ओखली नै यसको अभिलाषा हो ।

**दितिः शूर्पमदितिः शूर्पग्राही वातोऽपाविनक् ॥४॥**

दिति नामको केलाउने शक्ति यस अन्नको नाङ्लो हो र त्यो नाङ्लो समाउने अदिति नै अखण्ड शक्ति हुन्, वायुदेवता त्यस अन्नबाट फाल्नुपर्ने कुराहरू छुट्याउने हुन् ।

**अश्वाः कणा गावस्तण्डुला मशकास्तुषाः ॥५॥**

त्यहाँ विराट् अन्न कण नै शक्तिको प्रतीक अश्व हो, त्यस अन्नकणभित्रको गुदी गाई हो र मच्छरहरू त्यसबाट छुट्याइएका भुस हुन् ।

**कब्रु फलीकरणाः शरोऽभ्रम् ॥६॥**

विभिन्न किसिमका दृश्यहरू त्यस ब्रह्मौदनका बोक्रा हुन् र मेघ त्यसको माथिल्लो सतहमा रहेको शिर हो ।

**शयाममयोऽस्य मांसानि लोहितमस्य लोहितम् ॥७॥**
काला रङ्गको फलामे धातु त्यस अन्नको मांस हो र रातो रङ्गका ताँबा आदि धातु त्यस अन्नतत्त्वको रक्त हो ।

**त्रपु भस्म हरितं वर्णः पुष्करमस्य गन्धः ॥८॥**
अन्न पाकेपछि शेष रहेको खरानीभस्म नै सिसा नामको धातु हो, सुवर्ण त्यस अन्नको वर्ण हो र कमलको सुगन्ध नै त्यस अन्नको सुवास हो ।

**खलः पात्रं स्फ्यावंसावीषे अनूक्ये ॥९॥**
खलो नै त्यस अन्नको भाँडो हो, गाडाका अंशहरू सबै यसका काँध हुन् र ईषा नामको गाडाको अङ्ग त्यस काँधका बलिया हड्डी हुन् ।

**आन्त्राणि जत्रवो गुदा वरत्राः ॥१०॥**
गोरुका काँधमा बाँध्ने जोतारोडोरीहरू नै त्यस अन्नका आँत हुन् र छालाको हल्लुँड नै त्यस अन्नको गुदा हो ।

**इयमेव पृथिवी कुम्भी भवति राध्यमानस्यौदनस्य द्यौरपिधानम् ॥११॥**
यो विस्तृत भूमि नै त्यो ओदन पकाउने पाकका रूपमा रहेको कसौँडीको रूप हो र द्युलोक नै त्यस कसौँडीको बिर्को हो ।

**सीताः पर्शवः सिकता ऊबध्यम् ॥१२॥**
जोत्दाखेरि बनेको हलाको सियो यस अन्नका नसानाडी हुन् र नदीका किनारमा रहेको बालुवा नै त्यसको मलत्याग गर्ने स्थान हो ।

**ऋतं हस्तावनेजनं कुल्योपसेचनम् ॥१३॥**
जल नै यस अन्नलाई पखालेर सफा गर्ने हो र सानातिना नदीहरू यस अन्नलाई सिँचाइ गर्ने धाराहरू हुन् ।

**ऋचा कुम्भ्यधिहितार्त्विज्येन प्रेषिता ॥१४॥**
कसौँडीलाई ऋग्वेदले अग्निमा राखेको छ र यजुर्वेदले चलाउने गरेको छ ।

**ब्रह्मणा परिगृहीता साम्ना पर्यूढा ॥१५॥**
अथर्ववेदले यस अन्नलाई धारण गरेको छ र सामवेदका मन्त्रले यसलाई घेरेर अड्याएको छ ।

**बृहदायवनं रथन्तरं दर्विः ॥१६॥**
पानीमा मिसाएका चामललाई बृहत्सामले नै डाडुका रूपमा चलाउने काम गर्दछ र रथन्तरसाम त्यस अन्नलाई बाहिर निकाल्ने पन्यूँको काम गर्नमा खटेको छ ।

**ऋतवः पक्तार आर्तवाः समिन्धते ॥१७॥**
ऋतुहरूले यस अन्नलाई पकाउँछन् र यी ऋतुहरूमा हुने दिन र रातहरूले यस्तो अन्न पकाउँदा अगुल्टो ठोसेर आगो बाल्ने काम गर्दछन् ।

**चरुं पञ्चबिलमुखं घर्मोऽभीन्धे ॥१८॥**
पाँच किसिमका मुख भएका भाँडामा पकाइने यस अन्नलाई सूर्यका गर्मीले उसिन्ने काम गर्दछ ।

**ओदनेन यज्ञवचः सर्वे लोकाः समाप्याः ॥१९॥**
यज्ञकर्मले यो ओदन समस्त लोकहरूमा इच्छित फलका रूपमा प्राप्त हुने गर्दछ ।

**यस्मिन्त्समुद्रो द्यौर्भूमिस्त्रयोऽवरपरं श्रिताः ॥२०॥**
यस किसिमका ब्रह्मौदनका माथि र तल समुद्र, द्युलोक तथा पृथ्वी यी तीनै लोक आश्रित रहेका छन् ।

**यस्य देवा अकल्पन्तोच्छिष्टे षडशीतयः ॥२१॥**
यसै अन्नलाई खाएर बचेको जुठोपुरोबाट छ गुना असी अथवा छ सय असी देवताहरू प्रकट भए ।

**तं त्वौदनस्य पृच्छामि यो अस्य महिमा महान् ॥२२॥**
त्यस अन्नको महिमा के छ भनेर हामी तत्त्वदर्शीहरूसँग सोध्नेछौं ।
**स य ओदनस्य महिमानं विद्यात् ॥२३॥**
जसले यस अन्नको महिमा जानेको छ, उसले सबै किसिमका रहस्य जान्दछ ।
**नाल्प इति ब्रूयान्नानुपसेचन इति नेदं च किं चेति ॥२४॥**
उनले यसलाई सानो कुरो हो भन्दैनन्, त्यो विनासेचनको हो पनि भन्दैनन्, त्यो के हो भनेर पनि सोध्दैनन् र त्यो केही पनि होइन पनि भन्दैनन् ।
**यावद् दाताभिमनस्येत तन्नाति वदेत् ॥२५॥**
दिनेले जेजति दिएको छ, त्यसभन्दा बढता नखोजौं ।
**ब्रह्मवादिनो वदन्ति पराञ्चमोदनं प्राशी३ः प्रत्यञ्चा३मिति ॥२६॥**
ब्रह्मका विषयमा विचार गर्ने ज्ञानीहरू तिमीले त्यस्तो अगाडि फर्किएको अन्न खाएका छौ कि पछिल्तिर मुख भएको अन्न खाएका छौ भन्ने विचारविमर्श गर्दछन् ।
**त्वमोदनं प्राशी३स्त्वामोदना३ इति ॥२७॥**
तिमीले त्यस्तो अन्न खाएका छौ कि अन्नले नै तिमीलाई खाइसकेको छ भन्ने सोध्छन् ।
**पराञ्चं चैनं प्राशीः प्राणास्त्वा हास्यन्तीत्येनमाह ॥२८॥**
यदि तिमीले पछिल्तिर फर्किएको अन्न खाएका छौ भनेदेखि प्राणवायुले तिमीलाई त्याग्नेछ भनेर त्यसलाई सेवन गर्नेहरूले भनेका छन् ।
**प्रत्यञ्चं चैनं प्राशीरपानास्त्वा हास्यन्तीत्येनमाह ॥२९॥**
यदि तिमीले अघिल्तिर मुख भएको अन्न सेवन गरेका छौं भनेदेखि अपान वायुका वृत्तिहरूले तिमीलाई त्यागिदिनेछ भनेर विद्वान्हरूले भन्ने गरेका छन् ।
**नैवाहमोदनं न मामोदनः ॥३०॥**
न त मैले नै त्यस्तो ओदन खाएको छु, न मलाई नै त्यस ओदनले खाएको छ ।
**ओदन एवौदनं प्राशीत् ॥३१॥**
वास्तवमा अन्नले नै अन्नलाई खाने गर्दछ ।

## ४. ओदन सूक्त

**ऋषि—** अथर्वा । **देवता—** मन्त्रोक्त । **छन्द—** साम्नी त्रिष्टुप, एकापदासुरी गायत्री, दैवी जगती, आसुरी बृहती, एकपदासुर्यनुष्टुप्, साम्नी अनुष्टुप्, आर्च्यनुष्टुप्, साम्नी पङ्क्ति, आसुरी जगती, आसुरी पङ्क्ति, आसुरी त्रिष्टुप्, याजुषी गायत्री, दैवी पङ्क्ति, प्राजापत्या गायत्री, आसुर्यष्णिक्, दैवी त्रिष्टुप्, एकपदा भुरिक् साम्नी बृहती ।

**ततश्चैनमन्येन शीर्ष्णा प्राशीर्येन चैतं पूर्व ऋषयः प्राश्नन् । ज्येष्ठतस्ते प्रजा मरिष्यतीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । बृहस्पतिना शीर्ष्णा । तेनैनं प्राशिषं तेनैनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥१॥**

उहिलेउहिले अनुष्ठान गर्ने ऋषिहरूले जुन शिरले अन्न प्राशन गरेका थिए, यदि त्यसभन्दा बाहेक कुनै अर्को शिरले तिमीले अन्न प्राशन गर्दछौ भने जेठो सन्तानदेखि प्रारम्भ भएर क्रमैसँग तिम्रा सबै सन्तानहरू नाश हुने सम्भावना छ भन्ने कुराको जानकारी भएका पुरुषले ती अन्न प्राशन गर्नेहरूलाई भनून् । मैले अभिमुख रहेका स्थितिमा अघिल्लोतर्फका मुखले र पराङ्मुख भएका स्थितिमा वा पछिल्लोतर्फका मुखले अन्न खाएको छैनँ भनेर अन्न खानेले भनून् । उहिलेका ऋषिहरूले बृहस्पतिसँग सम्बन्धित शिरले यो अन्न प्राशन गरेका थिए । मैले पनि अन्नसम्बन्धी शिरले नै उसै तरिकाले सेवन गरेको छ । अन्नले नै अन्नलाई खाएको हो । यस किसिमले यो खाइएको अन्न सम्पूर्ण अङ्ग र अवयवहरूले परिपूर्ण हुन्छ । जुन मानिसले यस किसिमका अन्नका विषयमा

जानेको छ, उही सर्वाङ्गपूर्ण भएर पुण्यमय स्वर्गलोकमा विराजमान हुन्छ ।

**ततश्चैनमन्याभ्यां श्रोत्राभ्यां प्राशीयाभ्यां चैतं पूर्व ऋषयः प्राश्नन् । बधिरो भविष्यसीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । द्यावापृथिवीभ्यां श्रोत्राभ्याम् । ताभ्यामेनं प्राशिषं ताभ्यामेनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥२॥**

पहिलेका ऋषिहरूको भन्दा भिन्न तरिकाले यदि तिमीले अन्य कानका सहायताले यो अन्न खाएका छौ भनेदेखि बहिरो हुने दोषले दुःखी हुन सक्छौ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । द्यावापृथ्वीरूपी दुई कानले मैले यस अन्नलाई सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने वाञ्छित फल प्राप्त हुनेछ यसमा कुनै दोषको सम्भावना छैन । यस किसिमले प्राशन गरिएका यस ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरू प्राप्त गर्दछ ।

**ततश्चैनमन्याभ्यामक्षीभ्यां प्राशीर्याभ्यां चैतं पूर्व ऋषयः प्राश्नन् । अन्धो भविष्यसीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । सूर्याचन्द्रमसाभ्या मक्षीभ्याम् । ताभ्यामेनं प्राशिषं ताभ्यामेनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥३॥**

पहिलेका ऋषिहरूको भन्दा भिन्न तरिकाले यदि तिमीले अन्य आँखाका सहायताले यो अन्न खाएका छौ भनेदेखि दृष्टिहीन हुने दोषले दुःखी हुन सक्छौ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । मैले यो अन्न अभिमुख वा पराङ्मुख भएर होइन, बरु चन्द्रसूर्यरूपी आँखाले सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने वाञ्छित फल प्राप्त गरेको छु यसमा कुनै दोषको सम्भावना छैन । यस किसिमले प्राशन गरिएका यस ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरू प्राप्त गर्दछ ।

**ततश्चैनमन्येन मुखेन प्राशीर्येन चैतं पूर्व ऋषयः प्राश्नन् । मुखतस्ते प्रजा मरिष्यतीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । ब्रह्मणा मुखेन । तेनैनं प्राशिषं तेनैनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥४॥**

ब्रह्मरूपी मुखले उहिलेका ऋषिहरूले यो अन्न खाएका थिए, यदि तिमी त्यसभन्दा भिन्न कुनै लौकिक मुखले यो अन्न अभिमुख वा पराङ्मुख भएर सेवन गर्दछौ भने तिम्रा सन्तानको विनाश हुनेछ भनेर सेवनकर्तालाई भनिदेऊ । मैले यो अन्न न त अभिमुख भएर न पराङ्मुख भएर नै सेवन गरेको छु, बरु उसै ब्रह्मरूपी मुखले नै गरेको छु । त्यस ब्रह्मरूपी मुखले नै भोक्तालाई लक्षित स्थानसम्म पुऱ्याएको हुन्छ, यसमा निःसन्तान हुने दोषको सम्भावना नै छैन भनेर सेवनकर्ताले भनून् । यस अन्नले नै सर्वाङ्गपूर्ण भएर सम्पूर्ण फल प्राप्त गर्दै पुण्यको उपभोग गरेर स्वर्ग आदिको फल उपभोक्ताले प्राप्त गर्नेछ ।

**ततश्चैनमन्यया जिह्वया प्राशीर्यया चैतं पूर्व ऋषयः प्राश्नन् । जिह्वा ते मरिष्यतीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । अग्नेर्जिह्वया तयैनं प्राशिषं तयैनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥५॥**

पहिलेका ऋषिहरूको भन्दा भिन्न तरिकाले यदि तिमीले अन्य लौकिक जिब्राका सहायताले यो अन्न खाएका छौ भनेदेखि जिब्राको प्रभावक्षमता क्षीण हुने दोषले दुःखी हुन सक्छौ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । मैले यो अन्न अभिमुख वा पराङ्मुख भएर होइन, बरु अग्निरूपी

जिब्राले सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने वाञ्छित फल प्राप्त गरेको छु यसमा जिब्राको शक्ति क्षीण हुने दोषको सम्भावना छैन । यस किसिमले प्राशन गरिएका यस ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरू प्राप्त गर्दछ ।

**ततश्चैनमन्यैर्दन्तैः प्राशीर्यैश्चैतं पूर्व ऋषयः प्राश्नन् । दन्तास्ते शत्स्यन्तीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । ऋतुभिर्दन्तैः । तैरेनं प्राशिषं तैरेनमजीगमम् एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥६॥**

पहिलेका ऋषिहरूको भन्दा भिन्न तरिकाले यदि तिमीले अन्य लौकिक दाँतका सहायताले यो अन्न खाएका छौ भनेदेखि दाँतजति सबै झर्नेछन् । त्यस दोषले दुःखी हुन सक्छौ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । मैले यो अन्न अभिमुख वा पराङ्मुख भएर होइन, बरु अग्निरूपी वसन्त, ग्रीष्म आदि ऋतुरूपी दाँतले सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने वाञ्छित फल प्राप्त गरेको छु यसमा दाँत झर्ने दोषको सम्भावना छैन । यस किसिमले प्राशन गरिएका ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरू प्राप्त गर्दछ ।

**ततश्चैनमन्यैः प्राणापानैः प्राशीर्यैश्चैतं पूर्व ऋषयः प्राश्नन् । प्राणापानास्त्वा हास्यन्तीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । सप्तर्षिभिः प्राणापानैः । तैरेनं प्राशिषं तैरेनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥७॥**

पहिलेका ऋषिहरूको भन्दा भिन्न तरिकाले यदि तिमीले अन्य लौकिक प्राण अपान आदिका सहायताले यो अन्न खाएका छौ भनेदेखि प्राण अपानरूपी मुख्य प्राणले तिमीलाई त्याग्नेछ र त्यस दोषले दुःखी हुन सक्छौ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । मैले यो अन्न अभिमुख वा पराङ्मुख भएर होइन, बरु सप्तर्षिरूपी प्राण अपान आदिले सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने वाञ्छित फल प्राप्त गरेको छु यसमा मुख्य प्राण दूषित हुने वा त्यसले त्याग्ने दोषको सम्भावना छैन । यस किसिमले प्राशन गरिएका ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरू प्राप्त गर्दछ ।

**ततश्चैनमन्येन व्यचसा प्राशीर्येन चैतं पूर्व ऋषयः प्राश्नन् । राजयक्ष्मस्त्वा हनिष्यतीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । अन्तरिक्षेण व्यचसा । तेनैनं प्राशिषं तेनैनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥८॥**

पहिलेका ऋषिहरूको भन्दा भिन्न लौकिक तरिकाले यदि तिमीले यो अन्न खाएका छौ भनेदेखि राजयक्ष्मा नामको रोग तिमीलाई लाग्नेछ र त्यस दोषले दुःखी हुन सक्छौ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । मैले यो अन्न अभिमुख वा पराङ्मुख भएर होइन, बरु अन्तरिक्षात्मक विधिले सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने वाञ्छित फल प्राप्त गरेको छु यसमा राजयक्ष्मा रोगको दोषको सम्भावना छैन । यस किसिमले प्राशन गरिएका ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरू प्राप्त गर्दछ ।

**ततश्चैनमन्येन पृष्ठेन प्राशीर्येन चैतं पूर्व ऋषयः प्राश्नन् । विद्युत् त्वा हनिष्यतीत्येनमाह । तं**

**वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । दिवा पृष्ठेन । तेनैनं प्राशिषं तेनैनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥९॥**

पहिलेका ऋषिहरूको भन्दा भिन्न लौकिक पृष्ठले यदि तिमीले यो अन्न खाएका छौ भनेदेखि विद्युत्ले तिमीलाई नाश गर्नेछ र त्यस दोषले दुःखी हुन सक्छौ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । मैले यो अन्न अभिमुख वा पराङ्मुख भएर होइन, वरु द्युलोक रूपी पृष्ठले सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने वाञ्छित फल प्राप्त गरेको छु यसमा विद्युत्ले नाश गर्ने दोषको सम्भावना छैन । यस किसिमले प्राशन गरिएका ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरू प्राप्त गर्दछ ।

**ततश्चैनमन्येनोरसा प्राशीर्येन चैतं पूर्व ऋषयः प्राश्नन् । कृष्या न रात्स्यसीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । पृथिव्योरसा । तेनैनं प्राशिषं तेनैनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥१०॥**

पहिलेका ऋषिहरूको भन्दा भिन्न लौकिक वक्षले यदि तिमीले यो अन्न खाएका छौ भनेदेखि कृषिकार्यमा तिमी समृद्ध हुन सक्नेछैनौ र त्यस दोषले दुःखी हुन सक्छौ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । मैले यो अन्न अभिमुख वा पराङ्मुख भएर होइन, वरु पृथ्वीलोकरूपी वक्षले सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने वाञ्छित फल प्राप्त गरेको छु यसमा कृषिकार्य नाश हुने दोषको सम्भावना छैन । यस किसिमले प्राशन गरिएका ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरूका सबै किसिमका अभीष्ट फल प्राप्त गर्दछ ।

**ततश्चैनमन्येनोदरेण प्राशीर्येन चैतं पूर्व ऋषयः प्राश्नन् । उदरदारस्त्वा हनिष्यतीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । सत्येनोदरेण । तेनैनं प्राशिषं तेनैनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥११॥**

पहिलेका ऋषिहरूको भन्दा भिन्न लौकिक पेटले यदि तिमीले यो अन्न खाएका छौ भनेदेखि झाडापखाला नामको कष्टदायी रोग लाग्नेछ र त्यस दोषले तिमी विनाश हुन सक्छौ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । मैले यो अन्न अभिमुख वा पराङ्मुख भएर होइन, बरु सत्यरूपी उदरले सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने वाञ्छित फल प्राप्त गरेको छु यसमा अतिसार नामको रोग लागेर मेरो नाश हुने सम्भावना छैन । यस किसिमले प्राशन गरिएका ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरूका सबै किसिमका अभीष्ट फल प्राप्त गर्दछ ।

**ततश्चैनमन्येन वस्तिना प्राशीर्येन चैतं पूर्व ऋषयः प्राश्नन् । अप्सु मरिष्यसीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । समुद्रेण वस्तिाना । तेनैनं प्राशिषं तेनैनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥१२॥**

पहिलेका ऋषिहरूको भन्दा भिन्न लौकिक मूत्राशयले यदि तिमीले यो अन्न खाएका छौ भनेदेखि तिम्रो मृत्यु जलमा हुनेछ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । मैले यो अन्न अभिमुख वा पराङ्मुख भएर होइन, बरु समुद्ररूपी मूत्राशयले सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने

वाञ्छित फल प्राप्त गरेको छु यसमा जलमा डुबेर मेरो नाश हुने सम्भावना छैन । यस किसिमले प्राशन गरिएका ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरूका सबै किसिमका अभीष्ट फल प्राप्त गर्दछ ।

**ततश्चैनमन्याभ्यामूरुभ्यां प्राशीर्याभ्यां चैतं पूर्व ऋषयः प्राश्नन् । ऊरू ते मरिष्यत इत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । मित्रावरुणयो रूरुभ्याम् । ताभ्यामेनं प्राशिषं ताभ्यामेनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥१३॥**

पहिलेका ऋषिहरूको भन्दा भिन्न लौकिक जङ्घाले यदि तिमीले यो अन्न खाएका छौ भनेदेखि तिम्रा जङ्घाको विनाश हुनेछ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । मैले यो अन्न अभिमुख वा पराङ्मुख भएर होइन, बरु मित्रावरुणरूपी जङ्घाले सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने वाञ्छित फल प्राप्त गरेको छु यसमा मेरा जङ्घा नाश हुने सम्भावना छैन । यस किसिमले प्राशन गरिएका ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरूका सबै किसिमका अभीष्ट फल प्राप्त गर्दछ ।

**ततश्चैनमन्याभ्यामष्ठीवद्भ्यां प्राशीर्याभ्यां चैतं पूर्व ऋषयः प्राश्नन् । स्रामो भविष्यसीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । त्वष्टुरष्ठीवद्भ्याम् । ताभ्यामेनं प्राशिषं ताभ्यामेनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥१४॥**

पहिलेका ऋषिहरूको भन्दा भिन्न घुँडाका हड्डीले यदि तिमीले यो अन्न खाएका छौ भनेदेखि तिम्रा घुँडाहरू सुकेर तिम्रो विनाश हुनेछ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । मैले यो अन्न अभिमुख वा पराङ्मुख भएर होइन, बरु त्वष्टादेवतारूपी घुँडाले सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने वाञ्छित फल प्राप्त गरेको छु यसमा मेरा घुँडा सुकेर मेरो विनाश हुने सम्भावना छैन । यस किसिमले प्राशन गरिएका ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरूका सबै किसिमका अभीष्ट फल प्राप्त गर्दछ ।

**ततश्चैनमन्याभ्यां पादाभ्यां प्राशीर्याभ्यां चैतं पूर्व ऋषयः प्राश्नन् । बहुचारी भविष्यसीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । अश्विनोः पादाभ्याम् । ताभ्यामेनं प्राशिषं ताभ्यामेनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥१५॥**

पहिलेका ज्ञानी ऋषिहरूको भन्दा भिन्न गोडाले यदि तिमीले यो अन्न खाएका छौ भनेदेखि तिमीलाई बिनाकाममा मनगर्गे हिँड्नुपर्ने खालको पाप लाग्छ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । मैले यो अन्न अभिमुख वा पराङ्मुख भएर होइन, बरु अश्विनीकुमाररूपी गोडाले सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने वाञ्छित फल प्राप्त गरेको छु यसमा मलाई बेकाममा ज्यादा हिँड्नुपर्ने दोष लागेर मेरो विनाश हुने सम्भावना छैन । यस किसिमले प्राशन गरिएका ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरूका सबै किसिमका अभीष्ट फल प्राप्त गर्दछ ।

**ततश्चैनमन्याभ्यां प्रपदाभ्यां प्राशीर्याभ्यां चैतं पूर्व ऋषयः प्राश्नन् । सर्पस्त्वा हनिष्यतीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । सवितुः प्रपदाभ्याम् ।**

**ताभ्यामेनं प्राशिषं ताभ्यामेनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥१६॥**

पहिलेका ज्ञानी ऋषिहरूको भन्दा भिन्न लौकिक गोडाका अघिल्ला भागले यदि तिमीले यो अन्न खाएका छौ भनेदेखि तिमीलाई सर्पले टोकेर मर्नुपर्ने पाप लाग्छ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । मैले यो अन्न अभिमुख वा पराङ्मुख भएर होइन, बरु सवितादेवतारूपी गोडाका अघिल्लो भागले सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने वाञ्छित फल प्राप्त गरेको छु यसबाट मलाई सर्पले टोकिएर मर्नुपर्ने दोष लाग्ने सम्भावना छैन । यस किसिमले प्राशन गरिएका ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरूका सबै किसिमका अभीष्ट फल प्राप्त गर्दछ ।

**ततश्चैनमन्याभ्यां हस्ताभ्यां प्राशीर्याभ्यां चैतं पूर्व ऋषयः प्राश्नन् । ब्राह्मणं हनिष्यसीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । ऋतस्य हस्ताभ्याम् । ताभ्यामेनं प्राशिषं ताभ्यामेनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥१७॥**

पहिलेका ज्ञानी ऋषिहरूको भन्दा भिन्न लौकिक हातले यदि तिमीले यो अन्न खाएका छौ भनेदेखि तिमीलाई ब्रह्महत्याको पाप लाग्छ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । मैले यो अन्न अभिमुख वा पराङ्मुख भएर होइन, बरु परब्रह्मको सत्यरूपी हातले सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने वाञ्छित फल प्राप्त गरेको छु यसबाट मलाई ब्रह्महत्याको दोष लाग्ने सम्भावना छैन । यस किसिमले प्राशन गरिएका ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरूका सबै किसिमका अभीष्ट फल प्राप्त गर्दछ ।

**ततश्चैनमन्यया प्रतिष्ठया प्राशीर्यया चैतं पूर्व ऋषयः प्राश्नन् । अप्रतिष्ठानोऽनायतनो मरिष्यसीत्येनमाह । तं वा अहं नार्वाञ्चं न पराञ्चं न प्रत्यञ्चम् । सत्ये प्रतिष्ठाय । तयैनं प्राशिषं तयैनमजीगमम् । एष वा ओदनः सर्वाङ्गः सर्वपरुः सर्वतनूः । सर्वाङ्ग एव सर्वपरुः सर्वतनूः सं भवति य एवं वेद ॥१८॥**

पहिलेका ज्ञानी ऋषिहरूले जुन ब्रह्मात्मक प्रतिष्ठाले यस अन्नको प्राशन गरेका थिए । तिमीले त्यसभन्दा भिन्न तरिकाले खाएका छौ भनेदेखि तिमीलाई प्रतिष्ठा गुमाउनुपर्ने पाप लाग्छ भनेर अन्न प्राशन गर्नेलाई भनिदिऊँ । मैले यो अन्न अभिमुख वा पराङ्मुख भएर होइन, बरु ब्रह्ममा प्रतिष्ठित भएर संसारका प्रतिष्ठापक ब्रह्मरूपी तरिकाले नै सेवन गरेको हुँ र त्यसैबाट यस अन्नले प्रदान गर्ने वाञ्छित फल प्राप्त गरेको छु यसबाट मलाई प्रतिष्ठा गुमाउने दोष लाग्ने सम्भावना छैन । यस किसिमले प्राशन गरिएका ओदनले सबै अङ्ग र अवयवहरूमा पूर्णता प्रदान गर्दछ भनेर अन्न प्राशन गर्नेले भनोस् । यस किसिमको कुरो जसले जान्दछ, उही नै सर्वाङ्गसम्पन्न भएर फल प्राप्त गर्दै पुण्यमय स्वर्ग आदि लोकहरूका सबै किसिमका अभीष्ट फल प्राप्त गर्दछ ।

## ५. ओदन सूक्त

**ऋषि**– अथर्वा । **देवता**– मन्त्रोक्त । **छन्द**– आसुरी अनुष्टुप्, आर्ची उष्णिक्, भुरिक् साम्नी त्रिपदा त्रिष्टुप्, आसुरी बृहती, द्विपदा भुरिक् साम्नी बृहती, साम्नी उष्णिक्, प्राजापत्या बृहती ।

**एतद् वै ब्रध्नस्य विष्टपं यदोदनः ॥१॥**

यस्ता महिमायुक्त ओदनको स्वरूप सूर्य मण्डलका आकारको छ ।

**ब्रध्नलोको भवति ब्रध्नस्य विष्टपि श्रयते य एवं वेद ॥२॥**

यस ओदनका विषयमा जुन मानिसले जान्दछ, उसैले सूर्यलोक प्राप्त गर्दछ ।

**एतस्माद् वा ओदनात् त्रयस्त्रिंशतं लोकान् निरमिमीत प्रजापतिः ॥३॥**
प्रजापतिले यसै महिमाशाली ओदनबाट तेत्तीस देवता वा लोकहरूको रचना गरे ।

**तेषां प्रज्ञानाय यज्ञमसृजत ॥४॥**
ती लोक र देवताहरूको राम्रो जानकारी पाउनका लागि नै यज्ञीय विज्ञानको निर्माण गरियो ।

**स य एवं विदुष उपद्रष्ट्य भवति प्राणं रुणद्धि ॥५॥**
यस तथ्यको जानकारी भएर पनि जो निन्दक हुन्छन्, तिनले आफ्ना प्राणको गति रोक्दछन्, अर्थात् ती मर्दछन् ।

**न च प्राणं रुणद्धि सर्वज्योर्नि जीयते ॥६॥**
त्यसबाट उनका प्राणशक्तिको क्षय हुने मात्र होइन, त्यसका अतिरिक्त उनको पूरै अस्तित्व नै मेटिन्छ ।

**न च सर्वज्यानिं जीयते पुरैनं जरसः प्राणो जहाति ॥७॥**
त्यसको सर्वस्व समाप्त हुने मात्र होइन, अझ त्यस्ताका प्राणले समय नहुँदै तिनलाई छोडिदिन्छ ।

## ६. प्राण सूक्त

**ऋषि**– वैदर्भि भार्गव । **देवता**– प्राण । **छन्द**– अनुष्टुप्, शङ्कुमत्यनुष्टुप्, पथ्यापङ्क्ति, निचृत् अनुष्टुप्, भुरिक् अनुष्टुप्, अनुष्टुब्गर्भा त्रिष्टुप्, मध्येज्योति जगती, त्रिष्टुप्, बृहतीगर्भा अनुष्टुप् ।

**प्राणाय नमो यस्य सर्वमिदं वशे । यो भूतः सर्वस्येश्वरो यस्मिन्त्सर्वं प्रतिष्ठितम् ॥१॥**
यस सम्पूर्ण विश्वलाई नै आफ्ना अधीनमा बनाउने प्राणलाई हाम्रो नमस्कार छ । त्यही प्राण सम्पूर्ण प्राणीहरूको ईश्वर हो र उसैमा सम्पूर्ण विश्व विराजमान रहेको छ ।

**नमस्ते प्राण क्रन्दाय नमस्ते स्तनयित्नवे । नमस्ते प्राण विद्युते नमस्ते प्राण वर्षते ॥२॥**
हे प्राण ! तिमी शब्दध्वनि गर्ने र मेघको जस्तै गर्जन गर्ने खालका छौ । तिमीलाई प्रणाम छ । तिमी विद्युत्का रूपमा चम्कने र जलको वर्षा गराउने हौ, हामी नमस्कार गर्दछौं ।

**यत् प्राण स्तनयित्नुनाभिक्रन्दत्योषधीः । प्र वीयन्ते गर्भान् दधतेऽथो बह्वीर्वि जायन्ते ॥३॥**
हे प्राण ! जुन समयमा तिमी मेघका माध्यमबाट औषधिहरूलाई सुसम्पन्न गराउँदै ठूलो गर्जन गर्दछौ, त्यस बेला औषधिहरू तेजस्वी हुन्छन् र गर्भ धारण गरेर विभिन्न किसिमले तिनीहरू विस्तृत हुन थाल्दछन् ।

**यत् प्राण ऋतावागतेऽभिक्रन्दत्योषधीः । सर्वं तदा प्र मोदते यत् किं च भूम्यामधि ॥४॥**
वर्षा कालमा जब प्राणले औषधिलाई लक्ष्य गरेर गर्जन गर्दछ, त्यस बेला सबै नै हर्षित हुन्छन् । भूमिमा रहेका सम्पूर्ण प्राणीहरू आनन्दले गदगद हुन्छन् ।

**यदा प्राणो अध्यवर्षीद् वर्षेण पृथिवीं महीम् ।पशवस्तत् प्र मोदन्ते महो वै नो भविष्यति ॥५॥**
प्राणदेवताले जलको वर्षाद्वारा जब विस्तृत भूमिलाई सेचन गर्दछन्, त्यस बेलामा गाई आदि सबै पशुहरू अब पक्का पनि हाम्रो उन्नति हुनेछ भनेर खुसी हुन्छन् ।

**अभिवृष्य ओषधयः प्राणेन समवादिरन् । आयुर्वै नः प्रातीतरः सर्वा नः सुरभीरकः ॥६॥**
प्राणदेवताले सेचन गरेका औषधिहरूले प्राणसँग कुराकानी गर्दै हे प्राण ! हामी सबैको आयु तिमीले वृद्धि गर र सबैलाई सुन्दर तथा सुगन्धले युक्त गराऊ भन्दछन् ।

**नमस्ते अस्त्वायते नमो अस्तु परायते । नमस्ते प्राण तिष्ठत आसीनायोत ते नमः ॥७॥**
हे प्राणदेवता ! आउँदै गर्दा, जाँदा, कतै उभिँदा वा बस्ता तिमीलाई हामी नमस्कार गर्दछौं ।

**नमस्ते प्राण प्राणते नमो अस्त्वपानते । पराचीनाय ते नमः प्रतीचीनाय ते नमः सर्वस्मै त इदं नमः ॥८॥**
हे प्राणदेवता ! प्राणप्रक्रियालाई पूरा गराउने र अपान प्रक्रियालाई पूरा गराउने तिमीलाई हामी

नमस्कार गर्दछौं । आवागमनको स्वभाव भएका, अगाडि बढ्ने र पछाडि फर्कने आदि सबै खालका तिम्रा कामहरूलाई हामी नमस्कार गर्दछौं ।

**या ते प्राण प्रिया तनूर्यो ते प्राण प्रेयसी । अथो यद् भेषजं तव तस्य नो धेहि जीवसे ॥९॥**

हे प्राणदेवता ! तिमीलाई प्रिय लाग्ने यो प्राणमय शरीर, तिम्रा लागि अति प्रिय तथा अमृत तत्त्वले युक्त औषधि, ती सबैले हामीलाई दीर्घ जीवन प्रदान गरून् ।

**प्राणः प्रजा अनु वस्ते पिता पुत्रमिव प्रियम् । प्राणो ह सर्वस्येश्वरो यच्च प्राणति यच्च न ॥१०॥**

पुत्रभित्रै रहने पिताजस्तो बनेर सबै प्राणीसँगै प्राण रहेको हुन्छ । प्राण धारण गर्ने जङ्गम प्राणीहरू जति छन्, अथवा जो त्यसभन्दा भिन्न किसिमका स्थावर हुन्छन्, ती सबैलाई नियन्त्रण गर्ने ईश्वर उही प्राण नै हो ।

**प्राणो मृत्युः प्राणस्तक्मा प्राणं देवा उपासते । प्राणो ह सत्यवादिनमुत्तमे लोक आ दधत् ॥११॥**

मृत्युको कारण नै प्राण हो, रोग आदिको कारण नै प्राण हो, देवशक्तिले प्राणकै उपासना गर्दछन् । प्राणले नै सत्यनिष्ठ व्यक्तिलाई श्रेष्ठ लोकमा स्थापित गराउँछ ।

**प्राणो विराट् प्राणो देष्ट्री प्राणं सर्व उपासते । प्राणो ह सूर्यश्चन्द्रमाः प्राणमाहुः प्रजापतिम् ॥१२॥**

त्यो प्राण नै विराट् र सर्वप्रेरक छ । त्यसो हुनाले नै त्यस प्राणलाई सबै देवताहरूले उपासना गर्दछन् । त्यो प्राण नै सर्व उत्पादक सूर्य, अमृतमय सोम र प्रजाका उत्पादक प्रजापति देवताको रूप हो ।

**प्राणापानौ व्रीहियवावनड्वान् प्राण उच्यते । यवे ह प्राण आहितोऽपानो व्रीहिरुच्यते ॥१३॥**

चामल, जौ आदि खाद्यान्नका रूपमा उनै प्राण अपान आदि रहेका छन् । भारी ओसार्ने गोरु आदि बलका रूपमा त्यसै प्राणलाई नै अनड्वान भन्ने गरिन्छ । जौमा प्राण हुन्छ र चामलमा अपान हुन्छ भन्ने गरिन्छ ।

**अपानति प्राणति पुरुषो गर्भे अन्तरा । यदा त्वं प्राण जिन्वस्यथ स जायते पुनः ॥१४॥**

जीवात्माका गर्भमा प्राणसम्बन्धी र अपानसम्बन्धी प्रक्रियाहरू सम्पन्न हुन्छन् । हे प्राण ! तिमीले प्रेरित गरेका प्राणीहरू पृथ्वीमा नै उत्पन्न भएका हुन्छन् ।

**प्राणमाहुर्मातरिश्वानं वातो ह प्राण उच्यते । प्राणे ह भूतं भव्यं च प्राणे सर्वं प्रतिष्ठितम् ॥१५॥**

प्राणलाई मातरिश्वा वायु भन्ने गरिन्छ र वायुको नाम नै प्राण हो । विगतमा, आगतमा र वर्तमानमा जेजति भए, हुँदै छन् र हुनेछन्, ती सबै नै प्राणमा नै प्रतिष्ठित हुन्छन् ।

**आथर्वणीराङ्गिरसीर्दैवीर्मनुष्यजा उत । ओषधयः प्र जायन्ते यदा त्वं प्राण जिन्वसि ॥१६॥**

हे प्राण ! तिमी जब वर्षाद्वारा सन्तुष्ट गराउँछौ, त्यस बेला महर्षि अथर्वाले रचना गरेको, अङ्गिरा गोत्रीय र देवताहरूले निर्माण गरेको र मानिसले उत्पन्न गरेका सबै खालका औषधिहरू प्रकट हुन्छन् ।

**यदा प्राणो अभ्यवर्षीद् वर्षेण पृथिवीं महीम् । ओषधयः प्र जायन्तेऽथो याः काश्च वीरुधः ॥१७॥**

जुन समयमा यो प्राण झरीका रूपमा विशाल पृथ्वीमा बर्सन्छ, त्यसपछि नै औषधि र अन्य वनस्पतिहरू उत्पन्न हुन्छन् ।

**यस्ते प्राणेदं वेद यस्मिंश्चासि प्रतिष्ठितः । सर्वे तस्मै बलिं हरानमुष्मिंल्लोक उत्तमे ॥१८॥**

हे प्राणदेवता ! तिम्रा यस किसिमले वर्णन गरिने माहात्म्य जसले जान्दछ र जुन ज्ञानी मानिसभित्र

तिमी विराजमान हुन्छौ, त्यसकै लागि समस्त देवताको उत्तम स्वर्गलोक र अमरत्व तिमी नै प्रदान गर्दछौ ।

**यथा प्राण बलिहतस्तुभ्यं सर्वाः प्रजा इमाः । एवा तस्मै बलिं हरान् यस्त्वा शृणवत् सुश्रवः ॥१९॥**

हे प्राणदेवता ! सम्पूर्ण प्रजाहरू जसरी तिम्रा लागि बलिका रूपमा उपभोग्य अन्न लिएर आउँछन्, उसै रूपमा हे यशस्वी ! तिम्रो महिमा सुन्ने विद्वान्हरूका लागि पनि ती मानिसहरूले बलिका रूपमा अन्न प्रदान गरून् ।

**अन्तर्गर्भश्चरति देवतास्वाभूतो भूतः स उ जायते पुनः । स भूतो भव्यं भविष्यत् पिता पुत्रं प्र विवेशा शचीभिः ॥२०॥**

देवशक्तिमा रहेको प्राण नै गर्भमा पनि विचरण गरिरहेको हुन्छ । सबैतिर व्याप्त भएर त्यो प्राण फेरि प्रकट हुने गर्दछ । यो नित्य रूपमा रहने वर्तमान, भूत र भविष्यत् कालमा उत्पन्न वस्तुहरूमा आफ्ना शक्तिले त्यसरी प्रविष्ट हुन्छ, जसरी पिता आफ्ना पुत्रमा आफ्नै शक्तिले प्रवेश गरेको हुन्छ ।

**एकं पादं नोत्खिदति सलिलाद्धंस उच्चरन् । यदङ्ग स तमुत्खिदेन्नैवाद्य न श्वः स्यान्न रात्री नाहः स्यान्न व्युच्छेत् कदा चन ॥२१॥**

जलबाट माथि उड्न लागेका हाँसले एउटा खुट्टो उचालेकै हुँदैन । हे प्रियजनहरू हो ! यदि उसले त्यो खुट्टो उचालेको भएदेखि आज, हिजो, भोलि, दिन, रात, उज्यालो र अँध्यारो भन्नेजस्ता कुनै पनि कुरो बाँकी रहँदैन ।

**अष्टचक्रं वर्तत एकनेमि सहस्राक्षरं प्र पुरो नि पश्चा । अर्धेन विश्वं भुवनं जजान यदस्यार्धं कतमः स केतुः ॥२२॥**

आठ किसिमका पाङ्ग्रा भएको रथ आफ्नो धुरारूपी प्राणसँग हजारौँ अक्षय प्रभावका साथमा निरन्तर अघिपछि घुमिरहेको हुन्छ । आफ्नो आधा भागले त्यसले विश्वका सबै लौकिक पदार्थहरूको रचना गर्दछ भने बाँकी रहेका आधा भाग कसैको प्रतीक चिह्नका रूपमा रहेको हुन्छ ।

**यो अस्य विश्वजन्मन ईशे विश्वस्य चेष्टतः । अन्येषु क्षिप्रधन्वने तस्मै प्राण नमोऽस्तु ते ॥२३॥**

जुन प्राणले अनेकौँ जन्महरू धारण गर्दछ, जो चेष्टाशील सम्पूर्ण विश्वको नै अधिपति रहेको छ र अन्य प्राणीका शरीरमा जो शीघ्रतापूर्वक प्रवेश गर्दछ त्यस्ता खालका हे प्राण ! तिमीलाई हाम्रो बारम्बार प्रणाम छ ।

**यो अस्य सर्वजन्मन ईशे सर्वस्य चेष्टतः । अतन्द्रो ब्रह्मणा धीरः प्राणो मानु तिष्ठतु ॥२४॥**

जुन प्राण अनेकौँ रूपमा जन्मिएर सधैँ गतिमान् रहँदै सम्पूर्ण विश्वको स्वामी बनेको छ, त्यही प्राण निरन्तर क्रियाशील हुँदै सबैतिर विचरण गर्दछ र ज्ञानशक्तिले सम्पन्न तथा असीमित रूपमा हामीसँगै स्थिर रहोस् ।

**ऊर्ध्वः सुप्तेषु जागार ननु तिर्यङ् नि पद्यते । न सुप्तमस्य सुप्तेष्वनु शुश्राव कश्चन ॥२५॥**

हे प्राण ! प्राणीहरू निदाइसक्दा पनि तिमी तिनीहरूको सुरक्षाका लागि ननिदाईकन जागा भएर बस, नसुत । प्राणीहरू सुतेपछि यो प्राण पनि सुत्छ भन्ने परम्परागत कुरो कसैले सुनेको छैन ।

**प्राण मा मत पर्यावृतो न मदन्यो भविष्यसि । अपां गर्भमिव जीवसे प्राण बध्नामि त्वा मयि ॥२६॥**

हे प्राण ! हामीबाट विमुख तिमी नहोऊ र हामीभन्दा टाढा पनि कतै नजाऊ । हामी आफ्नो अस्तित्व बचाउनका लागि तिमीलाई बाँध्दछौँ । वैश्वानर अग्निलाई जसरी हामीले आफ्ना शरीरमा धारण गरेका छौँ, उसै किसिमले हामी आफ्नो शरीरमा तिमीलाई धारण गर्दछौँ ।

## ७. ब्रह्मचर्य सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** ब्रह्मचारी । **छन्द–** पुरोऽतिजागत विराड्गर्भा त्रिष्टुप्, पञ्चपदा बृहतीगर्भा विराट् शक्वरी, उरोबृहती, त्रिष्टुप्, शाक्वरगर्भा चतुष्पदा जगती, विरडगर्भा त्रिष्टुप्, पुरोतिजागता विराट् जगती, बृहतीगर्भा त्रिष्टुप्, भुरिक् त्रिष्टुप्, जगती, शाक्वरगर्भा चतुष्पदा विराट् अतिजगती, अनुष्टुप्, पुरस्ताज्ज्योति त्रिष्टुप्, पुरोबार्हतातिजागतगर्भा त्रिष्टुप्, एकावसानार्च्युष्णिक्, मध्येज्योति उष्णिग्गर्भा त्रिष्टुप् ।

**ब्रह्मचारीष्णंश्चरति रोदसी उभे तस्मिन् देवाः संमनसो भवन्ति । स दाधार पृथिवीं दिवं च स आचार्यं तपसा पिपर्ति ॥१॥**

ब्रह्मका अनुशासनमा आचरण–विचरण गर्ने ब्रह्मचारीले द्युलोक र पृथ्वी दुवैलाई आफ्नो अनुकूल बनाउँदै विचरण गर्दछ । देवताहरू त्यस्ता ब्रह्मचारीमा अत्यन्त खुसीका साथ निवास गर्दछन् । यसै किसिमले त्यस्ता ब्रह्मचारीले पृथ्वी र द्युलोक दुवैलाई आफ्ना तपस्याले धारण गर्दछ तथा आचार्यलाई अत्यन्त सन्तुष्ट र सार्थक गराउँछ ।

**ब्रह्मचारिणं पितरो देवजनाः पृथग् देवा अनुसंयन्ति सर्वे । गन्धर्वा एनमन्वायन् त्रयस्त्रिंशत् त्रिशताः षट्सहस्राः सर्वान्त्स देवांस्तपसा पिपर्ति ॥२॥**

देवता, पितृ र देवसमूह यी सबै नै ब्रह्मचारीको सहयोगका लागि पछिपछि लागेका हुन्छन् । तीन जोड तीस, तीन सय र छ हजार यी देवताहरूलाई ब्रह्मचारीले नै आफ्ना तपस्याले सन्तुष्ट गराएको हुन्छ ।

**आचार्य उपनयमानो ब्रह्मचारिणं कृणुते गर्भमन्तः । तं रात्रीस्तिस्र उदरे बिभर्ति तं जातं द्रष्टुमभिसंयन्ति देवाः ॥३॥**

आचार्यले ब्रह्मचारीलाई उपनयन संस्कार गराउँदै आफ्ना ज्ञानरूपी शरीरका गर्भमा धारण गर्दछन् । आचार्यले तीन रातसम्म उसलाई आफ्नै गर्भमा राख्दछन् । त्यसपछि जब उसले आध्यात्मिक रूपको दोस्रो जन्म लिएर बाहिर आउँछ, त्यसपछि दिव्य शक्तिका वाहक अथवा सत्पुरुषका रूपमा रहेका देवताहरू उसलाई अभिनन्दन गर्दै वा सहयोग गर्दै एकत्र भएका हुन्छन् ।

**इयं समित् पृथिवी द्यौर्द्वितीयोतान्तरिक्षं समिधा पृणाति । ब्रह्मचारी समिधा मेखलया श्रमेण लोकांस्तपसा पिपर्ति ॥४॥**

ब्रह्मचारीले समिधा, मेखला, श्रम र तपस्याले संसारलाई पोषण गर्दछ । उसको पहिलो समिधा पृथ्वी हो, दोस्रो द्युलोक हो र तेस्रो समिधा भनेको अन्तरिक्ष हो ।

**पूर्वो सजातो ब्रह्मणो ब्रह्मचारी घर्मं वसानस्तपसोदतिष्ठत् । तस्माज्जातं ब्राह्मणं ब्रह्म ज्येष्ठं देवाश्च सर्वे अमृतेन साकम् ॥५॥**

ब्रह्मनिष्ठ ब्राह्मणका रूपमा घोषित हुनुभन्दा पहिलेको साधक ब्रह्मचारी हुन्छ । उही नै ब्रह्मका अनुशासनको अभ्यास गर्नमा लागेको हुन्छ । त्यसले ऊर्जा धारण गर्दै उन्नतिको मार्गमा माथि उठेको हुन्छ । त्यसो भएपछि नै ऊ ब्राह्मणका रूपमा प्रकट हुन्छ र उसैले नै परब्रह्म तथा देवगणका निकटता प्राप्त गरेको हुन्छ ।

**ब्रह्मचार्येति समिधा समिद्धः कार्ष्णं वसानो दीक्षितो दीर्घश्मश्रुः । स सद्य एति पूर्वस्मादुत्तरं समुद्रं लोकान्त्संगृभ्य मुहुराचरिक्रत् ॥६॥**

समिधाहरू प्रज्वलित गरेर कालो वर्णका मृगको चर्म धारण गर्दै दाह्रीजुँगा पालेका ब्रह्मचारीहरू संसाररूपी पहिलो समुद्रबाट उत्तमलोक रूपी अर्को समुद्रमा पुग्दछन् ।

**ब्रह्मचारी जनयन् ब्रह्मापो लोकं प्रजापतिं परमेष्ठिनं विराजम् । गर्भो भूत्वामृतस्य योनाविन्द्रो ह भूत्वासुरांस्ततर्ह ॥७॥**

अमृतका गर्भमा रहेर ती ब्रह्मचारीले आफूभित्र ब्रह्मतेज, श्रेष्ठ लोक, प्रजापति र सर्वश्रेष्ठ स्थिति भएका विराट्लाई उत्पन्न एवं जागृत गराउँछन् । त्यसपछि सबैका लागि मार्गनिर्देश गर्ने इन्द्र बनेर

निश्चित रूपले असुरको विनाश गर्दछन् ।

**आचार्य स्ततक्ष नभसी उभे इमे उर्वी गम्भीरे पृथिवीं दिवं च । ते रक्षति तपसा ब्रह्मचारी तस्मिन् देवाः संमनसो भवन्ति ॥८॥**

आचार्यका गर्भरूपी आकाशमा उनै ब्रह्मचारीका लागि विशाल तथा गम्भीर पृथ्वी र द्युलोकको सिर्जना गर्छिन्छ । ब्रह्मचारीले तप र साधनका बलले तिनीहरूको रक्षा गर्दछन् । त्यसो भएकाले नै देवताहरू उनासंग सामनस्यता पूर्वक रहने गर्दछन् ।

**इमां भूमिं पृथिवीं ब्रह्मचारी भिक्षामा जभार प्रथमो दिवं च । ते कृत्वा समिधावुपास्ते तयोरार्पिता भुवनानि विश्वा ॥९॥**

ब्रह्मचारीले सबैभन्दा पहिले भूमिबाट भिक्षा ग्रहण गरे । त्यसपछि उनले द्युलोकको भिक्षा ग्रहण गरे । यी दुवै लोकबाट समिधा लिएर उनले ब्रह्मतेजरूपी अग्निको उपासना गरे । यी दुवै लोकका बीचमा उनै उनको संसार स्थित हुने गरेको छ ।

**अर्वागन्यः परो अन्यो दिवस्पृष्ठाद् गुहा निधी निहितौ ब्राह्मणस्य । तौ रक्षति तपसा ब्रह्मचारी तत् केवलं कृणुते ब्रह्म विद्वान् ॥१०॥**

ब्राह्मणको सम्पत्ति निकटवर्ती अन्तःकरणरूपी गुफा तथा द्युलोकको आधारभन्दा पर नै अडिएको हुन्छ । ब्रह्मचारीले तपस्याद्वारा तिनको रक्षा गर्दछन् । त्यसै तपस्याले उनलाई पक्का पनि ब्रह्मज्ञानले सम्पन्न बनाइदिन्छ ।

**अर्वागन्य इतो अन्यः पृथिव्या अग्नी समेतो नभसी अन्तरेमे । तयोः श्रयन्ते रश्मयोऽधि । दृढास्ताना तिष्ठति तपसा ब्रह्मचारी ॥११॥**

द्युलोकतिर एक किसिमको तेज रहेको छ भने यता पृथ्वीमा अर्को खालको तेज व्याप्त भएर रहेको छ । यी दुवै अन्तरिक्षमा भेला हुन्छन् । तिनै तेजबाट शक्तिशाली किरणहरू फैलन्छन् । तपस्याका शक्तिले ब्रह्मचारीले ती दिव्य तेज सञ्चार गर्ने अधिकार प्राप्त गर्दछन् ।

**अभिक्रन्दन् स्तनयन्नरुणः शितिङ्गो बृहच्छेपोऽनु भूमौ जभार । ब्रह्मचारी सिञ्चति सानौ रेतः पृथिव्यां तेन जीवन्ति प्रदिशश्चतस्रः ॥१२॥**

रातो र कालोखैरो अत्यन्त प्रभावशाली, गर्जन गर्ने मेघरूपी ब्रह्मचारीले पृथ्वीलाई उत्पादक तत्त्वले भरिपूर्ण गराउँछन् । उनले पृथ्वी र पर्वतका समथर ठाउँ उत्पादनशील तेजले सिँचाइ गर्दछन्, त्यसो भएपछि चारै दिशाहरू जीवनसम्पन्न भएर उठ्दछन् ।

**अग्नौ सूर्ये चन्द्रमसि मातरिश्वन् ब्रह्मचार्य१प्सु समिधमा दधाति । तासामर्चींषि पृथगभ्रे चरन्ति तासामाज्यं पुरुषो वर्षमापः ॥१३॥**

अग्नि, सूर्य, चन्द्रमा, वायु र जलमा ब्रह्मचारीले समिधा अर्पित गर्दछन् । उनको तेज अलगअलग रूपमा अन्तरिक्षमा निवास गर्दछ । त्यसै तेजबाट वर्षा, जल, घिउ र पुरुष आदि समृद्ध तथा तेजसम्पन्न हुने गर्दछन् ।

**आचार्यो मृत्युर्वरुणः सोम ओषधयः पयः । जीमूता आसन्त्सत्वानस्तैरिदं स्व१राभृतम् ॥१४॥**

आचार्य नै यमका अनुशासनमा रहेको मृत्युरूपी पहिलेको अवशेष समाप्त गर्ने, नवसिर्जनाका प्रतीक वरुण, आनन्दप्रद प्रवाहरूपी सोम, उपचारक औषधि, पोषक तत्त्वका रूपमा रहेको पयस् आदिका रूप हुन् । उनी सत्प्रवाहरूपी मेघ भएकाले उनैले साधकलाई नयाँ किसिमको आत्मबोधसम्पन्न गराएका छन् ।

**अमा घृतं कृणुते केवलमाचार्यो भूत्वा वरुणो यद्यदैच्छत् प्रजापतौ तद् ब्रह्मचारी प्रायच्छत् स्वान्मित्रो अध्यात्मनः ॥१५॥**

प्रजापतिको इच्छाअनुसार नै आचार्यले वरुणका रूपमा रहेर केवल शुद्ध घिउजस्तो सार तत्त्व उत्पन्न गराउँछन् । ब्रह्मचारीले त्यसलाई आफ्ना अधिकारमा लिएर आफ्नै जस्तो धर्म निर्वाह गर्ने

निम्नहरूलाई प्रदान गर्दछन् ।

**आचार्यो ब्रह्मचारी ब्रह्मचारी प्रजापतिः । प्रजापतिर्वि राजति विराडिन्द्रोऽभवद्वशी ॥१६॥**

आचार्य नै ब्रह्मचारी बनेका हुन्छन् र उनी नै प्रजापति पनि बनेका हुन्छन् । त्यस किसिमका प्रजापालक नै ब्रह्मसम्बन्धी अनुशासनमा राज्य सञ्चालन गर्दछन् । विराट्लाई आफ्ना नियन्त्रणमा राख्ने इन्द्र नै नियन्ता बनेका हुन्छन् ।

**ब्रह्मचर्येण तपसा राजा राष्ट्रं वि रक्षति । आचार्यो ब्रह्मचर्येण ब्रह्मचारिणमिच्छते ॥१७॥**

ब्रह्मचर्य र तपस्याका शक्तिले नै शासकले राष्ट्रको रक्षा गर्दछन् । आचार्यले पनि ब्रह्मचर्यको सामर्थ्यले नै ब्रह्मचर्यमा आस्था राख्ने शिष्यको कामना गर्दछन् र तिनको सिर्जना गर्ने प्रयास गर्दछन् ।

**ब्रह्मचर्येण कन्या३ युवानं विन्दते पतिम् । अनड्वान् ब्रह्मचर्येणाश्वो घासं जिगीर्षति ॥१८॥**

ब्रह्मचर्यको संयमरूपी साधनाले नै कन्याले युवालाई पतिका रूपमा प्राप्त गर्दछन् । गोरु र अश्वले पनि ब्रह्मचर्यलाई पालन गरेर नै घाँस आदि आधारभूत पदार्थ भक्षण गर्ने कामना गरेका हुन्छन् ।

**ब्रह्मचर्येण तपसा देवा मृत्युमपाघ्नत । इन्द्रो ह ब्रह्मचर्येण देवेभ्यः स्व१राभरत् ॥१९॥**

ब्रह्मचर्यरूपी तपस्याका साधनाले नै सबै देवताहरूले मृत्युलाई निवारण गरेका छन् । ब्रह्मचर्यको सामर्थ्यले नै देवराज इन्द्र र अन्य देवताहरु दिव्य तेजरूपी स्वर्गलोक प्रदान गर्नमा समर्थ भएका छन् ।

**ओषधयो भूतभव्यमहोरात्रे वनस्पतिः । संवत्सरः सहर्तुभिस्ते जाता ब्रह्मचारिणः ॥२०॥**

औषधिहरू, वनस्पतिहरू, ऋतुचक्र पूरा गराउँदै हिँड्ने संवत्सरहरू, दिनरात, भूतभविष्य यी सबै जन्मजात रूपमा ब्रह्मचारी नै हुन् ।

**पार्थिवा दिव्याः पशव आरण्या ग्राम्याश्च ये । अपक्षाः पक्षिणश्च ये ते जाता ब्रह्मचारिणः ॥२१॥**

पृथ्वीमा उत्पन्न प्राणी, आकाशमा विचरण गर्ने प्राणी, वनका पशु, घरपालुवा पशु, पँखेटा नभएका पशु र पँखेटा भएका पशुहरू पनि सबै नै जन्मजात रूपमा ब्रह्मचारी हुने गर्दछन् ।

**पृथक् सर्वे प्राजापत्याः प्राणानात्मसु बिभ्रति । तान्त्सर्वान् ब्रह्म रक्षति ब्रह्मचारिण्याभृतम् ॥२२॥**

प्रजापति परमेश्वरले उत्पन्न गरेका सबै प्राणीले आफूभित्रको प्राणशक्तिलाई विभिन्न तरिकाले धारण गरेका छन् । ब्रह्मचारी अवस्थामा रहेका उनै ब्रह्मले ती सबैका प्राणको रक्षा गर्दछन् ।

**देवानामेतत् परिषूतमनभ्यारूढं चरति रोचमानम् । तस्माज्जातं ब्राह्मणं ब्रह्म ज्येष्ठं देवाश्च सर्वे अमृतेन साकम् ॥२३॥**

देवताहरूको यस्तो सर्वश्रेष्ठ उत्साह नै उत्पन्न गराउने ज्योतिका रूपमा गतिशील बनेर रहेको हुन्छ । त्यसैबाट उत्पन्न ब्राह्मणका सम्बन्धमा प्राप्त सर्वश्रेष्ठ ज्ञान तथा देवगण अमृतका तत्त्वले युक्त भएर रहेका छन् ।

**ब्रह्मचारी ब्रह्म भ्राजद् बिभर्ति तस्मिन् देवा अधि विश्वे समोताः । प्राणापानौ जनयन्नाद् व्यानं वाचं मनो ह.दयं ब्रह्म मेधाम् ॥२४॥**

ब्रह्मचारी प्रकाशमान ब्रह्मका रूपमा चेतना या ज्ञान धारण गर्ने भएकाले नै सम्पूर्ण देवगण उनीभित्रै समाहित भएका हुन्छन् । तिनै ब्रह्मचारीले प्राण, अपान, व्यान, वाणी, मन र प्रतिभाशक्ति उत्पन्न गराउँछन् ।

**चक्षुः श्रोत्रं यशो अस्मासु धेह्यन्नं रेतो लोहितमुदरम् ॥२५॥**

यस्तै ब्रह्मचारीले हामीभित्र दृष्टिशक्ति, श्रवणशक्ति, यश, अन्न, पराक्रम, रक्त तथा पेटको पाचनशक्ति प्रदान गरून् ।

तानि कल्पद् ब्रह्मचारी सलिलस्य पृष्ठे तपोऽतिष्ठत् तप्यमानः समुद्रे । स स्नातो बभ्रुः पिङ्गलः पृथिव्यां बहु रोचते ॥२६॥

माथि बताइएका सबै खालका विषयमा ब्रह्मचारी कल्पनाशील भएर नै जलका नजिकै तपस्याको साधनामा लागेका हुन्छन् । यस्तो ज्ञानरूपी समुद्रमा तपस्यामा लीन भएर उनै ब्रह्मचारी स्नातक हुन्छन् । त्यसपछि अति तेजस्वी भएर यस भूमिमण्डलमा विशिष्ट आभाले सम्पन्न हुन्छन् ।

## ८. पापमोचन सूक्त

**ऋषि—** शन्ताति । **देवता—** चन्द्रमा, मन्त्रोक्त । **छन्द—** अनुष्टुप्, बृहतीगर्भा अनुष्टुप् ।

**अग्निं ब्रूमो वनस्पतीनोषधीरुत वीरुधः । इन्द्रं बृहस्पतिं सूर्यं ते नो मुञ्चन्त्वंहसः ॥१॥**

अग्निदेवता, औषधिको समूह, वनस्पतिको समूह, इन्द्र, बृहस्पति र सर्वप्रेरक सूर्यदेवतालाई हामी स्तुति गर्दछौँ । यी सबैले हामीलाई पापकर्मका प्रभावबाट मुक्त गराऊन् ।

**ब्रूमो राजानं वरुणं मित्रं विष्णुमथो भगम् । अंशं विवस्वन्तं ब्रूमस्ते नो मुञ्चन्त्वंहसः ॥२॥**

प्रकाशमान वरुणदेवता, मित्रदेवता, सर्वत्र व्याप्त रहेका विष्णु, भजनीय देवता, भग नामका देवता, अंश नामका देवता र विवस्वान् नामका देवताहरू सबैलाई हामी स्तुति गर्दछौँ । यी सबैले हामीलाई पापकर्मबाट जोगाऊन् ।

**ब्रूमो देवं सवितारं धातारमुत पूषणम् । त्वष्टारमग्रियं ब्रूमस्ते नो मुञ्चन्त्वंहसः ॥३॥**

सबैका सृष्टिकर्ता सवितादेवता, धातादेवता, पूषादेवता र अग्रणी त्वष्टादेवतालाई हामी स्तुति गर्दछौँ । यिनीहरू सबैले हामीलाई पापकर्मबाट मुक्त गरून् ।

**गन्धर्वाप्सरसो ब्रूमो अश्विना ब्रह्मणस्पतिम् । अर्यमा नाम यो देवस्ते नो मुञ्चन्त्वंहसः ॥४॥**

गन्धर्वको समूह, अप्सराको समूह, अश्विनीकुमारहरू, वेदका स्वामी ब्रह्मा र अर्यमा आदि देवताहरूलाई हामी प्रार्थना गर्दछौँ । उनीहरू सबैले हामीलाई दुष्कर्मरूपी कृत्यबाट मुक्त गरून् ।

**अहोरात्रे इदं ब्रूमः सूर्याचन्द्रमसावुभा । विश्वानादित्यान् ब्रूमस्ते नो मुञ्चन्त्वंहस ॥५॥**

दिनरात, यिनका अधिष्ठाता देवता सूर्य–चन्द्र र अदितिका पुत्र सबै देवताहरूलाई हामी स्तुति गर्दछौँ । उनीहरूले हामीलाई सबै खालका दुष्कर्मबाट मुक्त गराऊन् ।

**वातं ब्रूमः पर्जन्यमन्तरिक्षमथो दिशः । आशश्च सर्वा ब्रूमस्ते नो मुञ्चन्त्वंहसः ॥६॥**

वायुदेवता, पर्जन्यदेवता, अन्तरिक्ष, दिशाहरू र उपदिशाहरूलाई हामी स्तुति गर्दछौँ । उनीहरूले हामीलाई पापबाट बचाऊन् ।

**मुञ्चन्तु मा शपथ्यादहोरात्रे अथो उषाः । सोमो मा देवो मुञ्चतु यमाहुश्चन्द्रमा इति ॥७॥**

दिनरात र उषाकालका अधिष्ठाता देवताहरूले हामीलाई शपथजन्य पापबाट जोगाऊन् । ज्ञानीहरूले चन्द्रमा भन्ने गरेका सोमदेवताले पनि हामीलाई शपथजन्य पापबाट जोगाऊन् भनेर हामी स्तुति गर्दछौँ ।

**पार्थिवा दिव्याः पशव आरण्या उत ये मृगाः । शकुन्तान् पक्षिणो ब्रूमस्ते नो मुञ्चन्त्वंहसः ॥८॥**

पृथ्वीमा रहने प्राणीहरू, अन्तरिक्षमा रहने प्राणीहरू, चराचुरुङ्गी र जङ्गलमा रहने गरेका मृग आदि पशुहरूका साथै शकुन्त नामका पक्षीहरूले हामीलाई पापकृत्यबाट बचाउन् भनेर प्रार्थना गर्दछौँ ।

**भवाशर्वाविदं ब्रूमो रुद्रं पशुपतिश्च यः । इषूर्या एषां संविद्म ता नः सन्तु सदा शिवाः ॥९॥**

भवदेवता, शर्वदेवता, पशुका संरक्षक रुद्रदेवतालाई हामी स्तुति गर्दछौँ । यी देवताहरूका जुन वाणलाई हामी जान्दछौँ, ती वाणले हामीलाई सधैँ रक्षा गरून् ।

**दिवं ब्रूमो नक्षत्राणि भूमिं यक्षाणि पर्वतान् । समुद्रा नद्यो वेशन्तास्ते नो मुञ्चन्त्वंहसः ॥१०॥**

द्युलोक, नक्षत्र, भूमि, यक्ष, पर्वत, सातै समुद्र, नदीहरू र जलाशयलाई हामी स्तुति गर्दछौँ । ती

सबैले हामीलाई पापबाट संरक्षित गरून् ।

**सप्तर्षीन् वा इदं ब्रूमोऽपो देवीः प्रजापतिम् । पितॄन् यमश्रेष्ठान् ब्रूमस्ते नो मुञ्चन्त्वंहसः ॥११॥**

सप्तर्षिहरू, जल, प्रजापति, ब्रह्मा, पितृहरू र उनका अधिपति मृत्युका देवता यमले हामीलाई पापबाट मुक्त गराऊन् भनेर हामी प्रार्थना गर्दछौँ ।

**ये देवा दिविषदो अन्तरिक्षसदश्च ये । पृथिव्यां शक्रा ये श्रितास्ते नो मुञ्चन्त्वंहसः ॥१२॥**

दिव्यलोकमा विद्यमान देवता, अन्तरिक्षमा रहेका देवता र भूलोकमा रहेका देवताहरू जेजति छन्, तिनले हामीलाई पापकर्मबाट जोगाऊन् भनेर हामी प्रार्थना गर्दछौँ ।

**आदित्या रुद्रा वसवो दिवि देवा अथर्वाणः । अङ्गिरसो मनीषिणस्ते नो मुञ्चन्त्वंहसः ॥१३॥**

आदित्यहरू, रुद्रहरू, वसुहरू, दिव्यलोकका वर्तमानका देवता, अथर्वा ऋषि, अङ्गिरा ऋषि र अन्य मनीषीगणहरू सबैले नै हामीलाई पापबाट मुक्त गराऊन् भनेर हामी उनीहरूलाई प्रार्थना गर्दछौँ ।

**यज्ञं ब्रूमो यजमानमृचः सामानि भेषजा । यजूंषि होत्रा ब्रूमस्ते नो मुञ्चन्त्वंहसः ॥१४॥**

पापबाट हामीलाई जोगाऊन् भनेर हामी यज्ञ र यजमानलाई स्तुति गर्दछौँ । ऋचाहरू र सामगानलाई हामी स्तुति गर्दछौँ । औषधि र यज्ञकर्ता होताहरूलाई हामी वन्दना गर्दछौँ ।

**पञ्च राज्यानि वीरुधां सोमश्रेष्ठानि ब्रूमः । दर्भो भङ्गो यवः सहस्ते नो मुञ्चन्त्वंहसः ॥१५॥**

पात, डाँक्लो, फल, फूल र जरोरूपी पाँच राज्यले सम्पन्न औषधिहरूमा सोमलता सर्वश्रेष्ठ छ । दुबो, भाङ, जौ, धान आदि सबैसित हामीलाई पापबाट जोगाओ भनेर हामी प्रार्थना गर्दछौँ ।

**अरायान् ब्रूमो रक्षांसि सर्पान् पुण्यजनान् पितॄन् । मृत्यूनेकशतं ब्रूमस्ते नो मुञ्चन्त्वंहसः ॥१६॥**

यज्ञविरोधी असुर, सर्प, पुण्यकर्मी पितृहरू र एक सय एक मृत्युका देवताहरूले हामीलाई पापबाट जोगाऊन् भनेर हामी उनीहरूलाई प्रार्थना गर्दछौँ ।

**ऋतून् ब्रूम ऋतुपतीनार्तवानुत हायनान् । समाः संवत्सरान् मासांस्ते नो मुञ्चन्त्वंहसः ॥१७॥**

ऋतुहरू, तिनका अधिपति, छ किसिमका ऋतुहरूमा उत्पन्न हुने गरेका पदार्थहरू, संवत्सर र महिनाहरूलाई हामी स्तुति गर्दछौँ, उनीहरूले हामीलाई पापबाट मुक्त गरून् ।

**एत देवा दक्षिणतः पश्चात् प्राञ्च उदेत । पुरस्तादुत्तराच्छक्रा विश्वे देवाः समेत्य ते नो मुञ्चन्त्वंहसः ॥१८॥**

हे देवताहरू हो ! तिमीहरू पूर्व, पश्चिम, उत्तर, दक्षिण, आआफ्ना दिशाबाट चाँडै आएर हामीलाई पापकृत्यबाट जोगाओ भन्दै प्रार्थना गर्दछौँ ।

**विश्वान् देवानिदं ब्रूमः सत्यसंधानृतावृधः । विश्वाभिः पत्नीभिः सह ते नो मुञ्चन्त्वंहसः ॥१९॥**

सत्यको पक्षमा दृढनिश्चय भएका, सत्कर्मरूपी यज्ञका संवर्द्धक सम्पूर्ण देवताहरूलाई र उनीहरूका सहयोगीहरूलाई एकै साथमा हामीलाई पापबाट मुक्त गरून् भनेर हामी प्रार्थना गर्दछौँ ।

**सर्वान् देवानिदं ब्रूमः सत्यसंधानृतावृधः । सर्वाभिः पत्नीभिः सह ते नो मुञ्चन्त्वंहसः ॥२०॥**

सत्यनिष्ठ, यज्ञको वृद्धि गराउने देवताहरू र उनको शक्तिलाई पनि सँगै हामीलाई पापबाट मुक्त गर भनेर प्रार्थना गर्दछौँ ।

**भूतं ब्रूमो भूतपतिं भूतानामुत यो वशी । भूतानि सर्वा संगत्य ते नो मुञ्चन्त्वंहसः ॥२१॥**

भूत वा प्राणीलाई अधीनमा राख्ने, भूतका अधिपतिहरूले हामीलाई पापबाट जोगाऊन् भनेर हामी

प्रार्थना गर्दछौं ।

**या देवीः पञ्च प्रदिशो ये देवा द्वादशर्तवः । संवत्सरस्य ये दंष्ट्रास्ते नः सन्तु सदा शिवाः ॥२२॥**

दिव्यताले सम्पन्न पाँच दिशा, बाह्र महिना, संवत्सर, त्यसका दाह्राका रूपमा रहेका पक्ष, सप्ताह आदिले हामीलाई पापबाट जोगाऊन् भनेर हामी स्तुति गर्दछौं ।

**यन्मातली रथक्रीतममृतं वेद भेषजम् । तदिन्द्रो अप्सु प्रावेशयत् तदापो दत्त भेषजम् ॥२३॥**

इन्द्रका सारथी मातली, रथका बदलामा किनबेच हुने औषधि वा रथक्रीत नामको औषधि, त्यस्ता औषधिको ज्ञान भएका इन्द्रले औषधि जलमा प्रवेश गराए । हे जलदेवता ! तिमी त्यस्तो कल्याणकारी औषधि हामीलाई प्रदान गर ।

## ९. उच्छिष्ट ब्रह्म सूक्त

**ऋषि–** अथर्वा । **देवता–** उच्छिष्ट, अध्यात्म । **छन्द–** अनुष्टुप्, पुरोष्णिग् वार्हतपरा अनुष्टुप्, स्वराट् अनुष्टुप्, विराट् पथ्या बेहर्ती ।

**उच्छिष्टे नाम रूपं चोच्छिष्टे लोक आहितः । उच्छिष्ट इन्द्रश्चाग्निश्च विश्वमन्तः समाहितम् ॥१॥**

उसै बिराट्ले छोडेका उच्छिष्टमा नै नाम, रूप र उसरी नै लोकलोकान्तरमा स्थापित छन् । त्यसैभित्र नै इन्द्र, अग्नि र समस्त विश्व समाहित भएको छ ।

**उच्छिष्टे द्यावापृथिवी विश्वं भूतं समाहितम् । आपः समुद्र उच्छिष्टे चन्द्रमा वात आहितः ॥२॥**

त्यसै अवशेषमा द्युलोक र पृथ्वीका सबै प्राणीहरू अटाएका छन् । जल, समुद्र, चन्द्रमा र वायु आदि सबै कुराहरू नै उसै उच्छिष्टका रूपमा ब्रह्माण्डमा विद्यमान छन् ।

**सन्नुच्छिष्टे असंश्चोभौ मृत्युर्वाजः प्रजापतिः । लौक्या उच्छिष्ट आयत्ता व्रश्च द्रश्चापि श्रीर्मयि ॥३॥**

सत्‌रूपी चेतनशील र असत्‌रूपी जडतायुक्त यी दुवै किसिमका सृष्टि यसै अवशिष्टका रूपमा रहेका छन् । मृत्यु, सर्जक बल र प्रजापति पनि यसै उच्छिष्टमा रहेका छन् । सबै लोक, वरुणदेवता र अमृतमय सोम पनि यसैभित्र अटाएका छन् । यसैमा श्री, शोभा आदिको कारण पनि रहेको छ ।

**दृढो दृंहस्थिरो न्यो ब्रह्म विश्वसृजो दश । नाभिमिव सर्वतश्चक्रमुच्छिष्टे देवताः श्रिताः ॥४॥**

बलिया किसिमका यी लोकहरू, बलियो र स्थिर जड पदार्थ, गतिमान् प्राणीहरू, अव्यक्त ब्रह्म, विश्वलाई उत्पन्न गर्ने दस किसिमका देवशक्तिहरू, नाभीका रूपमा आश्रित रहेको चक्रझैं यसै अवशिष्टमै आश्रित छन् ।

**ऋक् साम यजुरुच्छिष्ट उद्‌गीथः प्रस्तुतं स्तुतम् । हिङ्कार उच्छिष्टे स्वरः साम्नो मेडिश्च तन्मयि ॥५॥**

ऋक्, यजुष्, साम आदि वेद, उद्‌गीथ, स्तुति र स्तोत्र आदि सबै कुराहरू नै त्यस अवशिष्टमै रहेका छन् । मात्र, स्वर, हिङ्कार, सामगान, गायन आदि सबै कुराहरू नै यसै यज्ञीय अवशिष्टमा नै निहित रहेका छन् र यिनीहरू नै सबै हामीभित्र स्थिर रहून् ।

**ऐन्द्राग्नं पावमानं महानाम्नीर्महाव्रतम् । उच्छिष्टे यज्ञस्याङ्गान्यन्तर्गर्भइव मातरि ॥६॥**

इन्द्राग्निको स्तुति गर्ने सूक्त, पवमान सोमलाई स्तुति गर्ने सूक्त, पावमान र महानाम्नी ऋचाहरू, महाव्रतशील यज्ञीय मन्त्रका भागहरू आदि यी सबै नै माताका गर्भमा जीव रहेझैं उसै अवशिष्टमा विद्यमान छन् ।

**राजसूयं वाजपेयमग्निष्टोमस्तदध्वरः । अर्काश्वमेधावुच्छिष्टे जीवबर्हिर्मदिन्तमः ॥७॥**
राजसूय, वाजपेय, अग्निष्टोम, अध्वर, अर्क, अश्वमेध र आनन्दप्रद जीवन रक्षक यज्ञहरू पनि यी सबै नै उसै अवशिष्टमा विद्यमान छन् ।

**अग्न्याधेयमथो दीक्षा कामप्रश्छन्दसा सह । उत्सन्ना यज्ञाः सत्त्राण्युच्छिष्टेऽधि समाहिताः ॥८॥**
अग्न्याधान, दीक्षा, छन्दले कामना पूर्ति गर्ने यज्ञ, उत्सन्न यज्ञ र सोमयागात्मक यज्ञ यी सबै नै उसै उच्छिष्टमा विद्यमान रहेका छन् ।

**अग्निहोत्रं च श्रद्धा च वषट्कारो व्रतं तपः । दक्षिणेष्टं पूर्तं चोच्छिष्टेऽधि समाहिताः ॥९॥**
अग्निहोत्र, श्रद्धा, वषट्कार, व्रत, तप, दक्षिणा र अभीष्टपूर्ति आदि सबै यज्ञादि नियमहरू उसै अवशिष्टमै निहित छन् ।

**एकरात्रो द्विरात्रः सद्यः क्रीः प्रक्रीरुक्थ्यः । ओतं निहितमुच्छिष्टे यज्ञस्याणूनि विद्यया ॥१०॥**
एकरात्र, द्विरात्र, सोमयाग, सद्य क्री, प्रक्री आदि एकै दिनमा पूरा गरिने खालका सोमयज्ञहरू सबै नै, गानका साथमा सम्पन्न गरिने उक्थ्य नामका यज्ञ आदि सबै यज्ञहरू नै र ब्रह्मविद्याका बाँकी रहेका सबै किसिमका अंशहरू उसै उच्छिष्टकै आश्रयमा रहेका हुन्छन् ।

**चतूरात्रः पञ्चरात्रः षड्रात्रश्चोभयः सह । षेडशी सप्तरात्रश्चोच्छिष्टाज्जज्ञिरे सर्वे ये यज्ञा अमृते हिताः ॥११॥**
चतुरात्र, पञ्चरात्र, षड्रात्र, यिनीहरूका दुई गुना समयमा गरिने यज्ञ तथा षोडश र सप्तरात्रका यज्ञहरू पनि उसै उच्छिष्टबाट नै निर्मित भएका हुन् । यी सबैले अमृतमय फल प्रदान गर्दछन् ।

**प्रतीहारो निधनं विश्वजिच्चाभिजिच्च यः । साह्नातिरात्रावुच्छिष्टे द्वादशाहोऽपि तन्मयि ॥१२॥**
प्रतिहार, निधन, विश्वजित्, अभिजित्, साह्न, अतिरात्र, द्वादशाह आदि सबै यज्ञहरू नै उच्छिष्टरूपी ब्रह्मज्ञानको चेतनाले युक्त छन् । यी सबै नै हामीभित्र स्थित होऊन् ।

**सूनृता संनतिः क्षेमः स्वधोर्जामृतं सहः । उच्छिष्टे सर्वे प्रत्यञ्चः कामाः कामेन तातृपुः ॥१३॥**
सत्यनिष्ठ वाणी, विनम्रभाव, कल्याण, पितृहरूलाई सन्तुष्टि गराउने स्वधा, बलप्रदायक अन्न अमरत्व प्रदान गर्ने अमृत, पराक्रमयुक्त शक्ति आदि, सबै खालका अभीष्ट पूरा गराउने यज्ञ यी सबैले अभीष्ट पूरा गराउँछन् र यी सबै नै उसै अवशिष्टमा निहित रहेका छन् ।

**नव भूमीः समुद्रा उच्छिष्टेऽधि श्रिता दिवः । आ सूर्यो भात्युच्छिष्टेऽहोरात्रे अपि तन्मयि ॥१४॥**
नौ तल्ला भएको भूमि, सात समुद्र, दिव्यलोक, सूर्यदेवता, दिन र रात आदि पनि उसै उच्छिष्टमा नै सन्निहित छन् भन्ने किसिमको सम्पूर्ण ज्ञान हामीभित्र स्थित होस् ।

**उपहव्यं विषूवन्तं ये च यज्ञा गुहा हिताः । बिभर्ति भर्ता विश्वस्योच्छिष्टो जनितुः पिता ॥१५॥**
उपहव्य, विषूवान्, गुफामा आश्रित यज्ञ आदि जेजति छन्, तिनीहरू सबैलाई विश्वका पोषक पितालाई पनि उत्पन्न गराउने उसै उच्छिष्टले आफूभित्र धारण गरेको छ ।

**पिता जनितुरुच्छिष्टोऽसोः पौत्रः पितामहः । स क्षियति विश्वस्येशानो वृषा भूम्यामतिघ्न्यः ॥१६॥**
त्यही उच्छिष्ट उत्पन्नकर्ताको पनि परम पिता हो । त्यही उच्छिष्ट प्राणको पौत्र र पितामह पनि हो । विश्वको नियन्ता उही हुनाले त्यो सर्वव्यापक छ र सर्वसमर्थ तथा पृथ्वीमा सर्वोत्तम रूपमा रहेको छ ।

**ऋतं सत्यं तपो राष्ट्रं श्रमो धर्मश्च कर्म च । भूतं भविष्यदुच्छिष्टे वीर्यं लक्ष्मीर्बलं बले ॥१७॥**
ऋत, सत्य, तप, राष्ट्र, श्रमशीलता, क्रियाशीलता, उत्पन्नभूत, उत्पन्न हुने भविष्य, वीर्यरूपी ... शक्ति, श्रीसम्पदा र बल आदि यी सबै नै उसै उच्छिष्टमा आश्रित रहेका छन् ।

**समृद्धिरोज आकूतिः क्षत्रं राष्ट्रं षडुर्व्यः । संवत्सरोऽध्युच्छिष्ट इडा प्रैषा ग्रहा हविः ॥१८॥**
समृद्धि, ओज, सङ्कल्प, बल, क्षात्रतेज, क्षात्रधर्मले संरक्षित राष्ट्र, छ किसिमका भूमिहरू, संवत्सर, इडा नामकी अन्नकी देवी, ऋत्विक्हरूलाई कर्ममा प्रेरित गर्ने प्रैष आदि मन्त्र, ग्रह आदि पात्रहरू, चरुले युक्त हवि यी सबै नै उसै अवशिष्टरूपी परब्रह्ममा नै निहित रहेका छन् ।

**चतुर्होतार आप्रियश्चातुर्मास्यानि नीविदः । उच्छिष्टे यज्ञा होत्राः पशुबन्धास्तदिष्टयः ॥१९॥**
चतुर्होता, आप्रिय, चातुर्मास्य, स्तोताको गुण प्रकट गराउने मन्त्र, वषट्कार उच्चारण गर्ने सात किसिमका यज्ञका होता, पशुबन्ध र त्यसका इष्टिहरू सबै नै उसै उच्छिष्टमा नै समाहित रहेका छन् ।

**अर्धमासाश्च मासाश्चार्तवा ऋतुभिः सह । उच्छिष्टे घोषिणीरापः स्तनयित्नुः श्रुतिर्मही ॥२०॥**
आधा महिनाका पक्ष, महिनाहरू, ऋतुहरूका साथै ऋतुअनुसारका पदार्थ, घोषयुक्त जल, गर्जन गर्ने मेघ र विचित्रताले युक्त पवित्र भूमण्डल आदि सबै नै उसै अवशिष्टमा समाहित रहेका छन् ।

**शर्कराः सिकता अश्मान ओषधयो वीरुधस्तृणा । अभ्राणि विद्युतो वर्षमुच्छिष्टे संश्रिता श्रिता ॥२१॥**
ढुङ्गेनी बालुवा, मसिनो बालुवा, ढुङ्गा, औषधि, वनस्पति, घाँस, जलले भरिएको बादल, विद्युत्, वर्षा आदि सबै नै उसै उच्छिष्टरूपी ब्रह्ममा आश्रित रहेका छन् ।

**राद्धिः प्राप्तिः समाप्तिर्व्याप्तिर्मह एधतुः । अत्याप्तिरुच्छिष्टे भूतिश्चाहिता निहिता हिता ॥२२॥**
पूर्ण सिद्धि, इष्ट फलप्राप्ति, सम्यक् प्राप्ति, अनेकौं किसिमका पदार्थहरूको प्राप्ति, सर्वत्र व्याप्ति, तेजस्विता, अभिवृद्धि, समृद्धि, अत्यधिक प्राप्ति र ऐश्वर्यशीलता आदि सबै कुराहरू नै उसै उच्छिष्टरूपी ब्रह्ममा आश्रय लिएका हुन्छन् ।

**यच्च प्राणति प्राणेन यच्च पश्यति चक्षुषा । उच्छिष्टाज्जज्ञिरे सर्वे दिवि देवा दिविश्रितः ॥२३॥**
प्राण धारण गरेका प्राणीहरू, आँखाले देख्ने किसिमका प्राणीहरू पनि उसै उच्छिष्टमा नै निहित छन् । दिव्यलोकमा विद्यमान देवशक्तिहरू पनि उसै उच्छिष्टमा नै आश्रित रहेका छन् ।

**ऋचः सामानि च्छन्दांसि पुराणं यजुषा सह । उच्छिष्टाज्जज्ञिरे सर्वे दिवि देवा दिविश्रितः ॥२४॥**
ऋक्, यजुष्, साम, अथर्व आदि छन्दयुक्त वेदहरू द्युलोक र स्वर्गमा रहेका सबै देवताहरू पनि उसै उच्छिष्टमा नै स्थित छन् ।

**प्राणापानौ चक्षुः श्रोत्रमक्षितिश्च क्षितिश्च या उच्छिष्टाज्जज्ञिरे सर्वे दिवि देवा दिविश्रितः ॥२५॥**
प्राण, अपान, श्रोत्र, चक्षु, भौतिक र अक्षय चेतनशीलता र दिव्यलोकका देवताहरू पनि उसै उच्छिष्टरूपी परब्रह्मबाटै उत्पन्न भएका हुन् ।

**आनन्दा मोदाः प्रमुदोऽभीमोदमुदश्च ये । उच्छिष्टाज्जज्ञिरे सर्वे दिवि देवा दिविश्रितः ॥२६॥**
आनन्द, मोद, प्रमोद, प्रत्यक्षीभूत आनन्द र स्वर्गीय देवताको समूह यी सबै नै उसै उच्छिष्टबाटै उत्पन्न भएका हुन् ।

**देवाः पितरो मनुष्या गन्धर्वाप्सरसश्च ये । उच्छिष्टाज्जज्ञिरे सर्वे दिवि देवा दिविश्रितः ॥२७॥**
देवता, पितृ, मानिस, गन्धर्व, अप्सरा आदि र यिनका समूह पनि उसै उच्छिष्टबाटै उत्पादित हुन् ।

## १०. अध्यात्म सूक्त

**ऋषि—** कौरुपथि । **देवता—** अध्यात्म, मन्यु । **छन्द—** अनुष्टुप्, पथ्यापङ्क्ति ।

**यन्मन्युर्जायामावहत् संकल्पस्य गृहादधि । क आसं जन्याः के वराः क उ ज्येष्ठवरोऽभवत् ॥१॥**
आत्मबलका रूपमा रहेको मन्युका सङ्कल्पस्रोतका प्रभावले आफ्नै सङ्कल्पशक्तिरूपमा स्त्रीलाई प्राप्त गरिएको थियो, त्यस बेला कन्यापक्षका मानिस कोको थिए ? वरपक्षका मानिस कोको थिए ? तिनीहरूमध्ये कसले कसलाई श्रेष्ठ वरको संज्ञा दिएर विभूषित गराएका थिए ?

**तपश्चैवास्तां कर्म चान्तर्महत्यर्णवे । त आसं जन्यास्ते वरा ब्रह्म ज्येष्ठवरोऽभवत् ॥२॥**

सृष्टिभन्दा पहिले नै सृष्टिको मूल तत्त्वका रूपमा रहेको अर्णव नाम दिइएको महासागरका बीचमा तपस्या र कर्म नामका दुई वटा पक्ष थिए । तिनीहरू नै वरको पक्षका र कन्याको पक्षका मानिस हुन् र ब्रह्मा नै त्यस बेलाका सबैभन्दा उत्तम वरका रूपमा रहेका थिए ।

**दश साकमजायन्त देवा देवेभ्यः पुरा । यो वै तान् विद्यात् प्रत्यक्षं स वा अद्य महद् वदेत् ॥३॥**

अधिष्ठाता देवताबाट दस देवताहरू उत्पन्न भए । जुन साधकहरूले प्रत्यक्ष रूपमा यिनको निश्चित रूपमा साक्षात्कार गरे, उनै मानिस ज्ञानी भए र देशकालको सीमाभन्दा पर रहेका ब्रह्मज्ञानका विषयमा बताउनका लागि समर्थ पनि भए ।

**प्राणपानौ चक्षुः श्रोत्रमक्षितिश्च क्षितिश्च या । व्यानोदानौ वाङ् मनस्ते वा आकूतिमावहन् ॥४॥**

प्राण, अपान, नेत्र, श्रवणेन्द्रिय, अक्षुण्ण ज्ञानशक्ति, क्षयशील भौतिक शक्ति, अन्नरस सञ्चार गराउने प्रवृत्ति भएको व्यान, शरीरको माथिल्लो भागमा उद्गार गराउने प्रक्रियामा लागेको उदान, वाणी र मस्तिष्क गरी यी दस किसिमका प्राण निश्चित रूपमा नै सङ्कल्पशक्तिलाई धारण गर्ने खालका हुन् ।

**अजाता आसन्नृतवोऽथो धाता बृहस्पतिः । इन्द्राग्नी अश्विना तर्हि कं ते ज्येष्ठमुपासत ॥५॥**

ऋतुहरू, धाता, बृहस्पतिदेवता, देवराज इन्द्र, अग्निदेवता र अश्विनीकुमारहरू यी कुनै पनि देवताहरू उत्पन्न नभईकन नै यिनीहरूले आफूलाई उत्पन्न गर्नका लागि कस्ता किसिमको उपासना गरेका थिए ?

**तपश्चैवास्तां कर्म चान्तर्महत्यर्णवे । तपो ह जज्ञे कर्मणस्तत् ते ज्येष्ठमुपासत ॥६॥**

ज्ञानले युक्त तपस्या र त्यसको फलका रूपमा रहेको कर्म नै विशाल समुद्रमा विद्यमान रहेका थिए । कर्मशक्तिले तप उत्पन्न भयो, त्यसो भएपछि नै त्यसले धाता आदि देवताहरूले आआफ्नो उत्पत्तिका लागि त्यसैको उपासना गर्दछन् ।

**येत आसीद् भूमिः पूर्वा यामद्धातय इद् विदुः । यो वै तां विद्यान्नामथा स मन्येत पुराणवित् ॥७॥**

वर्तमान भूमिरूपी पृथ्वीको कायाभन्दा पहिले नै बितेका जीवनका रूपमा जेजति कल्पहरू थिए वा भूमि थियो, उसैलाई तपस्याका प्रभावले सर्वज्ञ महर्षिहरूले जानेका थिए । अतीत कालका भूमिलाई विभिन्न किसिमका नामले जसले जानेको छ, उही पुराणरूपी पुरातन विषयको जानकार हो भनिन्छ ।

**कुत इन्द्रः कुतः सोमः कुतो अग्निरजायत । कुतस्त्वाष्टा समभवत् कुतो धाताजायत ॥८॥**

त्यस समयमा इन्द्र, अग्नि, सोम, त्वष्टा, धाता आदि देवताहरू कोकोबाट कोको उत्पन्न भए ?

**इन्द्रादिन्द्रः सोमात् सोमो अग्नेरग्निरजायत । त्वष्टा ह जज्ञे त्वष्टुर्धातुर्धाताजायत ॥९॥**

इन्द्रबाट इन्द्र, सोमबाट सोम, अग्निबाट अग्नि, त्वष्टाबाट त्वष्टा र धाताबाट धाता उत्पन्न भएका हुन् ।

**ये त आसन् दश जाता देवा देवेभ्यः पुरा । पुत्रेभ्यो लोकं दत्त्वा कस्मिंस्ते लोक आसते ॥१०॥**

यी अग्नि आदि अधिष्ठाता देवताहरूबाट पूर्वोक्त प्राण, अपान आदि दस देवताहरू उत्पन्न भए, अनि तिनै देवताहरूले आआफ्ना पुत्रहरूलाई कहाँकहाँ स्थान दिएर कुनकुन लोकमा आश्रयीभूत गराए ?

**यदा केशानस्थि स्नाव मांसं मज्जानमाभरत् । शरीरं कृत्वा पादवत् कं लोकमनुप्राविशत् ॥११॥**

सृष्टिका रचना गर्दा स्रष्टाले जब कपाल, हड्डी, नसा, मांस, मज्जा आदि एकत्र गरे, अनि तिनैबाट हातगोडा आदि अङ्गप्रत्यङ्गको रचना गर्दै कुन लोकमा अनुकूलतापूर्वक प्रवेश गरे ?

**कुतः केशान् कुतः स्नाव कुतो अस्थीन्याभरत् । अङ्गा पर्वाणि मज्जानं को मांसं कुत आभरत् ॥१२॥**

ती सृष्टिकर्ताले कुनकुन उपकरणले केश, स्नायुभाग बनाए र कहाँबाट हड्डीको खाँचो पूरा गरे ? कताबाट शारीरिक अङ्गअवयवहरू, मांसमज्जा आदि एकत्र गरे ? यस्तो कुरो बताउन सक्ने को होला ?

**संसिचो नाम ते देवा ये संभारान्त्समभरन् । सर्वं संसिच्य मर्त्यं देवाः पुरुषमाविशन् ॥१३॥**

सेचन गर्नमा कुशल हुनाले ती देवताहरूलाई संसिच भन्ने नाम राखिएको छ । ती देवताले यस खालको मरणशील शरीरलाई रगतले चिसो बनाएर त्यसैलाई पुरुषको आकारमा बनाएर उनीहरू त्यसैभित्र प्रवेश गरे ।

**ऊरू पादावष्ठीवन्तौ शिरो हस्तावथो मुखम् । पृष्टीर्बर्जह्ये पार्श्वे कस्तत् समदधादृषिः ॥१४॥**

कुन ऋषिले तिघ्रा, घुँडा, गोडा, शिर, हात, मुख, पिठ्युँ, हत्केला र मांसपेशी आदि सबै अङ्गमा आपसमा व्यवस्थित गराए ?

**शिरो हस्तावथो मुखं जिह्वां ग्रीवाश्च कीकसाः । त्वचा प्रावृत्य सर्वं तत् संधा समदधान्मही ॥१५॥**

शिर, हात, मुख, जिब्रो, घाँटी र हड्डीहरू आदि सबैमाथि छालाको खोल ओढाएर उनै देवताहरूले आआफ्ना काममा खटाए ।

**यत्तच्छरीरमशयत् संधया संहितं महत् । येनदमद्य रोचते को अस्मिन् वर्णमाभरत् ॥१६॥**

यहाँ देखिएका यस विशाल शरीरलाई जोड्ने सन्धाता देवताले जेजति अवयवहरू जोडेका छन्, त्यो शरीर जुन वर्ण, प्रकृति र रङ्गमा प्रकाशित भएको छ, त्यस रूपमा वर्णको स्थापना कुन देवताले गरेका हुन् ?

**सर्वे देवा उपाशिक्षन् तदजानाद् वधूः सती । ईशा वशस्य या जाया सास्मिन् वर्णमाभरत् ॥१७॥**

देवताहरूले नै शिक्षाका लागि प्रतिभा प्रदान गरे । धर्ममा स्थिर वधूरूपी सर्जक शक्तिले त्यसलाई बुझेको थियो । सबैलाई वशमा राखेर शासन चलाउने त्यस जायारूपी जन्मदात्रीले अङ्गमा वर्ण र प्रवृत्तिहरू भरिदिएको हो ।

**यदा त्वष्य व्यतृणत् पिता त्वष्टुर्य उत्तरः । गृहं कत्वा मर्त्यं देवाः पुरुषमाविशन ॥१८॥**

संसारका उत्पादक श्रेष्ठ आदिदेव नै त्वष्टा हुन् र उनले जब नेत्र, कान आदि छिद्रहरूको रचना गरे, त्यसपछि मानिसका शरीरलाई घरका रूपमा स्वीकार गर्दै प्राण, अपान र इन्द्रिय आदि देवताहरू तिनैमा प्रवेश गरे ।

**स्वप्नो वै तन्द्रीर्निर्ऋतिः पाप्मानो नाम देवताः । जरा खालत्यं पालित्यं शरीरमनु प्राविशन् ॥१९॥**

स्वप्न, निद्रा, आलस्य, झर्को आदि पापमूलक देवताहरूले वृद्ध अवस्थामा क्षय गर्नका लागि तालु खुइलिने, कपाल फुल्ने आदि गुणहरूका साथमा प्रवेश गरे ।

**स्तेयं दुष्कृतं वृजिनं सत्यं यज्ञो यशो बृहत् । बलं च क्षत्रमोजश्च शरीरमनु प्राविशन् ॥२०॥**

चोरी, दुराचारी, कुटिलता, सत्य, यज्ञ, महान् कीर्ति, बल, क्षात्रतेज र सामर्थ्यशक्ति आदि सबै खालका विशेषताहरू पनि मानिसका शरीरमा प्रवेश गरे ।

**भूतिश्च वा अभूतिश्च रातयोऽरातयश्च याः । क्षुधश्च सर्वास्तृष्णाश्च शरीरमनु प्राविशन् ॥२१॥**

सम्पन्नता, विपन्नता, दानवृत्ति, कन्जुसी, भोकतिर्खा आदि यी सबै कुराहरू मानिसका शरीरमा प्रवेश भए ।

**निन्दाश्च वा अनिन्दाश्च यच्च हन्तेति नेति च । शरीरं श्रद्धा दक्षिणा श्रद्धा चानु प्राविशन् ॥२२॥**

निन्दा, स्तुति, आनन्दप्रदायक वस्तु, आनन्दमा खलल पार्ने कुराहरू, शोक, श्रद्धा, धनसमृद्धिका रूपमा दक्षता, दक्षिणा, अश्रद्धा आदि पनि मानिसका शरीरमा प्रवेश गर्दै गए ।

**विद्याश्च वा अविद्याश्च यच्चान्यदुपदेश्यम् । शरीरं ब्रह्म प्राविशदृचः सामाथो यजुः ॥२३॥**

आत्मज्ञान रूपी वेदविद्या, भौतिक विद्यारूपी अविद्या र अन्य उपदेश दिनका लागि योग्य शब्दहरू र तिनका साथमा ऋक्, साम, यजुष् आदि वेदहरू पनि सबै नै यिनै मानिसका शरीरमा प्रवेश गरे ।

**आनन्दा मोदाः प्रमुदोऽभीमोदमुदश्च ये । हसो नरिष्ट्य नृत्तानि शरीरमनु प्राविशन् ॥२४॥**

आनन्द, हर्ष, खुसी, हाँसोठट्टा, हाँसोको चेष्टा र नाचगान आदि सबै नै मानिसका शरीरमा प्रवेश गरे ।

**आलापाश्च प्रलापाश्चाभीलापलपश्च ये । शरीरं सर्वे प्राविशन्नायुजः प्रयुजो युजः ॥२५॥**

आलापका रूपमा सार्थक कथन, प्रलापका रूपमा निरर्थक भनाइ र वार्तालापका रूपमा दोहोरो कथन यी सबैले मानिसका शरीरमा प्रवेश गरे । त्यसै गरी आयोजन, प्रयोजन र योजन पनि मनिसका शरीरमा प्रविष्ट भए ।

**प्राणापानौ चक्षुः श्रोत्रमक्षितिश्च क्षितिश्च या । व्यानोदानौ वाङ् मनः शरीरेण त ईयन्ते ॥२६॥**

प्राण, अपान, चक्षु, कान, जडचेतन, व्यान, उदान, वाणी र मन यी सबै कुराहरू मानिसका शरीरमा प्रवेश भएर आआफ्ना काममा संलग्न भए ।

**आशिषश्च प्रशिषश्च संशिषो विशिषश्च याः । चित्तानि सर्वे संकल्पाः शरीरमनु प्राविशन् ॥२७॥**

प्रार्थना, आशीष, घोषणा, प्रशासन, सहमति, विशेष अनुशासन, मन, बुद्धि, चित्त र अहङ्कारका सबै खालका वृत्तिहरू मानिसका शरीरमा प्रवेश गरे ।

**आस्तेयीश्च वास्तेयीश्च त्वरणाः कृपणोश्च याः । गुह्याः शुक्रा स्थूला अपस्ता बिभत्सावसादयन् ॥२८॥**

स्नानमा प्रयोग भएर शुद्ध गराउने जल, स्नान गर्न र पापन गर्न योग्य जल, प्राणलाई बचाउने जल, शीघ्रगामी जल, अल्प जल, गुफाभित्रको जल, शुक्ररूपी जल, स्थूल जल र बीभत्स भावरूपी जल पनि विचित्र किसिमका भावभङ्गिमासहित प्रवाहका साथ मानिसका शरीरमा प्रवेश हुन पुगे ।

**अस्थि कृत्वा समिधं तदष्यपो असादयन् । रेतः कृत्वाज्यं देवाः पुरुषमाविशन् ॥२९॥**

अस्थिहरूलाई आधाररूप समिधा बनाएर आठ किसिमका जलले शरीरका आकृतिलाई कुँदे र वीर्यलाई घिउका रूपमा प्रयोग गरेर देवताहरू मानिसका शरीरमा प्रवेश गरे ।

**या आपो याश्च देवता या विराड् ब्रह्मणा सह । शरीरं ब्रह्म प्राविशच्छरीरेऽधि प्रजापतिः ॥३०॥**

यही जलका रूपमा देवगण विराट् ब्रह्मका साथ अव्यक्त रूपमा रहेको हुन्छ । त्यही देवगण ब्रह्मतेजका साथै मानिसका शरीरमा प्रविष्ट भएको हो । ब्रह्म पनि शरीरमा प्रविष्ट भयो र उहाँ ब्रह्म प्रजापतिका रूपमा स्वामी बनेर देहमा स्थित भएको हुन्छ ।

**सूर्यश्चक्षुर्वातः प्राणं पुरुषस्य वि भेजिरे । अथास्येतरमात्मानं देवाः प्रायच्छन्नग्नये ॥३१॥**

सूर्यदेवताले आँखालाई , वायुदेवताले नाकलाई आआफ्ना भागका रूपमा स्वीकार गरे । त्यसबाहेक छ वटा कोशयुक्त शरीरलाई सबै देवताहरूले अग्निको भागका रूपमा प्रदान गरे ।

**तस्माद् वै विद्वान् पुरुषमिदं ब्रह्मेति मन्यते । सर्वा ह्यस्मिन् देवता गावो गोष्ठ इवासते ॥३२॥**

यस किसिमका सबै कुराहरू जान्ने मानिस नै विद्वान् हो र उसले यो शरीर नै ब्रह्मको स्वरूप हो भन्ने कुरो जानेको तथा मानेको हुन्छ । किनभने यसभित्र सबै किसिमका देवशक्तिहरू गोठमा गाई बन्को लागेर बसेझैँ बसेका हुन्छन् ।

**प्रथमेन प्रमारेण त्रेधा विष्वङ् वि गच्छति । अद एकेन गच्छत्यद एकेन गच्छतीहैकेन नि षेवते ॥३३॥**

यो जीवात्मा मृत्युका क्रममा एक किसिमले श्रेष्ठ कर्मबाट उच्च लोकतर्फ जान्छ भने अर्को किसिमले हीन कर्म गरेर निम्न लोकतर्फ जान्छ । अनि फेरि अर्को किसिमका कर्मले फेरि पनि यसै विश्वको भोग गर्ने गर्दछ ।

**अप्सु स्तीमासु वृद्धासु शरीरमन्तरा हितम् । तस्मिञ्छवोऽध्यन्तरा तस्माच्छवोऽध्युच्यते ॥३४॥**

पोषक तत्त्वका रूपमा रहेको अप् अर्थात् जलका प्रवाहले अन्तरिक्षरूपी गर्भमा आफ्नो शरीरलाई वृद्धि गराउँछ । त्यसो भएकैले यसलाई शव अर्थात् वृद्धि गराउने भनिएको हो । त्यसभित्र स्थापित भएर रहेको त्यो बढाउने आत्मतत्त्वलाई नै शव भनिएको हो ।

## ११. शत्रुनिवारण सूक्त

**ऋषि–** काङ्कायन । **देवता–** अर्बुदि । **छन्द–** अनुष्टुप्, त्र्यवसाना सप्तपदा विराट् शक्वरी, परोष्णिक्, त्र्यवसाना उष्णिक् बृहतीगर्भा परापत्रष्टुप् षट्पदा अतिजगती, पथ्यापङ्क्ति, त्र्यवसाना सप्तपदा शक्वरी, त्र्यवसाना पञ्चपदा विराट् उपरिष्टाज्ज्योति त्रिष्टुप्, त्रिपदा गायत्री ।

**ये बाहवो या इषवो धन्वनां वीर्याणि च । असीन् परशूनायुधं चित्ताकूतं च यद्धृदि । सर्वं तदर्बुदे त्वममित्रेभ्यो दृशे कुरूदारांश्च प्र दर्शय ॥१॥**

हे अर्बुद ! तिम्रा यी विशाल बाहु, बाण, धनुष, तरबार, परशु आदि आयुधहरूका साथ रहेका पराक्रम र सङ्कल्पलाई हाम्रा मित्रहरूभन्दा बाहेकले देख्ने गरी अगाडि ल्याऊ । यी शस्त्रहरू आततायीलाई देखाऊ । यस्ता घातक शस्त्र देखाएर शत्रुलाई वशमा गर ।

**उत्तिष्ठत सं नह्यध्वं मित्रा देवजना यूयम् । संदृष्ट्य गुप्ता वः सन्तु या नो मित्राण्यर्बुदे ॥२॥**

हे मित्रदेवताहरू हो ! तिमीहरू उठ र युद्धका लागि तयार होओ । हे शत्रुनाशक अर्बुद ! हाम्रा मित्रहरू जतिलाई तिमी उचित किसिमले सुरक्षित राख । हाम्रा सबै वीर सैनिकहरू तिमीबाट उचित किसिमले सुरक्षित होऊन् ।

**उत्तिष्ठतमा रभेथामादानसंदानाभ्याम् । अमित्राणां सेना अभि धत्तमर्बुदे ॥३॥**

हे अर्बुद ! तिमी आफ्ना स्थानबाट उठ र आफ्नो कार्य गर्न थाल । आदान र सन्दान विधिसहितका उपकरणले शत्रुका सेनालाई वशमा गराऊ ।

**अर्बुदिर्नाम यो देव ईशानश्च न्यर्बुदिः । याभ्यामन्तरिक्षमावृतमियं च पृथिवी मही । ताभ्यामिन्द्रमेदिभ्यामहं जितमन्वेमि सेनया ॥४॥**

अर्बुद र न्यर्बुद नामका प्रसिद्ध देवताहरू छन्, उनीहरूले अन्तरिक्ष र भूमण्डल ढाकेका छन् । इन्द्रका त्यस्ता स्नेही अर्बुदि र न्यर्बुदिले विजय प्राप्त गराउँछन् भन्ने खालको हाम्रो मान्यता रहेको छ ।

**उत्तिष्ठ त्वं देवजनार्बुदे सेनया सह । भञ्जन्नमित्राणां सेनां भोगेभिः परि वारय ॥५॥**

हे देवसमुदायमा रहेका अर्बुद ! तिमी आफ्ना सैन्यशक्तिका साथ उठ र शत्रुको शक्ति खण्डित

गराउँदै तिनीहरूलाई चारै तिरबाट छेकेर पर पुऱ्याइदेऊ ।

**सप्त जातान् न्यर्बुद उदाराणां समीक्षयन् । तेभिष्ट्वमाज्ये हुते सर्वैरुत्तिष्ठ सेनया ॥६॥**

हे न्यर्बुद ! सात किसिमका अस्त्रहरूको समीक्षा गर्दै घिउको आहुति प्रदान गरेपछि आफ्नो सैन्यशक्तिका साथमा तिमी पनि उठेर तयार होऊ ।

**प्रतिघ्नानाश्रुमुखी कृधुकर्णी च क्रोशतु । विकेशी पुरुषे हते रदिते अर्बुदे तव ॥७॥**

हे अर्बुद ! तिम्रा प्रहारले गर्दा पुरुष र पुरुषार्थ नष्ट भएपछि शत्रुको शक्ति पनि श्रीहीन, लथालिङ्ग र आँखाभरि आँसु भएर मनमनै पिरोलिइरहून् ।

**संकर्षन्ती करूकरं मनसा पुत्रमिच्छन्ती । पतिं भ्रातरमात् स्वान् रदिते अर्बुदे तव ॥८॥**

हे अर्बुद ! तिमीले आक्रमण गरेपछि त्यस किसिमका शत्रुशक्तिले आआफ्ना कार्य सम्हाल्दै दाजुभाइ, आफन्त र नातागोताको हित तथा सुरक्षाको कामना गर्नेतिर लागून् ।

**अलिक्लवा जाष्कमदा गृध्राः श्येनाः पतत्रिणः । ध्वाङ्क्षाः शकुनयस्तृप्यन्त्वमित्रेषु समीक्षयन् रदिते अर्बुदे तव ॥९॥**

हे शत्रुनाशक अर्बुद ! तिम्रा प्रहारले शत्रु नष्ट भएपछि भयङ्कर खालका अनेकौँ विशाल गिद्ध, बाज, काग आदि जस्ता मांसभक्षी पक्षीहरू उनलाई खाएर अघाऊन्, तिमी ती शत्रुलाई हेर ।

**अथो सर्वं श्वापदं मक्षिका तृप्यतु क्रिमिः । पौरुषेयेऽधि कुणपे रदिते अर्बुदे तव ॥१०॥**

हे शत्रुसंहारक अर्बुद ! तिमीले नष्ट गराइसकेपछि, स्याल, ब्वाँसा, झिँगा र औँसाहा आदि किराहरूले यी सबै शत्रुका लास खाएर अत्यन्त सन्तुष्ट होऊन् ।

**आ गृह्णीतं सं बृहतं प्राणापानान् न्यर्बुदे । निवाशा घोषाः सं यन्त्वमित्रेषु समीक्षयन् रदिते अर्बुदे तव ॥११॥**

अर्बुद र न्यर्बुद नामका हे वीरहरू हो ! तिमीहरू दुवैले शत्रुको प्राण हरण गर र कोलाहाल र हाहाकार मच्चिने गरी उनीहरूलाई समूल नाश गराओ ।

**उद् वेपय सं विजन्तां भियामित्रान्त्सं सृज । उरुग्राहैर्बाह्वङ्कैर्विध्यामित्रान् न्यर्बुदे ॥१२॥**

हे न्यर्बुद ! तिमी हाम्रा शत्रुलाई डरले थर्कमान गराऊ, शत्रुहरू डरले थर्किएर भागून् । त्यसपछि तिमी हाम्रा शत्रुलाई हातगोडाले काम गर्न नसक्ने बनाएर दुःख देऊ ।

**मुह्यन्त्वेषां बाहवश्चित्ताकूतं च यद्धृदि । मैषामुच्छेषि किं चन रदिते अर्बुदे तव ॥१३॥**

हे शत्रुको संहार गर्ने अर्बुद ! तिमीले सताएका शत्रुहरूका पाखुरा थाकून्, मनको अठोट उनले बिर्सिऊन् । यी शत्रुका रथ, हात्ती, अश्व आदि केही पनि सुरक्षित रहन नपाऊन् ।

**प्रतिघ्नानाः सं धावन्तूरः पटूरावाघ्नानाः । अघारिणीर्विकेश्यो रुदत्य१ः पुरुषे हते रदिते अर्बुदे तव ॥१४॥**

हे शत्रुविनाशक अर्बुद ! तिमीले प्रहार गरेकाले पुरुष र पुरुषत्व नाश भएपछि शत्रुको शक्तिका रूपमा रहेका स्त्रीहरू आधारहीन भएर जगल्टा फिँजाएर छाती पिट्दै रोएर यहाँबाट अरूतिरै भागून् ।

**श्वन्वतीरप्सरसो रूपका उतार्बुदे । अन्तःपात्रे रेरिहतीं रिशां दुर्णिहितैषिणीम् । सर्वास्ता अर्बुदे त्वममित्रेभ्यो दृशे कुरूदारांश्च प्र दर्शय ॥१५॥**

हे अर्बुद ! फूल फक्रेझैँ रूपवती देखिने अप्सरा, अन्तःकरणरूपी पात्रलाई उत्तेजित गर्ने पीडा, मायारूपी सेना, ऊर्ध्व अस्त्र र भयङ्कर दैत्यहरू यी सबै कुरा तिमी शत्रुलाई नै देखाऊ ।

**खड्रूरेऽधिचङ्क्रमां खर्विकां खर्ववासिनीम् । य उदारा अन्तर्हिता गन्धर्वाप्सरसश्च ये । सर्पा इतरजना रक्षांसि ॥१६॥**

अन्तःकरणमा भ्रमण गर्ने, अत्यन्तै साना स्थानमा रहने, हिंस्रक पक्षिकाहरू, माथि बसेर गोप्य रूपमा उत्पीडक शस्त्र प्रहार गर्दछन्, ती सबै शत्रुलाई देखाऊ । आफ्नो छलले गर्दा नदेखिने गरेका गन्धर्व, अप्सरा, सर्प, राक्षस यी सबै कुराहरू शत्रुलाई पराजित गर्नका लागि उनका

सेनालाई देखाइदेऊ ।

**चतुर्दंष्ट्राञ्छ्यावदतः कुम्भमुष्काँ असृङ्मुखान् । स्वभ्यसा ये चोद्भयसाः ॥१७॥**

चार किसिमका दाह्रा भएका, काला दाँत भएका, थैलाजत्रा अण्डकोश भएका, मुखमा रगत पोतिएका, देख्दै डर लाग्दा र डर देखाउने खालका यी सबै शत्रुलाई देखाएर उनलाई भयाक्रान्त गराऊ ।

**उद् वेपय त्वमर्बुदेऽमित्राणाममूः सिचः । जयांश्च जिष्णुश्चामित्राञ्जयतामिन्द्रमेदिनौ ॥१८॥**

हे न्यर्बुद ! तिमी हाम्रा शत्रुका सेनालाई शोकाकुल र कम्पायमान गराऊ । तिमीहरू दुवै विजयशील इन्द्रदेवताका मित्रजस्तै हौ । त्यसो हुनाले हाम्रा शत्रुहरूलाई पराजित गराउँदै हामीलाई विजयी बनाऊ ।

**प्रब्लीनो मृदितः शयां हतोऽमित्रो न्यर्बुदे । अग्निजिह्वा धूमशिखा जयन्तीर्यन्तु सेनया ॥१९॥**

हे न्यर्बुद ! हाम्रा शत्रुहरू छेकिऊन्, कुच्याइऊन्, ढलून् र यज्ञीय धुवाँको मुस्लो र आगाको लप्काले शत्रुका सेनालाई जित्दै हाम्रा सेनाका साथमा प्रस्थान गरून् ।

**तयार्बुदे प्रणुत्तानामिन्द्रो हन्तु वरंवरम् । अमित्राणां शचीपतिर्मामीषां मोचि कश्चन ॥२०॥**

हे अर्बुद ! शत्रुका श्रेष्ठ वीरुहरूलाई तिमीले युद्धभूमिबाट तिमीले भगाएपछि इन्द्रदेवताले तिनलाई छानीछानीकन मारुन् र यी शत्रुहरूमा कुनै पनि सुरक्षित भएर जान नपाऊन् ।

**उत्कसन्तु हृदयान्यूर्ध्वः प्राण उदीषतु । शौष्कास्यमनु वर्ततामममित्रान् मोत मित्रिणः ॥२१॥**

शत्रुको मन उराठिलो होस्, शत्रुको प्राण माथि रहेका अवस्थामा माथि नै शरीरको साथ छोडोस्, भयका कारण उनीहरूको मुख सुकोस् तर हाम्रा मित्रहरूलाई यस किसिमका कुनै पनि कष्ट नहोऊन् ।

**ये च धीरा ये चाधीराः पराञ्चो बधिराश्च ये । तमसा ये च तूपरा अथो बस्ताभिवासिनः । सर्वांस्ताँ अर्बुदे त्वममित्रेभ्यो दृशे कुरूदारांश्च प्र दर्शय ॥२२॥**

हे अर्बुद ! धैर्यशाली, वीर, अधैर्य भएका, काँतर, युद्धबाट भागेका, डरले शक्ति गुमाएका, अन्धकारमा परेका जेजति छन्, तिनीहरू अज्ञानमा परेका, सिङ भाँचिएका पशुजस्तै दिक्क भएर रहून् । अरू जो भेडाबाखाजस्तो कराउँदै गरेका शत्रुहरू हुन्छन्, हाम्रा वीरहरूलाई ती शत्रुको सेना पराजित गर्नका लागि तिनका अगाडि पुऱ्याइदेऊ ।

**अर्बुदिश्च त्रिषन्धिश्चामित्रान् नो वि विध्यताम् । यथैषामिन्द्र वृत्रहन् हनाम शचीपतेऽमित्राणां सहस्रशः ॥२३॥**

अर्बुद र त्रिसन्धि नामका यी दुवै देवताहरू हाम्रा वीरहरूका नायक होऊन् । यिनले शत्रुलाई अनेकौँ तरिकाले विनाश गरून् । हे वृत्रनाशक, शचीपति इन्द्रदेवता ! हामी जुन हजारौँ किसिमले यस्ता शत्रुलाई नाश गर्न सक्दछौँ, उसै किसिमले तिमी पनि यिनलाई प्रताडित गर ।

**वनस्पतीन् वानस्पत्यानोषधीरुत वीरुधः । गन्धर्वाप्सरसः सर्पान् देवान् पुण्यजनान् पितृन् । सर्वांस्ताँ अर्बुदे त्वममित्रेभ्यो दृशे कुरूदारांश्च प्र दर्शय ॥२४॥**

हे अर्बुद देवता ! वृक्ष र वनस्पतिले बनेका पदार्थहरू, औषधिहरू, लहराहरू, गन्धर्व, अप्सरा, सर्प, देवता, पुण्यात्मा, पितृ आदिलाई तिमी शत्रुका लागि प्रदर्शित गर । अनि आकाशीय शस्त्रास्त्र पनि प्रदर्शित गर, त्यसो भएपछि शत्रुको पक्ष डराउनेछ ।

**ईशां वो मरुतो देव आदित्यो ब्रह्मणस्पतिः । ईशां व इन्द्रश्चाग्निश्च मित्रः प्रजापतिः । ईशां व ऋषयश्चक्रुरमित्रेषु समीक्षयन् रदिते अर्बुदे तव ॥२५॥**

हे अर्बुद ! तिमीले आक्रमण गरेपछि, शत्रु भनेर चिनिएपछि, हाम्रा शत्रुपक्षलाई मरुत्हरूले दण्डित गरून् । इन्द्र, अग्नि आदि देवताहरूले हाम्रा शत्रुलाई नियन्त्रण गरून् । धाता, मित्र, प्रजापति, आदित्य, ब्रह्मणस्पति आदि देवता, अथर्वा, अङ्गिरा आदि ऋषिहरूले हाम्रा शत्रुलाई

नियन्त्रित गरून् ।

**तेषां सर्वेषामीशाना उत्तिष्ठत सं नह्यध्वं मित्रा देवजना यूयम् । इमं संग्रामं संजित्य यथालोकं वि तिष्ठध्वम् ॥२६॥**

हे हाम्रा मित्रका रूपमा रहेका देवताहरू हो ! तिमीहरू हाम्रा शत्रुपक्षलाई नियन्त्रण गर्नका लागि तयार भएर उठ । यस युद्धमा उचित किसिमले विजय प्राप्त गरेर आआफ्ना स्थानमा प्रस्थान गर ।

## १२. शत्रुनाशक सूक्त

**ऋषि–** भृग्वङ्गिरा । **देवता–** त्रिषन्धि । **छन्द–** अनुष्टुप्, विराट् पथ्या बृहती, त्र्यवसाना षट्पदा त्रिष्टुब्गर्भा अतिजगती, विराट् आस्तार पङ्क्ति, विराट् अनुष्टुप्, विराट् त्रिष्टुप्, पुरोविराट् पुरस्ताज्ज्योति त्रिष्टुप्, पञ्चपदा पथ्यापङ्क्ति, षट्पदा जगती, त्र्यवसाना षट्पदा ककुम्मती अनुष्टुप्, त्रिष्टुब्गर्भा शक्वरी, पथ्यापङ्क्ति, त्रिपदा गायत्री, विराट् पुरस्ताद् बृहती, ककुप् उष्णिक्, प्रस्तार पङ्क्ति ।

**उत्तिष्ठत सं नह्यध्वमुदाराः केतुभिः सह । सर्पा इतरजना रक्षांस्यमित्राननु धावत ॥१॥**

हे उदार वीरहरू हो ! तिमीहरू आआफ्ना ध्वजापताकाहरूका साथमा युद्ध गर्नका लागि निस्केका छौ । हे सर्पजस्तै आकृति भएका देवताहरू हो ! तिमीहरू राक्षस र अन्य मानिसका साथै हाम्रा शत्रुमाथि आक्रमण गर ।

**ईशां वो वेद राज्यं त्रिषन्धे अरुणैः केतुभिः सह । ये अन्तरिक्षे ये दिवि पृथिव्यां ये च मानवाः । त्रिषन्धेस्ते चेतसि दुर्णामान उपासताम् ॥२॥**

हे शत्रुहरू हो ! वज्रधारी देवताहरूले तिमीहरूलाई वशमा राखून् । हे त्रिषन्धिदेवता ! तिमी आफ्ना अरुण वर्णका ध्वजापताकाहरूका साथमा उठ र आकाश, अन्तरिक्ष तथा पृथ्वीका नराम्रो फल दिने काम गर्ने मानिसलाई हेरिराख ।

**अयोमुखाः सूचीमुखा अथो विकङ्कतीमुखाः । क्रव्यादो वातरंहस आ सजन्त्वमित्रान् वज्रेण त्रिषन्धिना ॥३॥**

वज्रका साथै फलामको फालीजस्तो मुख भएका, सियोको टुप्पोजस्तो तिखा अनेकौं काँडाहरू भएका, रुखजस्तो जताततै काँडाहरू भरिएका, काँचो मासु खाने र वायुको जस्तै तीव्र वेगले गमन गर्ने बाणहरू त्रिषन्धिदेवताले शत्रुहरूमाथि बर्साऊन् ।

**अन्तर्धेहि जातवेद आदित्य कुणपं बहु । त्रिषन्धेरियं सेना सुहितास्तु मे वशे ॥४॥**

हे जातवेद, हे आदित्य ! तिमी शत्रुका शवहरू आफूमा समेट । वज्र धारण गर्ने त्रिषन्धिदेवताका सेना उचित किसिमले हाम्रा नियन्त्रणमा रहून् ।

**उत्तिष्ठ त्वं देवजनार्बुदे सेनया सह । अयं बलिर्व आहुतस्त्रिषन्धेराहुतिः प्रिया ॥५॥**

हे देवजन, हे अर्बुद ! तिमी आफ्ना सेनाका साथमा उठ । यो आहुति तिमीलाई तृप्ति प्रदान गर्ने किसिमको छ । त्रिषन्धिदेवताका सेना पनि हाम्रो आहुतिले सन्तोष होऊन् र तिनले हाम्रा शत्रुलाई विनाश गरून् ।

**शितिपदी सं द्यतु शरव्येऽयं चतुष्पदी । कृत्येऽमित्रेभ्यो भव त्रिषन्धेः सह सेनया ॥६॥**

शितिपाद नामका यस चार पद हुने शक्तिले बाणभैँ भएर शत्रुको संहार गरोस् । हे विनाशकारिणी कृत्या ! तिमी त्रिषन्धिदेवताको वज्र धारण गर्ने सेनाका साथमा शत्रु विनाश गर्नका लागि तयार होऊ ।

**धूमाक्षी सं पततु कृधुकर्णी च क्रोशतु । त्रिषन्धेः सेनया जिते अरुणाः सन्तु केतवः ॥७॥**

मायावी धुवाँ शत्रुसेनाका आँखामा भरियोस् र तिनीहरू भुईंमा ढल्न थालून् । नगाडाको ध्वनिले सुन्ने शक्ति नष्ट भएर शत्रुसेना रुन थालून् । त्रिषन्धिदेवताका सेनाको विजय भएपछि राता वर्णका ध्वजाहरू फर्फराऊन् ।

**अवायन्तां पक्षिणो ये वयांस्यन्तरिक्षे दिवि ये चरन्ति । श्वापदो मक्षिकाः सं रभन्तामामादो गृध्राः कुणपे रदन्ताम् ॥८॥**

दिव्यलोक र अन्तरिक्षमा उड्नेघुम्ने गरेका चराहरू जति छन्, ती सबै शत्रुसेनाको मृत्यु भएपछि मासु खानका लागि उँधो मुन्टो लगाउँदै तल ओर्लिएर आऊन् । हिंस्रक पशु र भिँगाहरू शव खानका लागि ओइरिऊन् । काँचो मासु खाने गिद्धहरूले शव लुछेर खाऊन् ।

**यामिन्द्रेण संधां समधत्था ब्रह्मणा च बृहस्पते । तयाहमिन्द्रसंधया सर्वान् देवानिह हुव इतो जयत मामुतः ॥९॥**

हे बृहस्पतिदेवता ! तिमीले देवराज इन्द्र र प्रजापति ब्रह्मासित प्रतिज्ञा गरेका थियौ । हे इन्द्रदेवता ! त्यसै प्रतिज्ञाअनुसारका सन्धान क्रियाले हामी समस्त देवताहरूलाई यहाँ आह्वान गर्दछौँ । हे आह्वान गरिएका देवताहरू हो ! तिमीहरू हाम्रा सैन्यदललाई विजय श्री प्रदान गर, शत्रुसेनालाई होइन ।

**बृहस्पतिराङ्गिरस ऋषयो ब्रह्मसंशिताः । असुरक्षयणं वधं त्रिषन्धिं दिव्याश्रयन् ॥१०॥**

अङ्गिराका पुत्र देवमन्त्री बृहस्पति र आआफ्ना ज्ञानमा पोख्त अन्य सबै ऋषिहरू पनि असुर संहार गर्ने त्रिषन्धिदेवताको वज्रका कारण दिव्यलोकमा आश्रय लिन्छन् ।

**येनासौ गुप्त आदित्य उभाविन्द्रश्च तिष्ठतः । त्रिषन्धिं देवा अभजन्तौजसे च बलाय च ॥११॥**

जुन त्रिषन्धिले सूर्यदेवतालाई संरक्षित गरे, सूर्य र इन्द्र दुवै उनैबाट रक्षित रहन्छन् । त्रिषन्धि नामका वज्रलाई सबै देवताहरूले ओज र बलका लागि स्वीकार गरेका छन् ।

**सर्वाँल्लोकान्त्समजयन् देवा आहुत्यानया । बृहस्पतिराङ्गिरसो वज्रं यमसिञ्चतासुरक्षयणं वधम् ॥१२॥**

अङ्गिराका पुत्र बृहस्पतिले असुर विनाशका लागि जुन वज्र निर्माण गरे, इन्द्र आदि सबै देवताहरूले त्यसैका सहायताले सबै लोकमाथि विजय प्राप्त गरे ।

**बृहस्पतिराङ्गिरसो वज्रं यमसिञ्चतासुरक्षयणं वधम् । तेनाहममूं सेनां नि लिम्पामि बृहस्पतेऽमित्रान् हन्म्योजसा ॥१३॥**

हे बृहस्पतिदेवता ! उसै वज्रका ओजले हामी शत्रुसेनालाई बलपूर्वक नष्ट गर्दछौँ, यसलाई तिमीले असुर संहार गर्नका लागि बनाएका थियौ ।

**सर्वे देवा अत्यायन्ति ये अश्नन्ति वषट् कृतम् । इमां जुषध्वमाहुतिमितो जयत मामुतः ॥१४॥**

वषट्कारको उच्चारण गर्दै जसले हविष्यान्न सेवन गर्दछन्, ती देवताहरू शत्रुलाई जितेर हामीतिर आइरहून् । हे देवताहरू हो ! तिमीहरू यो आहुति ग्रहण गर र यहाँ शत्रुलाई पराजित गर, अन्यत्र होइन ।

**सर्वे देवा यत्यायन्तु त्रिषन्धेराहुतिः प्रिया । संधां महतीं रक्षत ययाग्रे असुरा जिताः ॥१५॥**

समस्त देवगणले शत्रुसेनालाई जितून् । त्रिषन्धि वज्रलाई हवि प्रिय लाग्दछ । हे देवताहरू हो ! तिमीहरूले जेले सबैभन्दा पहिले आसुरी शक्तिलाई परास्त गरेका थियौ, उसैबाट सन्धिको पनि सुरक्षा गर ।

**वायुरमित्राणामिष्वग्राण्याञ्चतु । इन्द्र एषां बाहून् प्रति भनक्तु मा शकन् प्रतिधामिषुम् । आदित्य एषामस्त्रं वि नाशयतु चन्द्रमा युतामगतस्य पन्थाम् ॥१६॥**

वायुदेवताले शत्रुका बाणको अघिल्लो भागलाई शक्तिविहीन बनाऊन् । इन्द्रदेवताले तिनका भुजाहरूलाई भाँचून् । उनीहरू धनुषका प्रत्यञ्चामा बाण चढाउन नसक्ने होऊन् । सूर्यदेवताले तिनीहरूका हतियारहरू नष्ट पारुन् । चन्द्रदेवताले शत्रुको बाटो छेकिदिऊन् ।

**यदि प्रेयुर्देवपुरा ब्रह्म वर्माणि चक्रिरे । तनूपानं परिपाणं कृण्वाना यदुपोचिरे सर्वं तदरसं कृधि ॥१७॥**

हे देवताहरू हो ! यदि शत्रुरूपी राक्षसहरूले पहिलेदेखि नै मन्त्र गरिएका कवच निर्माण गरेका

छन् भने पनि तिमीहरूले ती मन्त्रलाई काम नलाग्ने र शक्तिहीन बनाइदेऔ ।

**क्रव्यादानुवर्तयन् मृत्युना च पुरोहितम् । त्रिषन्धे प्रेहि सेनया जयामित्रान् प्र पद्यस्व ॥१८॥**

हे त्रिषन्धिदेवता ! तिमी शत्रुका समूहलाई छेकारो हालेर मांसभक्षी पक्षीले भैँ घँच्याटिदेऊ र आफ्ना सेनासितै अगाडि बढ । अनि ती शत्रुलाई जितेर आफ्ना वशमा नियन्त्रित गरिराख ।

**त्रिषन्धे तमसा त्वममित्रान् परि वारय । पृषदाज्यप्रणुत्तानां मामीषां मोचि कश्चन् ॥१९॥**

हे त्रिषन्धिदेवता ! तिमी आफ्नो मायावी अन्धकार उत्पन्न गराएर शत्रुलाई छेक । पृषदाज्य नामको महान् व्रतको सारतत्त्वले प्रेरित होऊ, त्यसो भएपछि यी शत्रुहरूमा कुनै पनि भागेर जोगिन नसकून् ।

**शितिपदी सं पतत्वमित्राणाममूः सिचः । मुह्यन्त्वद्यामूः सेना अमित्राणां न्यर्बुदे ॥२०॥**

सेतो वा चिसो पाउले युक्त शक्ति शत्रुको सेनामाथि खसोस् । हे अर्बुद ! आज यस युद्धभूमिमा परसम्म देखिने गरेका शत्रुको सेनालाई बिलखबन्दमा पारिदेऊ ।

**मूढा अमित्रा न्यर्बुदे जह्येषां वरंवरम् । अनया जहि सेनया ॥२१॥**

हे अर्बुद ! तिमी आफ्ना छलले शत्रुलाई अलमल्याऊ, यिनका मुख्य सेनापतिलाई पराजित गराऊ । तिम्रा अनुग्रहले नै हाम्रा सेनाले पनि उनीहरूमाथि विजय प्राप्त गरोस् ।

**यश्च कवची यश्चाकवचोऽमित्रो यश्चाज्मनि । ज्यापाशैः कवचपाशैरज्मनाभिहतः शयाम् ॥२२॥**

कवच लगाएका वा कवच नलगाएका अथवा कवचबाहेक अन्य कुनै रक्षा साधन लगाएका शत्रुका सैनिक युद्ध गरिरहेका भएमा तिनै कवच बाँध्ने तुना, धनुषका प्रत्यञ्चा रथ आदिमा अल्झिएर चोटपटक लागोस् र हिँड्न नसकून्, अनि बेहोस् भएर ढलिरहून् ।

**ये वर्मिणो येऽवर्माणो अमित्रा ये च वर्मिणः । सर्वांस्ताँ अर्बुदे हताञ्छ्वानोऽदन्तु भूम्याम् ॥२३॥**

कवच लगाएका वा कवच नलगाएका वा कवचबाहेक अरू पनि रक्षा साधन लगाएका शत्रुका सैनिक युद्धमा मरेका भए हे अर्बुद ! तिनीहरूको मृत शरीरलाई धर्तीमा भएका कुकुर, स्याल आदिले लुछेर तिनको मासु खाऊन् ।

**ये रथिनो ये अरथा असादा ये च सादिनः । सर्वानदन्तु तान् हतान् गृध्राः श्येनाः पतत्रिणः ॥२४॥**

रथमा चढेका, रथविहीन, अश्वमा चढेका वा अश्वविहीन जस्तासुकै अवस्थामा भएका भए पनि शत्रुका सैनिकलाई हे अर्बुद ! तिनको मृत शरीर गिद्ध, चिल, बाज आदि चराले खाऊन् ।

**सहस्रकुणपा शेतामामित्री सेना समरे वधानाम् । विविद्धा ककजाकृता ॥२५॥**

शत्रुका सेनाहरू शस्त्रले छेडिएर हजारौँ सङ्ख्यामा घायल भएर ढलून् र लास बनून् ।

**मर्माविधं रोरुवतं सुपर्णैरदन्तु दुश्चितं मृदितं शयानम् । य इमां प्रतीचीमाहुतिममित्रो नो युयुत्सति ॥२६॥**

जुनजुन शत्रुहरू हाम्रो पृषदाज्य नामको आहुति हामीलाई फिर्ता गरेर हामीसित युद्ध गर्ने रहर गर्दछन्, उनका मर्मस्थलमा बाणको प्रहार परोस् र तिनीहरू छिन्नभिन्न होऊन् । मार्मिक वेदनाले गर्दा उनीहरू रुन थालून् । दुःखले तड्पिँदै तिनीहरू भुईंमा ढलून् र हिंस्रक पशुले तिनलाई खाऊन् ।

**यां देवा अनुतिष्ठन्ति यस्या नास्ति विराधनम् । तयेन्द्रो हन्तु वृत्रहा वज्रेण त्रिषन्धिना ॥२७॥**

देवगण जसका सहायताले अनुष्ठान सम्पन्न गर्दछन् र जुन कहिल्यै निरर्थक हुँदैन, त्यस्तो त्रिषन्धि नामको वज्रले वृत्रलाई संहार गर्ने इन्द्रले हाम्रा शत्रुहरू संहार गरून् ।

**॥ इत्येकादशं काण्डम् ॥**

एघारौँ काण्ड सकियो ।

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

## अथर्ववेद – संहिता

# ॥अथ द्वादशं काण्डम् ॥

## १. भूमि सूक्त

**ऋषि–** अथर्वा । **देवता–** भूमि । **छन्द–** त्रिष्टुप्, भुरिक् त्रिष्टुप्, त्र्यवसाना षट्पदा जगती, प्रस्तार पङ्क्ति, त्र्यवसाना षट्पदा विराडष्टि, परानुष्टुप्, त्र्यवसाना पञ्चपदा शक्वरी, महाबृहती, पञ्चपदा शक्वरी, एकावसाना साम्नी त्रिष्टुप्, त्र्यवसाना षट्पदा त्रिष्टुप् अनुष्टुब्गर्भा शक्वरी, उरोबृहती, विराट् उरोबृहती त्र्यवसाना षट्पदा विराट् अतिजगती, पञ्चपदा विराट् अतिजगती, पञ्चपदा अनुष्टुब्गर्भा जगती, त्र्यवसाना सप्तपदा उष्णिक् अनुष्टुब्गर्भा शक्वरी, अनुष्टुप्, विराट् गायत्री, पुरस्ताज्ज्योति त्रिष्टुप्, त्र्यवसाना षट्पदा त्रिष्टुप् बृहतीगर्भा अतिजगती, विपरीतपादलक्ष्मा पङ्क्ति, त्र्यवसाना षट्पदा ककुम्मती शक्वरी, स्वराट् अनुष्टुप्, विराट् आस्तार पङ्क्ति, जगती, षट्पदा अनुष्टुब्गर्भा ककुम्मती शक्वरी, पञ्चपदा अनुष्टुब्गर्भा परातिजगती, पुरोबार्हतानुष्टुप्, पुरोऽतिजागता जगती, पुरस्ताद् बृहती, पुरोबार्हता त्रिष्टुप्, पराविराट् त्रिष्टुप् ।

**सत्यं बृहदृतमुग्रं दीक्षा तपो ब्रह्म यज्ञः पृथिवीं धारयन्ति । सा नो भूतस्य भव्यस्य पत्न्युरुं लोकं पृथिवी नः कृणोतु ॥१॥**

सत्यनिष्ठा, विस्तृत यथार्थको बोध, दक्षता, क्षात्रबल, तपश्चर्या, ब्रह्मज्ञान र त्याग बलिदान आदि यी भावहरूले मातृभूमिको पालनपोषण र संरक्षण गर्दछन् । भूतकालीन र भविष्यमा हुने सबै प्राणीहरूको पालन गर्ने मातृभूमिले हामीलाई विस्तृत स्थान प्रदान गरोस् ।

**असंबाधं मध्यतो मानवानां यस्या उद्वतः प्रवतः समं बहु । नानावीर्या ओषधीर्या बिभर्ति पृथिवी नः प्रथतां राध्यतां नः ॥२॥**

स्वभाव तथा गुणकर्म फरक भए तापनि हाम्रा जुन भूमिका सबै मानिसहरूमा पारस्परिक सामञ्जस्य र एकताको भावना अत्यधिक रहेको छ, जुन मातृभूमिले अनेकौं किसिमका रोगनाशक औषधिहरू धारण गरेको छ, उही मातृभूमि नै हाम्रा कामनाहरू पूरा गराउने हुनुका साथै यश बढाउने पनि बनोस् ।

**यस्यां समुद्र उत सिन्धुरापो यस्यामन्नं कृष्टयः संबभूवुः । यस्यामिदं जिन्वति प्राणदेजत् सा नो भूमिः पूर्वपेये दधातु ॥३॥**

हाम्रा जुन विशाल भूमिमा सागर, महासागर, नदी, झिल, तलाउ, पोखरी, इनार आदि जलाशयहरू छन्, जहाँ सबै किसिमका अन्न, फलफूल र सागपात अत्यधिक मात्रामा उत्पन्न हुन्छन्, जहाँका सबै प्राणीहरू खुसी र सुखी छन्, जसमा किसान, शिल्पकार आदि आआफ्ना क्षेत्रका विशेषज्ञ, उद्यमी र सङ्गठित रूपमा रहेका छन्, यस किसिमको हाम्रो पृथ्वी हाम्रा लागि श्रेष्ठ भोग्य पदार्थ र ऐश्वर्य प्रदान गर्ने किसिमको होस् ।

**यस्याश्चतस्रः प्रदिशः पृथिव्या यस्यामन्नं कृष्टयः संबभूवुः । या बिभर्ति बहुधा प्राणदेजत् सा नो भूमिर्गोष्वप्यन्ने दधातु ॥४॥**

हाम्रा जुन भूमिमा उद्यमी र शिल्पकलामा निपुण, कृषिकार्यमा कुशल व्यक्तिहरू रहेका छन्, जुन भूमिमा चारै दिशाउपदिशाहरूले धान, गहुँ आदि उत्पन्न गर्दछन्, जो विभिन्न किसिमका प्राणधारीहरू र बोटबिरुवालाई पालनपोषण तथा संरक्षण गर्दछ, उही मातृभूमि हामीलाई गाई आदि पशु र अन्न आदि खाने कुरो प्रदान गर्ने होस् ।

**यस्यां पूर्वे पूर्वजना विचक्रिरे यस्यां देवा असुरानभ्यवर्तयन् । गवामश्वानां वयसश्च विष्ठा भगं वर्चः पृथिवी नो दधातु ॥५॥**

हाम्रा जुन धर्तीमा उहिलेका ऋषिहरूले अनेकौं किसिमका पराक्रमी कार्यहरू सम्पन्न गरे, जसमा देवताका उपासक वीरहरूले आसुरी शक्तिसँग धर्मयुद्ध गरे, जुन भूमिमा विशेष गरी गाई, घोडा र अनेकौं अन्य पशुपक्षीले आश्रय प्राप्त गरेका छन्, यस्तो हाम्रो मातृभूनि हामीलाई ज्ञानविज्ञान, शौर्य, वीर्य, तेज, ऐश्वर्य आदि वृद्धि गराउने होस् ।

**विश्वंभरा वसुधानी प्रतिष्ठा हिरण्यवक्षा जगतो निवेशनी । वैश्वानरं बिभ्रती भूमिरग्निमिन्द्रऋषभा द्रविणे नो दधातु ॥६॥**

विश्वका सबै खालका प्राणीहरूलाई पालनपोषण गर्ने, खनिज सम्पदाहरूको खानी भएको, सबैलाई प्रतिष्ठित गराउने, सुनको वक्ष धारण गरेझैँ सबैलाई आश्रय प्रदान गर्ने, प्राणाग्निका रूपमा रहेका वैश्वानर अग्निले भरणपोषण गरेको, सबैको अग्रणी स्थान प्राप्त गरेको बलशाली इन्द्रदेवता र हामी सबैका लागि यही भूमि अनेकौं किसिमका धन धारण गर्ने होस् ।

**यां रक्षन्त्यस्वप्ना विश्वदानीं देवा भूमिं पृथिवीमप्रमादम् । सा नो मधु प्रियं दुहामथो उक्षतु वर्चसा ॥७॥**

निद्रा, तन्द्रा, आलस्य, अज्ञान आदि दुर्गुणरहित देवगण वा दिव्यपुरुषहरू प्रमादरहित भएर जुन विशाल भूमिको रक्षा गर्दछन्, त्यसै मातृभूमिले सबै खालका उत्तम, प्रिय र कल्याणकारी पदार्थले हामीलाई सुसम्पन्न गराओस् र हामीलाई ज्ञान, ओज र ऐश्वर्य प्रदान गरोस् ।

**यार्णवेऽधि सलिलमग्र आसीद् यां मायाभिरन्वचरन् मनीषिणः । यस्या हृदयं परमे व्योमन्त्सत्येनावृतममृतं पृथिव्याः । सा नो भूमिस्त्विषिं बलं राष्ट्रे दधातूत्तमे ॥८॥**

समुद्रका जलले सुसम्पंन्न भएका जुन भूमिको हृदय परमव्योमको सत्यरूपी अमृतका प्रवाहले आवृत्त छ, मनीषीहरूले आफ्नै कुशलताले जसको अनुगमन गरिरहन्छन्, त्यो भूमि हाम्रा राष्ट्रको तेज र बल वृद्धि गराउने होस्

**यस्यामापः परिचराः समानीरहोरात्रे अप्रमादं क्षरन्ति । सा नो भूमिर्भूरिधारा पयो दुहामथो उक्षतु वर्चसा ॥९॥**

जुन धर्तीमा चारैतिर घुमफिर गर्ने परिव्राजक, सन्यासी, शीतल जलजस्तो समानताको दृष्टि राख्ने उपदेश प्रदान गर्दै रातदिन सजग हुँदै ज्ञानको प्रवाह बगाउँछन्, जुन भूमिले हामीलाई सबै किसिमका अन्न, जल, दुध, घिउ आदि पदार्थ प्रदान गर्दछ, त्यसै भूमिले हाम्रो तेज र प्रखरता वृद्धि गराओस् ।

**यामश्विनावमिमातां विष्णुर्यस्यां विचक्रमे । इन्द्रो यां चक्र आत्मनेऽनमित्रां शचीपतिः । सा नो भूमिर्वि सृजतां माता पुत्राय मे पयः ॥१०॥**

अश्विनीकुमारहरूले जुन धर्तीको मापन गरेका छन्, विष्णुदेवताले जसमा विभिन्न पराक्रमी कार्य सुसम्पन्न गरेका छन् र इन्द्रदेवताले जसलाई दुष्ट शत्रुरहित बनाएर नियन्त्रण गरेका छन्, त्यस पृथ्वीले मातृसत्तामा रहेर सन्तानलाई दुध खुवाएझैँ आफ्ना सबै सन्तानलाई खाद्य पदार्थ प्रदान गरोस् ।

**गिरयस्ते पर्वता हिमवन्तोऽरण्यं ते पृथिवि स्योनमस्तु । बभ्रुं कृष्णां रोहिणीं विश्वरूपां ध्रुवां भूमिं पृथिवीमिन्द्रगुप्ताम् । अजीतोऽहतो अक्षतोऽध्यष्ठां पृथिवीमहम् ॥११॥**

हे धर्तीमाता ! तिम्रा हिउँले ढाकिएका चुली, पाखा, पर्वत र वनहरू हाम्रा लागि सुखदायक होऊन्, तिनीहरू शत्रुरहित होऊन् । विभिन्न रङ्गमा सजिएको, इन्द्रले रक्षा गरेको हुनाले इन्द्रगुप्ता नाम भएका यस पृथ्वीमा क्षयरहित, अपराजित र अनन्त बनेर हामी रहन पाऔँ ।

**यत् ते मध्यं पृथिवि यच्च नभ्यं यास्त ऊर्जस्तन्वः संबभूवुः । तासु नो धेह्यभि नः पवस्व माता भूमिः पुत्रो अहं पृथिव्याः । पर्जन्यः पिता स उ नः पिपर्तु ॥१२॥**

हे पृथिवीमाता ! तिमी आफ्नो मध्य भाग र केन्द्र भागमा तथा तिम्रा शरीरबाट उत्पन्न हुने सबै पोषण पदार्थमा हामीलाई प्रतिष्ठित गराऊ अनि हामीलाई पवित्रता प्रदान गर । यी धर्ती सबैकी माता हुन् र हामी सबै उनका सन्तान हौँ । उत्पादक प्रवाहका रूपमा रहेका पर्जन्य हाम्रा पिता हुन्, उनीहरू सबैले हामीलाई परिपूर्ण र सन्तुष्ट गराऊन् ।

**यस्यां वेदिं परिगृह्णन्ति भूम्यां यस्यां यज्ञं तन्वते विश्वकर्माणः । यस्यां मीयन्ते स्वरवः पृथिव्यामूर्ध्वाः शुक्रा आहुत्याः पुरस्तात् । सा नो भूमिर्वर्धयद् वर्धमाना ॥१३॥**

विश्वकर्मा आदि यस धर्तीका सिर्जनशील पुत्रहरूले जुन भूमिमा वेदिका बनाएर यज्ञ आदि उत्तम कार्यको विस्तार गर्दछन्, जहाँ स्वच्छ तथा उत्पादक शक्तिका रूपमा रहेका शुक्रले आहुतिभन्दा पहिले नै यज्ञीय यूपरूपी आधार स्थापित गरेका हुन्छन्, जुन ठाउँमा यज्ञको उद्घोष निरन्तर भइरहन्छ, त्यस किसिमको उन्नतिप्रदायक भूमिले हाम्रो कल्याण गरोस् ।

**यो नो द्वेषत् पृथिवि यः पृतन्याद् योऽभिदासान्मनसा यो वधेन । तं नो भूमे रन्धय पूर्वकृत्वरि ॥१४॥**

हे मातृभूमि ! हाम्रो रिसडाह जसले गर्दछन्, जसले सैन्यशक्तिद्वारा हामीलाई जित्न खोजेका हुन्छन्, जसले मनमनै हाम्रो कुभलो चिताउँछन्, जसले हामीलाई परतन्त्रका बन्धनमा जेल्ने दुष्प्रयास गर्दछन्, जसले हाम्रो संहार गरेर हामीलाई दुःख दिन खोजेका हुन्छन्, त्यस्ता खालका शत्रुलाई तिमी जरैदेखि मासिदेऊ ।

**त्वज्जातास्त्वयि चरन्ति मर्त्यास्त्वं बिभर्षि द्विपदस्त्वं चतुष्पदः । तवेमे पृथिवि पञ्च मानवा येभ्यो ज्योतिरमृतं मर्त्येभ्य उद्यन्त्सूर्यो रश्मिभिरातनोति ॥१५॥**

हे धर्तीमाता ! तिमीबाट उत्पन्न र तिमीमाथि विचरण गर्ने प्राणीहरू, दुई खुट्टे, चार खुट्टे आदि सबैलाई तिमी पालनपोषण गर्दछ्यौ । जसका लागि सूर्यले आफ्नो अमृतमय रश्मि चारैतिर फिँजाएको छ, यस्ता ब्राह्मण, क्षत्रिय, वैश्य, शिल्पी र शूद्र हामी पाँचै किसिमका मानिसहरू तिम्रै आफन्त हौँ ।

**ता नः प्रजाः सं दुह्रतां समग्रा वाचो मधु पृथिवि धेहि मह्यम् ॥१६॥**

हे मातृभूमि ! सूर्यका किरणले हाम्रा लागि प्रजा, सन्तान र वाणी उपलब्ध गराओस् । तिमी हामीलाई मधुर पदार्थ र मधुर वाणी प्रदान गर ।

**विश्वस्वं मातरमोषधीनां ध्रुवां भूमिं पृथिवीं धर्मणा धृताम् । शिवां स्योनामनु चरेम विश्वहा ॥१७॥**

सबै खालका वनस्पति र औषधिहरू उत्पन्न हुने यी पृथ्वीमाता विस्तृत र स्थिर रहून् । विद्या, शौर्य, सत्य, स्नेह आदि सद्गुणले पालनपोषण गरिएका, कल्याणकारी र सुखद साधनले सम्पन्न गराउने मातृभूमिको सेवा हामी सधैँ गर्न पाऔँ ।

**महत् सधस्थं महती बभूविथ महान् वेग एजथुर्वेपथुष्टे । महांस्त्वेन्द्रो रक्षत्यप्रमादम् । सा नो भूमे प्र रोचय हिरण्यस्येव संदृशि मा नो द्विक्षत कश्चन ॥१८॥**

हे धर्तीमाता ! हामी सबैलाई बस्ने बास तिमीले नै दिएकी छ्यौ । त्यसो हुनाले नै तिम्रो निरन्तर उन्नति भइरहन्छ । तिमी जुन गतिले आकाशमा कम्पित हुने गर्दछ्यौ, त्यो गति अत्यन्त तीव्र छ । इन्द्रदेवताले सतर्कतापूर्वक तिम्रो रक्षा गर्दछन् । तिमी स्वयं नै स्वर्णझैँ तेजले सम्पन्न हुनाले हामीलाई पनि तेजसम्पन्न बनाऊ । आपसमा हाम्रो कुनै द्वेषको भावना नहोस्, हामी सबैका प्रिय हुन सकौँ ।

**अग्निर्भूम्यामोषधीष्वग्निमापो बिभ्रत्यग्निरश्मसु । अग्निरन्तः पुरुषेषु गोष्वश्वेष्वग्नयः ॥१९॥**

पृथ्वीका मध्य भागमा र औषधिहरूमा अग्नितत्त्व विद्यमान छ । जलमा, विद्युत्मा, ढुङ्गामा

अग्निको रूप विद्यमान छ । मनुष्य, गाई, घोडा आदि पशुमा पनि जठराग्निका नामले अग्नि विद्यमान छन् ।

**अग्निर्दिव आ तपत्यग्नेर्देवस्योर्वन्तरिक्षम् । अग्निं मर्तास इन्धते हव्यवाहं घृतप्रियम् ॥२०॥**

दिव्यलोकमा, सूर्यका रूपमा पनि अग्निदेवता नै विद्यमान छन् । उनी सबैतिर प्रकाशित हुन्छन्, विशाल अन्तरिक्ष पनि उनै अग्निको प्रकाशका रूपले आलोकित भइरहेको छ । यज्ञमा प्रदान गरिएको आहुति लिएर जाने, घिउको चिल्लोले पोसिने अग्निलाई मानिसले प्रदीप्त गर्दछन् ।

**अग्निवासाः पृथिव्य सितज्ञुस्त्विषीमन्तं संशितं मा कृणोतु ॥२१॥**

अत्यन्त तापसम्पन्न हुनाले असितवर्ण भनिएका अग्निदेवताले पृथ्वीमा रहेर हामीलाई प्रकाश एवं तेजसँग संयुक्त गराऊन् ।

**भूम्यां देवेभ्यो ददति यज्ञं हव्यमरंकृतम् । भूम्यां मनुष्या जीवन्ति स्वधयान्नेन मर्त्याः । सा नो भूमिः प्राणमायुर्दधातु जरदष्टिं मा पृथिवी कृणोतु ॥२२॥**

यज्ञले सजिएका भूमिमा मानिसहरूले देवतालाई यज्ञकै माध्यमबाट आहुति प्रदान गर्दछन् । त्यसै कारण त्यस भूमिबाट मानिसहरूले उत्तम किसिमको अन्न र जल प्राप्त गरेर जीवन धारण गर्दछन् । त्यस भूमिले हामीलाई प्राण र आयु प्रदान गरोस् । त्यस पृथ्वीले हामीलाई पूर्ण आयु प्राप्त गर्नका लागि योग्य बनाओस् ।

**यस्ते गन्धः पृथिवि संबभूव यं बिभ्रत्योषधयो यमापः । यं गन्धर्वा अप्सरसश्च भेजिरे तेन मा सुरभिं कृणु मा नो द्विक्षत कश्चन ॥२३॥**

हे मातृभूमि ! तिमीभित्र विद्यमान श्रेष्ठ सुगन्ध औषधि र वनस्पतिहरूको सुगन्धका रूपमा उत्पन्न हुने गर्दछ । अप्सरा र गन्धर्वहरूले त्यही सुगन्ध धारण गरेका हुन्छन् । हामीलाई त्यस सुगन्धले तिमी सुरभित गराऊ । आपसमा हामी कसैसित द्वेष नगरौँ, सबै मानिस परस्पर मैत्रीभावले रहौँ ।

**यस्ते गन्धः पुष्करमाविवेश यं संजभ्रुः सूर्याया विवाहे । अमर्त्याः पृथिवि गन्धमग्रे तेन मा सुरभिं कृणु मा नो द्विक्षत कश्चन ॥२४॥**

हे मातृभूमि ! तिमीभित्र रहेको सुगन्ध कमल आदि फूलहरूमा प्रविष्ट भएको छ । त्यही सुगन्ध सूर्यपुत्री उषाको पाणिग्रहण गर्ने अवस्थामा वायुदेवताले धारण गरेका थिए । त्यस्तै सुगन्धले हामी तिमीलाई सुगन्धित गर्न सकौँ । आपसमा हामी कसैसित द्वेष नगरौँ, सबै मानिस परस्पर मैत्रीभावले रहौँ ।

**यस्ते गन्धः पुरुषेषु पुंसु भगो रुचिः यो अश्वेषु वीरेषु यो मृगेषूत हस्तिषु । कन्यायां वर्चो यद् भूमे तेनास्माँ अपि सं सृज मा नो द्विक्षत कश्चन ॥२५॥**

हे मातृभूमि ! वीरवीराङ्गना, पुरुषस्त्री, हात्तीघोडा आदि चार खुट्टे पशुहरूमा, कन्याहरूमा रहेको तेज र सुगन्ध तिम्रै हो । त्यस्तै सुगन्धी तेज हामीभित्र पनि समाहित होस् । आपसमा हामी कसैसित द्वेष नगरौँ, सबै मानिस परस्पर मैत्रीभावले रहौँ ।

**शिला भूमिरश्मा पांसुः सा भूमिः संधृता धृता । तस्यै हिरण्यवक्षसे पृथिव्या अकरं नमः ॥२६॥**

जुन धर्तीको माथिल्लो भाग धुलो, ढुङ्गा र पहाडहरूले छोपिएको छ, जसका भित्री भागमा स्वर्ण आदि अमूल्य रत्न आदि खनिज पदार्थहरू छन्, त्यस्ता धर्तीलाई माताका रूपमा हामी नमस्कार गर्दछौँ ।

**यस्यां वृक्षा वानस्पत्या ध्रुवास्तिष्ठन्ति विश्वहा । पृथिवीं विश्वधायसं धृतामच्छावदामसि ॥२७॥**

जुन धर्तीमा लतावृक्ष आदि वनस्पति सधैँ स्थिर रहेका हुन्छन्, जुन लतावृक्ष आदि औषधिका रूपमा सबैको सेवा गरिरहेका हुन्छन्, त्यस्ता वनस्पतिहरूलाई धारण गर्ने, धर्म एवं कर्तव्य निर्वाह गर्ने र सबैलाई पालनपोषण गर्ने धर्तीलाई हामी शिर झुकाएर स्तुति तथा नमस्कार गर्दछौँ ।

**उदीराणा उतासीनास्तिष्ठन्तः प्रक्रामन्तः । पद्भ्यां दक्षिणसव्याभ्यां मा व्यथिष्महि भूम्याम् ॥२८॥**

हे मातृभूमि ! हामी दाहिने वा बायाँ जुन गोडाले हिँडडुल गरौँ, उठौँ, बसौँ वा अन्य कुनै स्थितिमा रहौँ तर कहिल्यै दुःखी नहोऔँ ।

**विमृग्वरीं पृथिवीमा वदासि क्षमां भूमिं ब्रह्मणा वावृधानाम् । उर्जं पुष्टं बिभ्रतीमन्नभागं घृतं त्वाभि नि षीदेम भूमे ॥२९॥**

क्षमाको प्रतिमूर्तिका रूपमा रहेकी, परम पवित्र र मन्त्रले वृद्धि प्राप्त गर्ने भूमिलाई हामी नमस्कार गर्दछौँ । हे पुष्टिदात्री, अन्नरस र बल धारण गर्ने पृथ्वीमाता ! तिमीलाई हामी घिउको आहुति प्रदान गर्दछौँ ।

**शुद्धा न आपस्तन्वे क्षरन्तु यो न सेदुरप्रिये तं नि दध्मः । पवित्रेण पृथिवि मोत् पुनामि ॥३०॥**

हे मातृभूमि ! हाम्रो शुद्धताका लागि तिमी स्वच्छ जल प्रवाहित गर । हाम्रा शरीरबाट खसेका जलले हामीलाई अनिष्ट गर्न खोज्नेहरूलाई बगाएर लगोस् । हे मातृभूमि ! पवित्रता प्रदायक शक्तिशाली प्रवाहले हामी आफैँलाई पवित्र बनाउँछौँ ।

**यास्ते प्राचीः प्रदिशो या उदीचीर्यास्ते भूमे अधराद् याश्च पश्चात् । स्योनास्ता मह्यं चरते भवन्तु मा नि पप्तं भुवने शिश्रियाणः ॥३१॥**

हे मातृभूमि ! तिम्रा पूर्व, पश्चिम आदि चारै दिशाउपदिशाहरू, तल र माथिका दिशाहरूमा विचरण गर्ने सबै मानिसहरू हाम्रा लागि कल्याणकारी होऊन् । कुनै पनि किसिमले हाम्रो अपगति हुँदै अधःपतन नहोस् ।

**मा नः पश्चान्मा पुरस्तान्नुदिष्ठा मोत्तरादधरादुत । स्वस्ति भूमे नो भव मा विदन् परिपन्थिनो वरीयो यावया वधम् ॥३२॥**

हे मातृभूमि ! पूर्व, पश्चिम, उत्तर र दक्षिणका सबै दिशामा तिमी नै प्रहरीझैँ बनेर हाम्रो संरक्षण गर । हाम्रा निम्ति तिमी कल्याणकारी होऊ । दुष्ट शत्रुले हामीलाई नदेखून्, ती शत्रुलाई संहार गरेर हामीलाई मुक्त गराऊ ।

**यावत् तेऽभि विपश्यामि भूमे सूर्येण मेदिना । तावन्मे चक्षुर्मा मेष्टोत्तरामुत्तरां समाम् ॥३३॥**

हे मातृभूमि ! आफ्ना प्रकाशले तिमीलाई उजिल्याएर आनन्द प्रदान गर्दै स्नेह प्रकट गर्ने सूर्यका सामु हामी जहिलेसम्म तिमीलाई देखिरहन्छौँ, त्यस दिनसम्म हाम्रो आयु बढ्नुका साथै आँखाको ज्योतिमा पनि कुनै खालको शिथिलता नआओस् ।

**यच्छयानः पर्यावर्ते दक्षिणं सव्यमभि भूमे पार्श्वम् । उत्तानास्त्वा प्रतीचीं यत् पृष्टीभिरधिशेमहे । मा हिंसीस्तत्र नो भूमे सर्वस्य प्रतिशीवरि ॥३४॥**

हे मातृभूमि ! सुतेका अवस्थामा हामीले दाहिने वा बायाँतिर कोल्टे फेर्दा, तिम्रो पश्चिम दिशातिर गोडा पसारेर सुत्दा, पिठ्युँलाई तल पारेर उत्तानो परेर सुत्दा पनि तिमी सबै मानिसलाई आश्रय प्रदान गर्दछ्यौ । हे भूमि ! हामीलाई तिमी संहार नगर ।

**यत् ते भूमे विखनामि क्षिप्रं तदपि रोहतु । मा ते मर्म विमृग्वरि मा ते हृदयमर्पिपम् ॥३५॥**

हे धर्तीमाता ! हामी कुनै प्रयोजनमा तिमीलाई खन्दछौँ भने, त्यहाँ तुरुन्तै कुनै वस्तु उम्रियोस् । अनुसन्धानका क्रममा हामीबाट तिम्रा मर्मस्थल अथवा हृदयलाई कहिल्यै आघात नपुगोस् ।

**ग्रीष्मस्ते भूमे वर्षाणि शरद्धेमन्तः शिशिरो वसन्तः । ऋतवस्ते विहिता हायनीरहोरात्रे पृथिवि नो दुहाताम् ॥३६॥**

हे विशाल मातृभूमि ! तिमीभित्र ग्रीष्म, वर्षा, शरद्, हेमन्त, शिशिर र वसन्त यी छ वटा ऋतुहरू प्रतिष्ठित भएका छन् । ती ऋतुहरूका दिन र रातहरू सबै नै हाम्रा लागि कल्याणकारक होऊन् ।

**याप् सर्पं विजमाना विमृग्वरी यस्यामासन्नग्नयो ये अप्स्व१न्तः । परा दस्यून् ददती देवपीयूनिन्द्रं वृणाना पृथिवी न वृत्रम् । शक्राय दध्रे वृषभाय वृष्णे ॥३७॥**

हल्लिइरहेका भूमिमा अग्नि विद्यमान छन् र जल भूमिका बीचमा छ । देववृत्तिको अवरोधक वृत्रजस्ता शत्रुलाई संहार गर्ने देवताका राजा इन्द्रले रक्षा गरेकी पृथ्वीदेवी शक्तिशाली, वीर्यवान् र सामर्थ्यशाली पुरुका लागि धारण गरिएकी हुन् ।

**यस्यां सदोहविर्धाने यूपो यस्यां निमीयते । ब्रह्माणो यस्यामर्चन्त्यृग्भिः साम्ना यजुर्विदः । युज्यन्ते यस्यामृत्विजः सोममिन्द्राय पातवे ॥३८॥**

जुन धर्तीमा हविष्यान्न समर्पित गर्नका लागि यज्ञमण्डपहरूको निर्माण हुने गर्दछ, जहाँ यज्ञस्तम्भहरू ठडिएका हुन्छन्, जुन भूमिमा ऋग्वेद, सामवेद, यजुर्वेद आदिका मन्त्रहरूले ऋत्विक्हरू पूजाअर्चना गर्दछन्, र इन्द्रदेवताका सोमपान गराउने कार्यमा संलग्न हुन्छन् .... ।

**यस्यां पूर्वे भूतकृत ऋषयो गा उदानृचुः । सप्त सत्रेण वेधसो यज्ञेन तपसा सह ॥३९॥**

प्राचीन समयमा जुन पृथ्वीमा प्राणीसमूहका हितैषि, क्रान्तदर्शी ऋषिहरूले सात सत्रमा पूरा गरिने ब्रह्मयज्ञ गरे, तपस्याले पवित्र भएका वाणीले वन्दना गरेका थिए ... ।

**सा नो भूमिरा दिशतु यद्धनं कामयामहे । भगो अनुप्रयुङ्क्तामिन्द्र एतु पुरोगवः ॥४०॥**

त्यस पृथ्वीले आवश्यकताअनुसार हामीले खोजेको धन प्रदान गरोस् । ऐश्वर्य हाम्रो सहायक होस् । इन्द्रदेवता अगुवा भएर अगाडि आऊन् ।

**यस्यां गायन्ति नृत्यन्ति भूम्यां मर्त्या व्यैलबाः । युध्यन्ते यस्यामाक्रन्दो यस्यां वदति दुन्दुभिः । सा नो भूमिः प्र णुदतां सपत्नानसपत्नं मा पृथिवी कृणोतु ॥४१॥**

जुन भूमिमा मानिसहरू प्रसन्नतापूर्वक नाच्ने गाउने गर्दछन्, जसमा मानिसहरू शूरवीरलाई सुहाउँदा गुणले परिपूर्ण भएर राष्ट्रको संरक्षणका लागि युद्धमा लागेका हुन्छन्, जहाँ शत्रुहरूको रुवाबासी हुन्छ, जहाँ युद्धका नगाडा बज्दछन्, त्यस पृथ्वीले हाम्रा शत्रुलाई पर भगाएर हामीलाई शत्रुविहीन गराओस् ।

**यस्यामन्नं व्रीहियवौ यस्या इमाः पञ्च कृष्टयः । भूम्यै पर्जन्यपत्न्यै नमोऽस्तु वर्षमेदसे ॥४२॥**

जनु भूमिमा धान, गहुँ, जौ आदि खाद्यान्नहरू प्रचुर मात्रामा हुन्छन्, जहाँ विद्वान् ब्रह्मण, शूरवीर क्षत्रिय, कुशल व्यापारी वैश्य, कुशल सेवक शूद्र र यीबाहेक अन्य जातिका गरी पाँचै किसिमका मानिसहरू आनन्दपूर्वक निवास गर्दछन्, जुन भूमिमा निश्चित समयमा जलको वर्षा भएर अन्न आदिको उत्पादन हुन्छ, पर्जन्य नामका वर्षाका देवताले जसको पोषण गर्दछन्, त्यस्ता मातृभूमिलाई हामी नमस्कार गर्दछौँ ।

**यस्याः पुरो देवकृताः क्षेत्रे यस्या विकूर्वते । प्रजापतिः पृथिवीं विश्वगर्भामाशामाशां रण्यां नः कृणोतु ॥४३॥**

देवगणले रचना गरेका हिंस्रक पशुहरू पृथ्वीका जुन भागमा विभिन्न किसिमका क्रीडा सम्पन्न गर्दछन्, जसले सम्पूर्ण विश्वलाई स्वयं नै धारण गरेको छ, त्यस पृथ्वीका प्रत्येक दिशालाई प्रजापतिले हाम्रा लागि सौन्दर्यसम्पन्न बनाऊन् ।

**निधिं बिभ्रती बहुधा गुहा वसु मणिं हिरण्यं पृथिवी ददातु मे । वसूनि नो वसुदा रासमाना देवी दधातु सुमनस्यमाना ॥४४॥**

आफ्ना अनेकौं गोप्यस्थलमा विभिन्न किसिमका सुन आदि रत्नको निधि धारण गर्ने पृथ्वीदेवीले हाम्रा लागि खनिज पदार्थ प्रदान गरून् । धन प्रदान गर्ने, वरदान दिने, दिव्य रूपले सजिएकी, पृथ्वी हामीमाथि प्रसन्न भएर हामीलाई ऐश्वर्य प्रदान गरून् ।

**जनं बिभ्रती बहुधा विवाचसं नानाधर्माणं पृथिवी यथौकसम् । सहस्रं धारा द्रविणस्य मे दुहां ध्रुवेव धेनुरनपस्फुरन्ती ॥४५॥**

अनेकौं किसिमका धार्मिक मान्यता भएका र विभिन्न किसिमको भाषा बोल्ने जनसमुदायलाई एकै

परिवारका रूपमा आश्रय प्रदान गर्ने, अविनाशी र स्थिर स्वभाव भएकी पृथ्वी दुध दिने गाईजस्तै भएर हामीमाथि प्रसन्न हुँदै असङ्ख्य ऐश्वर्य हाम्रा लागि प्रदान गर्ने भइदिऊन् ।

**यस्ते सर्पो वृश्चिकस्तृष्टदंश्मा हेमन्तजब्धो भृमलो गुहा शये । क्रिमिर्जिन्वत् पृथिवि यद्यदेजति प्रावृषि तन्नः सर्पन्मोप सृपद् यच्छिवं तेन नो मृड ॥४६॥**

हे मातृभूमि ! तिमीभित्र सर्प, बिच्छी आदि जेजतिले निवास गरेका छन्, जसको डसाइले तिर्खा र डाह उत्पन्न गराउने खालको हुन्छ, जसले टुङ्दाखेरि शरीरमा फोका उठ्दछन्, जुन किराहरू गुफाभित्र सुतेका हुन्छन्, यी सबै वर्षा ऋतुमा स्वच्छन्दताले विचरण गर्ने प्राणी र घस्रिने खालका बिखालु प्राणीले हामीलाई कहिल्यै नछोऊन् । जुन कल्याणकारी प्राणीको समूह जुन हुन्छ, त्यसले हामीलाई सुख प्रदान गरोस् ।

**ये ते पन्थानो बहवो जनायना रथस्य वर्त्मानसश्च यातवे । यैः संचरन्त्युभये भद्रपापास्तं पन्थानं जयेमानमित्रमतस्करं यच्छिवं तेन नो मृड ॥४७॥**

हे देवताको रूपमा रहेकी पृथ्वी ! मानिसले हिँडडुल गर्न योग्य, रथ र अन्य सवारी साधन चल्न योग्य मार्गहरू जति तिमीभित्र छन्, जहाँ अर्काको हित गर्नमा लागेका सज्जन मानिसहरू छन्, जहाँ स्वार्थमा लागेका दुर्जनहरू विचरण गर्दछन्, तिनीहरू सबैलाई तिमी चारैतिरका शत्रुहरूबाट भयमुक्त गराऊ । हामी कल्याणकारी मार्गमा हिँड्दै विजय प्राप्त गरौँ र तिनै मार्गमा हामीलाई तिमी सुखी बनाऊ ।

**मल्वं बिभ्रती गुरुभृद् भद्रपापस्य निधनं तितिक्षुः । वराहेण पृथिवी संविदाना सूकराय वि जिहीते मृगाय ॥४८॥**

गुरुत्वाकर्षणको शक्तिलाई धारण गर्ने क्षमताले युक्त, पुण्यात्मा र पापात्मा दुवै किसिमका मानिसलाई सहन गर्ने यी पृथ्वी उत्तम जल प्रदान गर्नुका साथै मेघले युक्त सूर्यका किरणबाट आफ्नो मैलोपना निवारण गर्दै सूर्यका चारैतिर विशेष रूपले गमन गर्दछ ।

**ये त आरण्याः पशवो मृगा वने हिताः सिंहा व्याघ्राः पुरुषादश्चरन्ति । उलं वृकं पृथिवि दुच्छुनामित ऋक्षीकां रक्षो अप बाधयास्मत् ॥४९॥**

हे पृथ्वी ! जङ्गलमा घुमिफिरी रहने, मानिस आदिलाई खाने सिंह, बाघ, उल नामका पशु, ब्वाँसा, भालु र राक्षस आदिलाई हाम्रा नजिकैबाट पर हटाएर हामीलाई निर्भय बनाइदेऊ ।

**ये गन्धर्वा अप्सरसो ये चारायाः किमीदिनः । पिशाचान्त्सर्वा रक्षांसि तानस्मद् भूमे यावय ॥५०॥**

हे भूमि ! जो हिंस्रक, अल्छी, दरिद्र, अर्काको धन हरण गर्ने, मांसभक्षी र राक्षसी वृत्ति भएका आततायीहरू छन्, ती सबैलाई हामीदेखि टाढा पारिदेऊ ।

**यां द्विपादः पक्षिणः संपतन्ति हंसाः सुपर्णाः शकुना वयांसि । यस्यां वातो मातरिश्वेयते रजांसि कृण्वंश्च्यावयंश्च वृक्षान् । वातस्य प्रवामुपवामनु वात्यर्चिः ॥५१॥**

जुन भूमिमा दुई खुट्टे हाँस, गरूड आदि चराहरू उड्दछन्, जहाँ माटोधुलो उडाउँदै र बोटबिरुवालाई बटार्दै अन्तरिक्षमा सञ्चरित हुने मातरिश्वा नामको वायु प्रवाहित हुन्छन्, उनै वायुदेवताको तीव्रताले अग्निदेवता पनि तीव्र गतिले चल्न थाल्दछन् ।

**यस्यां कृष्णमरुणं च संहिते अहोरात्रे विहिते भूम्यामधि । वर्षेण भूमिः पृथिवी वृतावृता सा नो दधातु भद्रया प्रिये धामनिधामनि ॥५२॥**

जुन पृथ्वीमा उज्याला र काला दिनरातहरू मिलेर रहेका हुन्छन्, जुन पृथ्वी वर्षाले आवृत्त रहन्छ, उसै पृथ्वीले हामीलाई आफ्ना कल्याणकारी चित्तवृत्तिले प्रिय धाममा प्रतिष्ठित गराओस् ।

**द्यौश्च म इदं पृथिवी चान्तरिक्षं च मे व्यचः । अग्निः सूर्य आपो मेधा विश्वे देवाश्च सं ददुः ॥५३॥**

द्युलोक, पृथ्वी, अन्तरिक्ष, अग्नि, सूर्य, जल, मेधा र समस्त देवताहरूले हामीलाई विभिन्न

किसिमले संव्याप्त हुँदै चल्ने खालको शक्ति प्रदान गरेका छन् ।

**अहमस्मि सहमान उत्तरो नाम भूम्याम् । अभीषाडस्मि विश्वाषाडाशामाशां विषासहिः ॥५४॥**

हामी शत्रुलाई तिरस्कृत गर्ने हुनाले पृथ्वीमा विशेष रूपले प्रसिद्ध हुन सकौँ । हामी शत्रुका सम्मुख पुगेर उनलाई सताउन सकौँ । हामी हरेक दिशामा रहेका शत्रुहरूलाई उचित किसिमले वशमा राख्न सकौँ ।

**अदो यद् देवि प्रथमाना पुरस्ताद् देवैरुक्ता व्यसर्पो महित्वम् । आ त्वा सुभूतमविशत् तदानीमकल्पयथाः प्रदिशश्चतस्रः ॥५५॥**

हे पृथ्वीदेवी ! तिम्रो विकास नहुँदैखेरि देवताहरूले तिमीसित विस्तृत भइदेऊ भन्ने कामना गर्दै प्रार्थना गरेका थिए । त्यस अवसरमा तिमीभित्र श्रेष्ठ किसिमका प्राणीहरूले प्रवेश गरे त्यसपछि तिमीले चार दिशाको कल्पना गरेकी थियौ ।

**ये ग्रामा यदरण्यं याः सभा अधि भूम्याम् । ये संग्रामाः समितयस्तेषु चारु वदेम ते ॥५६॥**

भूमिमा रहेका गाउँ, सहर, वन, सभा जता छन्, जुन ठाउँमा युद्ध र सङ्ग्रामका विषयमा छलफल हुन्छ, त्यस्ता ठाउँमा हामी तिम्रो स्तुति गर्दछौँ ।

**अश्व इव रजो दुधुवे वि तान् जनान् य आक्षियन् पृथिवीं यादजायत । मन्द्राग्रेत्वरी भुवनस्य गोपा वनस्पतीनां गृभिरोषधीनाम् ॥५७॥**

पृथ्वीमा उत्पन्न हुने पदार्थ पृथ्वीमै वास गर्दछन् । तिनीहरूमाथि अश्वजस्तै गतिशील धुलोकण उड्दछ । यसै पृथ्वीले प्रसन्नताप्रदायक, अग्रणी, विश्वको रक्षक वनस्पति र औषधिहरूको उत्पादन र पालन गर्दछ ।

**यद् वदामि मधुमत् तद् वदामि यदी क्षे तद् वनन्ति मा । त्विषीमानस्मि जूतिमानवान्यान् हन्मि दोधतः ॥५८॥**

हामी आफ्ना राष्ट्रका विषयमा जेजस्तो कुरो उच्चारण गर्दछौँ, त्यो हितकारक र मधुरताले युक्त बनेको होस् । जेजस्ता कुराहरू हेर्दछौँ, ती सबै हाम्रा लागि प्रिय र सहयोग प्रदान गर्ने खालका होऊन् । हामी तेजस्वी, वेगसम्पन्न हुन सकौँ र अर्को पक्षमा रहेका शत्रुहरूलाई संहार गरौँ ।

**शन्तिवा सुरभिः स्योना कीलालोध्नी पयस्वती । भूमिरधि ब्रवीतु मे पृथिवी पयसा सह ॥५९॥**

शान्दिप्रदायक, सुगन्धले सम्पन्न, सुखदायी अन्न प्रदान गर्ने, अमृतको खानीजस्ता यस मातृभूमिले हामीलाई उपभोग्य सामग्री र ऐश्वर्य प्रदान गर्दै सधैँ हाम्रो हितको कुरो बोलोस् ।

**यामन्वैच्छद्धविषा विश्वकर्मान्तरर्णवे रजसि प्रविष्टाम् । भुजिष्यं पात्रं निहितं गुहा यदाविर्भोगे अभवन्मातृमद्भ्यः ॥६०॥**

विश्वकर्माले जब अन्तरिक्षमा उत्पादक प्रवाहरूपी अर्णवबाट हविका माध्यमबाट पृथ्वीको रचना गरे, त्यस बेला नदेखिएर रहेका भोज्य पदार्थका भण्डरहरू पनि प्रकट भए ।

**त्वमस्यावपनी जनानामदितिः कामदुघा पप्रथाना । यत् त ऊनं तत् त आ पूरयाति प्रजापतिः प्रथमजा ऋतस्य ॥६१॥**

हे धर्तीमाता ! तिमी मानिसलाई दुःखबाट मुक्त गराउन सक्ने मन लागेका कुराहरू प्रदान गर्ने हौ, तिमी खेत वा मैदानका रूपमा फैलिएकी छ्यौ । तिम्रा भागमा जेजति कुराहरू कमी रहेका थिए, ती सबै नै सृष्टिको क्रममा सबैभन्दा पहिले उत्पन्न भएका प्रजापति ब्रह्माले पूरा गराइदिन्छन् ।

**उपस्थास्ते अनमीवा अयक्ष्मा अस्मभ्यं सन्तु पृथिवि प्रसूताः । दीर्घं न आयुः प्रतिबुध्यमाना वयं तुभ्यं बलिहृतः स्याम ॥६२॥**

हे मातृभूमि ! तिमीभित्र उत्पन्न भएका सबै मानिसहरू निरोगी, क्षय आदि रोगबाट मुक्त भएर हाम्रा नजिकै रहून् । हामी दीर्घायु प्राप्त गर्दै मातृभूमिका लागि हवि प्रदान गर्दछौँ ।

**भूमे मातर्नि धेहि मा भद्रया सुप्रतिष्ठितम् । संविदाना दिवा कवे श्रियां मा धेहि भूत्याम् ॥६३॥**

हे मातृभूमि ! हामीलाई तिमी कल्याणकारी प्रतिष्ठाले सम्पन्न गराऊ । हे कवि ! हे देवी ! हामीलाई ऐश्वर्य र विभूतिमा प्रतिष्ठित गराउँदै स्वर्गको प्राप्ति गराऊ ।

## २. यक्ष्मारोगनाशन सूक्त

**ऋषि–** भृगु । **देवता–** अग्नि, मन्त्रोक्त, मृत्यु । **छन्द–** त्रिष्टुप्, अनुष्टुप्, आस्तार पङ्क्ति, भुरिक् आर्षी पंक्ति, जगती, भुरिक् त्रिष्टुप्, अनुष्टुब्गर्भा विपरीतपादलक्ष्मा पङ्क्ति, ककुम्मती पराबृहती अनुष्टुप्, निचृत् अनुष्टुप्, पुरस्ताद् बृहती, पुरस्तात् ककुम्मती अनुष्टुप्, त्रिपदा एकावसाना भुरिक् आर्ची गायत्री, एकावसाना द्विपदा साम्नी त्रिष्टुप्, पञ्चपदा बार्हतवैराजगर्भा जगती, उपरिष्यात् विराट्, बृहती, पुस्ताद् विराट् बृहती, बृहतीगर्भा त्रिष्टुप् ।

**नडमा रोह न ते अत्र लोक इदं सीसं भागधेयं त एहि । यो गोषु यक्ष्मः पुरुषेषु यक्ष्मस्तेन त्वं साकमधराङ् परेहि ॥१॥**

हे क्रव्याद् नामका अग्निदेवता ! तिमी नर्कटमा आरोहण गर । तिम्रा लागि यहाँ ठाउँ छैन, यो सिसा तिम्रा भागको हो, तिमी यसैमा आऊ । गाई र मानिसमा लागेको यक्ष्मा नामका रोगसहित तिमी तल्लो बाटोबाट बाहिर जाऊ ।

**अघशंसदुःशंसाभ्यां करेणानुकरेण च । यक्ष्मं च सर्वं तेनेतो मृत्युं च निरजामसि ॥२॥**

सबै खालका रोग पापी तथा दुष्टहरूका साथ यहाँबाट पर जाऊन् । कर नाम भएका क्रिया र अनुकर नाम भएका सहायक क्रियाले यक्ष्मा आदि रोगलाई हामी छुट्याउँछौँ । त्यसरी नै मृत्युलाई पनि हामी पर भगाउँछौँ ।

**निरितो मृत्युं निर्ऋतिं निररातिमजामसि । यो नो द्वेष्टि तमद्ध्यग्ने अक्रव्याद् यमु द्विष्मस्तमु ते प्र सुवामसि ॥३॥**

हे क्रव्याद् नाम भएका अग्निदेवता ! हामी यहाँबाट पापका देवता निर्ऋति र मृत्युलाई पर हटाउँछौँ । जोसित हामी द्रोह गर्दछौँ, तिनैतिर तिमीहरूलाई पठाउँछौँ ।

**यद्यग्निः क्रव्याद् यदि वा व्याघ्र इमं गोष्ठं प्रविवेशान्योकाः । तं माषाज्यं कृत्वा प्र हिणोमि दूरं स गच्छत्वप्सुषदोऽप्यग्नीन् ॥४॥**

यदि मृतक जलाउने क्रव्याद् नामका अग्नि र हिंस्रक बाघले अन्त कतै ठाउँ नपाएर यस गोठमा पस्न आए भने हामी माषाज्य विधिले तिनलाई पन्छाउँछौँ । तिनीहरू जलमा निवास गर्ने अग्निका शरणमा जाऊन् ।

**यत् त्वा क्रुद्धाः प्रचक्रुर्मन्युना पुरुषे मृते । सुकल्पमग्ने तत् त्वया पुनस्त्वोद्दीपयामसि ॥५॥**

कुनै पनि मानिसको मृत्यु भएमा तिनलाई जलाइदिने भएकाले मानिसहरूले रिसले तिमीलाई क्रव्याद् नाम दिएर प्रदीप्त गराएका हुन् । अब त्यस किसिमको लास जलाउने कार्य सम्पन्न भएपछि तिमीलाई तिमीबाटै प्रदीप्त गराउँछौँ ।

**पुनस्त्वादित्या रुद्रा वसवः पुनर्ब्रह्मा वसुनीतिरग्ने । पुनस्त्वा ब्रह्मणस्पतिराधाद् दीर्घायुत्वाय शतशारदाय ॥६॥**

हे अग्निदेवता ! आदित्य, रुद्र, वसु, धन प्रदाता ब्रह्मा र ब्रह्मणस्पतिले तिमीई सय वर्षको लामो आयु प्राप्त होस् भनेर पुनः प्रतिष्ठित गरेका थिए ।

**यो अग्निः क्रव्यात् प्रविवेश नो गृहमिमं पश्यन्नितरं जातवेदसम् । तं हरामि पितृयज्ञाय दूरं स घर्ममिन्धां परमे सधस्थे ॥७॥**

मांसभक्षी क्रव्याद् अग्निदेवताले अर्का जातवेदा अग्निदेवतालाई देखेर मानिसका घरमा प्रवेश

गरेका छन् । उनलाई पितृयज्ञका निम्ति हामी पर लिएर जान्छौं, उनले परम व्योममा गर्मी वृद्धि गराऊन् ।

**क्रव्यादमग्निं प्र हिणोमि दूरं यमराज्ञो गच्छतु रिप्रवाहः । इहायमितरो जातवेदा देवो देवेभ्यो हव्यं वहतु प्रजानन् ॥८॥**

क्रव्याद् अग्निलाई हामी पर पुऱ्याउँछौं । दोष दूर गराउने मृत्युदेवका नजिक उनी पापसँगै जाऊन् । यहाँ रहेका अर्का जातवेदा अग्निले सबै देवताका लागि यजनीय भाग वहन गरून् ।

**क्रव्यादमग्निमिषितो हरामि जनान् दृंहन्तं वज्रेण मृत्युम् । नि तं शास्मि गार्हपत्येन विद्वान् पितॄणां लोके अपि भागो अस्तु ॥९॥**

मानिसलाई मृत्युतिर लिएर जाने प्रेतदाहक क्रव्याद् अग्निलाई हामी मन्त्ररूपी वज्र नामका अस्त्रले पर भगाउँछौं । हामी ज्ञानसम्पन्न मानिसहरू गार्हस्थ अग्निले उनलाई नियन्त्रित गर्दछौं । पितृहरूका लोकमा क्रव्याद् अग्निको भाग अवश्य रहनेछ ।

**क्रव्यादमग्निं शशमानमुक्थ्यं प्र हिणोमि पथिभिः पितृयाणैः । मा देवयानैः पुनरा गा अत्रैवैधि पितृषु जागृहि त्वम् ॥१०॥**

स्तुतिवचनहरूको प्रशंसा गर्ने प्रेतदाहक क्रव्याद् अग्निलाई हामी पितृहरूका गमन मार्गबाट पर पठाउँछौं । देवयानका मार्गबाट उनी फेरि यस ठाउँमा नआऊन् । उनी उसै पितृलोकमा रहेर त्यहीँ जागृत् होऊन् ।

**समिन्धते संकसुकं स्वस्तये शुद्धा भवन्तः शुचयः पावकाः । जहाति रिप्रमत्येन एति समिद्धो अग्निः सुपुना पुनाति ॥११॥**

पवित्र अग्निदेवता नै प्राणीको कल्याणका लागि शवभक्षक अग्निलाई प्रज्वलित गर्दछन् । यसो भएपछि सबै खालका दुर्भावजन्य दोष र पापकर्मको निवारण हुन्छ । पवित्र अग्निदेवता प्रदीप्त भएर सबैलाई शुद्ध गराउँछन् ।

**देवो अग्निः संकसुको दिवस्पृष्ठान्यारुहत् । मुच्यमानो निरेणसोऽमोगस्माँ अशस्त्याः ॥१२॥**

दहन कार्यमा प्रयोग हुने अग्निदेवता प्रदीप्त भएर द्युलोकमा आरोहण गर्दछन् । हामी सबैलाई पापबाट जोगाउँदै साँगुरो, जान नहुने र नचिनेको मार्गका विषयमा जानकारी गराउँछन् ।

**अस्मिन् वयं संकसुके अग्नौ रिप्राणि मृज्महे । अभूम यज्ञियाः शुद्धाः प्र ण आयूंषि तारिषत् ॥१३॥**

यस्ता खालका दहन कार्य सम्पन्न गर्ने अग्निमा नै हामी सबै किसिमका दुष्कर्महरूको शोधन गर्दछौं । हामी शुद्ध भइसकेका छौं र यज्ञीय कार्यका लागि उपयुक्त भएका छौं । हामीलाई अग्निदेवताले दीर्घायु बनाऊन् ।

**संकसुको विकसुको निर्ऋथो यश्च निस्वरः । ते ते यक्ष्मं सवेदसो दूराद् दूरमनीनशन् ॥१४॥**

संघातक, विघातक र शब्दरहित अग्निदेवताले तिम्रो यक्ष्मा नामको रोग चिनेका छन् । उनी त्यस यक्ष्मा रोगका साथै पर गएर विनाश भइसकेका छन् ।

**यो नो अश्वेषु वीरेषु यो नो गोष्वजाविषु । क्रव्यादं निर्णुदामसि यो अग्निर्जनयोपनः ॥१५॥**

जुन अग्नि हाम्रा अश्व, वीर पुरुष, गाई र भेडाबाख्रामा लागेर मानिसका लागि दुःखदायी भएका छन्, ती मांसभक्षी अग्निलाई हामी पर पुऱ्याउँछौं ।

**अन्येभ्यस्त्वा पुरुषेभ्यो गोभ्यो अश्वेभ्यस्त्वा । निः क्रव्यादं नुदामसि यो अग्निर्जीवितयोपनः ॥१६॥**

जीवनचक्रलाई विनाश गर्ने क्रव्याद् अग्निलाई गाई, घोडा, अन्य पशु र मानिसबाट हामी पर राख्दछौं ।

**यस्मिन् देवा अमृजत यस्मिन् मनुष्या उत । तस्मिन् घृतस्तावो मृष्ट्वा त्वमग्ने दिवं रुह ॥१७॥**

हे अग्निदेवता ! जुन दिव्यलोकमा देवगण र मानिसहरू पवित्र हुन्छन्, घिउको आहुतिले शुद्ध भएर उसै दिव्यलोकमा तिमी पनि आरोहण गर ।

**समिद्धो अग्न आहुत स नो माभ्यपक्रमीः । अत्रैव दीदिहि द्यवि ज्योक् च सूर्यं दृशे ॥१८॥**

हे आह्वान गरिएका अग्निदेवता ! तिमी प्रज्वलित भएपछि हामीलाई नछोड । तिमी द्युलोकमा प्रकाशमान होऊ । हामीलाई तिमी चिरकालसम्म सूर्यको दर्शनबाट लाभान्वित गराऊ ।

**सीसे मृड्ढ्वं नडे मृड्ढ्वमग्नौ संकसुके च यत् । अथो अव्यां रामायां शीर्षक्तिमुपबर्हणे ॥१९॥**

हे मानिसहरू हो ! तिमीहरू शिरको रोगलाई सिसा र नर्कट नामका घाँसले हटाओ ।सङ्कसुक नामका विनाशक अग्निमा, भेडामा, स्त्रीमा र सिरानीमा रहेका त्यस रोगलाई तिमीहरू मलझैँ सफा गर ।

**सीसे मलं सादयित्वा शीर्षक्तिमुपबर्हणे । अव्यामसिक्न्यां मृष्ट्वा शुद्धा भवत यज्ञियाः ॥२०॥**

हे मानिसहरू हो ! तिमीहरू सिरानीमा टाउको राख र मललाई सिसा तथा कालो भेडामा लगेर शोधित गरेर पवित्र होओ ।

**परं मृत्यो अनु परेहि पन्थां यस्त एष इतरो देवयानात् । चक्षुष्मते शृण्वते ते ब्रवीमीहेमे वीरा बहवो भवन्तु ॥२१॥**

हे मृत्यु ! देवयानको मार्गभन्दा भिन्न तिम्रो जुन हीन किसिमको मार्ग छ, त्यो हामीभन्दा परै रहोस् । हाम्रा वीर पुरुष र प्राणप्रवाहको वृद्धि होस् ।

**इमे जीवा वि मृतैरावर्वृत्रन्नभूद् भद्रा देवहूतिर्नो अद्य । प्राञ्चो अगाम नृतये हसाय सुवीरासो विदथमा वदेम ॥२२॥**

यी जिउँदो देखिएका मानिसहरू पनि निर्जीव मानसिकताका मानिसहरूले घेरिएका छन् । जीवन्तर रहन खोज्ने हाम्रा लागि सत्पुरुषको वचनजस्तो वा प्रार्थनाजस्तो उत्कृष्ट वाणी काम लाग्ने होस् । हामी हाँस्तै नाच्तै अगाडि बढौँ र श्रेष्ठ वीरका साथमा विशिष्ट प्रयोजनमा लागिरहौँ ।

**इमं जीवेभ्यः परिधिं दधामि मैषां नु गादपरो अर्थमेतम् । शतं जीवन्तः शरदः पुरूचीस्तिरो मृत्युं दधतां पर्वतेन ॥२३॥**

जीवित प्राणीका लागि यो मर्यादा दिएका छौँ । कसैले पनि यस्ता मर्यादाहरूलाई उल्लङ्घन नगरोस् । यसै किसिमका अनुशासनमा रहेर सय वर्षसम्मको दीर्घायु प्राप्त गरौँ र मृत्युलाई पर्वतजस्तो बलियो तरिकाले पराजित गरौँ ।

**आ रोहतायुर्जरसं वृणाना अनुपूर्वं यतमाना यदि स्थ । तान् वस्त्वष्टा सुजनिमा सजोषाः सर्वमायुर्नयतु जीवनाय ॥२४॥**

वृद्ध अवस्थासम्म दीर्घ आयु वरण गरौँ । एकपछि अर्को उन्नतिका लागि प्रयास गरौँ । श्रेष्ठ तथा सिर्जना गर्ने त्वष्टादेवताले सबैलाई पूर्ण आयुसम्म पुऱ्याइदिऊन् ।

**यथाहान्यनुपूर्वं भवन्ति यथर्तव ऋतुभिर्यन्ति साकम् । यथा न पूर्वमपरो जहात्येवा धातरायूंषि कल्पयैषाम् ॥२५॥**

हे धारण गर्ने धातादेवता ! एकसँग अर्को दिन गाँसिएझैँ अथवा एकसँग अर्को ऋतु जोडिएझैँ एउटाले अर्कालाई नछोडीकन हाम्रो जीवनलाई निरन्तर प्रवाहशील बनाइदेऊ ।

**अश्मन्वती रीयते सं रभध्वं वीरयध्वं प्र तरता सखायः । अत्रा जहीत ये असन् दुरेवा अनमीवानुत्तरेमाभि वाजान् ॥२६॥**

हे सार्थीहरू हो ! पहाडबाट झर्ने वेगवान् नदीहरू बगिरहेका छन् । सावधान होओ, वीरता धारण गर र यसमा पौडी खेल । यसमा पौडी खेल्दा बाधा पार्ने पापवृत्तिरूपी भारीहरूलाई यतै

बिसाओ । यसबाट पारि पुगेपछि निरोगरूपी पुरुषार्थ प्राप्त हुनेछ ।

**उत्तिष्ठता प्र तरता सखायोऽश्मन्वती नदी स्यन्दत इयम् । अत्रा जहीत ये असन्नशिवाः शिवान्त्स्योनानुत्तरेमाभि वाजान् ॥२७॥**

हे मित्रहरू हो ! अब उठ र पौडी खेल्नका लागि तयार होओ । ढुङ्गाका किनारा भएका नदीहरू वेगपूर्वक बगिरहेका छन् । यसमा भएका अहितकारी कुराहरूलाई यतै मिल्काओ । हामी पौडी खेलेर नदी तरिसकेपछि सुखप्रद अन्न उपलब्ध गरौँ ।

**वैश्वदेवीं वर्चस आ रभध्वं शुद्धा भवन्तः शुचयः पावकाः । अतिक्रमन्तो दुरिता पदानि शतं हिमाः सर्ववीरा मदेम ॥२८॥**

हे पवित्र गराउने पावक नामका अग्निदेवता ! तिमी शुद्ध, पावन र दोष तथा विकृतिले रहित भएर हामीलाई कल्याण गर्नका लागि सबै देवताहरूको स्तुति गर्न थाल । हामी ऋग्वेदका पदहरूले पापलाई जितेर आफ्ना शाखासन्तान र वीर पुरुषहरूका साथ सय वर्षसम्मको आयु आनन्दपूर्वक रहौँ ।

**उदीचीनैः पथिभिर्वायुमद्भिरतिक्रामन्तोऽवरान् परेभिः । त्रिः सप्त कृत्व ऋषयः परेता मृत्युं प्रत्यौहन् पदयोपनेन ॥२९॥**

ऋषिहरूले तीन किसिमका सातसात पुरुषार्थ गरेर माथि रहेको वायुयुक्त मार्गबाट जाँदै तल रहेका नीच कर्मयुक्त मार्गहरूलाई जितेका थिए । यसै किसिमले आफ्नो पदलाई उच्च गराउँदै सन्तुलित पाइला चालेर मृत्युलाई पनि पराजित गराएका थिए ।

**मृत्योः पदं योपयन्त एत द्राघीय आयुः प्रतरं दधानाः । आसीना मृत्युं नुदता सधस्थेऽथ जीवासो विदथमा वदेम ॥३०॥**

मृत्युका विनाशकारी चरणहरूलाई रोकेर, अधिक लामो र श्रेष्ठ आयु धारण गरौँ । यस क्रममा रहँदै मृत्युलाई पछाडितिर धकेलौँ । यस किसिमको जीवन जिउन सकेमा आफ्नो आवास, शरीर र धर्तीमा विशिष्ट यज्ञादि गर्ने कुरो गर्न सक्नेछौँ ।

**इमा नारीरविधवाः सुपत्नीराञ्जनेन सर्पिषा सं स्पृशन्ताम् । अनश्रवो अनमीवाः सुरत्ना आ रोहन्तु जनयो योनिमग्रे ॥३१॥**

यी नारीहरू असल पत्नी होऊन्, सधैँ सधवा रहून्, आँखामा काजलजस्तो शृङ्गार र आँतमा घिउजस्तो तेजवर्द्धक तत्त्वले युक्त होऊन् । यिनीहरू रोगरहित र अल्छीरहित मनका भएर श्रेष्ठ रत्नजस्ता उत्तम सन्तान जन्माउने होऊन्, अगाडि बढून् र उन्नति गरून् ।

**व्याकरोमि हविषाहमेतौ तौ ब्रह्मणा व्य१हं कल्पयामि । स्वधां पितृभ्यो अजरां कृणोमि दीर्घेणायुषा समिमान्त्सृजामि ॥३२॥**

हविष्यान्नले हामी मृतक र जीवित यी दुवै खालका मानिसलाई नै विशेष रूपले लाभान्वित गर्दछौँ । ज्ञानशक्तिले हामी यिनको विशेष कल्पना गर्दछौँ । पितृहरूलाई दिइने स्वधायुक्त आहुतिलाई हामी अविनाशी बनाउँछौँ र यिनलाई दीर्घायुले सम्पन्न बनाउँछौँ ।

**यो नो अग्निः पितरो हृत्स्व१न्तराविवेशामृतो मर्त्येषु । मय्यहं तं परि गृह्णामि देवं मा सो अस्मान् द्विक्षत मा वयं तम् ॥३३॥**

हे पितृहरू हो ! अमर फल प्रदायक जुन अग्नि मानिसका हृदयमा प्रवेश गर्दछ, उसै दिव्य अग्निलाई हामी आफूभित्र ग्रहण गर्दछौँ । त्यसले हामीसित विद्वेष नगरोस् र हामी पनि त्यससित द्वेष नगरौँ ।

**अपावृत्य गार्हपत्यात् क्रव्यादा प्रेत दक्षिणा । प्रियं पितृभ्य आत्मने ब्रह्मभ्यः कृणुता प्रियम् ॥३४॥**

हे मानिसहरू हो ! तिमीहरू मन्त्रका प्रयोगले, गार्हपत्य अग्निभन्दा पर भएर क्रव्याद् नामका मृतक कर्ममा प्रयुक्त हुने अग्नि भएको दक्षिण दिशातर्फ जाओ । त्यतै गएर ज्ञानी, पितृ र

आफूलाई प्रसन्न गराउने खालका प्रिय कार्यहरू सम्पन्न गर ।

**द्विभागधनमादाय प्र क्षिणात्यवर्त्या । अग्निः पुत्रस्य ज्येष्ठस्य यः क्रव्यादनिराहितः ॥३५॥**

क्रव्याद् नामका अग्निलाई शान्त जसले गराउँदैन, उसले आफ्नो र आफ्ना जेष्ठ पुत्रको गरी दुवै भागको सम्पदा पाए पनि त्यसबाट वञ्चित हुँदै जान्छ ।

**यत् कृषते यद् वनुते यच्च वस्नेन विन्दते । सर्वं मर्त्यस्य तन्नास्ति क्रव्याच्चेदनिराहितः ॥३६॥**

क्रव्याद् अग्निलाई जसले शान्त गराउँदैन, उसका कृषि, सेवनीय वस्तु तथा मूल्य तिरेर किनेका वस्तुहरू पनि सकिँदै जानेछन् ।

**अयज्ञियो हतवर्चा भवति नैनेन हविरत्तवे । छिनत्ति कृष्या गोर्धनाद् यं क्रव्यादनुवर्त्तते ॥३७॥**

जुन व्यक्तिले क्रव्याद् अग्निलाई सन्तुष्ट गराउँदैन, उसले यज्ञ गर्ने आफ्नो क्षमतालाई क्षीण गराउँछ । त्यस्ता तेजरहित व्यक्तिको हवि देवगणले स्वीकार गर्दैनन् । त्यस खालका व्यक्तिका कृषि, गाई र ऐश्वर्य सबै नष्ट भएर जानेछन् ।

**मुहुर्गृध्यैः प्र वदत्यार्तिं मर्त्यो नीत्य । क्रव्याद् यानग्निरन्तिकादनुविद्वान् वितावति ॥३८॥**

जसलाई क्रव्याद् अग्निले पछि लागेर लखेट्न थालेको हुन्छ, त्यस्तो व्यक्ति दुःखदायक स्थितिमा पर्दछ । उसलाई आवश्यक साधनहरूका निम्ति पनि बारम्बार दीनतायुक्त वचनहरू बोल्नुपर्ने हुन्छ ।

**ग्राह्या गृहाः सं सृज्यन्ते स्त्रिया यन्म्रियते पतिः । ब्रह्मैव विद्वानेष्योः यः क्रव्यादं निरादधत् ॥३९॥**

कुनै स्त्रीको पति मरेपछि उसको घर नै यातनाकेन्द्रजस्तो हुन्छ । त्यस घरमा भलो चाहने खालका परमार्थपरायण, ब्रह्मनिष्ठ ब्राह्मणलाई बोलाउनुपर्ने हुन्छ । अनि उनैले क्रव्याद् अग्निलाई शान्त गराएर उचित मार्गनिर्देश गर्नेछन् ।

**यद् रिप्रं शमलं चकृम यच्च दुष्कृतम् । आपो मा तस्माच्छुम्भन्त्वग्नेः संकसुकाच्च यत् ॥४०॥**

हामीले गरेका पाप, दोष र दुष्कर्महरू जेजति छन्, तिनीहरूबाट र मृतक जलाउने क्रव्याद् अग्निका स्पर्शले हामीलाइ जुन दोष लागेको हुन्छ, त्यस्ता अवस्थाबाट हामीलाई जलले पवित्रता प्रदान गरोस् ।

**ता अधरादुदीचीराववृत्रन् प्रजानतीः पथिभिर्देवयानैः । पर्वतस्य वृषभस्याधि पृष्ठे नवाश्चरन्ति सरितः पुराणीः ॥४१॥**

देवहरूका गमनमार्गमा दक्षिणबाट उत्तरतर्फका स्थानहरूलाई जलले घेरेको हुन्छ, त्यसपछि उसै प्राचीन जलले नयाँ तरिकाले वर्षाका रूपमा पर्वतका शिखरमा पर्दछ र नदीका प्रवाहित हुन्छ ।

**अग्ने अक्रव्यान्निःक्रव्यादं नुदा देवयजनं वह ॥४२॥**

हे क्रव्याद् अग्निदेवता ! मांसभक्षक क्रव्याद् नामका अग्निलाई हामीदेखि अगल गराऊ । देवताको पूजासामग्री देवताहरूका समीपमा पुऱ्याऊ ।

**इमं क्रव्यादा विवेशायं क्रव्यादमन्वगात् । व्याघ्रौ कृत्वा नानानं तं हरामि शिवापरम् ॥४३॥**

क्रव्याद् अग्निले मृत व्यक्तिहरूमा आफ्ना प्रभाव जमाइसकेका छन् । यिनीहरू पनि उनै शव भक्षक क्रव्याद् अग्निका अनुगामी भइसकेका छन् । हामी यी दुवैलाई व्याघ्रको रूप मान्दछौँ । कल्याणरहित हुनाले अशिव रूपमा अनेकौँलाई आफ्नो पछि लगाउने यी क्रव्याद् अग्निलाई हामी पर हटाउँछौँ ।

**अन्तर्धिर्देवानां परिधिर्मनुष्याणामग्निर्गार्हपत्य उभयानन्तरा श्रितः ॥४४॥**

गार्हपत्य अग्निदेव देवता र मानिसका मध्यस्थ हुन् । किनभने उनी देवताहरूको आन्तरिक र मानिसको बाह्य परिधिलाई रक्षकका रूपमा काम गर्दछन् ।

**जीवानामायुः प्र तिर त्वमग्ने पितृणां लोकमपि गच्छन्तु ये मृताः । सुगार्हपत्यो वितपन्नरातिमुषामुषां श्रेयसीं धेह्यस्मै ॥४५॥**

हे अग्निदेवता ! तिमी प्राणीहरूको आयु बढाऊ र जसको मृत्यु भइसकेको छ, तिनलाई पितृलोक प्राप्त गराऊ । श्रेष्ठ गार्हपत्य अग्निदेवताले शत्रुलाई सन्तप्त गराऊन् र हाम्रा लागि प्रत्येक उषाहरू कल्याणकारी बनाइदिऊन् ।

**सर्वानग्ने सहमानः सपत्नानैषामूर्जं रयिमस्मासु धेहि ॥४६॥**

हे अग्निदेवता ! सबै किसिमका दुष्ट शत्रुहरूलाई पराजित गर्दै तिमी उनीहरूको सम्पत्ति र सामर्थ्य हामीभित्र स्थापित गराऊ ।

**इममिन्द्रं वह्निं पप्रिमन्वारभध्वं स वो निर्वक्षद् दुरितादवद्यात् । तेनाप हत शरुमापतन्तं तेन रुद्रस्य परि पातास्ताम् ॥४७॥**

हे मानिसहरू हो ! तिमीहरू यी सामर्थ्यवान्, ऐश्वर्यशाली अग्निको उपासना गर्नतिर लाग । यिनले तिमीहरूलाई निन्दनीय दुष्कर्मबाट पर राख्नेछन् । ती दुष्कर्मका अस्त्रहरू नष्ट गराऊ र रुद्रदेवताका अस्त्रहरूले स्वयंलाई संरक्षित गराऊ ।

**अनड्वाहं प्लवमन्वारमध्वं स वो निर्वक्षद् दुरितादवद्यात् । आ रोहत सवितुर्नावमेतां षड्भिरुर्वीभिरमतिं तरेम ॥४८॥**

हे साधकहरू हो ! भारी बोकेर उत्रिने यी सवितादेवताका नौकामा चढ । यिनले तिमीहरूलाई निन्दनीय दुष्कर्म तथा दुष्प्रवृत्तिहरूबाट जोगाउनेछन् । उनका छ वटा विशाल शक्तिहरूका सहाराले हामी अज्ञानबाट पार पाउन सक्दछौँ ।

**अहोरात्रे अन्वेषि बिभ्रत् क्षेम्यस्तिष्ठन् प्रतरणः सुवीरः । अनातुरान्त्सुमनसस्तल्प बिभ्रज्ज्योगेव नः पुरुषगन्धिरेधि ॥४९॥**

हे तल्प नाम गरेका सुखद सहारा ! हे गार्हपत्य अग्नि ! हाम्रा कुशलताको निर्वाह गर्दै, दिनरात हामीलाई बढाउँदै, श्रेष्ठ वीरझैँ तिमी गतिशील रहन्छौ । तिमी उत्तम मन भएका र धैर्यताले सम्पन्न साधकलाई धारण गर्ने हौ, हामीलाई सुगन्धयुक्त पुरुषार्थ प्रदान गर ।

**ते देवेभ्य आ वृश्चन्ते पापं जीवन्ति सर्वदा । क्रव्याद् यानग्निरन्तिकादश्व इवानुवपते नडम् ॥५०॥**

पापवृत्तिले जीविका चलाउने पुरुषहरूले देवतासित आफ्नो सम्बन्ध समाप्त गर्दछन् । घोडाले नर्कट नामको घाँस कुल्चिएझैँ तिनीहरूलाई क्रव्याद् अग्निले किच्नेछन् ।

**येऽश्रद्धा धनकाम्या क्रव्यादा समासते । ते वा अन्येषां कुम्भीं पर्यादधति सर्वदा ॥५१॥**

धनका लोभी, श्रद्धाविहीन, अर्काको पाकेको वा काँचो भाग खोस्नेजस्ता व्यक्तिहरू क्रव्याद नामका उत्पीडक अग्निका नजिक पुग्दछन् ।

**प्रेव पिपतिषति मनसा मुहुरा वर्तते पुनः । क्रव्याद् यानग्निरन्तिकादनुविद्वान् वितावति ॥५२॥**

क्रव्याद् अग्निका फन्दामा परेकाहरू जेजति हुन्छन्, तिनीहरू बारम्बार पतनशील कर्मतर्फ फर्कन र तिनैमा रमाउन खोजिरहेका हुन्छन् ।

**अविः कृष्णा भागधेयं पशूनां सीसं क्रव्यादपि चन्द्रं त आहुः । माषाः पिष्टा भागधेयं ते हव्यमरण्यान्या गह्वरं सचस्व ॥५३॥**

हे मांसभक्षक अग्नि ! कालो रङ्गका भेडा तिम्रै भाग हुन्, सिसा र चन्द्ररूपी फलाम, स्वर्ण आदि धातु पनि तिम्रै भाग हुन् भनिन्छ । पिँधेको मासको दाल तिम्रो हविष्यान्न हो, तिमी मानिसक